आचार्य गम्पोपा विरचित

# सद्धर्मचिन्तामणिमोक्षरत्नालंकार

## The Jewel Ornament of Liberation

The Wish-fulfilling Gem of the Noble Teachings




Translated into Nepali by:
Milan Shakya

Edited by:
Min Bahadur Shakya



आचार्य गम्पोपा विरचित

# सद्धर्मचिन्तामणिमोक्षरत्नालंकार

## THE JEWEL ORNAMENT OF LIBERATION

*The Wish-fulfilling Gem of the Noble Teachings*

*by*

GAMPOPA

**नेपालीमा अनुवाद**

**मिलन शाक्य**

**सम्पादन**

**मीन बहादुर शाक्य**

**प्रकाशक**

**नागार्जुन बौद्ध अध्ययन संस्थान**

ल. पु. चाकुपाट, नेपाल

२०६४



# विषय सूची

# Editorial Preface

The present text called "Jewel Ornament of Liberation by *Gampopa*" belongs to the genre of Buddhist teachings known as *the stage of path* (skt: *mārgakrama*). This text is the guide book for the students who follow the path of Bodhisattva from the elementary levels to the profound realization of Buddhahood.

The special feature of this text of the Master Gampopa is that it integrates the sūtra and the profound teachings of Mahāmudrā in unified aspect. The text is divided into 21 chapters.

1. Buddhanature
2. The working basis
3. Instruction of Spiritual friend
4. Meditation on Impermanence
5. Sufferings of Samsara
6. The Karma and its results
7. Benevolence and compassion
8. Taking Refuge
9. Generation of Bodhicitta
10. Training in Bodhictta
11. The Six Perfections
12. The perfection in Generosity
13. The Perfection in Ethics and Manners
14. The Perfection of Patience
15. The Perfection in Strenuousness
16. The Perfection of meditative concentration
17. The Perfection of Awareness
18. The five Paths
19. The spiritual Levels
20. Perfect Buddhahood
21. Buddha activity



Another aspect of this text is that it is addressed to all people monastic or lay person or philosopher who pursues the quest for enlightenment. The greatness of the author lies in the fact that he completely dispelled the darkness of confusion and reconciled all misunderstanding between the sūtra and tantra systems. That is why, he was declared to be the *Sun like disciple of Milarepa*.

The author Gampopa has profusely quoted various sūtras and commentarial literatures to substantiate his instructions in traditional manner. Here we have tried to give the quote in original sanskrit wherever possible. Besides, the author has drawn various stories or Avadānas to illustrate his statement. We have cited these stories in detail in the appendices.

To add the sanctity of the text we have given the brief biography of this illustrious master.

This Nepalese translation of Jewel ornament of Liberation is based on three texts so far published.

1. Jewel Ornament of Liberation translated by Herbert Guenther and published from Luzac London in 1959.
2. Another English Translation by Khenpo Konchog Gyaltsen Rinpoche published by Snow Lion Publications, Ithaca, New York, 1998.
3. A Hindi translation by Khenpo Sonam Gyatso published from Central Institute of Higher Tibetan Studies, Sarnath, Varanasi, 2000.

I hope this translation in Nepali will be useful for the readers who are acquainted with this language. We have simplified the language as far as possible. The text is the essence of all Tripitaka of Bodhisattva path.

**Acknowledgements:**

First of all I'd like to thank my son Milan Shakya for his untiring efforts in translating this text minutely in Nepali language for the benefit of Nepalese readers. He took no stone unturned in presenting this text as beautiful as possible.





Thanks also to Kalyānamitra Mr. Punya Parajuli who helped in clarifying the different aspect of doctrines presented in this text.

Thanks also goes to Mr. Radhakrishna Sharma who devoted his time and energy in beautifying the text.

Finally, I'd like to thank Mr. Lin Kuo-Ying, the President of The Corporate Body of Buddha Educational Foundation and his compassionate and energetic staff who sponsored this important publication for free distribution for the readers in Nepal, the birth place of Lord Buddha. We are grateful for this generosity.

Namo Amitabha !

Min Bahadur Shakya

Director
Nagarjuna Institute of Exact Methods
A center for Buddhist Studies
P.O.Box.100 chakupat, Lalitpur
Kathmandu, Nepal
Tel: 977-1-5520558
Fax: 977-1-5527446
www.nagarjunainstitute.com





आचार्य गम्पोपा विरचित

# सद्धर्मचिन्तामणिमोक्षरत्नालंकार




# THE JEWEL ORNAMENT OF LIBERATION

*The Wish-fulfilling Gem of the Noble Teachings*

*by*

GAMPOPA





## वन्दना

आर्य मञ्जुश्री कुमारभूतलाई वन्दना
जिन, जिन पुत्र, सद्धर्म[१] र तिनको पनि मूलस्वरूप गुरु[२]लाई नमस्कार
मिलारेपा र अतीशको अनुकम्पाबाट, म आफ्नो र अरूको हितको लागि
चिन्तामणि समान यस सद्धर्म ग्रन्थरत्न लेख्दैछु ।



# विषय प्रवेश

सामान्यतयाः समस्त धर्महरू यही संसार र निर्वाण दुईटा वर्गमा समेटिएका छन् । यो संसारको स्वभाव शून्यता हो, त्यसको आकार भ्रान्ति हो भने त्यसको लक्षण दुःखको रूपमा उदय हुनु हो । निर्वाणको स्वभाव पनि शून्यता नै हो, त्यसको आकार र लक्षण क्रमशः सबै भ्रान्तिहरूको अन्त वा परिनिवृति तथा सबै दुःखहरूबाट मुक्ति हुन् ।

प्रश्न : संसार नामक यस भ्रान्तिमा को भ्रमित छन् त ?
उत्तर : त्रिधातु[१] का सबै प्राणीहरू भ्रमित छन् ।



प्रश्न : यो भ्रान्ति कुनचाँही आधारबाट उत्पन्न हुन्छ ?
उत्तर : शून्यताको आधारबाट भ्रान्तिको उदय हुन्छ ।



प्रश्न : भ्रम वा भ्रान्तिको कारण के हो ?
उत्तर : भ्रान्तिको कारण अविद्या हो ।

प्रश्न : कसरी प्राणीहरू भ्रान्तिमा फस्छन् ?
उत्तर : षड्गति[२]का विषयहरूमा आसक्त भएर प्राणीहरू भ्रमित हुन्छन् वा भ्रान्तिमा फस्छन् ।

प्रश्न : यसको उपमा के हो ?
उत्तर : यसको उपमा निन्द्रामा देखिने सपना हो ।[३]

प्रश्न : कहिले देखि प्राणी यसरी भ्रमित हुँदै आएका छन् ?











उत्तर : अनादिकालदेखि नै प्राणीहरू भ्रमित हुँदै आइरहेका छन् ।

प्रश्न : यस भ्रान्तिमा के दोष छ ?
उत्तर : भ्रान्तिले गर्दा प्राणीहरूले केवल दुःख मात्र भोगिराख्नुपर्नेछ ।

प्रश्न : यो भ्रान्ति कहिले ज्ञानमा बदलिन सक्ला त ?
उत्तर : अनुत्तर बोधि प्राप्त हुनासाथ यो भ्रान्ति ज्ञानको रूपमा परिणत हुन्छ ।

यो भ्रान्ति स्वतः अन्त भएर जानेछ भनी नसोँचे हुन्छ किनकी यो भ्रान्तिमय संसार अन्तहीनरूपमा प्रख्यात छ ।

तसर्थ, यो संसार भ्रान्तिमय, दुःखै दुःखले भरिपूर्ण, अन्तहीन, स्वयं-मुक्तिको संभावनाले रहित छ । त्यसैले अहिलेदेखि नै अभिसंबोधि प्राप्तिको लागि भरमग्दुर प्रयत्न गर्नुपर्छ ।

अनुत्तर सम्यक् सम्बोधि प्राप्तिका लागि के के कुराहरू आवश्यक छन् त ? यसको उत्तर निम्न विषयवस्तु भित्र पाइनेछः

हेतु, आश्रय, प्रत्यय, उपाय, फल र कर्म –
यी छ वटा अनुत्तर बोधिका सामान्य सूचकहरू हुन् भनेर बुद्धिमान मानिसले जान्नुपर्छ ।

अर्को शब्दमा, बोधि हेतु, पुद्गल आश्रय, बोधि प्राप्तिमा उत्प्रेरक प्रत्यय, बोधि प्राप्तिको उपाय, फल र समुदाचारको रूपमा बुद्ध चर्यालाई जान्नु आवश्यक छ ।

यी विषयवस्तुहरूलाई क्रमबद्धरूपले निम्न शीर्षकहरूद्वारा चिन्न सकिन्छ ।

(क) हेतु तथागत गर्भ हो ;









(ख) आश्रय अति दुर्लभ मनुष्य शरीर हो ;

(ग) प्रत्यय कल्याणमित्र हो ;

(घ) उपाय कल्याणमित्रका उपदेश हुन् ;

(ङ) फल सम्बुद्धकाय हो ;

(च) समुदाचार निर्विकल्परूपले लोकहितार्थ कार्य सम्पादन गर्नु हो ।

यी ६ वटा विषयवस्तुहरू ग्रन्थको मुख्य अंश हुन् । अब यिनका अंगहरूको विस्तृतरूपमा व्याख्या गरिनेछ ।











# भाग १

# हेतु



हेतु तथागतगर्भ हो ।



# परिच्छेद १
# *तथागत गर्भ*

हामी जस्ता हीन प्राणीहरूले जतिसुकै प्रयास गरे पनि यस भ्रान्तिमय संसारबाट मुक्त भई अनुत्तर बोधि प्राप्त गर्न सकौँला त? यदि हामी यसरी सोँच्छौँ भने निरन्तर प्रयास गरिरह्यौँ भने बोधि किन प्राप्त हुदैन र? भन्ने जवाफ पाएपछि हामी आश्वस्त हुनेछौँ। किनभने बोधि हाम्रै पहुँच भित्र छ। हामी सबै प्राणीहरूमा बुद्धत्वको हेतु तथागतगर्भ विद्यमान छ। यसलाई *समाधिराजसूत्र* मा पुष्टि गरिएको छ :

तथागतगर्भद्वारा समस्त जगत् व्याप्त छ।




*लघुपरिनिर्वाणसूत्र* का अनुसार, सबै सत्त्वहरू तथागतगर्भले युक्त छन्। *महापरिनिर्वाणसूत्र* का अनुसार, जसरी दुधमा नौनी व्याप्त छ, त्यसरी नै समस्त सत्त्वमा तथागतगर्भ व्याप्त छ।

*महायानसूत्रालंकार* का अनुसार,

तथता सबै प्राणीमा समान नै हुन्छ,
तर पनि जब यसले पूर्ण विशुद्धी प्राप्त गर्छ
तब मात्र प्राणी तथागत बन्छ। यसैले गर्दा, सबै सत्त्वमा
तथागत गर्भ व्याप्त छ।[१]

सबै सत्त्वहरू तथागतगर्भले युक्त छन् किनभने धर्मकायरूपी शून्यता सबै प्राणीमा व्याप्त छ ; किनभने धर्मता र तथतामा कुनै भेद हुँदैन र सबै सत्त्वहरूमा त्यस्ता कारकहरू हुन्छन् जसले तिनीहरूलाई कुनै एक गोत्र











विशेषमा वर्गीकरण गरिदिन्छ । *उत्तरतन्त्र* मा यसरी भनिएको छ :

संबुद्धकायले द्युतिमान (प्रकाशमान) भएकाले,
तथता भेदरहित भएकाले,
र गोत्रहरू विद्यमान भएकाले
समस्त प्राणीहरू सदा तथागतगर्भले युक्त छन् ।[२]

पहिलो पंक्ति 'धर्मकायरूपी शून्यता सबै प्राणीमा व्याप्त छ' को अर्थ के हो भने बुद्ध आदिरूपले धर्मकाय भएका हुँदा, धर्मकाय शून्यता भएको हुँदा, र शून्यता सबै प्राणीहरूमा व्याप्त भएको हुँदा सत्त्वहरू तथागतगर्भले युक्त छन् । दोश्रो पंक्ति अर्थात 'धर्मता वा तथतामा कुनै भेद हुँदैन' । यसको अर्थ के हुन आउँछ भने बुद्धको तथता र सत्त्वको तथतामा राम्रो, नराम्रो, ठूलो सानो, उच नीच त्यस्तो कुनै भेद हुँदैन । त्यसैले पनि सत्त्व तथागतगर्भले युक्त छन् ।

अन्तिममा, 'सबै सत्त्वहरूमा त्यस्ता कारकहरू हुन्छन् जसले तिनीहरूलाई कुनै एक गोत्र विशेषमा राखिदिन्छन्' । यसको अर्थ हो सत्त्वहरू निम्न पाँच प्रकारका बुद्धगोत्रहरूमा रहन्छन् ।

अगोत्र, अनियतगोत्र, श्रावकगोत्र,
प्रत्येकबुद्ध गोत्र र बोधिसत्त्व गोत्र वा महायान गोत्र ।
यही पाँच गोत्रहरूमा बुद्धगोत्रक (सत्त्वहरू) संगृहित छन् ।

१. **अगोत्र** : अगोत्रक यस्ता सत्त्वहरू हुन् जसमा आर्य असङ्गको भनाई बमोजिम अनपत्राप्य (निर्लज्जता), अन्हीक (शर्म), अकारुण्य (निर्दयी) आदि ६ प्रकारका लक्षणहरू हुन्छन् । उहाँका शब्दहरू निम्नानुसार छन् :

संसारका दु:खहरू देखेर पनि तिनीहरू अलिकति पनि संवेग हुँदैन ;
बुद्धका गुणहरू सुनेर तिनीहरूमा अलिकति पनि श्रद्धा उत्पन्न हुँदैन ;











उनीहरूमा लाजशर्म (ह्री), भय (अपत्रपा) र अलिकति पनि करुणा हुँदैन ;
जतिसुकै पाप गरेपनि उनीहरूमा अलिकति पनि पश्चाताप हुँदैन ।
यही छ वटा दुर्गुणहरूले भरिएकाले बुद्ध बन्ने मौका तिनीहरूमा हुँदैन ।

*महायानसूत्रालंकार* का अनुसार,

कुनै नितान्त दुश्चरित्र (पापी) हुन्छन्,
कुनैले भएका कुशलमूल पनि एकनाशले नाश गरिराखेका हुन्छन्,
भने कुनैमा मोक्षतर्फ लैजाने कुशलमूल नै हुँदैन,
कुशलमूल नहुने प्राणीमा बुद्ध हुने कुनै हेतु हुंदैन ।[३]

आफ्नो चित्तलाई दीर्घकालसम्म संसारमा भौँतारिनमै प्रवृत तुल्याएका यस्ता उपर्युक्त लक्षणहरूले युक्त अगोत्रकहरू पनि कहिल्यै बोधि प्राप्त गर्न नसक्ने प्राणीहरू चाँहि होइनन् । प्रयास गरेमा तिनीहरूले पनि बोधि प्राप्त गर्न सक्छन् । यो तथ्यलाई *महाकरुणापुण्डरीकसूत्र* मा पनि उल्लेख गरिएको छ :

हे आनन्द ! निर्वाण प्राप्त गर्ने संस्कार नै नभएको कुनै सत्त्वले
माथि आकाशमा बुद्धलाई देखेर एउटा मात्र फूल फालेको
खण्डमा पनि ऊ निर्वाणको अधिकारी बन्छ ।
म भन्छु ऊ निर्वाणको निकट मै हुन्छ, निर्वाणको समीप पुग्छ ।

२. **अनियत गोत्र** : अनियत गोत्रक कुनै विशेष प्रत्ययको अधीनमा हुन्छ । जो व्यक्ति श्रावक कल्याणमित्रको सम्पर्कमा आउँछ, जो व्यक्ति श्रावकको मित्र हुन्छ, र श्रावकका सूत्रहरू पढेपछि जसले श्रावक जीवन पद्धतिलाई विश्वास गर्छ ऊ श्रावक गोत्र कै हुन्छ, यस्तै प्रत्येकबुद्ध वा बोधिसत्त्व गोत्रको प्राणीलाई भेटेपछि क्रमशः प्रत्येक बुद्ध वा बोधिसत्त्वगोत्रको नै बन्छ ।











३. **श्रावक गोत्र** : श्रावकगोत्रक त्यस्ता सत्त्वहरू हुन् जसले भवसंसारदेखि भयभीत भएर निर्वाणको आकांक्षा राख्दछन् । तिनीहरूमा कम मात्र करुणा हुन्छ । तिनीहरूको बारेमा यस्तो भनिएको छ :

> संसारको दुःख देखेर तिनीहरू भयभीत हुन्छन्
> र निर्वाणको आकांक्षा राख्छन् ;
> सत्त्वहरूलाई हित हुने कार्य गर्नमा उनीहरू आनन्दित हुँदैनन् ;
> यी तीन लक्षणहरूबाट युक्त भएबाट उनीहरू श्रावकगोत्रक हुन् ।

४. **प्रत्येकबुद्ध गोत्र** : प्रत्येकबुद्धगोत्रकहरूमा यी तीनै लक्षणहरू हुनुको साथ साथै तिनीहरू अत्यन्तै अभिमानी हुन्छन्, आफ्ना गुरुहरूबारे मौन रहन्छन् र एकान्तमा एक्लै बस्न रुचाउँछन् । जस्तो भनिएको छ :

> संसारबाट उद्विग्न (निराश) भएर उनीहरू निर्वाणको पछि लाग्छन् ;
> उनीहरूमा कम मात्र करुणा हुन्छ तर अभिमानी भने एकदमै हुन्छन् तिनीहरू ;
> आफ्ना गुरुहरूको बारे मौन रहन्छन् र एक्लै बस्न मन पराउँछन् –
> यस्ता सत्त्वहरूलाई बुद्धिमान मानिसले प्रत्येकबुद्ध गोत्रक भनी जान्नुपर्छ ।

श्रावक र प्रत्येकबुद्ध, यी दुई गोत्रले दुई अलग अलग जीवनपद्धतिलाई संकेत गर्छन् । हुनत ती दुवैले आ-आफ्ना लक्ष्यहरू प्राप्त गर्छन् तर जुन निर्वाण तिनीहरूले प्राप्त गरेको दावी गर्छन् त्यो वास्तविक निर्वाण होइन । त्यसोभए तिनीहरू कुन भूमिमा रहन्छन् त ? अविद्याको वासनाभूमिमा स्थिर रहेता पनि, तिनीहरू अनाश्रव कर्मद्वारा मनोमय काय धारण गरेर त्यसैमा प्रतिष्ठित हुन्छन् । यो समाधि अनाश्रव (आश्रवरहित) हुने हुँदा यही निर्वाण हो भन्ने धारणामा उनीहरू टाँसिन्छन् । अब यहाँ के प्रश्न उठ्न सक्ला भने, यदि यो साँच्चिकैको निर्वाण होइन भने भगवान् बुद्धले यी दुई मार्गहरू (श्रावकयान र प्रत्येक बुद्ध यान) किन देखाउनुभयो त?











हो, निम्न कारणले गर्दा उहाँले यी दुईटा मार्गहरू देखाउनुभयो । मानौँ कुनै भारतीय व्यापारीहरू समुद्र पारी मणिहरू लिन जान्छन् तर बीच यात्रामै कुनै मरुभूमिमा पुग्दा तिनीहरू एकदम थाक्छन् र अब अरू अगाडि बढ्न नसक्ने कुरा सोँच्छन् । त्यसपछि उनीहरू फर्किन लाग्दा, उनीहरूको नाइकेले आफ्नो ऋद्धिबलले उनीहरूको आश्रयको लागि एउटा विशाल नगर बनाइदिन्छ । यसै प्रकारले अल्प मनोबलका प्राणीहरू बुद्धको परम ज्ञानको बारेमा सुनेर भयभीत हुन्छन् र 'बुद्धत्व प्राप्त गर्नु त एकदम कठिन र झन्झटपूर्ण रहेछ, यो मबाट हुन सक्दैन' भन्ने सोंचेर हतोत्साहित हुन्छन् र आफ्नो दुर्बलताको कारण विमुख हुन्छन् । त्यसबेला बुद्धले श्रावक र प्रत्येकबुद्धका मार्गहरू देखाएर तिनीहरूलाई श्रावक र प्रत्येकबुद्धको अवस्थामा विश्राम गराउनुभयो । जस्तो *सद्धर्मपुण्डरीक* मा भनिएको छ :

> सबै (प्रत्येकबुद्ध) र श्रावकहरूले 'मैले निर्वाण प्राप्त गरेँ' भनी सोंच्छन् ।
> उनीहरूलाई भगवान् बुद्ध भन्नुहुन्छ :–
> "यो केवल विश्राम हो, निर्वाण होइन ।"[४]

ती सत्त्वहरू श्रावक तथा प्रत्येकबुद्धहरूका अवस्थामा विश्राम गरिराखेका छन् भन्ने कुरा थाहा पाउनासाथै तथागतले उनीहरूलाई काय, वाक् र चित्तद्वारा बुद्धत्व प्राप्त गर्ने प्रेरणा दिनुहुन्छ । 'चित्तद्वारा' अर्थात भगवान् बुद्धले फिजाउनुभएको रश्मिले मनोमय कायधारी श्रावक तथा प्रत्येक बुद्धहरूलाई स्पर्श गर्छ। स्पर्श गर्नेबित्तिकै उनीहरू अनाश्रव समाधिबाट ब्युझिन्छन् । त्यसपछि भगवान् बुद्धले उनीहरूलाई आफ्नो कायको साक्षात् दर्शन दिनुहुन्छ। 'वाकद्वारा' अर्थात उहाँ भन्नुहुन्छ : "हे भिक्षुहरू ! तिमीहरूले अझै आफ्नो कार्य सम्पन्न गरिसकेका छैनौ, तिमीहरू कृतकृत्य भएका छैनौ, तिमीहरूको निर्वाण वास्तविक निर्वाण होइन । हे भिक्षुहरू ! अब तिमीहरू तथागतकहाँ आउनू, तथागतका कुरा सुन र बुझ ।" यसरी भगवान् बुद्धले उनीहरूलाई प्रेरित गर्नुहुन्छ । यसलाई *सद्धर्मपूण्डरीकसूत्र* मा यसरी देखाइएको छ :











हे भिक्षुहरू ! आज म तिमीहरूलाई भन्छु :
यतिमात्रले अझै निर्वाण प्राप्त भएको छैन ।
सर्वज्ञज्ञान प्राप्त गर्नको लागि तिमीहरूले
परम वीर्य र उदारता उत्पन्न गर्नुपर्छ ।
अनि मात्र तिमीहरूलाई सर्वज्ञ बुद्धको ज्ञान हासिल हुनेछ ।[५]

भगवान् बुद्धको यस्तो प्रेरणाले गर्दा श्रावक तथा प्रत्येक बुद्धहरूले सर्वप्रथम बोधिचित्तोत्पाद गर्छन्, त्यसपछि अपरिमित कल्पहरूसम्म बोधिसत्त्वको चर्या अभ्यास गरी अन्तमा बुद्ध बन्छन् । यही तथ्यलाई *लंकावतारसूत्र* र *सद्धर्मपूण्डरीक सूत्र* मा पनि उल्लेख गरिएको छ:

श्रावकहरूले निर्वाण प्राप्त गर्दैनन् ।
श्रेष्ठ बोधिचर्या पालना गरिसकेपछि उनीहरू बुद्ध नै बन्छन् ।[६]




५. **महायान गोत्र** : महायान वा बोधिसत्त्व गोत्र के हो ?

भेद, स्वरूप, पर्याय,
अन्य भन्दा अधिक बिशेष हुनमा कारण,
आकार र लिङ्ग – यी ६ विषयवस्तुहरूमा
महायानगोत्र संगृहित छ ।

**५.१. भेद :** यहाँ 'भेद' दुइटा छन् : प्रकृतिस्थ र समुदानीत ।

५.२. **स्वरूप :** ती दुइटै भेदका 'स्वरूप' को कुरा गर्दा, प्रकृतिस्थ गोत्र बुद्धधर्म (गुण) उत्पाद गर्नमा समर्थ, अनादिकालिक (अनादि कालको) र धर्मताबाट प्राप्त हुन्छ । हुनत समुदानीत गोत्र पनि बुद्धधर्म (गुण) उत्पाद गर्नमा समर्थ नै छ तर यो पूर्वकृत्य (पहिले गरिएका) कुशलमूलबाट प्राप्त हुन्छ । फलतः यी दुवै गोत्रहरू बुद्धत्वका अधिकारी छन् ।











**५.३. पर्याय :** बीज, धातु र परम स्वभाव 'गोत्र' का पर्यायवाची शब्दहरू हुन् ।

**५.४. विशिष्टता :** 'अन्य गोत्रहरू भन्दा महायान गोत्र अधिक विशिष्ट हुनमा कारण के हो भने श्रावक र प्रत्येकबुद्धका गोत्र हीन (तल्लोस्तरका) छन् किनभने ती गोत्रहरू केवल क्लेशावरणको शोधनले मात्र परिशुद्ध भएका हुन्छन् । महायान गोत्र श्रेष्ठ छ किनभने यो गोत्र क्लेशावरण र ज्ञेयावरण दुवैको शोधनले परिशुद्ध छ । त्यसैले, यो गोत्र अन्य सबै गोत्रहरू भन्दा विशिष्ट र अनुत्तर छ ।

**५.५. आकार :** यस गोत्रको 'आकार' प्रबुद्ध गोत्र र अप्रबुद्ध गोत्र हो । प्रबुद्ध गोत्र त्यस्तो गोत्र हो जसमा फल (बोधि) सिद्ध भएका लक्षणहरू देखिन्छन् । जबकी अप्रबुद्ध गोत्रमा ती लक्षणहरू देंखिदैनन् किनकि फल अझै प्राप्त भएकै हुँदैन । अप्रबुद्ध गोत्र कसरी प्रबुद्ध गोत्रमा परिणत हुन्छ त ?

प्रतिकूल प्रत्ययबाट बर्जित, अनुकूल प्रत्ययले युक्त हुँदाखेरी गोत्र प्रबुद्ध बन्छ । यसको ठीक विपरीत भयो भने गोत्र अप्रबुद्ध हुन्छ ।

प्रतिकूल प्रत्यय चारवटा छन् : आठ अक्षणहरूमा जन्मिनु, प्रमादी (चेतना-शून्य) हुनु, मिथ्या-मार्गमा लाग्नु, दुई आवरणहरूले ढाक्नु ।

अनुकूल प्रत्यय दुइवटा छन्: बाह्य अनुकूल प्रत्यय सद्धर्म देशना हो जुन परप्रत्यय (अर्थात अरूमा निर्भर) हुन्छ । आन्तरिक अनुकूल प्रत्यय योनिशोमनसंस्कार (स्मृतिले युक्त चित्त), कुशलधर्मछन्द (कुशल धर्ममा अभिरुची) इत्यादि हो ।

**५.६. लिङ्ग :** गोत्रको 'लिङ्ग' भन्नाले महायान गोत्रको विशेष चिह्नलाई जनाउछ । जस्तो *दशधर्मकसूत्र* मा भनिएको छ :

जसरी धूवाँले आगो भएको र
हाँसले पानी भएको थाहा हुन्छ,











त्यसरी नै बोधिसत्त्व गोत्र त्यसका चिन्हहरूद्वारा थाहा हुन्छ ।[७]

ती चिह्नहरू यस्ता हुन्छन् । बोधिसत्त्वका काय र वाक प्रतिपक्ष निर-पेक्ष (प्रतिपक्षको सहारा नलिइकनै) स्वभावैले मृदु हुन्छन् र चित्त जालझेल र छलकपटको प्रभावबाट रहित हुन्छ र त्यसमा सबै सत्त्वका लागि स्नेह र आन्तरिक शुद्धता भरिएको हुन्छ । यसरी *दशधर्मकसूत्र* का अनुसार:

जो कठोर र निष्ठुर हुँदैन जो छल र माया रहित हुन्छ
जसमा सबै प्राणीहरूप्रति स्नेह भरिएको हुन्छ,
त्यही नै बोधिसत्त्व हो ।

अर्को शब्दमा, अज्ञातकालदेखि नै बोधिसत्त्वका समस्त कार्य सत्त्वहरू-प्रति करुणाभावद्वारा प्रेरित भइ राखेका छन् । उनले महायान धर्ममा श्रद्धा राख्छन्, दुष्कर चर्याप्रति अति सहिष्णु हुन्छन् र पारमिताकै स्वरूप कुशलमूलहरूको अभ्यास गर्छन् । *महायानसूत्रालंकार* मा यस्तो लेखिएको छ :

सुरूदेखि नै करुणापूर्वक कार्य गर्नु, अधिमुक्ति, क्षान्ति,
शुभकार्यमा रुचि – यी सबै गुणहरू यस गोत्रका चिह्न हुन् ।[८]

यस प्रकार उक्त पाँचवटै गोत्रहरूमध्ये महायान गोत्रको विद्यमानता बुद्धत्व प्राप्तिको निकटतम हेतु हो । श्रावक तथा प्रत्येकबुद्ध गोत्रकहरूले निकै लामो समयपछि मात्र बुद्धत्व प्राप्त गर्छन्, त्यसैले उनीहरूको हेतु दुरस्थ (निकै टाढाको) हुन्छ ।

अनियत गोत्रका प्राणीहरू मध्ये कुनैको हेतु निकटतम् हुन्छ भने कुनै को दूरस्थ हुन्छ । त्यस्तै संसारमा भौंतारिन मै प्रवृत भएका अगोत्रका प्राणीहरूले पनि अन्ततः मात्र बोधि प्राप्त गर्छन् किनकी अगोत्रकहरूमा पनि निकै दूरस्थ हेतु भएकै हुन्छ ।











तसर्थ, सत्त्वहरूलाई संगृहित गर्ने यी पाँच वटा गोत्रहरू रहेकाले सत्त्वहरू तथागत गर्भले युक्त छन् । यस प्रकार उपर्युक्त तीन कारणहरूले सबै प्राणीमा तथागर्भ विद्यमान छ भन्ने तथ्य देखाउँछन् । यसलाई निम्नलिखित उपमाले प्रस्टचाउन खोजिएको छ :

जसरी धाउबाट चाँदिलाई निकाली शुद्ध पारिन्छ, तिललाई पेलेर तेल निकालिन्छ, दुधबाट नौनी निकालिन्छ, त्यसरी नै सबै प्राणीहरूमा बुद्धत्व एक यथार्थ बन्न सक्छ ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
हेतु निर्देश
नामक प्रथम परिच्छेद समाप्त ।












## परिच्छेद २

# दुर्लभ मनुष्य शरीर

यदि सबै सत्त्वहरू तथागतगर्भले युक्त छन् भने के नरक, प्रेत, आदि पाँच गतिका प्राणीहरूमा पनि बुद्धत्व प्राप्त गर्ने सामर्थ्य होला त ? हुँदैन । 'दुर्लभ मनुष्य शरीर' नै यस्तो शरीर हो जो क्षण सम्पदले युक्त छ र जसमा तीन प्रकारका श्रद्धाले युक्त चित्त छ । बुद्धत्व प्राप्तिको लागि आश्रय रूपी यो पुद्‌गलमा शुभ गुणहरू छन् । निम्नलिखित बुँदाहरूमा यसको संक्षिप्त व्याख्या गर्न सकिन्छ ।

निम्न पाँच बुँदाहरू श्रेष्ठ आश्रयसित सम्बन्धित छन् :
क्षण, सम्पद, विश्वास, अभिलाषा र प्रसाद,
यिनमा दुई कायिक र तीन चेतसिक हुन् ।

१. **क्षण** : 'क्षण' को अर्थ आठ अक्षणहरूबाट रहित हुनु हो । ती आठ अक्षणहरूलाई *सद्धर्मस्मृत्युपस्थानसूत्र* मा यसरी देखाइएको छ :

नरक, प्रेत, तिर्यक्, म्लेच्छ, दीर्घायुष देव, मिथ्यादृष्टि
बुद्धको प्रादुर्भाव नहुनु, र मूकता ।
यी आठ अक्षण हुन् ।[1]

यी सबै कसरी अक्षण छन् ? किनकी नरकका प्राणीहरूले सदैव दुःख यातना भोग्नुपर्छ, प्रेतहरूका चित्त सदैव संतप्त रहन्छ र तिर्यकहरू पूर्णरूपले अज्ञानी हुन्छन् । यी तीनै गतिका प्राणीहरूमा ह्रि (लाज) र अपत्रपा (शर्म) हुंदैन र तिनीहरूका चर्या अकुशल नै हुन्छन् । तसर्थ तिनीहरू कुशल धर्मको अभ्यासका लागि योग्य छैनन् ।











'दीर्घायुष देव' यस्ता सत्त्वहरू हुन् जो असंज्ञी (स्मृतिहीन) हुन्छन् ; दीर्घायुष देवका सबै विज्ञानका कार्यहरू बन्द हुने भएकाले तिनीहरूले धर्मलाई हृदयङ्गम गर्न सक्दैनन् । यसले कामधातुका देवहरूलाई पनि जनाउँछ । किनभने मनुष्यको तुलनामा यिनीहरूको आयु एकदम लामो हुन्छ । यसको अर्थ देवलोकले सदा अक्षणलाई नै जनाउँछ किनकी अनित्य सुखमा बांचेका देवताहरूले कुशलमूलको अभ्यास गर्दै गर्दैनन् ।[२]

तसर्थ, अलि दुःख भोल्नु परेता पनि यही मनुष्य जुनीमा मात्र हामीले धर्मको अभ्यासका लागि उपयुक्त गुण पाउँछौं ; अर्को शब्दमा, संसारप्रति उद्विग्नता (वितृष्णा) र सारा सत्त्वहरूप्रति करुणा उत्पन्न हुन्छ । अहंकार निर्मूल भई पापकर्मबाट विरक्ति र कुशल कर्ममा अभिरुचि यही जूनीमा जाग्छ । *बोधिचर्यावतार* मा यसरी लेखिएको छ :

> संवेगले अभिमान नष्ट हुन्छ ; संसारका प्राणीहरूप्रति करुणा जाग्छ ;
> पापबाट भयभीत भई कुशलमा रुचि जाग्छ ;
> यही दुःखको अर्को गुण हो ।
> त्यसैले यी चार गतिहरूलाई अक्षण भनिएको हो ।[३]

तैपनि, यहाँ उल्लेखनीय कुरा यो छ कि मनुष्य नै भएर पनि म्लेछ जाति (Border Tribes) का प्राणीहरूलाई अयोग्य पात्र मानिन्छ किनभने यिनीहरूमा सत्पुरुष भेटाउन गाऱ्हो हुन्छ ।

मिथ्यादृष्टिले युक्त सत्त्व पनि उत्तिकै अयोग्य छन् किनभने यिनीहरूले कुशल कर्म नै स्वर्गको क्षणिक सुख (अभ्यूदय) र मुक्ति (निःश्रेयेश) को कारक हो भन्ने कुरो जान्दैनन् ।

बुद्ध नभएको लोकमा जन्मिएका सत्त्वहरू पनि अयोग्य नै छन् किनभने उनीहरूलाई के गर्नु हुन्छ र के गर्नु हुँदैन, के कुशल, के अकुशल इत्यादि सिकाउने कोही हुन्न ।

त्यसरी नै मूक सत्त्वहरू पनि अयोग्य छन् किनकी तिनीहरू स्वयंले के लाई कुशल र के लाई अकुशल भनिन्छ भन्ने कुरा थाहा पाउन सक्दैनन् ।











अतः आठ अक्षणहरूबाट रहित हुनु नै अत्युत्तम क्षणसम्पद हो ।

२. **सम्पद्** : सम्पद्हरू दशवटा हुन्छन् । दश सम्पद्हरूमध्ये पाँच स्व-सम्पद् हुन् भने पाँच पर सम्पद् हुन् ।

पाँच स्व-सम्पद्हरू यस प्रकार छन् :

> मध्यदेशमा मनुष्य भएर जन्मिनु, इन्द्रियहरूको पूर्णता,
> विपरित कर्म (पाप) बाट वर्जित हुनु र धर्मप्रति श्रद्धा हुनु ।

'मनुष्य हुनु' को अर्थ सामान्य मनुष्यको जस्तै प्रकृति भई पुरुष अथवा स्त्री इन्द्रियले युक्त हुनु हो । 'मध्यदेशमा जन्मिनु' को तात्पर्य यस्तो देशमा जन्मिनु हो जहाँ हामीले पुण्यवान् सज्जनहरूसित सत्संगत गर्न सक्छौँ । 'इन्द्रियहरूको पूर्णता' मूर्ख र मूक नभई कुशल धर्म अनुष्ठान गर्न सक्षम हुनु हो । 'धर्मप्रति श्रद्धा हुनु' को तात्पर्य बुद्धद्वारा उपदिष्ट विनय आदि सबै कुशल धर्महरूका आधाररूपी सद्धर्मप्रति श्रद्धा हुनु हो । 'अविपरित कर्म' को तात्पर्य यस जन्ममा आनन्तर्य कर्म (पञ्च महापाप) नगर्नु हो ।

पाँच पर-सम्पदहरू यस प्रकार छन् : लोकमा बुद्ध उत्पन्न हुनु ; सद्धर्म देशना ; उपदिष्ट धर्म अक्षुण्णरूपले कायम हुनु ; त्यस धर्मलाई अनुशरण गर्नु ; अरू प्राणीप्रति मैत्री करुणा राख्नु ।

अतः दश सम्पदहरू जसमध्ये पांच स्वसम्पद र पांच परसम्पद अत्यन्तै उत्तम छन् ।

दुर्लभ मनुष्य शरीर यी दुवै क्षण सम्पदहरूले युक्त छन् । मनुष्य शरीर चिन्तामणि रत्न सरह दुर्लभ र उपयोगी भएकोले यसलाई दुर्लभ रत्न भनिन्छ । *बोधिसत्त्वपिटक* मा यस प्रकार उल्लेखित छः

> मनुष्यत्व प्राप्त गर्नु कठीन छ
> सद्धर्म प्राप्त गर्नु कठीन छ
> र बुद्धको उत्पत्ति पनि कठीन नै छ ।[४]











यस्तै प्रकारले *महाकरुणापुण्डरीकसूत्र* मा भनिएको छ :

> मनुष्यको जन्म दुर्लभ छ, क्षण सम्पद दुर्लभ छ। बुद्धको लोकमा उत्पत्ति पनि दुर्लभ नै छ। कुशल धर्ममा अभिरुचि पनि दुर्लभ नै छ र सम्यक् प्रणिधान पनि दुर्लभ छ।

*गण्डव्यूहसूत्र* मा पनि भनिएको छ :

> अष्टाक्षणबाट मुक्त हुनु दुर्लभ (कठीन) छ ; मनुष्य जन्म दुर्लभ छ, विशुद्ध क्षण सम्पद दुर्लभ छ ; बुद्धको लोकमा उत्पत्ति दुर्लभ छ ; इन्द्रियहरूको परिपूर्णता दुर्लभ छ ; बुद्धधर्मको श्रवण दुर्लभ छ ; सज्जनहरूसितको सत्संगत दुर्लभ छ ; सच्चा कल्याणमित्र दुर्लभ छन् ; सही उपदेश दुर्लभ छ, सम्यकाजीविका दुर्लभ छ ; मनुष्य लोकमा धर्म र अनुधर्म अनुष्ठान दुर्लभ छ।[५]




*बोधिचर्यावतार* मा भनिएको छः

> क्षण सम्पद अत्यन्त दुर्लभ छन्।[६]

यो दुर्लभ मनुष्य जीवन प्राप्त गर्न कति गाऱ्हो छ, कस्ता सत्त्वहरूका लागि यो मनुष्य जीवन दुर्लभ छ र किन दुर्लभ छ ? यी सबैको उत्तर हामी विभिन्न उपमाहरूबाट पाउन सक्छौं । क्षण सम्पदको दुर्लभता दर्शाउने गर्ने एउटा उपमा *बोधिचर्यावतार* मा यसरी दिइएको छ।

> त्यसैले भगवान् बुद्धले भन्नुभएको छ :
> महासमुद्रमा फालिएको जुआको प्वालमा कुनै कछुवाले
> आफ्नो घाँटी छिराउनु जति कठिन छ
> मनुष्य जन्म प्राप्त गर्नु त्यति नै कठिन छ।[७]











निम्न उपमा *सम्यगगाम* बाट उद्धृत गरिएको हो :

मानौँ यस सम्पूर्ण महापृथ्वी पानी नै पानीले भरिएको छ, त्यसमा एक कानो कछुवा पनि रहन्छ । कुनै मानिसले त्यो समुद्रमा एउटा जुआ फाल्छ जसलाई हावाले यता उता चारै दिशातिर बगाएर लान्छ । हजारौँ वर्षमा एकचोटि माथि सतहमा निस्कने त्यो कानो कछुवाले त्यस जुआको प्वालमा आफ्नो टाउको छिराउने कुरा जति दु:साध्य (हुनै नसक्ने) हो मनुष्य जीवन प्राप्त गर्नु त्यो भन्दा पनि दु:साध्य र कठिन छ ।

नरक, तिर्यक र प्रेतलोकमा जन्मिने 'सत्त्व' हरूका लागि पनि पुद्-गलरूपी मनुष्य जीवन प्राप्त गर्न अति कठिन छ त्यसैले यहाँ 'पुद्गल' शब्दको प्रयोग गरिएको छ ।

यो मनुष्य जुनी प्राप्त गर्न किन कठिन छ भन्दाखेरी क्षण सम्पदले परिपूर्ण यो शरीर पुण्य सम्भार गरेपछि मात्र प्राप्त भइन्छ । तीन दुर्गतिमा जन्मिने सत्त्वहरू कसरी कुशल कर्मद्वारा पुण्य सम्भार गर्ने भन्ने कुरा थाहा नपाएर सदैव अकुशल कर्ममा नै प्रवृत हुन्छन् । त्यसैले तीन वटा दुर्गतिहरूमा जन्मेर पनि यदि कसैले एकदम कम मात्र पाप गरी कुशल कर्मद्वारा पुण्यसंभार गर्दछ भने मात्र उसले मनुष्य जुनी प्राप्त गर्न सक्छ ।

यसको उपयोगिता *बोधिचर्यावतार* मा यसरी देखाइएको छ:

पुरुषार्थ साधन मनुष्य जुनीमा हुने भएकोले ।[८]

तिब्बती शब्द 'क्येबु' लाई संस्कृतमा पुरुष भनिन्छ । पुरुष शब्दको प्रयोग बल वा सामर्थ्यको अर्थमा गरिन्छ । क्षण र सम्पदले युक्त मानव देहमा अभ्युदय (सद्गति) र नि:श्रेयस (निर्वाण) प्राप्त गर्ने बल वा सामर्थ्य रहन्छ । त्यसैले हामी त्यसलाई 'पुरुष' भन्छौँ । यस बाहेक, यो बल अधिमात्र, मध्य र मृदु गरी तीन थरीका भएका हुँदा, पुरुष पनि उत्तम, मध्यम र अधम गरी तीनै थरीका हुन्छन् । यसलाई *बोधिपथप्रदीप* मा यसरी बताइएको छ :











पुरुष तीन प्रकारका छन् भनी बुझ्नुपर्छ :
अधम, मध्यम र उत्तम[९]

तीन दुर्गतिहरूमा पतन नहुने र देव वा मनुष्य गति प्राप्त गर्ने सामर्थ्य अधम पुरुषमा हुन्छ । त्यसैले भनिएको छ :

जसले कुनै पनि उपायद्वारा केवल
आफ्नो लागि मात्र सुख-सुविधा प्राप्त गर्ने
कामना गर्छ त्यसलाई अधम पुरुष भनिन्छ ।[१०]

संसारबाट मुक्त भइसकेपछि मध्यम पुरुषले सुख र शान्तिको अवस्था प्राप्त गर्न सक्छ ।

जो भवसुखबाट विमुख रहन्छ,
पाप कर्मबाट विरक्त हुन्छ र
जसले आफ्नो लागि मात्र निर्वाण चाहन्छ
त्यसलाई मध्यम पुरुष भनिन्छ ।[११]

उत्तम पुरुषले बुद्धत्व प्राप्त गरेर सारा सत्त्वहरूको हितार्थ चर्या (कार्य) गर्न सक्छन् ।

जसले अरूका सबै दु:खहरूलाई आफ्नै चित्त
सन्ततिले अनुभव गर्ने दु:ख समान् बुझेका छन्
त्यसैले सबैका दु:ख समूल नष्ट गर्न चाहन्छन्
त्यसलाई नै उत्तम पुरुष भनिन्छ ।[१२]

मानवदेहको उपयोगिताको सम्बन्धमा आचार्य चन्द्रगोमिन ले यस्तो भन्नुभएको छ :











> यो मानव देह जसको प्राप्तिबाट भवसागरको अन्त हुन्छ, जसले अनुत्तर बोधिका बीजरूपी कुशलमूल रोप्न सहायता गर्छ, जसका गुणहरू चिन्तामणि रत्नका गुणहरू भन्दा पनि ज्यादा छन्, त्यस्तो मानव देह कसले खेर फाल्न चाहन्छ ? उच्च मनोबलले युक्त मनुष्यद्वारा मात्र प्राप्त गर्न सकिने यस मार्गलाई देव र नागले पनि अनुशरण गर्न सक्दैनन् न असुर, गरुड, विद्याधर, किन्नर र उरगहरूले अनुशरण गर्न सक्छन् ।

क्षण सम्पदले युक्त यस मानव देह अकुशल धर्म निवारण गर्न र कुशल धर्म सम्पादन गर्नमा समर्थ छ । भवसागरलाई पार गराउनमा समर्थ छ, बोधिपथगामी मार्ग अनुशरण गर्न समर्थ छ र संबुद्धत्व प्राप्त गर्नमा समर्थ छ । त्यसैले यो मानवदेह देव, नाग आदि अन्य गतिहरूका देह भन्दा अधिक विशिष्ट र चिन्तामणि रत्नभन्दा पनि उत्कृष्ट छ । अत्यन्तै दुर्लभ र अत्यन्तै उपयोगी भएको हुँदा यसलाई 'दुर्लभ रत्न' भनिन्छ ।

मनुष्य शरीर दुर्लभ र अत्यन्तै उपयोगी भए तापनि सजिलैसित नष्ट पनि हुन्छ । किनकी मृत्युका कारणहरू धेरै छन् एक क्षण पनि नपर्खी यो भविष्य तर्फ बढ्छ । अत, *बोधिचर्यावतार* मा भनिएको छ :

> 'म आज त मर्दिन नि' भन्ने सोँची
> सुखशयलपूर्वक रहनु बुद्धिमतापूर्ण कुरा होइन ।
> त्यो समय त अवश्य आउँछ आउँछ
> जब म यस संसारमा रहनेछैन ।
> त्यस्तो सोँच्नुपर्छ ।[१३]

यस प्रकार यस क्षण सम्पदले युक्त मानव शरीर प्राप्त गर्न कठिन छ, यसको नाश सजिलैसित हुन्छ, र यो अत्यन्तै उपयोगी छ। अतः यस शरीर लाई एउटा डुङ्गाको रूपमा लिएर यसको माध्यमले भवसागर तर्ने प्रयत्न गर्नुपर्छ । जस्तो भनिएको छ :











मानवदेहरूपी डुङ्गाको सहाराले
दुःखरूपी महानदी तर ।
हे मुर्ख, यो सुतेर बिताउने समय होइन
किनकी यो डुङ्गा फेरी पाउन कठिन हुनेछ ।[१४]

यस शरीरलाई घोडा ठानेर त्यसमा चढी यस दुःखमयी संसारबाट उम्कनुपर्छ । जस्तो उल्लेखित छ :

अश्वसमान मानवदेह चढेर यस दुःखमयी संसारबाट पलायन हुनू ।

अथवा, यस शरीरलाई दाशको रूपमा लिएर यसलाई कुशल कार्यमा तल्लीन गराउनुपर्छ । जस्तो उल्लेखित छ :

हामी मानिसहरूको यो शरीर दाशको रूपमा काम गराउनको
लागि हो ।[१५]

मानवदेहलाई उपर्युक्त प्रकारले उपयोग गर्नको लागि श्रद्धा हुनु अति जरुरी छ । श्रद्धा बिना हाम्रो सदा परिवर्तनशील जीवन प्रवाहमा कुशल गुणहरू (धर्महरु) को विकाश हुन सक्दैन । यसलाई *दशधर्मकसूत्र* मा यसरी पुष्टि गरिएको छ :

श्रद्धा बिना कुनैपनि व्यक्तिमा कुशल धर्म अंकुरित हुँदैन
जसरी डढेको बीउबाट हरियो विरुवा पलाएर आउंदैन ।[१६]

यही कुरा *अवतंसकसूत्र* मा पनि भनिएको छ :

अल्पश्रद्धावान सांसारिक व्यक्तिहरूलाई
बुद्धको बोधिको ज्ञान हुन सक्दैन ।











तसर्थ बोधि प्राप्तिको लागि श्रद्धोत्पाद गरिनुपर्छ जस्तो *ललितविस्तरसूत्र* मा भनिएको छ :

हे आनन्द 'श्रद्धाले युक्त हुनू । यही तथागतको आग्रह हो ।'

श्रद्धा तीन प्रकारको हुन्छ : संप्रत्यय, अभिलाष र प्रसाद ।

१. **संप्रत्यय श्रद्धा** : 'संप्रत्यय श्रद्धा' कर्म फल, दुःख सत्य र समुदय सत्यबीचको अपरिहार्य सम्बन्धबाट पैदा हुन्छ । यो श्रद्धा कुशल कर्मको फलस्वरूप कामलोकको सुख, अकुशल कर्मको फलस्वरूप कामलोकको दुःख प्राप्त हुन्छ भने आनिञ्ज्य कर्मको फलस्वरूप उर्ध्व धातु (रूपधातु र अरूपधातु) सित संबद्ध सुख प्राप्त हुन्छ भन्ने एउटा दृढ विश्वास हो । 'संप्रत्यय श्रद्धा' समुदय सत्यरूपी कर्म र क्लेशको समुदाचार (क्रियाकलाप) बाट दुःख सत्यरूपी रूप आदि सास्रव पञ्च स्कन्धहरू उत्पन्न हुन्छन् भन्ने दृढ विश्वास पनि हो ।[१७]

२. **अभिलाष श्रद्धा** : 'अभिलाष श्रद्धा' को अर्थ अनुत्तर बोधिलाई विशेषरूपले महत्त्वपूर्ण ठानी त्यसलाई प्राप्त गर्ने इच्छाले भक्तिपूर्वक मार्गको अभ्यास गर्नु हो ।

३. **प्रसाद श्रद्धा** : 'प्रसाद श्रद्धा' त्रिशरणगमनबाट उत्पन्न हुन्छ । मार्गदर्शक-रूपी बुद्धरत्न, मार्गरूपी धर्मरत्न र मार्गको अभ्यासमा सहायकरूपी संघ-रत्नप्रति चित्तको अधिमुक्ति, भक्तिभाव र प्रसन्नता नै प्रसाद श्रद्धा हो । अतः *अभिधर्म* अनुसार :

श्रद्धा के हो ?
श्रद्धा कर्म फल, र त्रिरत्नप्रति विश्वास हो ।
यो अभिलाष (मन पर्नु) तथा चित्तको प्रसन्नता हो ।[१८]











*रत्नावली* मा पनि यसको उल्लेख छः

छन्द, द्वेष, भय, मोह को कारणले जसले धर्मलाई त्याग्दैन
त्यसलाई श्रद्धावान भन्नुपर्छ ।
ऊ निःश्रेयसको लागि उत्तम पात्र हो ।[१९]

यहाँ 'छन्दको कारणले धर्मलाई नत्याग्नु' को अर्थ रागको वशमा परेर धर्मलाई नत्याग्नु हो । उदाहरणको लागि, कसैले प्रलोभन दिएर भन्छ, "म तिमीलाई धनधान्य, स्त्री, राज्य आदि दिन्छु, तर तिमीले धर्मलाई त्याग्नुपर्छ", यस्तो प्रलोभन दिइँदापनि धर्मको त्याग नगर्नु हो ।

'द्वेषको कारणले धर्मलाई नत्याग्नु' को तात्पर्य प्रतिघ (क्रोध) को कारणले धर्मलाई नत्याग्नु हो । उदाहरणको लागि कसैले मलाई धेरै अहित वा हानि गरेको छ र ऊसित बदला लिने मौका मसँग छ । तैपनि मैले धर्मलाई त्यागेर ऊसित बदला लिन्न ।

'भयको कारणले धर्मलाई नत्याग्नु' को अर्थ भयभीत भएर धर्मको त्याग नगर्नु हो । उदाहरणको लागि कसैले यस्तो धम्की दिन्छ, 'यदि तिमीले धर्मलाई त्यागेनौ भने म तीन सय योद्धाहरूलाई दिनहुँ तिम्रो शरीरका पाँच पाँच टुक्रा मासु काट्न अऱ्हाउँछु । यस्तो अवस्थामा पनि तिमी धर्मलाई त्याग्दैनौ ।

'मोहको कारणले धर्मलाई नत्याग्नु' को अर्थ अज्ञानताको कारणले धर्मको त्याग नगर्नु हो । उदाहरणको लागि कसैले भन्छ, "कर्म सत्य हो इन, फल सत्य होइन न त त्रिरत्न नै सत्य हो । धर्म गरेर के पाउँछौ तिमीले । त्यागिदेऊ यस धर्मलाई ।" तैपनि तिमीले धर्मलाई त्याग्दैनौ ।

अतः जसले उपर्युक्त चार स्थितिहरूमा पनि धर्मलाई त्याग्दैन त्यो नै श्रद्धावान व्यक्ति हो । त्यही व्यक्ति निःश्रेयस (मोक्ष) प्राप्ति को लागि उत्तम पात्र पनि बन्छ ।

जब कुनै व्यक्तिमा यी तीन प्रकारका श्रद्धा हुन्छन्, त्यसवेला उसलाई असीम लाभहरू प्राप्त हुन्छन् । उसमा उत्तम पुरुषको चित्त उत्पन्न











हुन्छ, उसका अक्षणहरू निवृत (समाप्त) हुन्छन्, उसका इन्द्रियहरू तीक्ष्ण र तेजिला हुन्छन्, ऊबाट शील उल्लंघन हुँदैन, उसका क्लेशहरू नष्ट हुन्छन्, उसलाई मारले छुन सक्दैन, उसलाई मोक्ष मार्ग प्राप्त हुन्छ, विपुल पुण्यसम्भार हुन्छ, अनेक बुद्धहरूको दर्शन प्राप्त भएर उहाँहरूद्वारा अधिष्ठित हुन्छ र उसलाई अनेक अचिन्त्य गुणहरू प्राप्त हुन्छन् । तसर्थ *रत्नोल्कानामधारणी* मा पनि भनिएको छ :

> बुद्ध र बुद्धधर्ममा श्रद्धा राख्ने,
> बोधिसत्त्व चर्यामा श्रद्धा राख्ने,
> अनुत्तर बोधिमा श्रद्धा राख्ने व्यक्तिमा
> महापुरुषहरूको चित्त उत्पन्न हुन्छ ।

अर्को कुरा, कसैमा श्रद्धा छ भने, भगवान् बुद्ध पनि उसको नजीक आएर उसलाई धर्मदेशना गर्नुहुन्छ । जस्तो *बोधिसत्त्वपिटक* मा भनिएको छः

> यस्तो श्रद्धाले युक्त बोधिसत्त्वलाई भगवान् बुद्धले बुद्धधर्मको पात्र ठानेर आफै उसको नजीक गएर उसलाई बोधिसत्त्वमार्गको सम्यक् देशना गर्नुहुन्छ ।

यस प्रकार, क्षण सम्पदले युक्त यो दुर्लभ मनुष्य शरीर र तीन प्रकार-का श्रद्धाले युक्त त्यसको चित्त नै अनुत्तर बोधिको लागि आश्रयरूपी पुद्-गल हो ।

**सद्धर्मचिन्तामणि–मुक्तिरत्नालंकार** अन्तर्गत
**आश्रय निर्देश**
नामक द्वितीय परिच्छेद समाप्त









# परिच्छेद ३
# कल्याणमित्र संश्रय

आश्रयरूपी दुर्लभ मनुष्यशरीर भएर पनि जबसम्म हामीलाई प्रत्ययरूपी कल्याणमित्रहरूको प्रेरणा प्राप्त हुंदैन तबसम्म पूर्व समयमा गरेका दुष्कर्म अभ्यासद्वारा संवर्धित प्रबल वासनाले गर्दा हामीलाई बोधिपथमा लाग्न एकदम कठीन हुन्छ। अतः कल्याणमित्रको आश्रय लिनु अत्यन्तै आवश्यक छ। कल्याणमित्र संश्रयसित सम्बन्धित कुराहरू निम्न पाँच शीर्षकहरूभित्र पाइनेछन् :

उपपत्ति, भेद, प्रत्येक भेदको लक्षण,
संश्रयको उपाय, एवं अनुशंसा।




१. **उपपत्ति** : कल्याणमित्र संश्रय का तीनवटा उपपत्तिहरू (कारणहरू) छन्। ती हुन् :

१.१. आगम,
१.२. युक्ति र
१.३. दृष्टान्त (उपमा)।

१.१. **आगम** : 'आगम' अन्तर्गतका कुराहरू *प्रज्ञापारमितासमुच्चयगाथा* मा पाइन्छ :

गुरुभक्त असल शिष्यहरू सदा
विद्वान गुरुको सम्पर्कमा रहनुपर्छ,
किनभने उनीबाट विद्वताका गुणहरू प्राप्त हुन्छन्।[1]











*आर्य अष्टसाहस्रिका प्रज्ञापारमिता* मा पनि भनिएको छः

> अनुत्तर सम्यक् सम्बोधि प्राप्त गर्न
> इच्छुक बोधिसत्त्व महासत्त्वले सर्वप्रथम
> कल्याणमित्रसित संश्रय (पर्युपासन) गर्नुपर्छ,
> अनि उनको सेवा र प्रशंसा गर्नुपर्छ ।

१.२. **युक्ति** : सर्वज्ञत्व प्राप्त गर्ने क्षमताले युक्त पुद्‌गल (व्यक्ति) को गुण तिमीमा छ । अतः तिमीले कल्याणमित्रको आश्रय लिनुपर्छ । किनभने तिमी स्वयं पुण्य संभार र आवरणहरूको प्रहाण कसरी गर्ने भन्ने बारे अनभिज्ञ छौ । यो निर्विवाद तथ्य हो । सामान्यतया त्रिकालबुद्ध (अर्थात भूत, वर्तमान र भविष्यका बुद्ध) हरू साधर्म्य (धर्मानुकूल) दृष्टान्त हुन् । जबकी प्रत्येक बुद्धहरू वैधर्म्य (विपरित) दृष्टान्त हुन् ।[२] अतः पूर्ण बुद्धत्व प्राप्त गर्न इच्छुक हामी जस्ता सत्त्वहरूका लागि पुण्य एवं ज्ञान संभार गर्न आवश्यक हुन्छ । संभार संचय गर्ने उपाय कल्याणमित्रद्वारा मात्र साध्य (सम्भव) हुनसक्छ । बुद्धत्व प्राप्तिको लागि क्लेश तथा ज्ञेय आवरणहरूलाई समूल नष्ट गर्नु पनि उत्तिकै आवश्यक छ । ती आवरणहरूबाट छुटकारा पनि कल्याणमित्रबाट मात्र संभव छ ।

१.३. **दृष्टान्त** : 'दृष्टान्त (उपमा)' यस्तो छ : अपरिचित ठाउँमा जाँदाखेरी कल्याणमित्र एक मार्गदर्शक समान हो, भयावह प्रदेशमा जाँदाखेरी कल्याणमित्र एक संरक्षक समान हो, र महा नदी तर्दाखेरी कल्याणमित्र एक नाविक समान हो ।

प्रथम दृष्टान्तको सम्बन्धमा, जब हामी मार्गदर्शकबिना कुनै अपरिचित ठाउँमा यात्रा गर्छौं, त्यसबेला बाटो बिराउने, हराउने डर हामीमा रहन्छ । तर यदि एकजना मार्गदर्शक साथमा लिएर गयौं भने त्यस्तो डर हुँदैन र एउटा पनि व्यर्थ पाइला नचाली हामी आफ्नो गन्तव्यसम्म सकुशल पुग्न सक्छौं । त्यस्तै प्रकारले बोधिपथमा आरुढ भई सम्यकसम्बुद्ध











भूमिसम्म पुग्नको लागि हामीलाई मार्गदर्शकको रूपमा कुनै महायानिक कल्याणमित्रको खाँचो पर्दछ । अन्यथा तीर्थिकहरूका मार्गमा फस्ने, बाटो बिराएर श्रावक मार्ग तथा प्रत्येकबुद्ध मार्गमा पुग्ने आशंका रहनेछ । हाम्रो मार्गदर्शकको रूपमा एकजना कल्याणमित्र भइदिएको खण्डमा त्यस्तो कुनै डर वा आशंका रहन्न, र हामी सर्वज्ञ नगरसम्म सकुशल पुग्छौं । यसलाई *श्रीसंभवविमोक्ष* मा बताइएको छ :

> कल्याणमित्रहरू मार्गदर्शक समान हुन् किनकी उनीहरूले नै हामीलाई पारमिताको मार्गमा स्थापित गराइदिन्छन् ।

दोश्रो दृष्टान्तमा, भयावह प्रदेश (ठाउँ) चोर, डाँकू, र अरू हिंसक जनावरहरूका आतंकले ग्रस्त हुन्छ । कुनै संरक्षक बिना हामी त्यहाँ गयौं भने आफ्नो शरीर, जीवन जोखिममा पर्ने वा हाम्रो धनसम्पति लुटिने डर हुन्छ ; तर हामीसँग एक बलवान संरक्षक साथमा छ भने आफ्नो गन्तव्यसम्म बिना कुनै नोक्सानी पुग्न सक्छौं । त्यस्तै प्रकारले बोधिपथमा प्रवेश गरी पुण्य एवं ज्ञान संभारहरू संचय गरेर सर्वज्ञ नगर तर्फ प्रस्थान गर्ने समयमा यदि हाम्रो साथमा एक संरक्षकरूपी कल्याणमित्र रहेनन् भने आन्तरिक तत्त्वहरू जस्तै विकल्प, क्लेश तथा वाह्य तत्त्वहरू जस्तै असुर, मिथ्या पथप्रदर्शक र अरू छली मानिसहरूद्वारा हाम्रो पुण्य संभार नष्ट भइने डर हुन्छ, र सुगतिमा प्राप्त भएको हाम्रो यो प्राण समेत छिनिने संभावना भइरहने हुन्छ । जस्तो बताइएको छ :

> क्लेशरूपी डाँकूहरूको दल
> उचित अवसर वा दाउको पर्खाइमा रहन्छ ।
> मौका पाउदै मानिसले प्राप्त गरेका
> कुशल कर्महरू सबै छिनेर लान्छन्
> उसको सुगतिमा पाएको
> प्राण समेत हरेर लान्छन् ।[३]











संरक्षकको रूपमा कल्याणमित्र हाम्रो साथमा भएमा, हाम्रा कुशल धनको अपहरण हुँदैन, हाम्रो सुगतिमा प्राप्त भएको प्राण हामीबाट छिनिदैन र हामी सकुशल सर्वज्ञ नगरसम्म पुग्छौं । यसलाई *श्रीसंभव विमोक्ष* मा यसरी पुष्टचाइएको छ :

> बोधिसत्त्वका सबै पुण्यहरू कल्याणमित्रद्वारा संरक्षित हुन्छन् ।[४]

र *उपासिकाचलाविमोक्ष* मा पनि उल्लेखित छ :

> कल्याणमित्र एक संरक्षक समान हुन् किनभने हामी यिनकै संरक्षणमा सर्वज्ञ नगरसम्म पुग्छौं ।

अन्तमा, तेश्रो दृष्टान्त अनुसार, कुनै व्यक्तिले नाविक नै नभएको डुङ्गा चढेर महानदी तर्न खोज्यो भने, ऊ या त नदी मै डुब्छ या त उसलाई नदीप्रवाहले बगाएर लान्छ, अर्को किनारसम्म ऊ पुग्न सक्दैन । तर एउटा नाविक पनि हामीसंग भएको खण्डमा हामी उसको प्रयासबाट सकुशल अर्को किनारामा पाइला टेक्न सफल हुन्छौं । त्यस्तै प्रकारले, भव सागर तर्दा हाम्रो साथमा नाविकको रूपमा कल्याणमित्र छैन भने सद्धर्मरूपी डुङ्गा नै चढे पनि हामी यही संसार वा भवसागरमा डुब्नेछौं, वा यसैको प्रवाहले हामीलाई बगाएर लानेछ । जस्तो कथन पनि छ :

> जसरी नाविक नभएको डुङ्गाले यात्रीलाई नदी पार गराएर अर्को किनारासम्म लान सक्दैन त्यसरी नै सर्वगुण सम्पन्न भए पनि गुरु बिना कुनैपनि व्यक्ति भवको अन्तसम्म पुग्न सक्दैन ।

तसर्थ, यदि नाविक समान कुनै कल्याणमित्रको आश्रय लियौं भने हामी भवसागर तरेर अर्को किनारा अर्थात निर्वाणसम्म पुग्छौं । जस्तो *गण्डव्यूहसूत्र* मा बताइएको छ : “संसाररूपी महानदी पार गराउने हुनाले











कल्याणमित्र नाविक समान हुन् ।" अतः मार्गदर्शक, संरक्षक र नाविकरूपी कल्याणमित्रको आश्रय लिनुपर्छ ।

२. **भेद** : कल्याणमित्र चार प्रकारका छन् : (क) पृथग्जन कल्याणमित्र, (ख) महाभूमिस्थ बोधिसत्त्व कल्याणमित्र, (ग) निर्माणकायिक बुद्ध कल्याणमित्र र (घ) संभोगकायिक (बुद्ध) कल्याणमित्र । यी चारै प्रकार हाम्रै आध्यात्मिक अवस्थाहरूसित सम्बद्ध छन् ।

आदिकर्मिक (सुरुसुरुको) अवस्थामा हाम्रो संश्रय (सम्पर्क) बुद्ध वा महाभूमिस्थ बोधिसत्त्वहरूसित हुन सक्दैन, त्यसैले त्यसबेला पृथग्जनहरूलाई नै कल्याणमित्रको रूपमा मानी आश्रय लिनुपर्छ । हाम्रा कर्म आवरणहरू परिशुद्ध भइसकेपछि हामीले महाभूमिमा रहेका बोधिसत्त्वहरूलाई पनि भेट्न सक्छौँ । महासंभारमार्ग भन्दा माथि उँभो लागिसकेपछि हामीले निर्माणकायिक कल्याणमित्रलाई देख्छौँ । अन्ततोगत्वा, महाभूमिमा पुग्नासाथ हामीले सम्भोगकायिक कल्याणमित्रहरूलाई पनि भेट्न सक्छौँ ।




यदि कसैले यी चार कल्याणमित्रहरूमध्ये कसको कृपा बढी रहन्छ भनेर प्रश्न गर्‍यो भने त्यसको जवाफ हो : प्रारम्भिक अवस्थामा हामी अझै कर्म र क्लेशको अन्धकारमय गृहमा थुनिएका हुन्छौँ, त्यसैले हामीले महाभूमिस्थ कल्याणमित्रको मुख सम्म पनि देख्न सक्दैनौँ । त्यसकारण, त्यसबेला, हामीले कुनै त्यस्तो पृथग्जन कल्याणमित्र नै खोज्नु पर्ने हुन्छ जसको दीप समानको धर्म उपदेशलाई अनुशरण गरेर हामी क्रमशः उच्च भूमिका कल्याणमित्रहरूसित संगत गर्दै जान सक्षम हुन्छौँ । तसर्थ सबभन्दा बढी कृपा त पृथग्जन कल्याणमित्र कै रहन्छ ।

३. **प्रत्येक भेदका लक्षण** : यी चार प्रकारका कल्याणमित्रहरूका लक्षण हामी यसरी व्याख्या गर्न सक्छौँ ।

३.१. **सम्भोगकायिक तथा निर्माणकायिक कल्याणमित्र** : दुई प्रकारका आवरण (क्लेशावरण र ज्ञेयावरण) हरूलाई प्रहाण गरिसकेकाले वा हटाइ-











सकेकाले बुद्ध प्रहाण सम्पन्न छन् र दुई प्रकारका ज्ञान[४] ले युक्त भएकाले उनी ज्ञानसम्पन्न पनि छन् ।

३.२. **महाभूमिस्थ बोधिसत्व कल्याणमित्र** : महाभूमिस्थ बोधिसत्त्व कल्याण-मित्रहरू पनि प्रथम भूमि देखि लिएर दशौं भूमिसम्म का प्रहाण एवं ज्ञानले युक्त हुन्छन् ।

विशेषरूपले आठौं भूमि भन्दा माथिका बोधिसत्त्वहरूसंग दश यस्ता बलहरू (वशिताहरु) हुन्छन् जसद्वारा उनीहरू अरू प्राणीहरूको उद्धार गर्न सक्छन् । ती दश बल वा वशिताहरू हुन्: (क) आयुवशिता, (ख) चित्तवशिता, (ग) उपकरणवशिता, (घ) कर्मवशिता, (ङ) उत्पत्तिवशिता, (च) अधिमुक्ति वशिता, (छ) प्रणिधानवशिता, (ज) ऋद्धिवशिता, (झ) ज्ञानवशिता, एवं (ञ) धर्मवशिता ।

'आयुवशिता' को अर्थ आफूले चाहेजति समयसम्म बाँचिरहनसक्नु हो ।

'चित्तवशिता' को अर्थ आफ्नो इच्छा अनुसार समाधिमा रहन सक्नु हो ।

'उपकरणवशिता' प्राणीहरू उपर अपरिमित उपकरण रत्नहरूको वृष्टि गराउन सक्नु हो ।

'कर्मवशिता' को अर्थ धातु, गति, योनि तथा अन्य कुनै अवस्थामा जन्मेर पनि समाधिबाट च्यूत नहुने क्षमता हो ।

'उत्पत्तिवशिता' को अर्थ समाधिबाट च्यूत नभइकन कामधातुमा जन्मिनु हो ; र कामधातुमा जन्मिएपनि त्यसका दोषहरूबाट लिप्त नहुनु हो ।

'अधिमुक्ति वशिता' को अर्थ केवल मनले चिताउनासाथै तुरुन्तै जल-लाई पृथ्वीमा रूपान्तरित गर्ने र अरू त्यस्तै प्रकारका श्रृद्धि चमत्कार गरेर देखाउने क्षमता हो ।

'प्रणिधान वशिता' को अर्थ आफ्नो र अरूको कुनै प्रयोजन पूर्ति गर्ने प्रणिधान गर्नु र त्यसै अनुसार सिद्धि पनि पाउनु हो ।

'ऋद्धि वशिता' को अर्थ प्राणीहरूको मनमा उत्साह उमङ्ग जगाउन अनेक ऋद्धिहरू प्रकट गरेर देखाउनु हो ।











'ज्ञानवशिता' को अर्थ धर्म, अर्थ, निरुक्ति एवं प्रतिभान पूर्णरूपले जान्नु हो ।

'धर्मवशिता' को अर्थ यथायोग र अपेक्षित मात्रामा सबै प्राणीहरूलाई अन्यान्य नाम, पद एवं व्यञ्जनद्वारा सूत्र आदि धर्महरूमा ढालेर एकैचोटि एकै वचनमा तिनीहरूकै आ–आफ्नै भाषाहरूमा प्रवचन दिएर तिनीहरूको मनलाई सन्तुष्ट पार्नु ।

३.३. **पृथग्जन कल्याणमित्र** : पृथग्जन कल्याणमित्र आठ, चार वा दुई गुणहरूले युक्त हुन्छन् । पहिलो अर्थात्, आठ गुणहरूले युक्त कल्याणमित्रको सम्बन्धमा *बोधिसत्त्वभूमि* मा यस्तो भनिएको छ :

> जुन व्यक्ति आठ प्रकारका गुणहरूले युक्त हुन्छ उसलाई सर्वाकार–परिपूर्ण बोधिसत्त्व कल्याणमित्र भनिन्छ : ती आठ गुणहरू यस प्रकार छन् : (क) बोधिसत्त्वशीलले सम्पन्न हुनु, (ख) बोधिसत्त्वपिटकमा बहुश्रुत (धेरै जान्नेसुन्ने) हुनु वा निपुण हुनु, (ग) अधिगमयुक्त हुनु, (घ) मैत्री र करुणाले युक्त हुनु, (ङ) चतुर्वैशारद्य सम्पन्न हुनु, (च) क्षान्तिसम्पन्न हुनु, (छ) वीर्ययुक्त चित्त हुनु, (ज) सुभाषित हुनु ।[६]

दोश्रो अर्थात चार प्रकारका गुणहरूले युक्त कल्याणमित्रको सम्बन्धमा *महायान सूत्रालंकार* मा यसरी व्याख्या गरिएको छ :

> बहुश्रुत हुनु, शंका निवारण गर्न सक्ने हुनु, मान्य हुनु, द्विविध तत्त्व[७] हरूको दर्शन दिन सक्ने हुनु नै बोधिसत्त्वको अनुत्तर धर्मदेशनामा हुने गुणहरू हुन् ।[८]

'बहुश्रुत हुनु' को अर्थ धेरै नै शिक्षा ग्रहण गरेका कारणले बोधिसत्त्व एक महागुरु हुन् । आफ्नो महाप्रज्ञाले उनले अरूको शंका निवारण गर्छन् ।











सत्पुरुषका कर्म गर्ने भएकाले उनको वचन मान्य हुन्छ। संक्लेश र परि-शुद्धि यी दुई लक्षणले युक्त तत्त्वहरू वर्णन गरेर परमार्थ धर्मलाई अनावरण गर्छन् ।

तेश्रो अर्थात दुई प्रकारका गुणहरूले युक्त कल्याणमित्रको सम्बन्धमा *बोधिचर्यावतार* मा यसरी भनिएको छ :

> कल्याणमित्रले महायान धर्मको मर्म राम्रोसित जानेका हुन्छन् ।
> आफ्नो प्राणै गएपनि बोधिसत्त्वव्रत लिएका
> कल्याणमित्रहरूको परित्याग नगर्नू ।[९]

अर्को शब्दमा भन्ने हो भने, महायान धर्मका मर्मज्ञ एवं बोधिसत्त्व संवरले युक्त बोधिसत्त्व नै तेश्रो कल्याणमित्र हुन् ।

४. **कल्याणमित्र–संश्रयका उपायहरू :** कल्याणमित्र सम्पर्कमा आएपछि उनको संश्रय वा सेवन गर्ने उपायहरू तीन प्रकारका छन् : ४.१. आदरसत्कार र सेवाद्वारा संश्रय ४.२. अधिमुक्ति एवं गौरवद्वारा संश्रय, ४.३. साधना एवं प्रतिपतिद्वारा संश्रय ।

४.१. **आदरसत्कार र सेवा द्वारा संश्रय :** आदर सत्कारद्वारा संश्रय को अर्थ कल्याणमित्रलाई वन्दना गर्नु, उनी उपस्थित हुनासाथ तुरुन्तै उठ्नु, उनलाई दण्डवत् गर्नु, परिक्रमा गर्नु, उनीसँग उचित समयमा आदरार्थी भावले कुरा गर्नु, र अतृप्त मनले उनको बारम्वार दर्शन गर्नु हो । उदाहरणको लागि श्रेष्ठीपुत्र सुधन[१०] ले जस्तै कल्याणमित्रको संश्रय वा सेवन गर्नुपर्छ । *गण्डव्यूहसूत्र* मा यस्तो भनिएको छ :

> कल्याणमित्रको दर्शन गर्दा कहिल्यै सन्तुष्ट हुनुहुँदैन ।
> किनकी उनको दर्शन पाउनु, उनको लोकमा प्रार्दुभाव हुनु
> उनीसित समागम हुनु भनेको अत्यन्तै कठिन कुरा हो ।[११]











'सेवाद्वारा संश्रय' को तात्पर्य धर्म अनुसार भोजन, वस्त्र, ओछ्यान, आसन, औषधी, धन इत्यादि उपलब्ध गराएर आफ्नो शरीर र ज्यानको समेत परवाह नगरीकन कल्याणमित्रको सेवा गर्नु हो । आर्य सदाप्ररुदित[१२] ले जस्तै कल्याणमित्रको सेवा गर्नुपर्छ । *श्रीसंभवविमोक्ष* मा यस्तो भनिएको छ :

> कल्याणमित्रलाई उपासना गरेर बोधि प्राप्त हुन्छ ।

४.२. **अधिमुक्ति र गौरवद्वारा संश्रय** : अधिमुक्ति एवं गौरवले सेवा गर्नुको अर्थ कल्याणमित्रलाई बुद्ध ठान्नु, उनका आदेश उल्लंघन नगर्नु, उनीप्रति अधिमुक्ति, गौरव र प्रसाद भावना जागृत गर्नु हो । महापण्डित नरोपा[१३] ले जस्तै कल्याणमित्रको सेवा गर्नुपर्छ । *एकाक्षरीनामसर्वतथागत प्रज्ञापार-मिता* मा भनिए झैँ :





> कल्याणमित्रप्रति यत्नपूर्वक गौरव, प्रेम तथा प्रसादको भावना जागृत गर्नुपर्छ ।

अनल[१४] विमोक्ष भन्ने ग्रन्थमा बताइए झैं आफ्ना सबै मिथ्या विकल्प-हरूलाई हटाएर हामीले कल्याणमित्रका उपायकौशलप्रति अत्यधिक श्रद्धा उत्पन्न गर्नुपर्छ ।

४.३. **साधना र प्रतिपत्तिद्वारा संश्रय** : साधना र प्रतिपत्तिद्वारा सेवन गर्नुको अर्थ कल्याणमित्रद्वारा उपदिष्ट धर्म श्रवण, चिन्तन एवं भावना गरेर उनका शब्दहरुको प्रमाणिकता महशुस गर्नु हो । यसो गर्दा, कल्याणमित्र एकदम खुशी हुन्छन् । *महायान सूत्रालंकार* मा भनिए झैं :

> जसरी कल्याणमित्रले उपदेश दिन्छन् त्यसरी नै शिष्यले बुझिदिए कल्याणमित्र अधिक प्रसन्न हुन्छन् ।[१५]











कल्याणमित्र प्रसन्न र सन्तुष्ट हुँदा, हामीले बोधि प्राप्त गर्छौं । यही कुरा *श्रीसम्भवविमोक्ष* मा पनि भनिएको छ : "कल्याणमित्रलाई आराधना गरेर नै समस्त बुद्धहरूको बोधि प्राप्त हुन्छ ।"[१६]

तीन चरणमा कल्याणमित्रबाट उपदेश प्राप्त गरिन्छ : प्रयोग (Pre–paration), मौल (Actual Teachings), पृष्ठ (Consequence) ।[१७]

प्रयोग अवस्थामा बोधिचित्तले युक्तभई कल्याणमित्रलाई धर्मदेशनाको लागि अनुरोध गरिन्छ । मौल अवस्थामा आफैलाई एक रोगीव्यक्ति सरह ठानी, धर्म उपदेशलाई औषधी र कल्याणमित्रलाई वैद्यको संज्ञा दिई धर्मको श्रवण गरिन्छ । पृष्ठ वा त्यसको फलस्वरूप, घोप्टचाएको, प्वाल परेको र विषले भरिएको भाँडो समानका दोषहरूलाई त्यागिन्छ ।

५. **कल्याणमित्र–संश्रयका लाभहरू** : कल्याणमित्र संश्रय गर्नाका लाभहरू बारे *श्रीसंभवविमोक्ष* मा यस्तो बताइएको छ :




> हे कुलपुत्र, कल्याणमित्रको परिगृह प्राप्त गरेका बोधिसत्त्वहरू दुर्गतिमा पतन हुन्नन् । कल्याणमित्रको सुरक्षा प्राप्त गरेका बोधिसत्त्वहरू पापी मित्रहरूको वशमा पर्दैनन् । कल्याणमित्रद्वारा शुद्ध पारिएका बोधिसत्त्वहरू महायान धर्मबाट विमुख हुन्नन् । कल्याणमित्रको सहारा पाएका बोधिसत्त्वहरू पृथग्जनहरूको भूमिलाई पार गर्छन् ।[१८]

*एकाक्षरीमातानामसर्वतथागत प्रज्ञापारमिता* मा भनिएको छ :

> कल्याणमित्रहरूको परिगृह प्राप्त गरेको बोधिसत्त्वले तुरुन्तै अनुत्तर बोधि प्राप्त गर्छन् ।

**सद्धर्मचिन्तामणि-मुक्तिरत्नालंकार** अन्तर्गत
**कल्याणमित्र सेवन** नामक तृतीय परिच्छेद समाप्त ।









# भाग ४ : विषय-प्रवेश

हेतुरूपी तथागतगर्भ हामी सबैमा विद्यमान नै छ । अनादिकालदेखि यो संसारमा भौँतारिने क्रममा कैयौँचोटि हामीले आश्रयरूपी दुर्लभ मनुष्य जन्महरू लिइसक्यौँ । प्रत्यय अर्थात कल्याणमित्रहरूको सम्पर्कमा पनि आयौँ । हुनतः हामीले पहिल्यै बुद्धत्व प्राप्त गरिसक्नु पर्नेथ्यो तर त्यसो किन भएन ? यो हुन नसक्नुको दोष त हामीजस्ता प्राणीमै छ । हामी चार प्रकारका विघ्न वाधाहरूका वशमा छौँ जसले गर्दा हामीहरू बुद्धत्व प्राप्त गर्न सकिरहेका छैनौँ । ती हुन् : यस जीवनका विषयहरूप्रतिको आशक्ति, भवसुखप्रतिको आसक्ति, शमसुख (निर्वाणको सुख) प्रतिको आशक्ति, तथा बुद्धत्व प्राप्त गर्ने उपायबाट अनभिज्ञता । यी चार विघ्नबाधाहरूलाई कसले हटाउन सक्छ त ? जसले कल्याणमित्रको उपदेश सुनेर त्यसलाई आत्मसात गर्छ त्यसैले नै यी विघ्नबाधा पनि हटाउन सक्छ । कल्याणमित्रका उपदेशलाई हामीले निम्न ४ विषयहरूमा संगृहित गर्न सक्छौँ :

अनित्य भावना, कर्मफल एवं सांसारिक दुःख,
मैत्री र करुणाको भावना र बोधिचित्तोत्पाद गराउने धर्म ।

अर्को शब्दमा, यसो पनि भन्न सकिन्छ : अनित्यताको भावनासित सम्बद्ध उपदेश, कर्मफल र सांसारिक दुःखको भावनासित सम्बद्ध उपदेश, मैत्री एवं करुणाको भावनासित सम्बद्ध उपदेश र बोधि-चित्तोत्पाद सित सम्बद्ध उपदेश ।

तीमध्ये अनित्यताको भावनासित सम्बद्ध उपदेश यस संसारका विषयहरू प्रति हुने आसक्तिको प्रतिपक्ष हो । कर्मफल र सांसारिक दुःखको भावनासित सम्बद्ध उपदेशले भवसुखप्रतिको आसक्तिलाई हटाइदिन्छ ।











मैत्री एवं करुणाको भावनासित सम्बद्ध उपदेश शमसुखप्रतिको आशक्तिका प्रतिपक्ष हुन् । बोधिचित्तोत्पादसित सम्बधित उपदेशले बोधि लाभ गर्ने उपाय प्रतिको अनभिज्ञतालाई हटाइदिन्छ । त्रिशरणगमणदेखि लिएर दुई प्रकारका नैरात्म्य भावना, पाँच मार्ग, दश भूमिहरूसम्म सबै धर्म चितो-त्पादमा समेटिन्छन् ।

यो बाहेक, यीमध्ये कुनै धर्म बोधिचित्तोत्पादको आश्रय, कुनै धर्म आलम्बन, कुनै धर्म विधि, कुनै धर्म शिक्षा, कुनै धर्म फल हुन्छ । यस प्रकार बोधिचित्तोत्पादको क्षेत्रभित्र नपर्ने कुनै पनि महायान धर्म हुँदैन । तिनका समस्त उपदेशहरू कल्याणमित्रबाटै उत्पन्न हुन्छन् र कल्याणमित्रमै आश्रित हुन्छन् । जस्तो *गण्डव्यूह सूत्र* मा भनिएको छ :

> सबै कुशल धर्मका उद्‌गमस्थल कल्याणमित्र हुन् ।
> र कल्याणमित्रको उपदेशमाथि नै सर्वज्ञता निर्भर हुन्छ ।











# यस जीवनका विषयहरूप्रतिको आशक्तिको प्रतिपक्ष

*Antidote to Attachment to this Life*









## परिच्छेद ४
# अनित्य भावना

यस अध्यायमा हामी यस जीवनका विषयहरूप्रति हुने आसक्तिको प्रतिपक्ष अर्थात अनित्यताको भावना बारे चर्चा गर्नेछौँ । साधारणतया, सबै संस्कृत धर्म अनित्य हुन् भन्ने व्यवहारिक तथ्यसित यो सम्बन्धित छ । बुद्ध आफैले पनि भन्नुभएको छ :

> हे भिक्षुहरू हो ! सबै संस्कृत धर्महरू अनित्य छन् ।[1]

तैपनि कस्तो प्रकारको अनित्य भनी कसैले प्रश्न सोध्यो भने यसको जवाफ हो : सञ्चयको अन्त क्षय वा व्यय, उत्थानको अन्त पतन, मिलनको अन्त वियोग र जीवनको अन्त मृत्यु हो । *उदानवर्ग* को एउटा श्लोकमा पनि यही तथ्य बताइएको छ :

> हरेक सञ्चयको अन्त व्ययले हुन्छ ।
> हरेक उत्थानको अन्त पतनले हुन्छ ।
> हरेक मिलनको अन्त विछोडले हुन्छ ।
> र सबै जीवनको अन्त मृत्युले हुन्छ ।[2]

त्यसोभए अनित्यताको भावना कसरी गर्ने त ?

अनित्यताको भावनासित
सम्बद्ध विषयलाई यी तीन
शिर्षकहरूमा समेट्न सकिन्छ :
भेद, उपाय एवं अनुशंसा ।











१. **भेद** : भेद दुईटा छन् – १) बाह्य भाजन लोकको अनित्यता र २) भित्री सत्वको अनित्यता ।

पुनश्चः, बाह्य भाजन लोकको अनित्यता दुई प्रकारका छन् : स्थूल अनित्यता र सूक्ष्म अनित्यता । भित्री सत्त्वको अनित्यता पनि दुई प्रकारका हुन्छन् : पर अनित्यता र स्वअनित्यता ।

२. **उपाय** : अनित्यताको भावना गर्ने उपाय यस प्रकार छन् ।

२. १. **वाह्य भाजन लोकको अनित्यता**

**क. वाह्य स्थूल भाजन लोकको अनित्यता भावना** : वायुमण्डलदेखि लिएर माथि चतुर्थ ध्यानभूमिसम्म नित्य स्वभाव भएको, ठोस र अविकारी कुनै पनि चीज हुँदैन । कहिले प्रथम ध्यानसम्मको भूमि अग्निबाट नष्ट हुन्छ, कहिले द्वितीय ध्यानसम्मको भूमि जलले नष्ट हुन्छ भने कहिले तृतीय ध्यानसम्मको भूमि वायुले नष्ट हुन्छ । अग्निले नष्ट हुँदाखेरी, आगोले तेल सबै खाइदिए जस्तै खरानीसम्म बाँकी रहन्न । जलले नष्ट हुँदाखेरी पानीमा नून घूलेर बिलिन भएजस्तै चोकरसम्म पनि रहन्न । वायुले नष्ट हुँदाखेरी हावाले धुलो उडाइलगेजस्तै एक कण धूलो पनि बाँकी रहन्न । यस सम्बन्धमा *अभिधर्मकोष* मा भनिएको छ :

> अग्निप्रलय सात पल्ट हुन्छ, जलप्रलय एकचोटि हुन्छ यस क्रमले जलप्रलय सातचोटि भइसकेपछि सातपल्ट नै वायुप्रलय हुन्छ ।[३]

चतुर्थ ध्यान भूमिको नाश जल, अग्नि वा वायुबाट हुँदैन । तर यस भूमिमा रहने प्राणीहरूको मृत्यु र च्युतिले यस भूमि नष्ट हुन्छ । जस्तो भनिएको छ :











> प्राणीहरूको साथमा अनित्यताको भूमि उत्पन्न हुन्छ र त्यसको
> विनास पनि हुन्छ ।[४]

अहिले लोकधातुको विनाश अग्निले हुन्छ भनी *वृहदत्त गृहपतिपरिपृच्छासूत्र* मा भविष्यवाणी गरिएको छ :

> एक कल्प बितिसकेपछि, यो आकाश स्वभावको संसार
> आकाश मै परिणत हुनेछ ।
> सुमेरु पर्वत पनि जलेर सखाप हुनेछ ।

**ख. बाह्य लोकको सूक्ष्म अनित्यता** : सूक्ष्म अनित्यता तीन प्रकारको हुन्छ । चार ॠतुहरू बदल्ने कारणले अनित्यता, सूर्य र चन्द्रको उदय र अस्तको कारणले अनित्यता, सबै क्षणिक भएको कारणले अनित्यता ।

चार ॠतुहरू बदल्ने कारणले अनित्यताको तात्पर्य के हो भने बसन्त ॠतुको आगमनसंगै यस भाजन लोकको धर्ती कोमल र रातो रङ्गको हुन्छ । घाँस, रूख र सागपातहरू उम्रन थाल्छन् । तर यी सबै अनित्य छन् र केवल ॠतु बदलिएको कारणले मात्र भएका हुन् । त्यसपछि, वर्षा ॠतु आउँछ, धर्ती ओसिलो हुन्छ र हरियाली छाउँछ । घाँस, रूख र सागका पातहरू विकसित हुन थाल्छन् । समयमा परिवर्तन भएर शरद ॠतु आउँछ । शरदको आगमन संगै धर्ती कडा र पहेँलो हुन्छ । घाँस, रूख र सागपातहरूमा फल उम्रन थाल्छ । अन्ततः हेमन्त ॠतुको आगमनसंगै धर्ती चिसोले जम्न थाल्छ, र सेतो रङ्गले जताततै ढाक्छ । घाँस, रूख र सागपातहरू सुकेर टुक्रिन्छन् । यसरी यी सब अनित्य छन्, केवल ॠतुहरूको परिर्वतनले मात्र ती सबै हुन गएका हुन् ।

सूर्य र चन्द्रको उदय र अस्तको कारणले अनित्यताको तात्पर्य के हो भने सूर्योदय भएर दिनको शुरुवात भएपछि यो भाजनलोक उज्यालो र प्रकाशमान हुन्छ । तर राति हुनासाथ यो लोक अन्धकारमा विलिन हुन्छ । त्यसैले यो पनि अनित्य नै छ, र परिर्वतनको द्योतक हो ।











सबै क्षणिक भएको कारणले अनित्यताको तात्पर्य के हो भने यो भाजनलोक अघिल्लो क्षणमा जस्तो थियो पछिल्लो क्षणमा पनि त्यस्तै रहन सक्दैन । पहिलो क्षणमा जस्तो थियो पछिल्लो क्षणमा पनि त्यस्तै जस्तो देखिनु वा कुनै पनि परिवर्तन नभएको जस्तो देखिनु केवल भ्रामक आभास मात्र हो । झरनाको प्रवाह जस्तै पहिलो क्षण समान पछिल्लो क्षणको उदय भएको कारणले त्यसो हुन गएको हो ।[५]

२.२. **भित्री सत्त्वलोकको अनित्यता**

**क. पर–अनित्यता** : दुई प्रकारको आभ्यन्तर वा भित्री सत्त्वलोकको अनित्यता मध्ये पर–अनित्यताको अर्थ के हो भने त्रैधातुका समस्त सत्त्व प्राणीहरू अनित्य छन् । जस्तो *आर्यललितविस्तर सूत्र* मा भनिएको छ :

> तीनै धातुहरू शरद ऋतुको बादलजस्तै अनित्य छन् ।[६]




**ख. स्व–अनित्यता** : व्यक्ति आफैमा यस संसारमा रहिरहने बल हुँदैन अतः उसले एक दिन यो संसार छोडेर जानुपर्छ । यसलाई फेरि दुई किसिमले जान्न सकिन्छ : (अ) स्व–सन्तानको परीक्षा, (आ) पर–सन्तानबाट निष्कर्ष ।

**(अ) स्व–सन्तानको परीक्षा** : स्व–सन्तानको परीक्षा अन्तर्गत निम्न अनित्यताका भावनाहरू पर्छन् : मृत्युको भावना, मृत्युका लक्षणहरूको भावना, आयु समाप्तिको भावना र वियोगको भावना ।

मृत्युको भावना यसरी गरिन्छ : म अब यस संसारमा धेरै समय सम्म रहन सक्दिन, भविष्यमा जुनैबेला पनि यस जुनीलाई छोडी अर्को जुनीमा जानु पर्नेछ ।

मृत्युका लक्षणहरूको भावना यसरी गरिन्छ, 'मेरो जीवन अन्त्यतिर आइसकेछ, श्वास रुक्दैछ, शरीर लासमा बदलिँदै छ र मेरो चित्त अन्यत्र परलोकमा विचरण गर्दैछ ।











आयु समाप्तिको भावना यसरी गरिन्छ, 'एक वर्ष बित्यो, एक महिना बित्यो । हिजो भन्दा आज एक दिन बितिसकेछ । क्षण क्षण बितिरहेछ, हरेक क्षणमा मेरो आयु छोटिँदै छ । *बोधिचर्यावतार* मा भनिएझैँ :

रात दिन नरोकिएर मेरो आयुको नाश भइरहेको छ
यो बढ्ने सम्भावना कतैबाट पनि छैन भने
के म नमर्ने भन्ने कुरा आउँछ ?[७]

वियोगको भावना यसरी गरिन्छ, 'मेरा वर्तमान साथी, धनसम्पति र शरीर आदि सबै प्रिय कुराहरू सदैव म सित रहने छैनन् । शीघ्र नै तिनीहरू मबाट वियोग हुनेछन् । *बोधिचर्यावतार* मा भनिएझैँ :

सबैलाई छोडेर एक दिन म यस संसारबाट जानुपर्छ
भन्ने मलाई थाहै भएन ।[८]




स्व–सन्तानको परीक्षा अन्तर्गत मृत्युको भावना नौ प्रकारले गर्न सकिन्छ । ती सबै तीनवटा शीर्षकमा समेटिन्छन् । १) मृत्यु निश्चित छ, २) मृत्युको समय अनिश्चित छ, ३) मृत्युपछि आफ्नो साथमा कोही पनि हुनेछैन ।

१) मृत्युको निश्चितता : मृत्यु निश्चित छ - यसका तीनवटा कारणहरू छन् : १.१) अहिलेसम्म मृत्यु नभएको कोही पनि जीवित प्राणी छैन, १.२) शरीर संस्कृत धर्म हो, र १.३) क्षण क्षणपिच्छे मेरो आयु छोंटिंदैछ ।

१.१) पहिलो कारणको सम्बन्धमा आचार्य अश्वघोषले भन्नुभएको छ :

पृथ्वीलोक वा देवलोकमा जन्मने कुनै प्राणी नमरेको कसैले
देखेको छ, सुनेको छ वा त्यसमा कसैलाई शंका छ ?











यसरी ऋद्धिवान तथा अपरिमित अभिज्ञा सम्पन्न ऋषिहरू त मृत्यु रहित स्थान नपाएर मर्न बाध्य छन् भने हामी जस्ता प्राणीको के कुरा ? तसर्थ,

> पाँच अभिज्ञा[९]हरू प्राप्त गरेका महर्षिहरू
> आकाशमार्गबाट टाढा टाढा जान सकेतापनि
> त्यस्तो स्थानमा भने पुग्न सकेका छैनन्
> जहाँ मृत्यु पुग्न सक्दैन ।

यति मात्र होइन, आर्य प्रत्येकबुद्ध र महाश्रावक अर्हतहरूले पनि अन्ततोगत्वा आफ्नो देहत्याग गर्न विवश भए भने हामीजस्ता प्राणीहरूको त के कुरा ? जस्तो *उदानवर्ग* मा भनिएको छ ।

> प्रत्येकबुद्ध र बुद्धका श्रावकहरूले त
> आफ्नो शरीरलाई त्याग्नु पऱ्यो
> भने हामी सामान्यजनहरूको के कुरा ?[१०]

यति मात्र होइन, लक्षण र अनुव्यञ्जनहरूले युक्त, वज्रस्वभावको, सम्यकसम्बुद्धको निर्माणकाय शरीर त त्यागिन्छ भने हामी जस्ता प्राणीहरूको के कुरा ? आर्यशूरको भनाइमा :

> लक्षण एवं अनुव्यञ्जनहरूले युक्त, बुद्धहरूको बज्रकाय त
> अनित्य छ भने बाँस नर्कट जस्तो सारहिन अन्य देहधारीहरूका
> शरीरको के कुरा गर्ने ?

१.२) मनुष्यको शरीर संस्कृत[११] भएकोले मृत्यु निश्चित छ । यसको तात्पर्य सबै संस्कृत धर्म अनित्य स्वभावका हुन्छन्, नाशवान स्वभावका हुन्छन् । *उदानवर्ग* मा बताइएबमोजिम :











अहो ! सबै संस्कृत धर्म अनित्य छन्
उत्पन्न र विनाश हुनु यिनको स्वभावै रहेछ ।

तसर्थ यो शरीर संस्कृत भएको कारणले अनित्य छ । यसै कारणले मृत्युको समय अनिश्चित छ ।

१.३) आयु क्षण क्षणपिच्छे छोटिदैछ । हाम्रो आयु क्षण क्षणपिच्छे कम हुदै गएकोले हामी मृत्युतर्फ नजिकिँदैछौं । प्रायसः हामीले यस कटु सत्यलाई देख्दै देख्दैनौं । यस सत्यलाई धनुधारीको वाण, पहाडी खोँचबाट तल झरिरहेको झरना, फाँसीस्थलतर्फ लगिदै गरेको अपराधीसंग तुलना गर्न सकिन्छ ।

पहिलो उपमालाई यसरी बुझ्नु पर्छ । एक सिपालु धनुधारीले छोडेको वाण आकाशमा स्थिर भएर रहँदैन तर अति द्रुतगतिले आफ्नो गन्तव्यसम्म पुग्छ त्यसरी नै यो जीवन पनि एकक्षण नरोकीकन अति द्रुतगतिले मृत्युतर्फ गईराखेको छ । जस्तो एउटा भनाइ यहाँ उल्लेख गर्न सकिन्छ :

जसरी एक कुशल धनुधारीको वाण धनुषको डोरीबाट छुट्नासाथ नरोकी, द्रुतगतिमा लक्ष्यतर्फ बढ्छ । मानिसको आयु पनि त्यस्तै हो ।

दोश्रो उपमाले यसलाई अझ स्पष्टसित बुझ्न सकिन्छ । जसरी पहाडी खोँचबाट झरेको झरना एक क्षण पनि नरुकी निरन्तर प्रवाहित भईरहन्छ, त्यस्तै प्रकारले मानिसको आयु पनि रुक्दैन । यस सम्बन्धमा *महासन्निपात-रत्नकेतुधारणी* मा उल्लेख छ :

साथीहरू हो, पहाडबाट झरेको झरनाका द्रुत प्रवाह झैँ यो जीवनको आयु अति द्रुतगतिले व्यतीत भैराखेको हुन्छ । मूर्खहरूले यो तथ्यलाई बुझ्न सक्तैनन् । त्यसैले मूर्खहरू इन्द्रिय विषयहरूमा उन्मत्त रहन्छन् ।











यसै विषयमा *उदानवर्ग* मा यस्तो उल्लेख छ :

महानदीको प्रवाहजस्तै पछाडि हेर्दै नहेरी
यो अगाडि बगिरहन्छ, बगिरहन्छ । १/१३

तेश्रो उपमा अनुसार हामी फाँसीस्थलतर्फ डोऱ्याउँदै लगिएका बन्दीहरू सरह हौँ । हामीले चाल्ने हरेक पाइला संगसंगै हामी क्रमशः मृत्युको नजीक पुग्दै जान्छौँ । *आर्यद्रुमसूत्र* को यो श्लोक उल्लेखनीय छ :

फाँसीस्थलतर्फ डोऱ्याउँदै लगिएका बन्दीहरू जस्तै
जति जति आफ्नो पाइला चाल्दै जान्छ
त्यति त्यति ऊ मृत्युको नजीक पुग्दै जान्छ ।

यसै सम्बन्धमा *उदानवर्ग* मा पनि भनिएको छ :

मृत्युदण्ड दिइएको व्यक्तिले चाल्ने हरेक पाइलाले
उसलाई क्रमशः फाँसीको नजीक नजीक पुऱ्याइरहेको हुन्छ ।
मान्छेको आयु पनि त्यस्तै हो । १/१४

२) मृत्यु निश्चित छ तर मृत्युको समय भने निश्चित छैन । यसका पनि तीन प्रमाणहरू छन् । २.१) आयुको अनिश्चितता, २.२) सारहीन शरीर र २.३) मृत्युका अनेक कारणहरू ।

२.१) हो, अन्यगति वा द्वीपमा रहने प्राणीहरूको आयु निश्चित होला तर हामी जम्बूद्वीपमा बस्ने प्राणीहरूको आयु निश्चित हुँदैन । यही कुरा *अभिधर्मकोश* मा पनि बताइएको छ :

यहाँ निश्चित हुँदैन ; कल्पचक्रको प्रारम्भमा अपरिमित आयु
भएकोमा अन्तमा गएर दश वर्षको पनि हुन सक्छ ।[१२]











कसरी जम्बूद्वीपका प्राणीहरूका आयु अनिश्चित छ त ? यसको जवाफ *उदानवर्ग* को यो श्लोकमा पाइन्छ :

कोही कोखमै मर्छन् ।
कोही जन्मनासाथ मर्छन् ।
कोही बामे सर्न नपाउँदै मर्छन् ।
कोही बुढा भएपछि मर्छन् ।
कोही बाल्यावस्थामै मर्छन् ।
कोही जवानीमै मर्छन् ।
एवं रीतले सबैले मर्नुपर्छ । १/७

२.२) शरीरको सारहीनताको अर्थ के हो भने हाम्रो यो शरीरमा छत्तीस प्रकारका अशुची द्रव्यहरू बाहेक अरू कुनै सारयुक्त ठोस तत्व छैन । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

पहिले आफ्नो बुद्धिले चिन्तन गर्दै
छालाको थैलो निकालेर हेर,
त्यसलाई पनि प्रज्ञारूपी शस्त्रले छुट्टयाएर
अस्थिपञ्जरबाट भिन्न गर ।
अस्थिहरू, मज्जा हेर्दै जाऊ र आफै विचार गर
तिमीले केही सारयुक्त चीज भेट्टायौ त ?[१३]

२.३) मृत्युका अनेक कारणहरू हुनु भनेको के हो भने प्रकृतिमा त्यस्तो कुनै वस्तु छैन जो हाम्रो वा अरूको मृत्युको कारण नबनोस् । *सुहृल्लेख* मा भनिएको छ :

यो जीवनमा धेरै विघ्न वाधाहरू छन् ।
हावाले पानीमा उठाएका फोकाहरू भन्दा अधिक अनित्य छ ।











> श्वास फालेपछि फेरी लिने र निन्द्राबाट ब्युँझिने अवसर
> प्राप्त गर्नु भनेको ठूलो आश्चर्यकै कुरा हो । *सुहृल्लेख* - ५५

३) मृत्युपछि कोहीपनि हाम्रो साथमा हुन्न : मरणसमयमा हाम्रो साथमा यी तीनमध्ये केही पनि रहन्न । ३.१) धनसम्पत्ति, ३.२) साथी आफन्तहरू, र ३.३) हाम्रो आफ्नै शरीर

३.१) मृत्यु समयमा धन सम्पत्ति हाम्रो साथमा रहन्न भन्ने बारेमा *बोधिचर्यावतार* को यो श्लोक उल्लेख्य छ :

> जतिसुकै लाभ आर्जन गरे पनि
> जतिसुकै लामो सुखभोग गरे पनि
> आखिरमा कुनै लुटिएको व्यक्ति झैँ
> नाङ्गै खालिहात नै जानेछु ।[१४]



धनसम्पत्तिले मृत्युसमयमा हाम्रो साथ नदिने मात्र नभएर यसलोक र परलोक दुवैका लागि एक महाविघ्नको वस्तु पनि हो । यस लोकमा यो कसरी विघ्नकारी हुन्छ भने हामी यसको लागि सधैं झैझगडा गर्छौं, धनसम्पत्ति स्याहार्दा स्याहार्दै यसैको दास बन्नुपर्ने दुःख आइपर्छ । पर-लोकमा पुगेपछि पनि यसै दुःखको फलस्वरूप हामी दुर्गतिमा जन्मनुपर्ने हुन्छौं ।

३.२. साथीआफन्तहरूको साथ नरहने विषयमा *बोधिचर्यावतार* मा यसरी भनिएको छ :

> मृत्युको घडि आएपछि हाम्रा सन्तान, पिता, माता कसैमा पनि
> शरणको लागि जान सकिन्न ।

यसको अतिरिक्त साथी आफन्त हाम्रा यस लोक र परलोक दुबै-का लागि वाधकसिद्ध पनि छन् । यस लोकमा कसरी वाधक छन् भने











उनीहरूको मृत्यु होला कि भन्ने डरले हामीलाई सदैव सताइरहेको हुन्छ, यहीं डरले ग्रसित भएर हामीले ठूलो दु:ख भोल्छौं जसको फलस्वरूप परलोकमा गएर पनि दुर्गतिमै जन्म लिन पुग्छौं ।

३.३) हाम्रो आफ्नै शरीर पनि आफ्नो साथमा नरहनु को अर्थ के हो भने मृत्युको बेला न त शरीर नै आफूसंग हुन्छ न त यसका गुणहरू नै हुन्छन् । हाम्रा गुणहरू हाम्रो साथमा आउँदैनन् भन्नाको मतलव हामी जतिसुकै बलवान र शक्तिशाली भए तापनि मृत्युबाट उम्कन सक्दैनौं । हामी जतिसुकै द्रुतगतिले दौड्न सक्ने भएता पनि मृत्युलाई उछिनेर दौड्न सक्दैनौं । हामी जतिसुकै विद्वान तथा कुरा गर्न सिपालु भए पनि मृत्युलाई कुरा गरेर टार्न सक्दैनौं । पहाड मुनि अस्ताएको सूर्यलाई रोक्न वा पक्रन नसक्ने मानिससरह हौं हामीहरू । यस सम्बन्धमा *बोधिचर्यावतार* मा यस्तो भनिएको छ :

धेरै कठिनाइहरू भोलेर प्राप्त भएको
अन्नले पोषित गरिएको र कपडाले
ढाकिएको यो शरीर तिमीसित जाँदैन ।
चरा र कुकुरहरूले खान्छन् त्यसलाई ।
दनदन्ती बलेको आगोमा जलेर सखाप हुन्छ ।
पानीभित्र सड्छ वा जमिनमा गाडिन्छ ।

मृत्युको समयमा मात्र साथ नदिने नभएर यो शरीर यस लोक र परलोक दुवैका लागि पनि अहितकर नै छ । यस लोकमा यो शरीरले रोग खप्न सक्दैन, तातो चिसो भोक र प्यास सहन सक्दैन, मर्ने भय, बन्धनको भय वा छाला काढिने भय रहिरहन्छ । यस भयवाट ठूलो दु:ख उत्पन्न हुन्छ जसको फलस्वरूप परलोकमा गएर पनि दुर्गतिमै जन्म लिनपुग्छ ।

**आ. पर–सन्तानबाट निष्कर्ष निकाल्नु** : अरू मरेको देखेर, सुनेर वा संभोर त्यसलाई आफ्नै सन्तानमा सम्बद्ध गरेर भावना गर्नु नै यस शिर्षकको











तात्पर्य हो । अरूको मृत्यु भएको देख्दा आफ्नो पनि त्यही गति हुनेछ भनी भावना गरिन्छ । सो भावना यस किसिमले गर्न सकिन्छ :

पहिले एकदम बलवान, तेजयुक्त मुखमण्डल भएको, स्वस्थ र मृत्यु बारे सोँच्दै नसोच्ने आफन्त वा साथीको त्यो शरीर आज प्राणघातक रोगले ग्रसित छ । आफ्नो बल सबै हराएर बस्नै नसक्ने भएको छ । उसको मुख निष्तेज, चाउरी परेर फुलेको छ । यो ज्वरो र रोगको कारणले आफ्नो दुःख सहन नसकी ऊ असहाय छ । औषधी उपचारले पनि काम गर्न छोड्छ, पूजाले पनि छुँदैन । आफूमा काम गर्ने शक्ति नरहेको र आफू मरणासन्न भएको उसलाई थाहा हुन्छ ।

अन्तिम कालमा आफू वरिपरी घेरेर बसिरहेका आफन्तहरूसामुन्ने उसले आफ्नो अन्तिम भोजन ग्रहण गर्छ र अन्तिम शब्दहरू बोल्छ । त्यो सबै देखेर हामीले यस्तो बिचार गर्नुपर्छ, 'म पनि वस्तुतः ऊ जस्तै हुँ, उसकै स्वभाव ममा पनि छ, उसकै गुण ममा पनि छ, ऊ भन्दा अलिकति पनि फरक छैन म ।'




अनि त्यसपछि उसको श्वासप्रश्वास रोकिन्छ, पहिले जतिसुकै सुन्दर र घरमै राखिराखूँ जस्तो भएको व्यक्तिलाई आज कसैले एक दिनको लागि पनि घरमा राख्दैन । उसको लासलाई डोरीले बाँधेर खटमा राखी सुताइन्छ । लास उठाउने मान्छेहरूले त्यसलाई बाहिर लग्छन् । घरका केही मानिसहरूले लासलाई अंगालो मार्छन् र त्यसैमा स्नेहपूर्वक टाँस्सिन्छन् । अरू मानिसहरू रुन्छन र दुःखीत भएको अभिनय गर्छन्, कोही मुर्छा पर्छन् । कोही कोहीले यसो सान्त्वना पनि दिन्छन् 'यो शरीर केवल माटो, पत्थर सरह हो, यसरी विलाप गर्नुको केही अर्थ छैन ।' लासलाई दैलो कटाउनासाथ, कहिले पनि घरमा फर्केर आउँदैन, हामीले यस्तै स्मरण गरेर हाम्रो पनि यस्तै अन्त हुनेछ भनी सोँच्नुपर्छ ।

अतः लासलाई मसानतिर ल्याइन्छ, र त्यहीँ फालेर गइन्छ । यसलाई कुकुर र ब्वाँसो र अरू जंगली जन्तु वा पंक्षीले खाइदिन्छन् र उसका अस्थिहरू यताउता छरिन्छन्, यो सब देखेर वा स्मरण गरेर यस्तै हामीलाई पनि हुन सक्छ भनी चिन्तन गर्नुपर्छ ।











हाम्रो देशमा, गाउँमा वा घरमा कुनै वृद्ध वा युवा मानिस वा मित्रको मृत्यु भएको कुरा संझिंदै यस्तै हामीलाई पनि अति शीघ्र नै हुनसक्छ भनी सोँच्नुपर्छ । तसर्थ सूत्रमा भनिएको छ :

भोलि वा परलोकमा कुनचाहिँ
पहिले आउँछ निश्चित नहुने हुँदा
भोलिको लागि संघर्षशील नभई
परलोकको लागि तत्पर भई बस्नू ।

३. **अनुशंसा** : अनित्य भावनाको लाभ के हो भने सबै संस्कृत धर्म अनित्य छन् भन्ने कुरा बुझिसकेपछि हामी यस जीवनप्रति आशक्त हुनेछैनौं । यति मात्र होइन, हाम्रो श्रद्धालाई पोषण मिल्ने हुँदा हाम्रो वीर्य उत्साह बढेर आउँछ । राग द्वेषबाट मुक्त भइसकेपछि सर्व धर्मसमता वोध गर्नमा आधार प्राप्त हुन्छ ।





**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
संस्कृत धर्मको अनित्यता निर्देश
नामक चतुर्थ अध्याय समाप्त ।









# परिच्छेद ५
# संसारको दुःख

कोही कोही मानिस यसरी सोच्छन् : सबै संस्कृत धर्म अनित्य भएको कारणले मेरो मृत्यु नै भएपनि के बिग्रयो र ? अर्को जन्म भएपछि त फेरी मनुष्य वा देवको शरीर र धन–सम्पत्ति एवं वैभव मलाई प्राप्त हुनेनै छ। मेरो लागि त्यहीं पर्याप्त छ। यसरी सोंच्नु भवसुखप्रतिको आशक्ति हो। यसको प्रतिपक्ष सांसारिक दुःखको भावना गर्नु हो। जसको व्याख्या यस परिच्छेदमा गरिनेछ। संक्षेपमा :

निम्न तीन शिर्षकहरूमा सांसारिक दुःख समेटिन्छ :
संस्कार दुःखता, विपरिणाम दुःखता र दुःख दुःखता

यी तीन दुःखलाई उपमाद्वारा यसरी बुझ्न सकिन्छ। संस्कार दुःखता काँचो फल जस्तै हो, विपरिणाम दुःखता विष मिसिएको जाउलो जस्तै हो भने दुःख दुःखता ढुसी परेको फल जस्तै हो। संस्कार दुःखतामा उपेक्षाको वेदना हुन्छ, विपरिणाम दुःखतामा सुखको वेदना हुन्छ भने दुःख–दुःखतामा दुःखको वेदना हुन्छ। अब यी तीन प्रकारका दुःखहरूलाई तिनका लक्षणको आधारमा व्याख्या गरौं।

१. **संस्कार दुःखता** : उपादान–स्कन्ध[1] लाई ग्रहण मात्र गरेको खण्डमा पनि व्यक्ति संस्कार दुःखताले पीडित हुनपुग्छ। जसरी प्लेग रोगद्वारा पिडित व्यक्तिले आफ्नो शरीरमा अलिकति पनि तातोचिसोको अनुभूति गर्न सक्दैन त्यसरी नै पृथग्जनहरूले यसलाई दुःख नै ठान्दैनन्। तर प्लेग रोग निको भइसकेको मानिसले जसरी आफ्नो शरीरमा अलिकति तातो चिसो पदार्थ पर्दा पनि चाल पाउँछ त्यसरी नै श्रोतापन्न भूमि प्राप्त गरिसकेका











मुनिहरू संस्कार दु:खलाई पनि दु:ख नै ठान्छन् । अथवा यहाँ अर्को उपमा पनि दिन सकिन्छ : केशको एउटा रौं हत्केलामा राख्दाखेरी त्यसले सुख, दु:ख वा उपेक्षा कुनै पनि वेदना गराउँदैन तर त्यही रौं आँखामा पर्न गयो भने त्यसले दु:ख वेदना वा पीडा उत्पन्न गर्छ । संस्कार दु:खता पनि यस्तै हो । यो दु:ख पृथग्जनमा रहिरहेतापनि यसबाट उसलाई दु:खको अनुभूति भने हुँदैन । केवल मुनिहरूले मात्र यसलाई जस्ताको तस्तै अनुभव गर्न सक्छन् । तसर्थ *अभिधर्मकोशटीका* मा भनिएजस्तै:

हत्केलामा रहेको रौंले
कुनै वेदना गराउँदैन ।
तर त्यही रौं आँखामा पस्यो भने
दु:ख वेदना र पीडा उत्पन्न गर्छ ।
मूर्खहरू त्यही हातको हत्केला जस्तै हुन् ।
तिनीहरूले हत्केलामा रौं भएको चालै पाउन्नन् ।
संस्कार दु:खताको पनि चालै पाउन्नन्
तर आँखासमान मुनिहरूले यसलाई दु:ख नै ठान्दछन् ।[२]

२. **विपरिणाम दु:खता** : दोश्रो प्रकारको दु:खलाई विपरिणाम दु:खता किन भनिएको हो भन्दाखेरी संसारमा जतिपनि सुख छन्, ती सबै आखिर दु:खमै परिणत हुन्छन् । तसर्थ *महाकरुणापुण्डरीक सूत्र* मा भनिएको छ:

देवताहरूको राज्य दु:ख समुदयको कारण हो त्यस्तै मनुष्यको
लोक पनि दु:ख समुदयको कारण नै हो ।

त्यसैले कुनै मनुष्य चक्रवर्ती सम्राट नै भएपनि अन्तत: उसको सुख दु:खमै परिणत हुनेछ । जस्तो सुहृल्लेख मा उल्लेख छ :

संसारमा चक्रवर्ती सम्राट् पनि फेरि नोकर भएर जन्मन्छन् ।











यही सबैथोक होइन । देवराज इन्द्रकै दिव्य देह र वैभव प्राप्त गर्ने प्राणी पनि आखिर मर्नैपर्छ र ऊ उसको त्यो उच्च स्थानबाट च्यूत भएर तल खस्छ । त्यस्तै *सुहृल्लेख* मा भनिएको छ :

> अति पूजनीय देवराज इन्द्र पनि कर्मको बलले गर्दा
> फेरि पृथ्वी मै पतन हुन्छन् ।

यति मात्र होइन, कामरागबाट मुक्त एवं समाधिसमापत्ति सुख प्राप्त देवाधिपति ब्रह्मा वा उनी जस्ता अरू देवताहरू पनि अन्ततः आफ्नो उच्च पदबाट च्यूत भएर तल खस्छन् । *सुहृल्लेख* मा भनिएको छ :

> ब्रह्माकै विरागसुख प्राप्त गरेको व्यक्तिले पनि अविचि नरकको
> आगोमा इन्धन भएर अनन्त दुःख भोग्नुपर्ने हुन्छ ।



**३. दुःख दुःखता** : तेश्रो दुःख, दुःख दुःखता : उपादान स्कन्ध ग्रहण गर्नु आफैमा दुःखको एउटा रूप हो । त्यस बाहेक यी नाना प्रकारका दुःखहरू देखापरिरहन्छन्, दुःख दुःखता भनेकै त्यहीं हो । यो दुःख दुई प्रकारको हुन्छ : दुर्गतिको दुःख र सुगतिको दुःख



दुर्गति भन्नाले नरक, प्रेत र तिर्यक लोक गरी तीन लोकहरू हुन् । अब हरेक लोकका भेद, स्थान, दुःखको किसिम एवं आयुका बारेमा बिचार गरौं ।

**३.१. नरक लोक** : आठ उष्ण (तातो) र आठ शीत (चिसो) गरी जम्मा सोह्रवटा नरकहरू छन् । तिनमा पनि प्रादेशिक नरक र उत्सद नरक यी दुईटा नरकहरू थपेपछि जम्मा अठारवटा नरकहरू हुन्छन् ।

**३.१.१. उष्ण नरकहरू** : उष्ण नरकहरू यस जम्बुद्वीपमुनि पर्दछन् किनकी यस लोकबाट ती नरकहरूमा जाने प्राणीहरूको संख्या निकै











धेरै हुन्छन् । त्यसैले जम्बुद्वीपदेखि त्यहाँसम्मको मार्ग पनि छोटो नै छ । तिनमध्ये सबैभन्दा तल रहेको नरक अवीचि नरक हो । त्यसपछि क्रमशः माथि तर्फ प्रतापन, तापन, महारौरव, संघात, कालसूत्र र सञ्जीव नरक पर्दछन् । *अभिधर्मकोश* मा यसरी उल्लेख गरिएको छ ।

यहाँभन्दा बीस हजार योजन
तल अवीचि नरक छ ।
त्यसमाथि सातवटा नरकहरू छन् ।[३]

ती नरकहरूका नामाकरण त्यहाँ प्राणीहरूले भोग्ने दुःखको आधारमा गरिएको छ जसको संक्षिप्त विवरण यस प्रकार छ ।

*संजीव नरक* : पहिलो नरक संजीव नरक हो । यस नरकमा प्राणीहरू-लाई एकआपसमा बाँधी छेडिन्छ र काटेर मारिन्छ । त्यसपछि चिसो वायु बहेर मारिएका सबै प्राणीहरूलाई फेरी जीवित पारिन्छ । यस नरकमा तिनीहरूको आयु नसिद्धिउन्जेल यो प्रकृया यथावत चलिनै रहन्छ ।

*कालसूत्र नरक* : यस नरकलाई कालसूत्र किन भनिएको भन्दाखेरी त्यहाँका बासिन्दाहरूको शरीरमा चिह्नको रूपमा कालो धागो तानिन्छ र त्यसै चिह्न अनुसार शरीरलाई प्रज्वलित करौतिले चिरेर टुक्रा टुक्रा पारिन्छ । जस्तो भनिएको छ :

कसैलाई करौंतिले काटिन्छ भने
कसैलाई तीखो धार भएको बन्चरोले चिरिन्छ ।

*संघात नरक* : संघात नरकमा प्राणीहरू एक आपसमा जुध्न लागेका दुइटा विशाल पहाडहरू वा फलामे थालको बीचमा परी पिसिइ मर्छन् । पहिलो स्थितिमा, भेडाका टाउको जस्ता दुईवटा समान देखिने पहाडहरू बीच प्राणीहरू पर्छन्, यी पहाडहरू आई एक आपसमा ठोकिन्छन् र तिनै बीच थिचिएर तिनीहरूको मृत्यु हुन्छ । पछि फेरि एक चिसो वायु वग्न











थाल्छ र मरिसकेका सबै प्राणीहरू पूनर्जीवित भई पहिल्यैकै अवस्थामा फर्कन्छन् । फेरि त्यसरी नै दुई पहाडहरूबीच थिचिन्छन् फेरी मर्छन र फेरी यसरी नै जीवित हुन्छन् । यो यातना तवसम्म चलिनैरहन्छ जवसम्म तिनीहरूको आयु समाप्त हुँदैन । जस्तो *शिष्यलेख* मा लेखिएको छ :

> दुइवटा भयावह, विशाल, पहाडजस्ता देखिने भेडाका
> सिङ्गहरू एक आपसमा जुधेपछि बीचमा परेका प्राणीहरू
> पिसिएर धूलो धूलो हुन्छन् ।[४]

कोही दुइटा फलामे थालको बीचमा परि थिचिएर मर्छन् र चार नदीका पानी बरावर रगत बग्छ । जस्तो बताइएको छ :

> कसैलाई तिल झैं पेलिन्छ ।
> त्यसै गरी कसैलाई मिहिन पीठो झैं पिधिन्छ ।




*रौरव नरक* : रौरव नरकमा प्राणीहरूलाई जिउँदै जलाइन्छ । त्यो असह्य पीडा खप्न नसकी त्यहाँका वासिन्दाहरू भयानक किसिमले रुने कराउने गर्छन् । त्यसैले यसलाई रौरव भनी नामाकरण गरिएको हो ।

*महारौरव नरक* : महारौरवमा रहने प्राणीहरूको क्रन्दन त अझ रौरव-वासीको भन्दा भयानक हुन्छ । त्यसैले यसलाई महारौरव भनिन्छ ।

*तापन* : तापन नरकमा रहने प्राणीहरूलाई आगो र तापद्वारा यातना दिइन्छ । तातो पग्लेको पितलको झोल तिनीहरूको मुखमा खन्याइन्छ । अनि उनीहरूको आन्द्रा जलेर खरानी हुन्छ । त्यहाँका वासिन्दाहरूलाई मलद्वारदेखि टाउकोसम्म वारपार हुनेगरी त्रिशुलले छेडिन्छ ।

*प्रतापन नरक* : प्रतापन नरकका वासिन्दाहरूलाई विशेष तवरले यातना दिइन्छ । तातो पग्लेको पितलको झोल शरीरभित्र खन्याइँदा शरीर-का नौवटा छिद्रहरूबाट आगोका लप्का निस्कन्छन् र त्यही बेला मलद्वार र खुट्टादेखि टाउको र पाखुरासम्म वारपार निस्कने गरी त्रिशुलहरूले











छेडिन्छन् । पूरै शरीर जलेर सखाप हुन्छ र एक टुक्रा छाला पनि बाँकी रहन्न । यस नरक बारे यस्तो भनिएको छ :

> कसैलाई पगालेको तातो पितलको झोलमा उमालिन्छ ।
> कसैलाई रातो हुनेगरी तताइएको भालामा छेँडेर राखिन्छ ।

*अवीचि नरक* : यस नरकमा जन्मने प्राणीहरूलाई यसरी यातना दिइन्छ । ठूलो डेग्ची जस्तो विशाल कुण्डमा पगालेको पितलको झोल एउटा ठूलो भाँडोमा खन्याइन्छ, त्यही भाँडोमा प्राणीहरूलाई राखी एकदम दन्किएको आगोमा पकाइन्छन् ।

> कसैलाई ठूलो फलामे खड्कुलोमा राखेर
> भात जस्तै गरी पकाइन्छ ।



यस प्रकार निरन्तररूपले प्राणीहरूलाई यातना दिइने हुनाले यस नरक-लाई अवीचि भनिएको हो ।

यी नरकहरूका प्राणीहरूको आयु *अभिधर्मकोश* मा यसरी बताएको छ :

> संजीव लगायत पहिलो ६ नरकहरूको एक दिन–रात
> कामरूप धातुका देवताहरूको आयु बराबर हुन्छ ।
> तसर्थ ती नरकहरूका वासिन्दाका आयु कामरूप
> धातुका देवताहरूका आयुबाट पत्ता लगाउन सकिन्छ ।[५]

चतुर्महाराजहरूको कुल आयु संजीव नरकको एक दिन बराबर हुन्छ । त्यसै अनुसार तीस दिनले एक महिना हुन्छ, र बाह्र महिनाले एक वर्ष हुन्छ । त्यो हिसावले, त्यहाँका प्राणीहरूको आयु त्यस्तो पाँच सय वर्षको हुन्छ । जसलाई मनुष्यका आयुसित दाँजेर हेर्ने हो भने १६ खरव २० अरव (१,६२०,०००,०००,०००) वर्ष हुन आउँछ ।











त्यसैगरी त्रायस्त्रिंश देवभुवनका देवताहरूको कुल आयु (एक हजार वर्ष) कालसूत्र नरकको एक दिन बराबर हुन्छ । त्यसैको समय अनुसार कालसूत्र नरकका वासिन्दाहरूको आयु एक हजार वर्षको हुन्छ जसलाई मनुष्यका आयुसित दाँजेर हेर्दा १ नील २९ खरब ६० अरब (१२,९६०,०००,०००,०००) वर्ष हुन पुग्छ ।

याम देव भुवनका देवताहरूको कुल आयु संघात नरकको एक दिन बराबर हुन्छ। त्यस समय अनुसार संघात नरकका वासिन्दाहरू दुइ हजार वर्ष आयुका हुन्छन् जो मनुष्यको आयुको हिसावले दस नील छत्तीस खरव अस्सी अरब (१०३,६८०,०००,०००,०००) वर्ष हुन्छ ।

रौरव नरकको एक दिन तुषित देवभुवनका देवताहरूको कुल आयु बराबर हुन्छ। त्यस समय अनुसार रौरव नरकका वासिन्दाहरू चार हजार वर्ष आयुका हुन्छन् जो मनुष्यको समय अनुसार ८२ नील ९४ खरब ४० अरब (८२९,४४०,०००,०००,०००) वर्ष हुन्छ ।

महारौरव नरकको एक दिन निर्माणरति देवभुवनका देवताहरूको कुल आयु बराबर हुन्छ। त्यस समय अनुसार त्यहाँका वासिन्दाहरू आठ हजार वर्ष आयुका हुन्छन् जो मनुष्यको समय अनुसार ६ शंख ६३ नील ५५ खरब २० अरव (६,६३५,५२०,०००,०००,०००) वर्ष हुन्छ ।

तापन नरकको एक दिन परनिर्मितवशवर्तीन देवताहरूको कुल आयु बराबर हुन्छ। त्यस समय अनुसार त्यहाँका वासिन्दाहरू सोऱ्ह हजार वर्ष आयुका हुन्छन् । जो मनुष्यको समय अनुसार ५३ शंख ८ नील ४१ खरब ६० अरव (५३,०८४,१६०,०००,०००,०००) वर्ष हुन्छ ।

प्रतपन नरक वासीहरूको आयु आधी अन्तर्कल्प बरावर हुन्छ। अवीचि नरकवासीहरूको आयु एक अन्तर्कल्प बराबर हुन्छ। जस्तो बताइएको छ :

> प्रतपनमा आधा अन्तर्कल्प अवीचिमा एक अन्तर्कल्प आयु हुन्छ।[६]

३.१.२. **उत्सद नरकहरू**: उत्सद नरकहरू माथि उल्लेखित आठ नरक-हरूका चार अन्तर्दिशाहरूमा अवस्थित हुन्छन् ।











उत्सद नरकहरूमध्ये पहिलो नरक *कुकूल नरक* हो । यस नरकमा घुँडासम्मको उँचाईमा रातो हुनेगरी बलिरहेको कोइलाका थुपो राखिएका हुन्छन् । प्राणीहरू कुनै आश्रयस्थलको खोजीमा यता उता भौंतारिदै त्यतातिर आइपुग्छन्, तिनीहरूका खुट्टाले ती बल्दा कोइलाहरूमा कुल्चनासाथ खुट्टाका छाला, मासु, रगत सबै आगोले पोलेर नष्ट हुन्छ । तर खुट्टा उचाल्नासाथ फेरी पहिलेको जस्तै बन्छ । यो पहिलो उत्सद यातना हो ।

कुकूल नरकसंगै अर्को *कुणप नरक* रहेको छ । त्यो नरक मलमुत्र तथा हिलोले भरिएको हुन्छ जहाँ सेतो जीउ र कालो टाउका भएका किराहरू बस्छन् । ती किराहरूले आफ्ना सुइ जस्ता तीखा चुच्चाले त्यहाँका प्राणीहरूलाई हाडहरू मात्र बाँकी रहने गरी टोक्छन् । यो दोश्रो उत्सद यातना हो ।

कुणप नरकसंगै यी तीनवटा नरकहरू पर्छन् : *क्षुरमार्ग* (जहाँ बाटाभरी छुराहरू विछ्याएका हुन्छन्), *असिपत्र वन* जहाँ फलामे दाह्रा भएका चण्ड कुकुरहरू बस्छन् र *शाल्मशीलवन* जहाँ फलामे चुच्चा र नंग्रा भएका कागहरू रहन्छन् । ती नरकमा प्राणीहरूले असह्य पीडाहरू खप्छन् । यो तेश्रो उत्सद यातना हो ।

ती नरकहरूसंगै भकभक उम्लिरहेको पानी भएको *वैतरणी नदी* बग्छ । वैतरणीको उम्लदो पानीमा पोलेर प्राणीहरू मर्छन् । त्यो नदीको दुवै किनारमा शस्त्र लिएका नरकपालहरू तैनाथ रहन्छन् जसले प्राणीहरूलाई नदी बाहिर आउन दिदैनन् । यो चौथो उत्सद यातना हो ।

हरेक अन्तर्दिशामा चारवटा उत्सद नरकहरूको एक समुह हुन्छ यसरी जम्मा १६ उत्सद नरकहरू छन् । जस्तो *अभिधर्मकोष* मा भनिएको छ :

> चार अन्तर्दिशामा क्रमशः कुकूल, कुणप, क्षुरमार्ग र वैतरणी नदी रहन्छन् ।[७]

के मनुष्य जस्तै देखिने रक्षकहरू, फलामे चुच्चा भएका कागहरू, इत्यादि नरकपालहरू साच्चिकै छन् त? यसमा विवाद रहेको पाइन्छ । वै











भाषिक मतावलम्वीहरू 'तिनीहरू साँच्चिकै छन्' भन्छन् तर सौत्रान्तिक मतावलम्बीहरू भने, 'छैनन्' भन्छन् । जबकि योगाचार लगायत मार्पा एवं मिलारेपाका मत अनुसार प्राणीहरूका आफ्नै पापकर्मको फलस्वरूप यस्ता प्रकारका नारकीय प्राणीहरू पापीहरूकै चित्तको प्रतिभासस्वरूप देखापर्छन् ।[८] यस सम्बन्धमा *बोधिचर्यावतार* ले यस्तो भन्छ :

नरकपालहरूका शस्त्रहरू प्रयत्नपूर्वक कसले बनायो ?
कसले प्रज्वलित फलामको भूमि निर्माण गऱ्यो ?
ती स्त्रीहरू कहाँबाट पैदा भए ।
ती आगाका लप्काहरू कहाँबाट आए ?
भगवान् बुद्धले 'यी सबै पापी चित्तबाटै
उत्पन्न भएका हुन्', भनी भन्नुभएको छ ।[९]

**३.१.३. आठ शीतनरक** : आठवटा शीत नरकहरू यस प्रकारका छन् : अर्वुद, निरर्वुद, अटट, हहव, हुहुव, उत्पल, पद्म र महापद्म । जस्तो *अभिधर्मकोष* मा बताइएको छ :

अर्वुद आदि अन्य आठ शीत नरकहरू छन् ।[१०]

शीत नरकहरू जम्बुद्वीप तल तर उष्ण नरकहरूमाथि नै पाइन्छन् । ती नरकहरूको नामाकरणकै आधारमा त्यहाँका वासिन्दाले दुःख भोग्छन् जसको संक्षिप्त विवरण यहाँ दिइन्छ । पहिलो दुइटा नरकहरूको नामाकरण त्यहाँका वासिन्दाहरूको शरीरमा उत्पन्न हुने विकारको आधारमा गरिएका हुन् । असह्य चिसोले गर्दा तिनीहरूको शरीरमा फोकाहरू उठेर फुट्छन् ।

अरू तीन नरकहरूको नामाकरण प्राणीहरूले असह्य चिसोबाट पिडित भएर निकाल्ने शब्द वा क्रन्दनहरूको आधारमा गरिएको हो र अन्तिम तीन नरकहरूको नामाकरण प्राणीहरूको शरीरमा उत्पन्न हुने विकारको आधार मा गरिएको हुन्छ ।











उत्पल नरकमा बस्ने प्राणीहरूका छालाको रङ्ग नीलो हुन्छ, र शरीरमा पाँच वा छ वटा प्वालहरू परेका हुन्छन् । पद्म नरकमा बस्ने प्राणीहरूका छालाको रङ्ग नीलो बाट रातोमा बदलिन्छ र शरीरमा १० वा सोभन्दा बढी प्वालहरू देखापर्न थाल्छन् । महापद्म नरकका प्राणीहरूका छालाको रङ्ग गाढा रातो हुन्छ र शरीरमा १०० वा सोभन्दा बढी प्वालहरू हुन्छन् ।

यी नारकीय प्राणीहरूको आयु कति हुन्छ त ? भगवान बुद्धले यसको जवाफ यसरी एउटा उपमाको माध्यमले दिनुभएको छ :

> हे भिक्षुहरू ! मानौ यस मगध देशमा रहेको अस्सी खारी (bushel)[११] तिल अटाउने अन्नागार पूरै तिलै तिलले भरिन्छ। अब कुनै व्यक्तिले एक एक शय वर्षको अन्तरालमा एउटा एउटा तिलको दाना त्यहाँबाट झिक्दै जान्छ । त्यो पूरा अन्नागार रित्याउन जति समय त्यो व्यक्तिलाई लाग्दो हो त्यो समय त अर्वुद नरकवासीहरूका आयु नै हुन्छ । हे भिक्षुहरू ! अर्वुद बासी प्राणीहरूको बीस वर्ष निरर्वुद बासी प्राणीहरूका लागि एक वर्ष हुन्छ । हे भिक्षुहरू ! यसै क्रमले महापद्ममा बस्ने प्राणीहरूका लागि त्यो एक वर्ष एक शय वर्ष बराबर हुन्छन् ।[१२]

यसलाई आचार्य बसुवन्धुले यसरी संक्षेपीकरण गर्नुभएको छ :

> कुनै अन्नागारबाट एक एक शय वर्षको अन्तरालमा एउटा एउटा तिल निकाल्दै जाने हो भने त्यो अन्नागार पूरै रित्या-उन जति समय लाग्छ त्यति नै समय अर्वुद नरकका वासिन्दाहरूको आयु हुन्छ । अरू नरकहरूका वासिन्दाहरूको आयु क्रमशः बीस गुणा हुन्छन् ।[१३]

अतः तिलै तिलले भरिएको अन्नागार पूरै रित्याउन जति समय लाग्छ त्यति नै समय अर्बुद नरकमा बस्ने प्राणीहरूका आयु हुन्छ भने निरर्बुदवासीका











बीस अन्नागार, अटटवासीका चारसय, हहवका आठ हजार, हुहुवका एक लाख साठ्ठी हजार, उत्पलका बत्तीस लाख, पद्मका छ करोड चालीस लाख र महापद्म नरकका वासिन्दाहरूका आयु एक अरब अठाइस करोड अन्नागार पुरै रित्याउन लाग्ने समय बराबर आयु हुन्छ ।

३.१.४ **प्रादेशिक नरक** : दुई वा सो भन्दा ज्यादा प्राणीहरूका आफ्ना कर्म-हरूको फलस्वरूप प्रादेशिक नरकहरूको उत्पत्ति हुन्छ । प्रादेशिक नरक विभिन्न प्रकारका हुन्छन् र तिनको स्थानपनि निश्चित हुँदैन । कुनै प्रादेशिक नरक नदीनालामा पाइन्छ भने कुनै पहाड वा भयावह मरुभूमिमा पनि पाइने गर्छन् । आर्य महामौद्गल्याण*ले देख्नुभए बमोजिम कुनै पृथ्वीमूनि हुन्छन् भने कुनै मनुष्यहरूकै निवासस्थान पनि हुन्छन् । मरुभूमिको प्रादेशिक नरक आर्य संघरक्षित**ले देख्नुभएको थियो । प्रादेशिक नरकमा आयु पनि अनिश्चित नै हुन्छ ।

नारकीय सत्त्व प्राणीहरूको दुःखको वर्णन यही समाप्त हुन्छ ।




३.२. **प्रेत लोक** : प्रेतहरूका दुई प्रकारका हुन्छन् । प्रेतराज यम, र उनीद्वारा प्रेषित प्रेतहरू । तिनीहरू कहाँ बस्छन् त ? प्रेतराज यमको वासस्थान यो जम्बुद्वीपभन्दा पाँचशय योजन तल छ । जबकी उनीद्वारा प्रेषित प्रेतहरूका स्थान निश्चित हुँदैन । तिनीहरू कहिले मरुभूमिमा बस्छन् त कहिले कता ।

यमद्वारा प्रेषित प्रेतहरू तीन प्रकारका छन् । *आहार पेयसम्बन्धी बाह्य दृष्टि आवरण भएका, आहार पेयप्रति भित्री दृष्टि आवरण भएका,* र *दुईटै आवरण भएका प्रेतहरू*

यी विभिन्न प्रकारका प्रेतहरूले कस्ता किसिमका दुःखहरू भोग्छन् त ? यसको उत्तर यस प्रकार छ : कुनै प्रेतहरूले देवताहरूले जस्तै बैभवको उपभोग गर्छन् तर बाह्य दृष्टि आवरण भएका प्रेतहरूको हेराइमा खाद्य र पेयपदार्थ पनि रगत र मलमुत्रको रूपमा देखापर्छ । कसैले यसरी सबैथोक रगत र मलमुत्रहरूका रूपमा मात्र देखिने भएकाले आफैलाई खानपिनबाट











बञ्चित राख्छन् । भित्री आवरण भएका प्रेतहरूका हेराइमा कुनै व्यवधान हुन्न तर तिनीहरूले केहीपनि खान वा पिउन भने सक्दैनन् । जस्तो ग्रन्थमा बताइएको छ :

केहीको मुख सियोको प्वाल जत्रो र
पेट चाहिँ पर्वत जत्रो हुने भएकाले
खान खोज्दा फोहरको डंगुरमा फ्याँकिएको
अन्नको एक कणसम्म पनि खान सक्दैनन् ।

आहार पेय सम्बन्धी दृष्टि आवरण भएका प्रेत दुई प्रकारका हुन्छन् :– *अग्निशिखामाली* र *संकाराशी* । पहिलो अर्थात अग्निशिखामाली प्रेतहरूले केही खायो वा पियो कि जलेर भष्म हुन्छ । अर्को संकाराशी प्रेतहरूले दिशा, पिशाव र आफ्नै मासु काटेर खान्छन् । श्रोणकोटीकर्णले यो सबै दृष्य कुनै भयावह मरुभूमिमा देखेका थिए ।

ती प्रेतहरूको आयु कति छ भन्दाखेरी मानिसहरूका एक महिना उनीहरूका लागि एक दिन बराबर हुन्छ । तदनुसार उनीहरूको आयु पाँच सय वर्ष हुन आउँछ । यसबारे यस्तो उल्लेख छ :

मानिसहरूको एक महिना प्रेतहरूका लागि एक दिन बराबर
हुन्छ । त्यस अनुसार उनीहरूको आयु पाँच सय बर्ष हुन्छ ।[१४]

३.३. **तिर्यक लोक** : तिर्यक (पशु) चार प्रकारका हुन्छन् – बहुपाद, चतु-ष्पाद, द्विपाद र अपाद

ती पशुहरू पानीमा, सुख्खा जमीनमा र जंगलमा रहन्छन् । तैपनि तिनका मुख्य वासस्थान भने महासागर नै हो ।

तिर्यकहरूले कस्ता दुःखहरू भोग्छन् त ? तिनीहरूको दुःख नै कार्यमा प्रयोग, मारिने दुःख र परस्पर भक्षण (एकले अर्कालाई मारेर खाने) को दुःख ।











कार्यमा प्रयोग गरिने दुःख ती पशुहरूले भोग्छन् जो मानिसको वशमा परी दास जस्तै बन्छन् । यसबारे यस्तो उल्लेख छ :

> विचरा निरीह पशु जसलाई मानिसहरूले हातले कुट्छन्, लात्ताले हान्छन्, कोर्राले हिर्काउँछन्, अंकुश लगाई काममा प्रयोग गर्छन् ।

दोश्रो मारिने दुःख भोग्ने पशुहरू शिकारका पशुहरू इत्यादि हुन् । ती पशुहरूको बारे यस्तो उल्लेख पाइन्छ :

> केही पशुहरूलाई मोती, ऊन, हाड, मासु र छालाको लागि मारिन्छ ।

तेश्रो परस्पर भक्षणको दुःख भोग्ने पशुहरू मुख्यतयाः महासागरमा रहन्छन् । ती पशुहरूका बारे यस्तो बताइएको छ :

> ती पशुहरूले तिनीहरूको मुखमा जे आहार वा खानेकुरा पर्छ त्यही खान्छन् ।

पशुहरूका आयु अनिश्चित हुन्छ, धेरै लामो समयसम्म बाच्ने पशुको आयु एक अन्तरकल्प हुन्छ । यस सम्बन्धमा यस्तो कथन पाइन्छ :

> पशुहरूको अधिकत्तम आयु एक कल्प हुन्छ ।[१५]

दुर्गतिका दुःखहरूको वर्णन यहीँ समाप्त हुन्छ ।

सुगतिका दुःखलाई तीन वर्गमा बाँडिएको छ : मनुष्यहरूको दुःख, असुर योनिको दुःख र देवयोनीको दुःख ।











**३.४. मनुष्य लोक :** मनुष्यहरूका दु:ख आठ प्रकारका हुन्छन् । गर्भावक्रान्ति-सूत्रमा यस्तो भनिएको छ :

> जन्मनु दु:ख हो, जरा दु:ख हो, व्याधि दु:ख हो, मरण दु:ख हो, प्रियजनबाट वियोग हुनु दु:ख हो, अप्रियजनहरुसितको मिलन दु:ख हो, अभीष्ट बस्तु प्राप्त नहुनु दु:ख हो, एवं उपलब्ध बस्तुको संरक्षण दु:ख हो ।

*जन्म दु:ख* : जन्मनु नै अन्य समस्त दु:खहरूको मुहान हो । जन्म चार प्रकारबाट हुन सक्छ ।[१६] तर यहाँ जरायुज अथवा कोखबाट जन्मनुलाई नै प्रसंग बनाइएको छ । अन्तराभवबाट गर्भमा कसरी प्रवेश गरिन्छ यसको वर्णन निम्नानुसार छ :

अन्तराभवमा सबै प्राणीहरू ऋद्धिले सम्पन्न हुन्छन् । उनीहरू आकाश-मार्गबाट जान सक्छन् र आफ्ना दिव्यचक्षुद्वारा जतिसुकै टाढा रहेको आफ्नो भावी जन्मस्थल पनि सजिलै देख्न सक्छन् । तैपनि त्यसबेला आफ्नो कर्मको फलस्वरूप उनीहरूले ४ प्रकारका भ्रान्तिमय अनुभूतिहरू महसूस गर्छन् : आँधीवेहरी हुनु, घन्घोर वृष्टि हुनु, पूरै आकाश अँध्यारो देखिनु, थुप्रै मानिसहरू कराएको जस्तो भयानक कोलाहलपूर्ण आवाजहरू सुनिनु । त्यसपछि, उनीहरूका कुशल वा अकुशल कर्म अनुसार दश भ्रान्तिमय विचारहरू उत्पन्न हुन्छन् । उनीहरू सोच्छन्, 'म दिव्य महलमा प्रवेश गरिरहेको छु', 'घरको दोश्रो तल्ला उक्लदैछु', 'आसनमा चढ्दैछु', 'घाँसको छाप्रोमा प्रवेश गर्दैछु', 'पातले बनेको घरमा पस्दैछु', 'घाँसको बिचबाट जाँदैछु', 'जंगल भित्र पस्दैछु', 'पर्खालको प्वालमा प्रवेश गर्दैछु', 'परालभित्रबाट जाँदैछु' । यसरी सोँच्दै, उनीहरूले टाढैबाट आफ्ना भावी मातापिताले सम्भोग गरिरहेको देख्छन्, र त्यहीँ जान्छन् । जीवित छँदा विपुल पुण्यहरू सञ्चित गरेका रहेछन् जसको फलस्वरूप उच्च कुलमा जन्म हुनुपर्ने हुन्छ भने तिनीहरूले दिव्य महल, दुइतल्ले भवन र अरू कुनै महल देख्छन् र त्यतै तर्फ दगुर्छन् । जसले मध्यम कुलमा जन्माउने मध्यम पुण्यहरू सञ्चय











गरेका हुन्छन् तिनीहरूले घाँसको छाप्रो वा अरू छाप्रो कुटीहरू देख्छन् र त्यतैतर्फ लाग्छन् । जीवित छँदा कुनै प्राणीले कुनै पुण्य कर्म नै गरेको रहेनछ भने त्यस्ता प्राणीको जन्म निम्नकुलमा हुने हुँदा, पर्खालको प्वालमात्र देखेपनि त्यतै तर्फ दगुर्छन् । त्यो अन्तराभवीय सत्त्व ती ठाउँहरूमा गएर गर्भभित्र पस्छन् । पुरुष भएर जन्मने प्राणीको मनमा आमाप्रति राग र बाबुप्रति घृणा उत्पन्न हुन्छ । त्यसको ठीक उल्टो स्त्री भएर जन्मने प्राणीको मनमा आमाप्रति द्वेष र बाबुप्रति राग उत्पन्न हुन्छ । राग वा द्वेष भावनाले ओत प्रोत भएपछि त्यो विज्ञानयुक्त अन्तराभवी प्राणी आमाबाबुले स्खलन गरेको वीर्य र रजमा गएर मिसिन्छ । यसवेला देखि त्यो प्राणी अड्तीस हप्तासम्म आमाकै गर्भमा रहिरहन्छ भन्ने भनाइ छ । कोही कोही भन्छन् बच्चाहरू आठ, नौ वा दस महिनासम्म गर्भमा रहन्छन् । कोही भन्छन् यत्ति नै महिना हुन्छ भन्न सकिन्न । कोही कोही त साठी वर्षसम्म पनि बच्चाहरू आमाको गर्भमा रहन्छन् भनेर भन्छन् ।

पहिलो हप्तामा आमाको गर्भभित्र रहेको त्यो प्राणीले कायेन्द्रिय र विज्ञानद्वारा एउटा तातो कराईमा आफू तारिएको सरह असह्य पीडाको अनुभव गर्छ । यस अवस्थामा गर्भको भ्रूणलाई कलल भनिन्छ जुन जाउलो वा मही जस्तै देखिन्छ ।

त्यसपछि दोश्रो हप्तामा आमाको गर्भबाट एउटा संस्पर्श नामक वायु उत्पन्न हुन्छ, त्यो वायुले गर्भलाई छोएपछि, चारधातुहरू[१७] स्वत उत्पन्न हुन्छन् । यस समयमा भ्रूण लाम्चो आकारको हुन्छ जसलाई अर्वुद भनेर भनिन्छ र बाक्लो तर वा जमेको घ्यू झै देखिन थाल्छ ।

तेश्रो हप्तामा कोष नामक वायु उत्पन्न हुन्छ, त्यो वायुले गर्भलाई छोएपछि, चारधातुहरू पूर्णरूपले अभिव्यक्त हुन्छन् । यस अवस्थामा भ्रूण-लाई पेशी भनिन्छ र फलामे चम्चा वा कमिला झै देखिन्छ ।

क्रमशः सातौ हप्तामा आवर्त्तक नामक वायु उत्पन्न हुन्छ । त्यो वायुले गर्भलाई छोएपछि भ्रूणबाट हात खुट्टाहरू निक्लन थाल्छन् । यस चरणमा कुनै बलियो हावाले आफ्ना अंगहरू जबरजस्ती तानेर कसैले तिनलाई लट्ठीले बेस्सरी पिटेको जस्तो पीडा हुन्छ ।











एघारौँ हप्तामा आमाको गर्भबाट छिद्रदर्शी नामक वायुको उत्पत्ति हुन्छ । त्यो वायुले गर्भलाई छोएपछि गर्भमा रहेको शरीरमा नौ वटा प्वालहरू देखापर्छन् । त्यस बेला घाउमा औँलाले घोंचे सरह पीडा हुन्छ । आमाले उचित मात्रामा खाना नखाई केवल चिसो खाना मात्र खाइरह्यो भने गर्भको बच्चालाइ यति पीडा हुन्छ कि मानौ कुनै नाङ्गो व्यक्तिलाई बरफमा फालिएको होस् । तातो वा तीतो खाना खायो भने पनि यस्तै पीडा हुनेगर्छ । धेरै खाना खायो भने चट्टानहरूबीच थिचिएको जस्तो अनुभव हुन्छ । कम मात्र खायो भने आफू बीच हावामा झुन्डिएको जस्तो अनुभव हुन्छ । आमाले दगुर्दा, उफ्रँदा वा चिप्लेर लड्दाखेरी गर्भभित्रको बच्चालाई भीरबाट बल्ड्याङ्ग खाई खसे झै कष्ट हुन्छ । गर्भवती अवस्थामा आमाले अत्यधिक संभोग गरेमा, गर्भभित्रको बच्चालाई काँढायुक्त कोर्राले हिकाएर्को जस्तो पीडा हुन्छ ।

सैँतीसौँ हप्तामा, अझै गर्भमै रहेको बच्चाले आफू गर्भको फोहर, दुर्गन्ध, अंध्यारो र कैदमा एकदम उकुसमुकुस भएको अनुभव गर्छ र त्यहाँबाट बाहिर निक्लने इच्छा गर्छ ।

अड्तीसौ हप्तामा, आमाको गर्भमा पुष्पसंग्राहक नामक वायु उत्पन्न हुन्छ । त्यो वायुले गर्भको बच्चालाई पल्टाईदिन्छ र गर्भको मुखनेर घचेटि-दिन्छ । यसबेला, बच्चालाई कुनै फलामे यन्त्रमा राखी क्षत विक्षत पारेको जस्तै पीडा हुन्छ ।

यसरी धेरै समयसम्म तातो कराईमा तारिए र पकाइएझै गर्भभित्रको तापमा तारिए र पाकिएपछि गर्भको शिशुलाई अट्ठाइसवटा विभिन्न वायुले छोएर हल्लाइदिन्छ । आमाले ग्रहण गरेको भोजनको सारमात्र खाई त्यो अण्डाकारको भ्रूण विकसित हुँदै साधारण शरीरमा परिणत हुन्छ । यसलाई *गर्भवक्रान्तिसूत्र* मा यसरी दर्शाएको छ :

> सर्वप्रथम कललबाट अर्बुद नामक
> मासुको डल्लो उत्पन्न हुन्छ,
> अर्बुदबाट पेशी उत्पन्न हुन्छ,









पेशीमा घनत्व आउन थाल्छ
त्यति भइसकेपछि
टाउको र चार अङ्गहरू उत्पन्न हुन्छन्
र हाडहरू एक ठाउँमा मिलेर शरीर बन्छ
यी सबै कर्मकै कारण हुन्छन् ।

त्यसपछि अन्तिममा प्राङ्गमुखी नामक वायु उत्पन्न हुन्छ । यसले शिशुलाई अधमुन्टो पारिदिन्छ र शिशु हात फैलाएर गर्भबाट बाहिर निस्कन्छ । यसबेला फलामे तारहरूले बनेको जालीको प्वालबाट बेस्सरी ताने सरह पीडा हुन्छ ।

कुनै शिशु गर्भमै मर्छ र कुनै जन्म प्रकृयामा आमासंगै मर्छ। जन्मनासाथ शिशुलाई भूइँमा राखिन्छ, त्यसबेला उसलाई एक खस्रो सतहमा राखिए झैं कष्ट हुन्छ । जब पहिलोचोटि उसको शरीरलाई रुमाल वा अन्य चीजले पुछिन्छ, त्यो बेला पर्खालमा घिस्रिएर छाला खुर्केको जस्तो पीडा हुन्छ । लामोसमयसम्म नवजात शिशु पीडा, ताप, अन्धकार र दुःख वेदना झेलेर बस्छ । तिमी दुई दिनसम्म फोहरले भरिएको एउटा कालकोठरीमा बस्नु, म त्यसको बदलामा तीनवटा असर्फी दिन्छु भनी कसैले तिमीलाई भन्छ भने तिमी जतिसुकै लोभी भएपनि त्यहाँभित्र बस्न मान्दैनौ । गर्भभित्रको पीडा त त्यो भन्दा पनि अधिक हुन्छ । जस्तो *शिष्यलेख* मा पनि भनिएको छ :

असह्य दुर्गन्धको आवरणमा ढाकिएर
अति सन्नाटापूर्ण अन्धकारमा कुण्ठित भएर
नरकजस्तो गर्भमा बस्दा उसको शरीर खुम्चिएर
अति पीडादायी अवस्थामा पुग्छ ।[१८]

यति विघ्न दुःख हुन्छ भन्ने थाहा पाएपछि कोहीपनि प्राणीले एक-चोटिको लागि पनि गर्भमा प्रवेश गर्ने आँट गर्दैन ।











*वृद्धावस्थाको दुःख* : वृद्धावस्थाका दुःख पनि असीमित नै छन् । संक्षेपमा यी दुःखहरू दश प्रकारका हुन्छन् : रूपमा परिवर्तन, केशमा परिवर्तन, छालामा परिवर्तन, वर्णमा परिवर्तन, बलमा परिवर्तन, तेजमा परिवर्तन, भाग्यमा परिवर्तन, स्वास्थ्यमा परिवर्तन, चित्तमा परिवर्तन र जीवनको अन्त्य नजिकिएपछि मृत्यु हुनु ।

रूपमा परिवर्तन : जुन शरीर एकपल्ट बलियो, कडा थियो त्यो अब बदलेर कुप्रो टेढो हुन्छ, कतै हिड्नको लागि लौरोको सहारा लिनुपर्ने हुन्छ ।

केशमा परिवर्तन : जुन केश वा कपाल पहिले कालो मौरीजस्तै एक-दम कालो र चम्किलो थियो त्यो अब बदलेर सेतो फुलेको हुन्छ । कसैको त तालु नै खुइलिन्छ ।

छालामा परिवर्तन : पहिले एकदम बनारसी कपडाझै छुन मनलाग्ने मिहिन, नरम र सुगन्धित छाला बृद्धावस्थामा बाक्लो खस्रो, रुखो, टुक्रेका चुराहरूसरी चाउरी परेको हुनजान्छ ।

वर्णमा परिवर्तनः भर्खर फक्रेको कमलको फूल झैँ चहकिलो र तेजिलो वर्ण परिवर्तित भएर ओइलाएर झरेको फूल झै निस्तेज हुनपुग्छ ।

बलमा परिवर्तन : पहिला जुन उत्साह र शक्ति थियो अब त्यो रहन्न । सबै क्षीण भएर सुक्छन् । शारिरीक शक्ति नै नभएपछि, उसलाई काम गर्नै गाऱ्हो हुन्छ । इन्द्रियहरू सबै क्षीण हुँदा काम गर्ने जाँगर पनि रहन्न, कुनै पनि चीज दऱ्हो किसिमले समात्न सक्दैन, सबै आफूले चाहेभन्दा विपरित भइदिन्छन् ।

तेजमा परिवर्तनः जुन व्यक्तिलाई पहिले अरूले आदर सत्कार र प्रशंसा गर्ने गर्थे, आज आएर त्यही व्यक्तिलाई आफूभन्दा सानाले पनि हेप्न थाल्छन् । ऊ कसैको प्यारो हुनेछैन । तुच्छ व्यक्तिले पनि हेप्न थाल्छ । छोराहरूको अपमान धम्की सहनुपर्नेछ, नातिहरूले समेत गिज्याउँनेछन् ।

भाग्यमा परिवर्तन : हामीले पहिले पहिले खाने गरेका, उपभोग गर्ने गरेका खानाहरू, शारिरीक सुखमा पनि हाम्रो रुची घट्दै जान थाल्छ । न्यानो कपडा पहिरिएपनि शरीरमा न्यानोको अनुभव पटक्कै हुन्न, र स्वादिलो खाना खाएपनि जिब्रोमा कुनै स्वाद हुन्न । बिशेषगरी नभएका चीजहरू











मात्र खान मन लाग्छ । त्यस्तो बेलामा स्याहार सुसार गर्ने र आफूले चाहेको वस्तु उपलब्ध गरिदिनेहरू पनि हुँदैनन् ।

स्वास्थ्यमा परिवर्तन : वृद्धावस्था सबै रोगहरूको जड हो । प्राणी बुढो हुँदै गएपछि सबै प्रकारका रोगहरू पनि लाग्छन् । त्यसैले सबैले उसलाई गाली गर्छन्, ऊबाट टाढा रहन खोज्छन् ।

चित्तमा परिवर्तन : आफैले केही बेर अघि भनेको कुरालाई पनि उसले तुरुन्त विर्सन्छ । भ्रमित भई जथाभावी बोल्छ ।

जीवनको अन्त्य नजिकिएपछि मृत्यु हुनु : श्वास फेर्न कठिनाई हुन्छ र आवाज पनि लरबरिन थाल्छ । चित्तका सबै शक्ति क्षीण हुँदै गएर अन्त्यमा मृत्यु आइपुग्छ । जस्तो *ललितविस्तर* मा भनिएको छ :

> जराले सुन्दर रूपलाई कुरूप बनाइदिन्छ,
> जराले स्वास्थ्य र बलको हरण गर्छ ।
> जराले सुख हरेर दुःख ल्याउँछ ।
> जराले मृत्यु ल्याउँछ र तेज पनि हरेर लान्छ ।[१९]

*व्याधिको दुःख* : ब्याधिका दुःख पनि असीमित नै छन् । संक्षेपमा व्याधिका दुःख ७ प्रकारका हुन्छन् : तीव्र पीडाजनित दुःख, कष्टदायी उपचार झेल्नुपर्ने दुःख, चर्को औषधी खानुपर्ने दुःख, आफूले चाहेको खानेकुरा खानबाट निषेद्धित हुनुपर्ने दुःख, चिकित्सकहरूको सल्लाह मान्नुपर्ने बाध्यताको दुःख, सम्पत्ति सिद्धिने दुःख र मृत्युको डर । *ललितविस्तर* मा भनिएको छ :

> यो संसार सयौँ प्रकारका रोगहरूबाट उत्पन्न दुःखले ग्रस्त छ । शिकारीद्वारा सताइएका मृगहरू झैँ सबै सत्त्व (प्राणी)हरू यी रोग-हरूद्वारा पिडित छन् ।[२०]

*मरणको दुःख* : मरणका दुःखहरू पनि असीमित नै छन् । जस्तो *राजाववादकसूत्र* मा भनिएको छ :











हे महाराज ! यसरी यमराजका त्रिशुलले सत्त्व (प्राणी)का जीउमा छेँडेपछि सबै अहंकारहरू उडेर जान्छन् । उसले खानको लागि केही भोजन हुन्न, उसका कुनै शरण, रक्षक वा मित्र आफन्त हुन्न । रोगले ग्रस्त भई उसको मुख प्यासले सुक्न थाल्छ । उसको अनुहारको रङ्ग बदलिन थाल्छ । हातखुटा लरबराउन थाल्छ । केही काम गर्न नसक्ने हुन्छ । र्‍याल, सिङ्गान, दिशा, पिशाव, वान्ता, खकार इत्यादिले पूरै शरीर लटपटिन्छ । चिकित्सकले आसै छोडेर उपचार त्यागिदिन्छ । ऊ मृत्युशैयामा सुति-रहन्छ र यस लोकको भवसन्तति अन्तराभवमा डुब्न खोज्छ । यमदुतहरूदेखि ऊ डराउँछ । श्वास प्रश्वास रोकिन्छ । मुख र नाक खुल्ला रहन्छ । ऊ यो संसार त्यागेर अरू लोकमा जान्छ । ऊ सदाको लागि त्यो ठाँउ त्यागी एक भीषण सन्नाटा भएको अन्तराभवमा पुग्छ । ऊ भयंकर गहिरो खाडलमा खस्छ र महासागरले उसलाई बगाएर लान्छ । कर्मको वायुले उसलाई तान्दै त्यस्तो ठाउँमा पुर्‍याइदिन्छ जहाँ कुनै दरिलो जमीनै हुन्न । उसले आफ्नो धनसम्पति दामासाहिमा परेको देख्छ, 'हे मेरी आमा ! हे मेरा बुबा ! हे मेरा सन्तानहरू !' भनेर ऊ जतिसुकै अत्तालिएर कराएपनि हे महाराज, उसको धर्म सिवाय केही शरण हुन्न ।

*प्रियजनबाट वियोगको दुःख* : हाम्रा प्यारा बुवा, आमा, छोराछोरीहरू र नातिनातिनीहरू सबै एकदिन मर्छन् । तिनीहरूको मृत्युमा हामीले तीव्र शोक गर्छौं, पीडाको अनुभव गर्छौं, रुन्छौं, कराउछौं । यसरी असीमित दुःख भोग्छौं । यो नै प्रियजनबाट वियोगको दुःख हो ।

*अप्रियजनसित संयोग हुँदाको दुःख* : हाम्रा शत्रुहरू हुन्छन् । ती शत्रुहरूसित द्वेषको वशमा परि वाद–विवाद, मारपीट इत्यादि गरेर दुःखहरू झेल्छौं ।











अन्तिम दुई वटा दुःखहरू (अभिष्ट अप्राप्ति दुःख र उपलब्ध बस्तुको संरक्षणमा कठिनाई) बुझ्न त्यति गाऱ्हो नभएकाले यहाँ तिनको व्याख्या गरिरहन आवश्यक नहोला ।

**३.५. असुर लोक** : असुरहरूको दुःख पनि देवताहरूले भोग्ने दुःख नै हुन् । तर ती बाहेक पनि असुरहरूलाई अहंकार, ईर्ष्या र युद्धको दुःख पनि हुने गर्छ । यस बारे यस्तो भनिएको छ :

> असुरहरूमा देवताहरूको ऐश्वर्यप्रति स्वभावैले
> इर्ष्या हुने भएकाले मानसिक दुःख धेरै नै हुन्छ ।

**३.६. देव लोक** : कामधातुका देवताहरूले पनि असुरहरूसित लड्नुपर्ने दुःख भोग्नुपर्छ । यो बाहेक उनीहरूले कामभोगबाट असन्तुष्ट हुनुपर्ने दुःख, अपमानित हुनुपर्ने दुःख, मारिने दुःख, निष्कासन, च्युति तथा पतनका दुःखहरू भोग्नुपर्छ । यस बारे यस्तो भनाइ छ :

> देवताको मृत्यु समयमा पाँच प्रकारका लक्षणहरू देखापर्छन् । उसको वस्त्र मैलो हुन्छ ; उसले लगाएका मालाका फूलहरू ओइलाएर झर्छन् ; उसको काखीबाट पसिना निस्कन्छ ; उसको शरीरबाट दुर्गन्ध आउन थाल्छ ; उसलाई आफ्नै आसन अप्रिय लाग्न थाल्छ ।

रूप र अरूप धातुमा यस्ता दुःख पाइँदैन । तर ती ठाउँहरूपनि च्यूति एवं स्थानबाट स्वतन्त्र चाहिँ छैन । त्यहाँका प्राणीहरूले दौष्ठूल्य दुःख (त्यहाँबाट पतन भएर अरू दुर्गतिमा भोग्नुपर्ने दुःख) भोग्छन् । आफूले पूर्वजन्ममा संगृहित गरेको कर्मले प्राणीले यस्तो सुगति एवं स्वर्गको सुख भोग्छ । तर आफ्ना सारा कर्मको क्षय भइसकेपछि ऊ त्यहाँबाट पुनः दुर्गतिमै पतन भएर दुःख भोग्छ ।











तसर्थ यो संसार स्वभावैले दु:खमयी र एक बलिरहेको घर सरह हो । *गर्भवक्रान्तिसूत्र* मा भनिएझैँ :

> अहो ! यो भवसागर ज्वलित, प्रज्वलित एवं संप्रज्वलित छ । यसबाट प्रभावित नहुने कोही छैन । यो संसार राग, द्वेष, मोहको आगो, जन्म, जरा, व्याधिको आगो, शोक, परिदेव, दौर्मनस्य र क्षोभको आगोले सदा बलिरहेको छ । त्यसबाट कोहीपनि बच्न सक्दैन ।

अत: यस्तो तीव्र दु:खलाई देखेर प्राणीले भवसुखबाट आफ्नो चित्तलाई विमुख पार्नु पर्छ । यो सम्बन्धमा *पितापुत्रसमागमसूत्र* मा भनिएको छ :

> संसारको दु:ख देखेपछि
> तपाईंभित्र संवेगको चित्त उत्पन्न हुन्छ ।
> यो त्रैधातुक कारागारदेखि भयभीत भएर
> प्रयत्नपूर्वक यसलाई त्यागिदिनुपर्छ ।

यसलाई आचार्य नागार्जुनले पनि पुष्टि गर्नुभएको छ :

> संसारको स्थिति यस्तो छ कि देव, मनुष्य, असुर, तिर्यक, प्रेत र नरक जहाँ जन्मिएपनि सुख त कहीँ भेटिँदै भेटिन्न । त्यसैले जन्मलिनु भनेकै अनेक दु:खहरूका पात्रभूत हुन् भनी जान्नु ।

**सद्धर्मचिन्तामणि-मुक्तिरत्नालंकार** अन्तर्गत
भवदु:ख निर्देश नामक पञ्चम परिच्छेद समाप्त









# परिच्छेद ६
## कर्म र त्यसको फल

अगाडिका पृष्ठहरुमा वर्णन गरिएका दुःखहरूको मुल हेतु कुन हो भनेर सोंच्ने हो भने सास्रव कर्म नै ती दुःखहरूको हेतु हो भन्ने कुरा स्पष्ट हुन्छ। सास्रव कर्मद्वारा नै दुःख उत्पन्न हुन्छ। जस्तो *कर्मशतकसूत्र* मा भनिएको छ :

> कर्म नाना थरीका हुन्छन् र
> त्यही कर्मले गर्दा नै विभिन्न गति (लोक) हरुको सृजना हुन्छ।

यसै सम्बन्धमा *करुणापुण्डरीक सूत्र* मा पनि बताइएको छ :

> यो संसार कर्मकै निर्माण वा सिर्जना हो। सत्त्वहरू कर्मकै उपज हुन् वा कर्मकै कारणले सत्वहरू प्रकट हुन्छन्। कर्मकै कारण तिनीहरू वर्गीकृत हुन्छन्।

*अभिधर्मकोश* मा यस्तो बताइएको छ :

> कर्मको कारणले विभिन्न लोकहरू उत्पन्न हुन्छन्।[1]

कर्म भनेको के हो ? कर्म चेतना र चेतनायुक्त कार्य (चेतयित्वा) हुन्। अर्थात् चेतना कर्म र चेतयित्वा कर्म। *अभिधर्मकोश* मा पनि यही कुरा बताइएको छ :

> कर्म के हो ? कर्म चेतना र चेतनायुक्त कार्य हो।[2]











*मूलमध्यमककारिका* मा पनि यस्तै उल्लेख गरिएको पाइन्छ :

> कर्म चेतना र चेतयित्वा हो भनेर
> महामुनिले भन्नुभएको छ ।[३]

चेतना कर्म र चेतयित्वा कर्म भनेका के हुन् ? चेतनाकर्म मानसिक कर्म हो भने चेतयित्वा कर्म भनेको चेतनाद्वारा प्रेरित कर्म हो जुन काय र वाकद्वारा गरिन्छ । यही कुरालाई *अभिधर्मकोश* मा यसरी बताइएको छ :

> चेतना मानसिक कार्य हो
> यसको फलस्वरूप कायिक र वाककर्म उत्पन्न हुन्छन् ।[४]

यी दुई प्रकारका कर्महरूको व्याख्या गर्नुपर्दा देहायबमोजिमको सारभूत शीर्षकहरुको सहायता लिनुपर्ने हुन्छ ।




भेद, लक्षण, स्वग्राह्यता, कटु वा अकाट्य फल,
अल्प हेतु विपुल विपाक, अविप्रणाश ।

१. **कर्म फलको भेद** : कर्मफलको भेद तीन प्रकारको छ । अपुण्य कर्म–फल, पुण्य कर्म–फल तथा आनिञ्जय कर्म–फल ।

**२. हरेक भेदका लक्षण**

**क. अपुण्य (अकुशल) कर्म–फल** : हरेक भेदका लक्षण ब्याख्या गर्ने क्रममा सर्वप्रथम यहाँ अपुण्य (अकुशल) कर्म-फलको भेदका बारे नै चर्चा गरिन्छ । सामान्यतः अपुण्य कर्म–फल अनेक किसिमका हुन्छन् । तैपनि ती सबै दश अकुशल कर्म अन्तर्गत नै समावेश हुन्छन् । दश अकुशल कर्म मध्ये प्राणातिपात आदि तीन कायसित सम्बद्ध, मृषावाद आदि चार वाक्सित











सम्बद्ध र अभिद्या आदि तीन चित्तसित सम्बद्ध हुन्छन् । हरेक वर्गलाई भेद, फल र विशेष यी तीन शीर्षकहरु अन्तर्गत व्याख्या गरिनेछ ।

(१) **प्राणातिपात**

१.१) *प्राणातिपातका भेद* : प्राणातिपात अर्थात हत्या गर्नुका तीन भेद छन् : रागवश गरिने हत्या, द्वेषवश गरिने हत्या र मोहवश गरिने हत्या । यिनमध्ये पहिलो प्रकारको हत्या जनावरहरूको मासु, छाला र अरू अङ्गको लागि गरिन्छ, शिकारको लागि वा पैसाको लागि गरिन्छ, वा आफैलाई र आफ्ना साथीहरूलाई बचाउनको लागि गरिन्छ । दोश्रो प्रकारको हत्या अर्थात् द्वेषवश गरिने हत्या भनेको द्वेषले प्रेरित भई कुनै शत्रु वा प्रतिद्वन्दीहरूको हत्या गर्नु हो । तेश्रो प्रकारको हत्या अर्थात मोहवश गरिने हत्या भनेको अज्ञान-तावश यज्ञ, उत्सव आदिहरूमा निरिह प्राणीहरूको बलि चढाउनु हो ।

१.२) *प्राणातिपातका फल :* यस्ता कर्महरुको फल पनि तीन प्रकार-का हुन्छन् : विपाक फल, निष्यन्द फल र अधिपति फल । विपाक फलस्वरूप प्राणीहरू नरकमा जन्मिन्छन् । निष्यन्द फलस्वरूप प्राणीहरू मनुष्य गतिमा जन्मिएतापनि आयु एकदम छोँटो भई सधैजसो रोगहरूको वशमा रहने हुन्छ । अधिपति फलस्वरूप प्राणीहरू संकटग्रस्त, अनिकालग्रस्त र विपन्न देशमा जन्मिन्छन् ।

१.३) *प्राणातिपातको सम्बन्धमा विशेष* : प्राणातिपातको सम्बन्धमा विशेष के हो भने हत्याका सबै पापहरू मध्ये पितृहत्या वा अर्हत हत्या सवार्धिक ठूलो महापाप हो ।

(२) **अदत्तादान**

२.१) *अदत्तादानका भेद* : अदत्तादान वा चोरी इत्यादि पनि तीन किसिमले गरिन्छन् : बलपूर्वक, गुप्त तरीकाले, र छलपूर्वक । पहिलो अदत्तादान कुनै कारणै विना हिंसा रञ्जित हुनेगरी अर्काको सामान इत्यादि बलजफ्तीपूर्वक लुट्नु वा छिनेर लिनु हो । कसैको घरमा सुटुक्क पसेर वा अरू तरीका-बाट कसैले थाहै नपाउनेगरी उसका सामानहरू चोर्नु दोश्रो प्रकारको











अदत्तादान हो । नाप, तौलमा तलमाथि वा गडबदी गरेर वा कुनै तरीकाबाट व्यावसायिक व्यवहारहरूमा ग्राहक वा अरू कसैलाई छल्नु नै तेश्रो प्रकारको अदत्तादान हो ।

२.२) *अदत्तादानका फल* : यो कर्मको फल पनि तीनै किसिमका हुन्छन् : यिनमध्ये विपाक फलस्वरूप प्राणी प्रेत गतिमा जन्म लिन पुग्छन् । निष्यन्द फलस्वरूप मनुष्य गतिमा जन्मिएपनि ऊ दुःखी र दरीद्र हुनेछ । अधिपति फलस्वरूप उसले एकदम जाडो र हिमपात हुने ठाउँमा जन्म लिनेछन् ।

२.३) *अदत्तादानको सम्बन्धमा विशेष* : अदत्तादानमा सबैभन्दा भयानक पाप गुरु र त्रिरत्नका सम्पत्तिहरु चोर्नु वा लुट्नु हो ।

(३) **काममिथ्याचार**

३.१) *काममिथ्याचारका भेद* : काममिथ्याचारका तीन भेदहरू छन् : जाति रक्षिता, स्वामी रक्षिता र धर्म रक्षिताहरूसित काममिथ्याचार गर्नु । यिनमध्ये पहिलो जाति रक्षितासितको काममिथ्याचार (पारिवारिक सम्बन्ध भएकाहरूसित संभोग गर्नु) भनेको आफ्नी आमा, दिदीबहिनी वा अन्य कुनै स्त्री आफन्तहरूसित काममिथ्याचार गर्नु हो । दोश्रो, राजा वा पतिद्वारा संरक्षित व्यक्तिसित काममिथ्याचार गर्नु हो । तेश्रो काममिथ्याचार अन्तर्गत आफ्नै पत्नीसित पनि देहायबमोजिम पाँच किसिमले गरिएको काममिथ्याचार पाप मानिन्छ : अनङ्ग, अदेश, अकाल, असीमित र अनुचित ढंगबाट संभोग गर्नु । यिनमध्ये अनङ्गको तात्पर्य मुख वा मलद्वारबाट अप्राकृतिक ढंगले यौनाचार गर्नु हो । अदेशको तात्पर्य गुरु र शिष्यहरूको सामीप्यमा, विहार र स्तूप नजीकै संभोग गर्नु हो । अकालको अर्थ उपवास लिएकी, गर्भावस्थाकी, बच्चालाई दुध खुवाइरहेकी स्त्रीसित संभोग गर्नु हो । असीमितता भन्नाले पाँच वा त्यो भन्दा बढी पटक संभोग गर्नु र अनुचित ढंगबाट काममिथ्याचार गर्नुको अर्थ आफ्नी पत्नीलाई कुटेर वा करकापमा पारेर उनीसित यौन सम्पर्क गर्नु वा बलात्कार गर्नु । पुरुष वा नपुंसकको मुख वा मलद्वारबाट यौन सम्पर्क गर्नु पनि यसै भित्र पर्दछ ।











३.२) *काममिथ्याचारका फल :* काममिथ्याचार कर्मका तिन फलहरू विपाक, निष्यन्द र अधिपति मध्ये विपाकफलको कारणले पापी प्रेत गतिमा जन्मिन्छ। निष्यन्दफलको कारणले मनुष्यै भएतापनि उसले दुष्ट पत्नीसित जीवन निर्वाह गर्नुपर्ने हुन्छ भने अधिपतिफल स्वरूप ऊ धूलै धूलोले भरिएको ठाँउमा जन्म लिन पुग्छ।

३.३) *काममिथ्याचारको सम्बन्धमा विशेष :* काममिथ्याचारमा सबैभन्दा भयानक पाप आफ्नी आमा वा अर्हत्व पुगिसकेकी स्त्रीसित काममिथ्याचार गर्नु हो।

(४) **मृषावाद**

४.१) *मृषावादका भेद :* मृषावाद (झुठो बोल्नु) का पनि तीन भेदहरू छन् जस्तो : पाराजिक मृषा, महामृषा र अल्पमृषा : यिनमध्ये पहिलो झुठ वा मृषा, श्रेष्ठ मानव धर्म[५]को सम्बन्धमा झूठो बोल्नु अर्थात उदाहरणको लागि आफूसित ऋद्धि सिद्धि केही नभइकनै आफूलाई ऋद्धिवान वा सिद्धिवान भन्नु वा भन्न लगाउनु। दोश्रो, आफूलाई र अरूलाई हानि हुने झूठो कुरा बोल्नु। तेश्रो कसैलाई हानि नहुने झुठो कुरा बोल्नु।

४.२) *मृषावादका फल :* यस कर्मका तीन फलहरू विपाक, निष्यन्द र अधिपति मध्ये विपाकफलको कारणले प्राणी पशु भएर जन्मिन्छ ; निष्यन्दफलस्वरूप मनुष्यै भएतापनि ऊ अर्काको निन्दा मात्र गरिराख्ने व्यक्ति बन्नेछ। तेश्रो अधिपतिफलस्वरूप उसको सास गन्हाउने हुन्छ।

४.३) *मृषावादको सम्बन्धमा विशेष :* तथागतको विषयमा झूठो बोल्नु र गुरुलाई झुठो बोल्नु सबैभन्दा ठूलो पाप हो।

(५) **पैशुन्य प्रलाप**

५.१) *पैशुन्यका भेद* : पैशुन्य प्रलाप (फाटो ल्याउने कुरा) का पनि तीन भेदहरू छन् जस्तो : हठात् पैशुन्य, संसूचन पैशुन्य र परोक्ष पैशुन्य। पहिलो पैशुन्य हो दुई परममित्रहरूलाई प्रत्यक्षरूपले (अर्थात चाप्लुसी इत्यादि गरेर एक अर्काबीच आएर) छुट्टयाइदिनु। दोश्रो पैशुन्य हो एकले











भनेको कुरा अर्कोलाई सुनाएर दुई मित्रमा फूट लगाइदिनु । तेश्रो गोप्य तवरले एक आपसमा मतभेद सृजना गरी दुई मित्रहरूलाई छुट्टयाइदिनु ।

५.२) *पैशुन्यका फल :* यसका तीन फलहरु विपाक, निष्यन्द र अधिपति मध्ये विपाकफलको कारणले प्राणी नरकमा जन्मिन्छ । निष्यन्दफलस्वरूप मनुष्यै भएता पनि उसका साथीहरू कोही पनि हुन्न । अधिपति फलस्वरूप समतल नभएको ठाउँमा उसको जन्म हुनेछ ।

५.३) *पैशुन्य प्रलापको सम्बन्धमा विशेष :* अनर्थका कुराहरू लगाएर संघ भेद गरिदिनु सबैभन्दा ठूलो पाप हो ।

**(६) पारुष्य वचन**

६.१) *पारुष्य वचनका भेद :* पारुष्य वचन (दुर्वचन) का तीन भेदहरू छन् । सम्मुख पारुष्य, घुमाउरो पारुष्य (छेड हान्नु), परोक्ष पारुष्य । पहिलो पारुष्य, प्रत्यक्षरूपले कसैका नाना थरीका दोषहरू उसैका सामु चित्त दुख्ने गरी भन्नु ; दोश्रो, चित्त दुख्ने गरी कसैलाई छेद हान्नु वा कताक्ष व्यङ्ग प्रहार गर्नु ; तेश्रो, साथीहरूको सामु वा प्रियजनहरुसामु बेइज्जत हुने गरी कसैको दोष कोट्याइदिनु ।

६.२) *पारुष्य वचनका फल :* यसका तीन फलहरू विपाक, निष्यन्द र अधिपति मध्ये विपाकफलको कारणले प्राणी नरकमा जन्मिन्छ । निष्यन्द-फलस्वरूप ऊ मनुष्य नै भएर जन्मिए पनि उसले थुप्रै अप्रिय शव्दहरू, कुराहरू सुन्नुपर्नेछ । अधिपति फलस्वरूप कुनै सुख्खा र गर्मी एवं दुष्ट व्यक्तिहरूले भरिएको ठाउँमा उसको जन्म हुनेछ ।

६.३) *पारुष्य बचनको सम्बन्धमा विशेष :* आमाबाबु, वा अरू आर्य-जनहरूलाई दुर्वचनहरू बोल्नु सबैभन्दा ठूलो पाप हो ।

**(७) सम्भिन्न प्रलाप**

७.१) *सम्भिन्न प्रलापका भेद :* संभिन्न प्रलापका पनि तीनै वटा भेदहरू हुन्छन् । मिथ्या संभिन्नप्रलाप, लौकिक संभिन्न प्रलाप र सत्य संभिन्न-प्रलाप । पहिलो संभिन्न प्रलाप तीर्थिकहरूका गलत जप वा कुराहरू हुन् ।











दोश्रो अनर्थका वा नचाहिँदा गफहरू हुन् भने तेश्रो संभिन्न प्रलाप धर्म नै नरुचाउने व्यक्ति वा गलत व्यक्तिलाई धर्मको प्रवचन दिनु ।

७.२) *सम्भिन्न प्रलापका फल* : यसका तिन फलहरू विपाक, निष्यन्द र अधिपति मध्ये विपाकफलको कारणले प्राणी पशु भएर जन्मिन्छ । निष्यन्द फलस्वरूप मनुष्य भएरै जन्मिए पनि उसको वचन कसैले नपत्याउने हुन्छ । अधिपति फलस्वरूप ऊ कहिले अति गर्मी त कहिले अति नै जाडो हुने ठाउँ विषम ऋतु भएको ठाउँमा जन्म लिन पुग्छ ।

७.३) *सम्भिन्न प्रलाप सम्बन्धमा विशेष* : सम्भिन्न प्रलापहरूमध्ये उत्सुकतापूर्वक धर्म सिक्न इच्छुक व्यक्तिलाई नचाहिँदा कुराहरूमा अल्म-ल्याई उसको मनलाई बिचलित पार्नु सबैभन्दा ठूलो पाप हो ।

**(८) अभिध्या**

८.१) *अभिध्याका भेद* : अभिध्या वा लोभका तीन भेदहरू छन् । आत्मीय अभिध्या, परकीय अभिध्या र उभय–व्यतिरिक्त अभिध्या । पहिलो अभिध्या वा लोभ आफ्नो जीवन, कुल, रूप, गुण तथा धनसम्पत्तिहरूप्रति आशक्त भएर म जस्तो कोही छैन भनी सोच्नु हो । दोश्रो अर्काको धनसम्पत्ति वा गुणहरुको लोभ गरेर ती सबै मेरो भइदिए कति हुन्थ्यो ? भनी सोच्नु हो । आफ्नो र अरू कसैको अधिकार नभएको भूमिगत धनसम्पत्तिहरूको लोभ गरेर ती सबै भूमिगत सम्पत्तिहरूमा मेरो आधिपत्य रहे कति जाति हुन्थ्यो ? भनी सोच्नु तेश्रो अभिध्या हो ।

८.२) *अभिध्याका फलहरू* : यसका तीन फलहरू विपाक, निष्यन्द र अधिपति मध्ये विपाकफलको कारणले प्राणी प्रेत भएर जन्मिन्छ ; निष्यन्दफलको कारणले ऊ मनुष्य गतिमै जन्मिए पनि अत्यन्तै लोभी व्यक्ति बन्नेछ ; अधिपति फलस्वरूप अन्नको उब्जनी नै नहुने ठाउँमा उसको जन्म हुनेछ ।

८.३) *अभिध्याको सम्बन्धमा विशेष* : सम्यक प्रहाण सम्पन्न भिक्षु-हरूका वस्तुहरू हात पार्ने इच्छा गर्नु सबैभन्दा ठूलो पाप वा सबभन्दा ठूलो अभिध्या हो ।











**(९) व्यापाद**

९.१) *व्यापादका भेदहरू* : व्यापाद (कुमति राख्नु वा कुभलो चिताउनु) का तीन भेदहरू छन् : द्वेषजन्य व्यापाद, ईर्ष्याजन्य व्यापाद, र प्रतिघजन्य व्यापाद। पहिलो व्यापाद द्वेषले भरिएको चित्तले कसैलाई शत्रुलाई झैँ मार्ने इच्छा गर्नु हो। दोश्रो, आफ्नो प्रतिद्वन्दीलाई कतै उसले मैले भन्दा धेरै प्रगति त गर्ने होइन भन्ने सोचेर भयभीत भएर मार्ने इच्छा गर्नु। तेश्रो उसले मलाई पहिले धेरै दुःखहरू दियो त्यसैले अब म उसलाई मार्छु भन्ने खालको प्रतिघले भरिएको इच्छा राख्नु हो।

९.२) *व्यापादका फलहरू* : यसका तीन फलहरूमध्ये विपाकफल-स्वरूप त्यो पाप गर्ने प्राणी नरकमा जन्म लिन पुग्छ। निष्यन्द फलस्वरूप ऊ मनुष्य भएरै जन्मेतापनि उग्र द्वेष भएको व्यक्ति बन्नेछ। अधिपति फलस्वरुप ऊ त्यस्तो ठाँउमा जन्म लिन पुग्छ जहाँ खाइने अन्न अत्यन्तै तीतो र रुखो हुन्छ।

९.३) *अभिध्याको सम्बन्धमा विशेष* : आनन्तर्य कर्म (पञ्च आनन्तर्य कर्म वा पञ्च महापाप गर्ने इच्छा गर्नु) सबै व्यापादहरू मध्ये अधिक ठूलो पाप हो।

**(१०) मिथ्या दृष्टि**

१०.१) *मिथ्यादृष्टिका भेदहरू* : मिथ्या दृष्टि तीन प्रकारका हुन्छन्। कर्म र फलको सम्बन्धमा मिथ्यादृष्टि, सत्यको सम्बन्धमा मिथ्यादृष्टि र त्रिरत्नको सम्बन्धमा मिथ्यादृष्टि। पहिलो कर्म र फलको सम्बन्धमा मिथ्यादृष्टि भनेको कुशल कर्म र अकुशल कर्म नै क्रमशः सुख र दुःखका कारण हुन् भन्ने तथ्यलाई नै विश्वास नगर्नु हो। मार्ग सत्य अनुष्ठान गरेर पनि दुःख निरोध सत्य प्राप्त हुन्न भनेर मान्नु दोश्रो मिथ्या दृष्टि हो। त्रिरत्नलाई असत्य मानेर त्यसको निन्दा गर्नु तेश्रो मिथ्यादृष्टि हो।

१०.२) *मिथ्यादृष्टिका फलहरू* : मिथ्यादृष्टिका फल तीन प्रकारका छन्। यिनमध्ये विपाकफलस्वरूप प्राणी तिर्यक् गतिमा जन्म लिन पुग्छ। निष्यन्द फलस्वरूप प्राणी मनुष्य भएरै जन्मेता पनि ऊ तीव्र मोहले ढाकेको











व्यक्तिको रूपमा जन्मिनेछ। अधिपति फलस्वरूप ऊ त्यस्तो ठाउँमा जन्म लिन पुग्छ जहाँ अन्न नै हुँदैन।

१०.३) *मिथ्या दृष्टिको सम्बन्धमा विशेष* : मिथ्या दृष्टिहरूमध्ये सबै भन्दा ठूलो पाप दर्शनहरुमा अल्झिरहनु हो।

अहिले सम्म कर्मको विपाकफललाई सामान्य तवरले वर्णन गरियो। तर विशेषरूपले भन्ने हो भने विपाकफल अर्कै तीन प्रकारका हुन्छन्। क्लेशको आधारमा निर्धारित विपाकफल, आवृतिको आधारमा निर्धारित विपाकफल र विषयको आधारमा निर्धारित विपाकफल।

सर्वप्रथम, *क्लेशको आधारमा निर्धारित विपाकफल* : द्वेषको कारणले हामीले कुनै कुकर्महरू गऱ्यौँ भने हाम्रो जन्म नरकमा हुनेछ। रागवश् कुकर्म गरेमा हामी प्रेत हुन्छौँ र मोहवश् गरेमा तिर्यक (जनावर) बन्छौँ। यही तथ्य *रत्नावली* मा बताइएको छ :




> स्वभाविकरूपले, रागले प्राणी प्रेत गतिमा जान्छ ;
> द्वेषले नरकमा जान्छ र
> मोहले प्राणी तिर्यक गतिमा जान्छ।[६]

*आवृतिको आधारमा निर्धारित विपाकफल* : हामीले निरन्तररूपले पापहरू गरिरह्यौँ भने हामीहरू नरकमा जन्मन पुग्छौँ, थुप्रै अकुशल कर्म वा पापहरू गरेमा प्रेत गतिमा जन्मिन्छौँ र अलि अलिमात्र पाप गरेको खण्डमा तिर्यक गतिमा जन्मन्छौँ।

*विषय*[७]*को आधारमा निर्धारित विपाकफल* : उत्तम पुरुष विरुद्ध अकुशल कर्म गरेमा प्राणी नरकमा जन्मिन्छ, मध्यम पुरुष विरुद्ध गरेमा प्रेत गतिमा जन्मिन्छ भने अधम पुरुष विरुद्ध अकुशल कर्म गरेमा प्राणी तिर्यक गतिमा जन्म लिन पुग्छ।

यस प्रकार अकुशल कर्महरूको हेतुफलबीचको सम्बन्ध व्याख्या गरियो। यसको सांरासलाई *रत्नावली* मा यसरी दर्शाएको छ :











राग, द्वेष, मोहद्वारा गरिएका कर्महरु
सबै अकुशल हुन् ;
अकुशल कर्महरुले सबै दुःख सिर्जना गर्छन्
यसैले नै सबै दुर्गतिहरु पैदा गरिदिन्छ ।[८]

**ख. पुण्य (कुशल) कर्म–फल** : कुशल वा पुण्य कर्महरूका कर्म र फलबीचको सम्बन्धलाई दश कुशल कर्म अन्तर्गत संगृहित गरिएको छ ।

१) **कर्म** : दश अकुशल कर्महरूलाई त्याग्नु नै दश कुशल कर्म हुन् । यसको तात्पर्य दश कुशल कर्महरु भनेको १. अर्काको प्राणको रक्षा गर्नु २. अत्यधिक दान दिनु ३. बह्मचर्य धर्म पालन गर्नु ४. सत्य बोल्नु ५. शत्रुहरुलाई मिलाइदिनु ६. शान्तिमय र प्रिय निष्कपट बचन बोल्नु ७. सार्थक अर्थपूर्ण बचन बोल्नु ८. अल्परागी एवं सन्तुष्ट हुनु ९. मैत्री र करुणाको भावना गर्नु, १०. भूतार्थ (तथ्य)मा प्रवेश गर्नु ।

२) **फल** : यस्ता पुण्य कर्महरुका फल तीन प्रकारका हुन्छन् । १. विपाक फल २. निष्यन्द फल ३. अधिपति फल । विपाकफलको कारणले सत्त्व देवलोक, मनुष्यलोक र कामधातुमा जन्म लिन्छ । निष्यन्दफल : अरूको हत्या गर्ने कर्म त्यागेर अरू प्राणीहरुको प्राणलाई रक्षा गरेबापत उसको आयु लम्बिनेछ । अधिपति फलः अधिपति फलस्वरूप सत्त्व यस्तो ठाउँमा जन्मिनेछ जहाँका वस्तुहरू भद्र, असल र प्रबल स्वभावका हुन्छन् । अरू कुशल कर्म गरेवापत पनि यस्तै प्रकारका फलहरू प्राप्त भइरहने हुन्छन् ।

यस प्रकारले हामीले पुण्य कर्मका हेतु र फलबीचको सम्बन्धलाई व्याख्या गऱ्यौं । यसको सारांश *रत्नावली* मा पाइन्छ :

राग, द्वेष र मोह रहीत कर्म नै कुशल कर्म हुन् ; कुशल कर्मले
सबै गतिहरुमा सबै जन्महरूमा सुखै सुख उत्पन्न गर्छन् ।[९]











**ग. आनिञ्जय कर्म–फल** : आनिञ्जय कर्मका हेतु र फलबीचको सम्बन्ध एकदम सरल छ जुन यस प्रकार छ ।

१) **कर्म** : हेतु समापति ध्यान गरेको फलस्वरूप उपपत्ति (फल) ध्यानमा पुगिन्छ । हेतु समापत्ति ध्यानमा आठ सामन्तक (पूर्वागत) ध्यान, आठ मौल ध्यान र ध्यानान्तर समावेश हुन्छन् ।

२) **उपपत्ति (फल) ध्यान** : उपपत्ति-ध्यानमा रूपधातुस्थित १७ देवनिकायहरू र अरूप्यधातुका चतुष्कोटिक देवहरू समावेश छन् । तिनको सम्बन्धमा हेतु फलको वर्णन तलदेखि माथिल्लो क्रमको आधारमा गरिन्छ । सामान्यतया: ती भूमिहरूका सबै सत्त्वहरूले दश कुशल कर्महरूको अभ्यास गर्छन् ।

सामन्तक आनन्तर्य मार्ग (जो प्रथम आक्षेपक ध्यानको पहिलो भूमि अर्थात अनागम्य भूमि हो) को भावना गरेपछि चार मौलहरू वितर्क, विचार, प्रीति एवं सुखले युक्त भएको समाधि हाँसिल हुन्छ जसबाट सत्त्व प्रथम पूरक ध्यानमा पुग्छ । त्यस भूमिमा पुगिसकेपछि सत्त्वले ब्रह्मकायिक देवलोकमा जन्म लिन्छ । ध्यानान्तर (वितर्कमुक्त प्रथम ध्यानको परिवर्तित रूप) को भावना गरेर प्राणी महाब्रह्माको रूपमा जन्म लिन्छन् ।

द्वितीय आक्षेपक ध्यानमा निहित सामन्तक आनन्तर्य मार्गको भावना गरेपछि वितर्क र विचार रहित सुख र प्रितिले युक्त भएको समाधि प्राप्त हुन्छ । जसको फलस्वरूप हामी परीत्ताभ वा द्वितीय ध्यानका देवलोकमा जन्मिन्छौँ ।

यस्तै प्रकारले तृतीय ध्यानको सामन्तक आनन्तर्य मार्गको भावना गरेपछि तृतीय पूरक ध्यानको मौल सुखयुक्त समाधि प्राप्त हुन्छ यस भूमिमा प्रीतिको प्रहाण गरिन्छ । यसको फलस्वरूप परीत्तशुभ अर्थात् तृतीय ध्यानका देवलोकमा हामी जन्मिन्छौँ ।

यस्तै नै चतुर्थ ध्यानमा प्राप्त हुने समाधिमा चारैवटा मौल (वितर्क, विचार, प्रीति र सुख) ध्यानहरूको प्रहाण गरिन्छ र फलत: अनाभ्रक इत्यादि देवलोकमा जन्म हुन्छ ।











चार मौल ध्यानहरूको प्रहाणबाट (तिनका आशक्तिहरू त्यागिदिनाले) आकाशानन्त्यायतन बोध हुन्छ। यसको भावनाले हामी आकाशानन्त्यायतन देवनिकायमा जन्म लिन्छौँ । आकाशानन्त्यायनको प्रहाणबाट विज्ञानानन्त्यायतन बोध हुन्छ। यसको भावनाले हामी विज्ञानानन्त्यायतन देवनिकायमा जन्म लिन्छौँ । यसपछि क्रमशः एक पछि अर्को भावना गर्दै जाँदा आकिञ्चन्यायतन, नैवसञ्ज्ञानासंज्ञायतन आरूप्य देवनिकायहरूमा जन्म लिन्छौँ ।

'जुन विरक्ति वा प्रहाणको फल वा उपपत्तिबारे माथि चर्चा गरियो त्यो कुनचाँहि मार्ग हो ? यो मार्ग निम्न वा तल्लो भूमिप्रतिको मनको संवेग वा (वैराग वा त्याग भावना) हो किनकी त्यस समय रागरहित अवस्थामा पुगिन्छ ।

कतै आकाशानन्त्यायतन भन्ने नाम आकाशलाई आलम्बनको रूपमा लिएकोले पर्न गएको होइन ? यसको जवाफ हो, 'होइन' । प्रथम तीन समापत्ति (समाधि) अवस्था वा समयमा 'आकाश अनन्त छ' भन्ने वितर्क गरेको हुँदा यिनका नामाकरण पनि त्यसै अनुसार गरिएका हुन् । तर पछि जब समापत्तिले पूर्णता प्राप्त गर्छ, त्यस्ता विर्तकहरू मनमा आउन्नन् वा त्यस्तो किसिमको मनस्कार हुँदैन । अन्तिम भूमि नैवसंज्ञानासंज्ञायतन भनेर त्यसको हिन संज्ञाको कारणले नामाकरण गरिएको हो । किनभने त्यसको संज्ञा स्पष्ट हुँदैन, तर संज्ञा नै नभएको चाहिँ होइन ।

यस निष्कर्षमा के भन्न सकिन्छ भने आठैवटा मौलिक ध्यानहरू एकाग्र कुशल चित्त हुन् ।

यसरी हामीले आनिञ्जय कर्मका हेतु र फल बीचको सम्बन्ध बारेमा व्याख्या गर्‍यौं । *रत्नावली* मा हामी पढ्छौँ :

> अरूप, अपरिमित ध्यानहरूद्वारा ब्रह्मा आदिका सुख भोगिन्छ ।[१०]

तसर्थ यही त्रिविध सास्रव कर्म नै समस्त सांसारिक वस्तु वा धर्मका श्रष्टा हुन् ।











३. **कर्मको स्वग्राह्यता** : कर्मको स्वग्राह्यता भनेको के हो भने हामी आफूले गरेको कर्म आफैले भोग्नुपर्छ । कर्ताले ग्राह गरेको पञ्च उपादान स्कन्धमा नै यसको फल परिपक्व हुन्छ अन्य कतै हुने होइन । जस्तो *अभिधर्मसमुच्चय* मा भनिएको छ :

> कर्मको स्वग्राह्यता के हो ? कर्मको स्वग्राह्यता भनेकै आफूले गरेको कर्मको फल आफैले नै भोग्नु हो । अरू भन्दा भिन्न भएकोले यसलाई स्व वा आफ्नै भनिएको हो ।[११]

यदि यस्तो नहुदो हो त आफूले गरेको कर्म क्षय वा नष्ट भएर जाने थियो तर आफूले नगरेको कर्मको फल भोग्नु पर्थ्यो । जस्तो सूत्रमा बताइएको छ :

> देवदत्तले गरेका कर्महरूका विपाक फल स्वयं उसकै पञ्च उपादान स्कन्धमा वाहेक जमिन, पानी र अन्यत्र कतै हुन्नन् । अन्यत्र कता परिपक्व वा परिपाक हुनसक्छ त ?

४. **कटु वा अकाट्य फल** : चौथो शीर्षक कर्मको अकाट्यता (संस्कृतः दायाद् ता) हो । यसको अर्थ के हो भने कुशल कर्मको फल अवश्यंभावी कुशलै हुन्छ र अकुशल कर्मको फल अवश्यंभावी अकुशल नै हुन्छ । यो निर्विवाद सत्य हो । कुशल कर्म संञ्चित गरेमा कुशल फल नै भोगिन्छ र अकुशल कर्म संचित गरेमा अकुशल फल नै भोगिन्छ । जस्तो *अभिधर्मसमुच्चय* मा बताइएको छ :

> कर्मको अकाट्यता वा दायादता भनेको के हो ? त्यसको अर्थ आफूले जस्तो कर्म गऱ्यो त्यस्तै फल भोग्नु हो किनभने कुशल कर्मले कुशल तत्व (दाय्) नै छोडेको हुन्छ भने अकुशल कर्मले अकुशल तत्व नै ।[१२]











*लघुस्मृत्युपस्थान* मा पनि यही कुरा बताइएको छ :

कुशलबाट सुख प्राप्त हुन्छ ;
अकुशलबाट दुःख उत्पन्न हुन्छ ;
यस प्रकार कुशल र अकुशल कर्मका
फल निर्देश गरिएको छ ।

*सुरतपरिपृच्छासूत्र* मा पनि भनिएको छ :

तीता बीउबाट तीता फल नै उम्रन्छन् ;
मीठा बीउबाट मिठा फल नै उम्रन्छन् ;
यस उदाहरणबाट बुद्धिमान् प्राणीले
अकुशल कर्मबाट कटु फल र
कुशल कर्मबट मिठो फल प्राप्त हुन्छ भन्ने तथ्य जान्नुपर्छ ।




**५. अल्प हेतु विपुल फल** : सानो कर्मबाट पनि ठूलो फल प्राप्त हुने पाँचौ बुँदाका विषय हो । उदाहरणको लागि अकुशलकर्मलाई नै लिऔं । मनमा एकक्षणको लागि पनि अकुशल कर्मको विचार ल्याएको खण्डमा त्यसको फलस्वरूप कल्पौसम्म नरकमा दुःख भोग्नुपर्छ भन्ने कुरा माथि नै भनिसकिएको छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

यसप्रकारका दानपति बोधिसत्त्वहरूप्रति जसले
मनमा पाप चिताउँछ, ऊ त्यो पाप पैदा
भएको क्षणबराबरको कल्पसम्म नरकमा
वास गर्नुपर्छ भनी बुद्धले भन्नुभएको छ ।[१३]

आफ्नो एउटा दुर्वचनको कारणले कुनै प्राणीले ५ सय जन्मसम्म दुःख भोग्नु परेको पनि बताइएको छ । *उदानवर्ग* का अनुसार :











पेटभित्र विष पसे झैँ
अलिकति पाप गर्नाले पनि
प्राणीले परलोकमा एकदम भयानक
र क्रन्दनपूर्ण दु:खहरू भोग्नुपर्नेछ ।

यस्तै अलिकति कुशल कर्मले पनि महान फल प्रदान गर्छ । यसलाई *उदानवर्ग* मै यसरी पुष्टि गरिएको छ :

अलिकति पुण्य गरेपनि
परलोकमा महासुख प्राप्त हुन्छ ।
उन्नत बीउबाट राम्रो उब्जनी हुन्छ भनेझैँ
उसको पुरुषार्थ सिद्ध हुनेछ ।

६. **अविप्रणाश कर्म** : यस छैठौं शीर्षक अविप्रणाशताको अर्थ के हो भने अकुशल कर्मको प्रतिपक्षको रूपमा केही गरिएन भने अनन्त कल्पसम्म पनि त्यो कर्म आफ्नो फल नदिइकन त्यसै नाश भएर जाँदैन । धेरै कालसम्म सुरक्षाको घेराभित्र रहेका प्राणीले समेत प्रत्ययहरू मिल्नासाथ आफूले गरेका कर्मको फल भोगेरै छोड्छन् । अत: जब हामी संसारको दु:खदेखि भयभीत भएर कर्म र फलको सृंखलालाई बुझ्न थाल्छौँ, त्यसबेला हामी मध्यम पुरुष कहलिन्छौँ । कुनै श्लोकमा यस्तो भनिएको छ :

सांसारिक सुखबाट विमुख भएर
पाप कर्म त्यागेर जसले केवल आफ्नो मात्र
निर्वाणको कामना गर्छ
त्यो मानिस मध्यम पुरुष कहलिन्छ ।[१४]

उदाहरणको लागि राजा कृकिका सात पुत्रीहरू[१५]को कथालाई यहाँ लिन सकिन्छ । *कर्मशतकसूत्र* मा हामी पढ्छौँ :











सत्वका कर्म शयौं कल्पसम्म पनि
नाश भएर जान्नन्
कर्म सञ्चित भइसकेपछि
त्यसले उचित समय आउनासाथ
आफ्ना फलहरु दिएरै छाड्छन् ।

*लघुस्मृत्युपस्थान* मा पनि यही भनिएको छ :

आगो बरफ नै किन नबनोस्
हावालाई जालोमा पक्रेर राख्न किन नसकियोस्
सूर्य र चन्द्र पृथ्वी मै किन नखसुन्
तर कर्मको फलबाट बच्न असंभव छ ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
**कर्म–फल निर्देश**
नामक षष्ठम परिच्छेद समाप्त ।









# परिच्छेद ७
# मैत्री एवं करुणा

शमसुख (आफ्नो मात्र सुख) प्रति हुने आशक्तिको प्रतिपक्षको रूपमा यहाँ मैत्री र करुणाको भावना बारे व्याख्या गरिनेछ । शमसुख वा आत्मसुख भन्नाले यस अर्थमा बुझ्नुपर्छ कि हामी केवल आफ्नो लागि मात्र निर्वाणको कामना गर्छौं, अरूलाई हित हुने कार्यमा तल्लीन हुन्नौं किनकी अरू सत्त्व प्राणीहरूप्रति हामीमा कुनै स्नेह ममता नै हुन्न । यस्तो श्रेणीका सबै प्राणी श्रावकयानका अनुयायी हुन् । तसर्थ भनिन्छ :

आफ्नो स्वार्थ परिपूर्ति गर्न
अरूको स्वार्थ आफ्नो भन्दा धेरै किन नहोस्
तिनलाई त्यागिन्छ ।
यसरी स्वार्थपरायणताको बोध भएपछि
केवल आफ्नो स्वार्थ नै उसको लागि परम लक्ष्य बन्न पुग्छ ।

तर जब हामीमा मैत्री र करुणा उत्पन्न हुन्छ, त्यसबेला सत्त्व (प्राणी) हरूप्रति हाम्रो मनमा स्नेह जागृत हुन्छ, त्यसो भइसकेपछि हामीले आफ्नो लागि मात्र मोक्ष प्राप्त गर्ने कुरा सोच्नै सक्दैनौं । त्यसैले मैत्री र करुणाको भावना गर्नुपर्छ । यसलाई आचार्य मञ्जुश्रीकीर्ति ले पनि समर्थन गर्नुभएको छ :

महायानका अनुयायीहरू एक क्षणको लागि पनि
मैत्री र करुणाबाट विमुख हुनु हुन्न
तथा:
मैत्री र करुणाले अरूलाई हेर्नुपर्छ, द्वेषले होइन ।











**क. मैत्री** : सर्वप्रथम हामी मैत्रीको अर्थ खुलस्त पार्न तिर लागौं । संक्षेप-मा :

भेद, आलम्ब्य विषय, आकार,
भावनाको उपाय, पूर्णताको मापदण्ड र गुण
यी छ शीर्षकहरूमा अप्रमेय (असीम) मैत्री संगृहित छ ।

१. **मैत्रीको भेदः** मैत्री तीन प्रकारका हुन्छन् : सत्त्वआलम्बिनी मैत्री, धर्म–आलम्बिनी मैत्री र अनालम्बिनी मैत्री । यस बारे *अक्षयमतिपरिपृच्छासूत्र* मा यस्तो भनिएको छ :

> भर्खर बोधिचित्तोत्पाद गरेका बोधिसत्त्वहरूमा सत्त्वआलम्बिनी मैत्री हुन्छ ; चर्यामा लागेका बोधिसत्त्वहरूमा धर्म–आलम्बिनी मैत्री हुन्छ ; अनुत्पत्तिकधर्मक्षान्ति बोध गरिसकेका बोधिसत्त्व-हरूमा अनालम्बिनी मैत्री हुन्छ ।

तर यस ग्रन्थमा, म (गम्पोपा) केवल सत्त्व आलम्बिनी मैत्री बारे मात्र बयान गर्नेछु किनकी यसको व्यवहारिक महत्त्व छ ।

२. **आलम्ब्य विषयः** मैत्रीको आलम्बन विषय नै समस्त सत्त्व हुन् ।

३. **आकारः** मैत्रीको आकार सारा सत्त्वहरू सुखी होउन् भन्ने कामना गर्नु हो ।

४. **भावनाको उपायः** मैत्री भावनाको उपाय नै सत्त्वहरूका उपकारलाई स्मरण गर्नु हो । किनकी मैत्रीको जरा नै त्यसैमा रहेको छ । यस जुनीमा हामीलाई सबैभन्दा धेरै उपकार वा अनुग्रह गर्ने हाम्रै आमा हुन् । किनभने उनले हामीलाई शरीर दिन्छिन्, हाम्रो लागि आफूले दु:ख भोल्छिन्, हामीलाई











जीवन प्रदान गर्छिन्, हामीलाई यो संसार देखाउँछिन् । *अष्टसाहस्रिका प्रज्ञापारमिता* मा यस्तो उल्लेख गरिएको छ :

> त्यस्तो किन ? हाम्रो आमाले हामीलाई जन्म दिएर हुर्काउनुभयो, हाम्रो लागि दुःखकष्ट झेल्नुभयो, र हामीलाई यो संसार देखा-उनुभयो ।[१]

*हामीलाई शरीर दिएर गरेको उपकार* : यो शरीर पहिलेदेखि नै पूर्णरूपले हुर्किएको, मांसपेशीले भरिएको र प्रिय वर्णको थिएन । हाम्रो आमाको गर्भमा कलल एवं अर्वुद अवस्था देखि नै उनकै रगत र मासुबाट पोषित र संवर्धित भएको र आमाले सेवन गरेका पौष्टिक भोजनले विकसित भएको शरीर हो यो । आमाले लाज, असजिलो केही नमानी सबै किसिमका पीडाकष्टहरू सहेर यो शरीरलाई पैदा गरेको हो । जन्मपछि पनि सानो कलिलो बच्चालाई अनेक किसिमले पालन पोषण गरेर वयस्क हृष्टपुष्ट व्यक्तिको रूपमा हुँकाउँछिन् ।

*हाम्रो लागि आफैले दुःखकष्ट झेलेर गरेको उपकार* : आमाले हामीलाई केवल राम्रा राम्रा लुगा लगाइदिएर हाम्रो शरीरलाई अलंकृत गर्ने मात्र होइन, आफूलाई केही नराखी आफ्नो भएभरको सम्पति हाम्रै नाममा गरिदिन्छिन्, हामी (कतै अपरिचित ठाउँमा जाँदाखेरी) भोक र प्यासले छटपटाउन नपरुन् भन्ने उद्देश्यले आमाले हामीलाई आफ्ना खाने पिउने सबैथोक दिन्छिन् । जाडोबाट बँचाउन लुगाकपडाहरू दिन्छिन् । र गरीबी-मा पिल्सिनु नपरुन् भनेर हामीलाई धनसम्पतिहरू दिन्छिन् । आफूलाई मन नपरेर कुनै वस्तुहरू आफ्ना सन्तानलाई दिने होइन, आफ्नो सन्तानको सन्तुष्टिको लागि बरु आफैले कम मात्र खाने, पिउने र लगाउँने गर्छिन् । यस जुनीमा सुखसित रहन सकियोस् भन्ने इच्छाले वा परलोकमा सुख होस् भन्ने इच्छाले आमाले यी सबैथोक गर्ने होइन । केवल निःस्वार्थ प्रेमले आमाले आफ्ना सन्तानलाई पालन पोषण गरी हुर्काउँछिन् । उदाहरणको लागि कहिले आमाले माझी वा कसाईको अकुशल कर्म गरेर पनि त्यसबाट











पैसा आर्जन गरी आफ्नो सन्तानलाई हुर्काउँछिन् । आमाले कष्ट झेल्ने कुरा गर्ने हो भने दिनरात व्यापार गरेर, खेतमा मरिमेट्ने गरी काम गरेर हामीलाई हुर्काउँछिन् । खेतको खस्रो माटोलाई जुत्ताको रूपमा लगाएर, राति आकाशमा चम्किने तारालाई टोपीको रूपमा पहिरिएर, आफ्नो नाङ्गो खुट्टालाई घोडाको रूपमा प्रयोग गरेर, आफ्नो च्यातिएको कपडा कोराको रूपमा प्रयोग गरेर काम गर्छिन् । कुकुरलाई टोकाउन आफ्नो खुट्टा उसलाई दिन्छिन्, मान्छेहरूले हेर्नको लागि आफ्नो अनुहारको मासु उनीहरूलाई दिन्छिन् । आफूले यसरी कठोर मिहेनत गरेर प्राप्त गरेको जति सबै आमाले आफ्नो सन्तानलाई दिन्छिन् ।

आफ्ना गुरुजन, मातापिता, कृपानिधि आफन्तहरूलाई भन्दा धेरै मायास्नेह आमाले कुनै अपरिचित असहाय बालकलाई दिन्छिन् । आफ्नो सन्तानलाई मायाले भरिएको आँखाले हेर्ने, आफ्नो न्यानो छातिमा लगाउने, र आफ्नो हातमा विस्तारै झुलाएर दयामायाले भरिएको शब्दले शिशुलाई यस्तो भन्छिन्, 'मेरो खुशी, मेरो प्यारो बच्चा, मेरो मुटुको टुक्रा' ।

*जीवन प्रदान गरेर गरेको उपकार* : जीवन प्रदान गरेर गरेको उपकार को अर्थ के हो भने हामी यस संसारमा एकैचोटि हातमुख चलाउन जान्ने र आफ्नो भएभरको शक्ति लगाएर गाऱ्हो काम गर्न सक्ने वा जान्ने भएर आएका होइनौं । जब हामीहरू कुनै किरासरी एकदम कलिलो, कमजोर, तुच्छ र मुर्ख थियौं, त्यस बेला आमाले हामीलाई त्यसै नछाडि हाम्रो पालन पोषण गरीन्, आफ्नो काखमा राखिन् र हामीलाई आगो पानीबाट बचाइन्, खस्नबाट बचाइन्, सबै विघ्न बाधाहरू पञ्छाइदिइन्, हाम्रो सुखको लागि पूजाव्रतहरू गरिन् । हामी मरौंला वा विरामी परौंला भन्ने डरले उहाँले ज्योतिषीलाई जचाँउने, हस्तरेखा देखाउने इत्यादि कसैले सोँच्नै नसक्ने वा गर्नै नसक्ने कार्यहरू समेत गरिन् । यस्ता कार्यहरू गरी आमाले आफ्नो सन्तानलाई जीवन प्रदान गर्छिन् ।

*हामीलाई संसार देखाएर गरेको उपकार* : यस संसारमा हामी तीखा इन्द्रियहरू लिएर केवल देख्ने वित्तिकै सबैथोक जान्ने बुझ्ने भएर आएका होइनौं । जब हामी सहाराको लागि रुने कराउने गर्थ्यौं, जब हामीले हात











खुट्टा चलाउनै जानेका थिएनौँ, केहीपनि जानेका थिएनौँ, त्यसबेला आमाले हामीलाई खान, लाउन, हिड्न, बोल्न सिकाइन् । बच्चाकै तोते बोलीमा 'यो भन त, त्यो भन त' भनेर हामीलाई बोल्न सिकाइन् । हामीलाई सबै कलाहरू सिकाएर हुनै नसक्ने कुरा पनि सम्भव गरी देखाइदिई अरूको बराबरीमा पुऱ्याइन् । आमाले हामीलाई यस्तो उपकार हाम्रो यस जुनीमा मात्र गरेकी होइन, अनन्त कालदेखि अनन्त जुनीहरूमा गर्दै आइरहेका छन् । जस्तो *अनादिसंसारसूत्र* मा बताइएको छ :

> यदि कुनै एक व्यक्तिले पृथ्वीका सबै माटो, पत्थर, रुख र जंगलहरूलाई धूपीको गेडाजत्रो दानामा परिवर्तन गरेर अरू व्यक्तिलाई गन्न लगाउने हो भने उसले शायद त्यो गनी सक्नेछ । तर आमाहरू कति भए, आमाहरूले उसलाई कति उपकार गर्नुभयो त्यो सब गन्न उसले सक्तैन ।





*सृहल्लेख* मा यस्तो उल्लेख छ :

> धूपीको बीउ जत्रै सानो माटोको पिण्ड बनाएर
> कसैले अहिलेसम्म भएका आमाहरूको संख्या गन्छ भने
> यस पृथ्वीको पूरै माटोले पनि पुग्दैन । *सृहल्लेख* - ६४

यसरी हरेक जन्ममा आमाले गरेको उपकार संझनुपर्छ । अत: आमाको हामीप्रति असीमित उपकार भएको हुँदा कसरी आमाको हृदय सुख र खुशीले भर्ने भन्ने बारेमा हामी सदैव चिन्तनशील रहनुपर्छ । यति मात्र होइन, सबै प्राणी कुनै न कुनै जन्ममा हाम्रै आमा भइसकेका हुँदा, सबै प्राणीले हामीलाई आमा बनेर अत्यधिक उपकार गरेका छन् भनेर भावना गर्नुपर्छ । यस विषयमा कसैले सोध्न सक्छ, 'सत्त्वहरूको सीमा के हो ?' यसको जवाफ हो सत्त्व आकाश पर्यन्त व्याप्त छन् । *भद्रचर्याप्रणिधानसूत्र* मा यस्तो उल्लेख छ :











जुन सीमा आकाशको छ
त्यही सीमा सत्त्वहरूको हो ।[२]

तसर्थ सबै सत्त्व (प्राणी)हरूको हित र सुखको कामना गर्ने बोधिचित्तको भावना गर्नुपर्छ । बोधिचित्त उत्पन्न भएपछि मूल मैत्रीचित्त उत्पन्न हुन्छ । *महायानसूत्रालंकार* मा पनि दर्शाएको छ :

कुनै एक्लो सन्तानलाई झैँ
बोधिसत्त्वले सत्त्वहरूलाई माया गर्छन्
आफ्नो भित्री हृदयदेखि उत्पन्न महामैत्रीले
बोधिसत्त्वले तिनीहरूको सुखको कामना गर्छन् ।[३]

जब मैत्रीको बलले हाम्रा आँखाबाट आसु झर्न थाल्छ, हाम्रो शरीरका रौँ ठाडा ठाडा हुन्छन्, तव महामैत्री उत्पन्न हुन्छ । महामैत्रीले भरिएको चित्त सबै प्राणीहरूले उत्पन्न गर्न सकेमा मात्र त्यो अप्रमाण (immeasurable) हुन्छ ।

५. **पूर्णताको मापदण्ड** : पूर्णताको मापदण्ड भन्नाले हामीले आफ्नो मात्रै नभएर सारा प्राणीहरूको सुख चाह्यौँ (चाहना गर्‍यौँ) भने मैत्रीको पूर्णता हुन्छ भन्ने बुझिन्छ ।

६. **मैत्रीका गुण** : मैत्री अभ्यास गरेर प्राप्त हुने पुण्य नापेर नाप्न सकिन्न । *चन्द्रप्रदीपसूत्र* मा यसरी भनिएको छ :

विविध एवं अपरिमित पूजा सामग्रीले
कोटि कोटि क्षेत्रहरूलाई व्याप्त पारेर
तिनले बुद्धको पूजा गरेपनि त्यतिको
पुण्य प्राप्त हुन्न जति मैत्री धारण गरेमा हुन्छ ।[४]











मैत्रीको अभ्यास अलिकतिमात्र गरेपनि त्यसले दिने पुण्य अपरिमाण हुन्छ। *रत्नावली* मा लेखिएझैं :

> कसैले दिनहु ३ चोटि ३०० वटा भाँडोमा पकाएको भात दान
> दिँदा पनि त्यति पुण्य पाइन्न जति एकक्षणको मैत्रीले हुन्छ।

मैत्री अभ्यास गरेमा बोधिसम्म पुग्नु अगावै हामीलाई आठवटा लाभहरू प्राप्त हुन्छ जसको व्याख्या *रत्नावली* मा गरिएको छ :

> देव र मनुष्यहरूको प्रिय हुनु,
> देव र मनुष्यहरूद्वारा संरक्षित हुनु,
> शान्त चित्त र अरू यस्तै अनेक सुख प्राप्त हुनु,
> विष वा हतियारले हामीलाई छुन्न।[५]
> परिश्रम नै नगरीकन हाम्रा आफ्ना लक्ष्य हासिल हुनेछन्,
> र ब्रह्मलोकमा हाम्रो जन्म हुनेछ।
> परम मोक्ष प्राप्त नभएपनि
> मैत्रीधर्मका यी आठ लाभहरू भने हामीले प्राप्त गर्नेछौं।[६]

आफ्नै रक्षा गर्नको लागि पनि मैत्री अभ्यास उत्तम छ। यो ब्रह्मदत्तको कथाबाट स्पष्ट हुन्छ। र अरूको रक्षा गर्न पनि मैत्री अभ्यास उत्तम छ। राजा मैत्रीबल[७] को कथाबाट यसको पुष्टि हुन्छ।

**ख. करुणा** : मैत्री भावनामा पारंगत भइसकेपछि करुणाको अभ्यास गर्न गाह्रो हुँदैन। संक्षेपमा :

> भेद, आलम्ब्य विषय, आकार,
> भावनाको उपाय, पूर्णताको मापदण्ड र पुण्य (गुण)
> यी छ शीर्षकहरूमा अप्रमेय (असीम) करुणा संगृहित छ।











१. **करुणाको भेद** : करुणा तीन प्रकारका हुन्छन् : सत्त्वआलम्बिनी करुणा, धर्म–आलम्बिनी करुणा र अनालम्बिनी करुणा । यिनमध्ये पहिलो सत्त्व–आलम्बिनी करुणाको अर्थ दुर्गतिमा फसिरहेका सत्त्वहरूको दुःख देखेर करुणा उत्पन्न हुनु हो । दोश्रो धर्म–आलम्बिनी करुणाको अर्थ यस्तो छ : जब हामीले चार आर्य सत्यको अभ्यास गरेर हेतु र फलबीचको सम्बन्धलाई बुझ्छौँ, त्यसबेला हाम्रो मन नित्य एवं पिण्डग्राहबाट विमुख हुन्छ । यहाँनेर यसरी सोँचेमा करुणाको उत्पत्ति हुन्छ : 'बिचरा सत्त्वप्राणी-हरू ! हेतु र फलबीचको सम्बन्धप्रति अनभिज्ञ भई नित्य र पिण्डमा टाँस्सिइकन भ्रममा दुःख भोगी बाचिरहेका छन् ।' तेश्रो अर्थात अनालम्बिनी करुणाको अर्थ यस्तो छ : जब विकल्परहित समाधिबाट सबै धर्मको शून्यता बोध हुन्छ, त्यसबेला संवृति सत्य वा 'भाव' लाई ग्रहण वा ग्राह गर्ने सत्त्वप्राणीहरूप्रति विशेष किसिमले करुणा जागृत हुन्छ । जस्तो भनिएको छ :




> जब समाधिमा लीन बोधिसत्त्वको समाधिबल
> पूर्णतामा पुग्छ, तब उनमा भावग्राहले ग्रसित
> सत्त्वप्राणीहरूप्रति विशेषरूपले करुणा जागृत हुन्छ ।

यस परिच्छेदमा उल्लेखित तीन प्रकारका करुणाहरूमध्ये पहिलो करुणाको मात्र वर्णन यहाँ गरिनेछ ।

२. **आलम्ब्य विषय** : करुणाको आलम्ब्य विषय सबै सत्त्व प्राणीहरू हुन् ।

३. **करुणाको आकार** : करुणाको आकार समस्त प्राणीहरूलाई दुःख र दुःखको हेतुबाट मुक्त गर्ने इच्छा हो ।

४. **भावनाको उपाय** : करुणाभ्यासको उपाय यस प्रकार छ । करुणाको भावना हाम्री यस जुनीकी आमालाई आधार बनाएर गर्नुपर्छ । जस्तै हाम्री











आमालाई कसैले कुटेर जिउँदै जलाउँछ, वा अत्यन्तै चिसो यामको कारणले उनको शरीरमा घाउका फोकाहरू देखापरी त्यसबाट रगत चुहिन थाल्छ, त्यो बेला हाम्रो मनमा आफ्नी आमाप्रति निश्चयनै अगाध करुणा उत्पन्न हुन्छ । त्यसरी नै नरकका सबै प्राणीहरू वास्तवमा हाम्रै आमा भइसकेका हुँदा, के हामीले ती मातारूपी प्राणीहरूले यतिका मर्मस्पर्शी दुःख भोगिरहेको देख्दा करुणा जागृत गर्नु पर्दैन त ? ती प्राणीहरूलाई यस्तो दुःखबाट मुक्त गर्ने इच्छाले करुणाको अभ्यास गर्नुपर्छ ।

हाम्री आमा एकदम गहिरो र कहालीलाग्दो खाडलमा खस्न लाग्दा जहाँबाट माथि उक्लनै सकिन्न, त्यो बेला उहाँले कतिको पीडा र दुःखको अनुभव गर्नुहुन्छ होला । त्यो देखेर हाम्रो मनमा आफ्नी आमाप्रति अगाध करुणा उत्पन्न हुनेछ । त्यसरी नै प्रेतलोकका हाम्रै आमारूपी प्राणीहरू प्रेत, देव र मनुष्यलोकको महा खाडलमा खसिरहेका छन् । त्यो खाडलमा एकचोटि खसिसकेपछि त्यहाँबाट कदापि उम्कन सकिन्न र आफ्नो साथमा कल्याणमित्रहरू नभएका कारणले पाप त्याग्न नसकी ती प्राणीहरूले दुःख भोगिरहेका हुन्छन् । के हामीले त्यस्ता खाडलमा खसेका आफ्नै आमारूपी प्राणीहरूप्रति पनि त्यस्तै करुणा जागृत गर्नु पर्दैन त ? ती प्राणीहरूलाई यस्तो दुःखबाट मुक्त गर्ने इच्छाले करुणाको अभ्यास गरिनुपर्छ ।

५. **पूर्णताको मापदण्ड** : करुणाभ्यासको पूर्णता यसप्रकार हुन्छ : जब हामीले आफ्नो स्वार्थपरायणताको पाशोलाई चुँडाल्छौं, र जब हाम्रो मनमा प्राणीमात्र लाई दुःखबाट मुक्त गर्ने वाक्शून्य अभिलाषा उत्पन्न हुन्छ, त्यसबेला करुणा अभ्यासको पूर्णता हुन्छ भनी थाहा पाउनु पर्छ ।

६. **करुणाभ्यासको गुण** : करुणाभ्यासको गुण अपरिमित हुन्छ । जस्तो *अवलोकितेश्वरावदान* मा बताइएको छ :

> एउटा त्यस्तो गुण भयो भने बुद्धका सबै गुणहरू हाम्रो हत्केलामा आए सरह हुन्छन् । त्यो के गुण हो ? त्यो गुण हो महाकरुणा ।











*धर्मसंगीतिसूत्र* का अनुसार :

> हे भगवान्, यस्तै हो । जहाँ चक्रवर्ती राजाको धर्मचक्र रहन्छ त्यहीँ उनका सारा सेनागण पनि रहन्छन् । हे भगवान, यस्तै प्रकारले जहाँ कुनै बोधिसत्त्वका महा करुणा रहन्छ, त्यहीँ सबै अन्य बुद्धहरूका गुणहरू पनि रहन्छन् ।

*तथागताचिन्त्यगुह्यनिर्देश* को अनुसार :

> हे गुह्याधिपति[८], करुणाको मूलबाटै सर्वज्ञ ज्ञानको उदय हुन्छ ।

यस प्रकार मैत्रीद्वारा समस्त प्राणीहरूले सुख प्राप्त गरुन् र करुणाद्वारा सबै प्राणीहरू दुःखबाट मुक्त होउन् भन्ने इच्छा गरेर हामी आफ्नै लागि मात्र सुख प्राप्त गर्ने इच्छाबाट विमुख हुन्छौँ । अतः हामीले सबै प्राणीहरूको हित सुखको लागि बुद्धत्व प्राप्त गर्ने इच्छा गर्छौं जुन स्वपरायणताको प्रतिपक्ष हो । जसले मैत्री र करुणा चित्त उत्पाद गरेर अरूलाई आफूभन्दा उच्च ठानी प्रशंसा गर्छ त्यो नै उत्तम पुरुष कहलिन्छ । महादत्त[९] को कथाबाट यो तथ्य स्पष्ट हुन्छ । *बोधिपथप्रदीप* को निम्न श्लोकमा पनि यहीँ कुरा व्यक्त भएको छ :

> जसले गम्भीररूपले अरूहरूका सबै दुःख मेटाउन चाहन्छ त्यही उत्तम पुरुष हो । किनभने उनको चित्त सन्ततिमा दुःखको स्वभाव ज्ञात हुन्छ ।[१०]

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत

**मैत्री–करुणा निर्देश**

नामक सप्तम परिच्छेद समाप्त ।









# बुद्धत्वप्राप्तिका उपाय-अनभिज्ञताको प्रतिपक्षः
## विषय-प्रवेश

बुद्धत्व प्राप्तिका उपायका बारेमा थाहा नहुनु वा अज्ञानताको प्रतिपक्ष नै बोधिचित्तोत्पाद हो । यस विषयमा आउँदा परिच्छेदहरूमा विस्तृतरूपले व्याख्या गरिनेछ । संक्षेपमा :

आश्रय, स्वरूप, भेद,<br>
आलम्बन, हेतु, स्थान,<br>
विधि, अनुशंसा, आदीनव,<br>
परिहाणि, प्रत्यापत्ति एवं शिक्षा<br>
यी बाऱ्ह शीर्षकहरूमा बोधिचित्तोत्पादको विषयलाई संगृहित गर्न सकिन्छ ।











# परिच्छेद ८
# शरणगमन

**I. आश्रय** : *महायान गोत्रक, त्रिरत्नको शरणमा गएको, सप्तविध प्रातिमोक्ष-शील वा संवरमध्ये कुनै एक संवर पालन गरेको* एवं *प्रणिधिचित्त उत्पन्न गरेको* प्राणी नै बोधिचित्तोत्पादको आश्रय वा पुद्गल हो ।

माथिका सबै गुणहरू प्रस्थान बोधिचित्तोत्पादका आश्रय हुन् । त्रिशरण-गमनसम्मका गुणहरू भएको पुद्गल प्रणिधि बोधिचित्तोत्पादका आश्रय बन्न पुग्छ । त्यस्तो किन त ? यसको उत्तरको लागि जुन विवरण प्रस्तुत गरिएको छ त्यो यस प्रकार छ : *बोधिसत्त्वभूमि* का अनुसार बोधि-प्रस्थान चित्तको लागि सर्वप्रथम बोधिप्रणिधि चित्त हुनु जरुरी छ । *बोधिपथप्रदीप* का अनुसार बोधिप्रणिधि चित्त उत्पाद गर्नको लागि सर्वप्रथम शरणमा जानु अति आवश्यक छ भने बोधिप्रस्थान चित्त उत्पादको लागि आश्रयरूपी प्रातिमोक्ष संवर हुनु अति जरुरी छ । *अभिधर्मकोश* मा पनि प्रातिमोक्ष संवर ग्रहण गर्नु पूर्व शरणमा नै जानुपर्छ भनी ठोकेर भनिएको छ । त्यस्तै *बोधिसत्त्वभूमि* का अनुसार महायानगोत्र बिना बोधिचित्तोत्पाद सम्भव नै हुन्न । तसर्थ यी सबै पूर्वाधारहरू एक आपसमा मिल्नुपर्छ ।

**क. महायान गोत्र** : पहिलो पूर्वाधार महायान गोत्र हो । बोधिचित्तोत्पाद गर्नको लागि सामान्यतया महायान गोत्रको हुनु र विशेषरूपले प्रबुद्ध गोत्रको हुनु जरुरी छ । यस विषयमा माथिनै विस्तृतरूपमा व्याख्या गरिसकिएको छ ।[1]

**ख. त्रिशरणगमन** : दोश्रो पूर्वाधार वा शरणगमनको व्याख्या यस प्रकार छ । ब्रह्मा, विष्णु महेश्वर इत्यादि जस्ता शक्तिशाली देवताहरू वा पहाड, चट्टान, सरोवर, वृक्ष तथा हाम्रो देशका अन्य भूभागमा वासस्थान भएका











शक्तिशाली नागहरूको शरणमा हामी जानुहुन्छ कि हुन्न भनी कसैले सोध्यो भने यसको जवाफ के हुनेछ भने ती सबैले हामीलाई संरक्षण दिन सक्तैनन् । त्यसैले तिनीहरूले हामीलाई शरण पनि प्रदान गर्न सक्तैनन् । जस्तो सूत्रमा बताइएको छ :

> लोकले पर्वत, जंगल, मन्दिर चट्टान, वृक्ष आदिमा शरण लिन
> जान्छन् तर ती सबै उत्तम शरण होइनन् ।

त्यसो भए के हामीले आमा वा बाबुको, मित्रहरूको र हामीले माया गर्ने व्यक्तिहरूको वा हाम्रा शुभचिन्तकहरूकहाँ शरण लिन जाने त ? यसको पनि जवाफ उही हुनेछ : ती सबैले पनि हामीलाई रक्षा गर्न सक्दैनन् । *मञ्जुश्रीविक्रीडितसूत्र* मा बताए जस्तै :

> बाबु वा आमा तिम्रा शरण होइनन् । मित्र वा आफन्तहरू
> पनि तिम्रा शरण होइनन् ; तिनीहरू सबैले आफ्नो इच्छानुसार
> तिमीलाई त्यसै छाडेर जान्छन् ।

तिनीहरू सबै किन हाम्रो रक्षा गर्न असमर्थ छन् त ? यसको जवाफ यस प्रकार छ : शरण दिनेहरू सर्वप्रथम आफै भयबाट मुक्त हुनुपर्दछ, कुनै दुःखी हुनुहुन्न । माथि उल्लेखित सबै प्राणीहरू भयभीत छन् र दुःखको वश्मा छन् । तसर्थ केवल बुद्ध मात्र दुःखबाट पूर्णरूपले मुक्त छन्, धर्मले मात्र हामीलाई बुद्धत्व दिलाउन सक्छ र संघले मात्र धर्म गर्नमा हामीलाई मद्दत गर्न सक्छ, त्यसैले हामीले बुद्ध, धर्म र संघको शरणमा जानुपर्छ । त्यसैले यस्तो भनिएको छ :

> अब तिमी बुद्ध, धर्म र गणोत्तम संघको शरणमा जानू
> जसले भयभीतहरूको भयलाई निर्मूल पारिदिन्छन्
> र जसले शरण नभएकाहरूलाई शरण दिन्छन् ।











बुद्ध, धर्म र संघमा हाम्रो रक्षा गर्ने सामर्थ्य छ त्यसैले तिनले हामीलाई शरण दिन्छन् यसमा कुनै शंका छैन । *महापरिनिर्वाणसूत्र* मा भनिएझैं :

त्रिरत्नको शरणमा जाने व्यक्तिले
निर्भय हासिल गर्नेछ ।

त्रिशरणगमनको व्याख्या गर्दा, निम्नलिखित बुँदाहरू सहायकसिद्ध हुनसक्छन् ।

भेद, आश्रय, विषय, समय,
आशय, विधि, करणीय कर्म,
शिक्षा एवं अनुशंसा –
यी नौ वटा शीर्षकहरूमा शरणगमन संगृहित हुन्छ ।





१. **भेद** : त्रिशरणगमनका भेद दुईटा छन् : *सामान्य शरणगमन* र *विशिष्ट शरणगमन* ।

२. **आश्रय** : आश्रय वा पुद्गल दुई प्रकारका हुन्छन् : (क) संसारको दु:खबाट भयभीत हुने र त्रिरत्नलाई देवताको रूपमा मान्ने प्राणी हो, र (ख) विशिष्ट महायान गोत्रक प्राणी जसले देवता वा मनुष्यको विशुद्ध काय प्राप्त गरिसकेको हुन्छ ।

३. **विषय** : विषय पनि दुइटै प्रकारका हुन्छन् :
(क) *सामान्य विषय* : सामान्य विषय भनेको बुद्धरत्न, धर्मरत्न र संघरत्न हो । बुद्धरत्न भन्नाले प्रहाण एवं ज्ञान महत्ताले युक्त बुद्ध, भगवान् तथागत हो । धर्मरत्न भन्नाले द्वादसाङ्ग उपदेशमा व्यक्त धर्म र अधिगम धर्म र अर्को शब्दमा भन्ने हो भने मार्गसत्य एवं निरोध सत्य हो । संघरत्न पनि दुई किसिमका हुन्छन् यिनमध्ये पृथग्जनहरूको संघ त्यसलाई भनिन्छ जसमा











चार वा चारभन्दा बढी भिक्षुहरू सम्मिलित हुन्छन् । आर्य संघ भन्नाले आठ आर्य पुद्गलहरू, श्रोतापन्न इत्यादि भिक्षुहरू हुन् ।[२]

(ख) *विशिष्ट विषय* : विशिष्ट विषयलाई (१) पुरोवर्ती, (२) अभिसमय र (३) तात्विक गरी तीन भागमा विभक्त गर्न सकिन्छ । (१) तिनमध्ये पुरोवर्ती विषय भन्नाले तथागतको प्रतिमा अर्थात बुद्ध हो । धर्म भन्नाले महायानका ग्रन्थहरू हुन् भने संघ भन्नाले बोधिसत्त्वहरूको गण हो । (२) अभिसमयको अर्थ त्रिकायधारी बुद्ध, धर्म अर्थात् शान्ति र निर्वाणको बोध र संघ अर्थात उच्च भूमिका बोधिसत्त्वहरू हुन् । (३) तात्विक दृष्टिकोणले परम शरण त बुद्ध नै हुन् । *महायानोत्तरतन्त्रशास्त्र* मा यसरी बताइएको छ :

> परमार्थ दृष्टिले लोकको शरण नै बुद्ध(त्व) मात्रै हो ।[३]

बुद्ध मात्र किन परम वा सत् शरण हुन् त ? उही ग्रन्थले फेरि भन्छ :

> किनभने बुद्ध धर्मकायसम्पन्न हुन्छन् र गण वा साधकका
> चरम लक्ष्य पनि बुद्ध नै हो ।[४]

बुद्ध आदि अन्त रहित छन्, र परिशुद्ध र वीतराग (रागरहीत) छन् । उनी नै परम शरण हुन् किनभने उनी धर्मकायसम्पन्न छन् र त्रियानका साधकहरूको अन्तिम लक्ष्य नै बुद्धकै परम विशुद्ध धर्मकाय हासिल गर्नु हो ।

तर यहाँ एउटा प्रश्न के उठ्न सक्छ भने के धर्म र संघ परम शरण होइनन् र ? यसको जवाफ *महायानोत्तरतन्त्रशास्त्र* मा यसरी दिइएको पाइन्छ :

> द्विविध धर्म र आर्य संघ
> परम शरण होइनन् ।[५]











धर्म र संघ परम शरण किन होइनन् त ? पहिलो, आगम धर्म केवल शब्द र अक्षरहरूको संगालो मात्र हो त्यसैले यसलाई हामीले अर्को किनारा (निर्वाण) सम्म पुगेपछि नाउ सरी त्यहीँ छोडेर जानुपर्ने हुन्छ । दोश्रो, अधिगम धर्मका दुई पक्ष हुन्छन् : मार्ग सत्य र निरोध सत्य । यिनमध्ये मार्गसत्य संस्कृत भएकोले अनित्य नै हुन्छ । अनित्य धर्म छली (धोखा दिने खालको) हुन्छ त्यसैले त्यो शरण हुन सक्तैन । अर्को निरोध सत्यलाई श्रावकयानका साधकहरूले निवृत्त प्रदीप (निभेको दियो) समान भनेर तुलना नै गरेका छन् त्यसैले त्यसको पनि आफ्नै अस्तित्व छैन । त्यसैले निरोध सत्य पनि परम शरण होइन । संघ पनि परम शरण होइन किनभने संघ आफैले पनि संसारबाट भयभीत भएर बुद्धमा शरण लिएको हुन्छ । त्यसैले *महायानोत्तरतन्त्रशास्त्र* मा यो पनि भनिएको छ :

> त्याज्य (त्यागिने), विसंवादक (छली), अभाव एवं भयाकुल
> भएको कारणले द्विविध धर्म (आगम र अधिगम) र आर्य संघ
> परम शरण होइनन् ।[६]

त्यसैले आचार्य असङ्गले यस्तो भन्नुभएको छ :

> अक्षय शरण, नित्य शरण, शाश्वत शरण एवं सत्
> शरण एकै मात्र तथागत, अर्हत्, सम्यक् संबुद्ध हुन् ।

यदि यो कुरा माथि उल्लेखित त्रिशरणसित बाभिन्छ भनी टिप्पणी गर्ने हो भने यो सम्बन्धमा हामीले के सम्भनुपर्छ भने त्रिशरण त केवल विनयजनहरूलाई आकृष्ट गर्नको लागि मात्र प्रतिपादित भएका हुन् । जस्तो *महामोक्ष सूत्र* मा भनिएको छ :

> संक्षेपमा शरण एकै मात्र हुन्छ
> तर उपाय तीन हुन्छन् ।











उपायको आधारमा एकलाई किन तीनमा विभक्त गरिएको ? यसको जवाफ *महायानोत्तरतन्त्रशास्त्र* मा यसरी दिइएको पाइन्छ :

> शास्ता, शासन एवं शिक्षा, तीन यान
> तीन कारित्र एवं अधिमुक्तिहरू इत्यादिलाई
> ध्यानमा राखेर नै तीन प्रकारका संघको
> व्यवस्था गरिएको हो ।[७]

अर्को शब्दमा, (शास्ता, शासन र शिक्षाका) त्रिविध गुण, तीन यान, तीन कारित्र (पात्र) र तीन अधिमुक्तिको आधारमा नै तीन शरणको व्यवस्था गरिएको हो ।

शास्ताका गुणहरू प्रकाश गर्नको लागि, जुन बोधिसत्त्व यानका प्राणीहरू बुद्धत्वको लागि कार्य गर्नमा अधिमुक्त हुन्छन् उनीहरूको शरणनै बुद्ध हुन् । उनीहरू भन्छन्, “म मनुष्यहरूमा सर्वश्रेष्ठ, बुद्धको शरणमा जान्छु ।”

शासनका गुणहरू प्रकाश गर्नको लागि, जसले प्रत्येक बुद्ध हुने इच्छा राख्छन् र प्रत्येक बुद्धको कार्य गर्नमा अधिमुक्त हुन्छन् उनीहरूको लागि शरण नै धर्म हो । उनीहरू भन्छन्, “म वैरागीहरूका लागि सर्वाधिक उत्तम धर्मको शरणमा जान्छु ।”

शिक्षाका गुणहरू प्रकाश वा प्रकट गर्नको लागि, जसले श्रावक गो त्रको अनुशरण गर्छन् र संघका कार्य गर्नमा अधिमुक्ति राख्छन्, उनीहरूको लागि शरण नै शिक्षा हो । उनीहरू भन्छन्, “म गणोत्तम संघको शरणमा जान्छु ।”

यसरी त्रिविध प्रयोजनको आधारमा तथागतले छ प्रकारका पुद्गल (प्राणीहरू) का लागि तीन प्रकारका शरणहरूको व्यवस्था गर्नुभयो । भगवान् बुद्धले सत्त्व प्राणीहरूलाई एक पछि अर्को गर्दै यी पाँचै बोधि-गोत्रहरूमा क्रमशः प्रतिष्ठापित गर्दै लैजानको लागि सांवृत्तिक तवरले त्यसो गर्नुभएको हो ।











४. **समय** : शरणगमनको समय पनि दुई प्रकारको हुन्छ : (क) सामान्य र (ख) विशिष्ट । (क) सामान्य समयले आजदेखि म बाचुञ्जेलसम्म शरणमा जान्छु भन्ने अर्थ दिन्छ । (ख) विशिष्ट समयले आजदेखि बोधि प्राप्त नगरुञ्जेल सम्म शरणमा जान्छु भन्ने अर्थ दिन्छ ।

५. **आशय** : शरणगमनको आशय पनि दुई प्रकारको हुन्छ : (क) सामान्य र (ख) विशिष्ट । (क) सामान्य आशयले मेरो आफ्नो दु:ख सहन नसकेकोले म शरणमा जान्छु भन्ने अर्थ दिन्छ । (ख) विशिष्ट आशयले अर्काको दु:ख सहन नसकेकाले म शरणमा जान्छु भन्ने अर्थ दिन्छ ।

६. **विधि** : शरणगमनको विधि पनि दुई प्रकारको हुन्छ :
(अ) *सामान्य विधि* यस किसिमको छ : सर्वप्रथम शिष्यले त्रिरत्नको प्रतिमा स्थापना गरेर त्यसको पूजा गर्छु भनेर गुरुसित निवेदन गर्छ । यदि यो सम्भव नभएमा उसले आकाशमा त्रिरत्न उपस्थित छन् भनेर भावना गर्छ र मनमनै तिनको पूजा गर्छ । अनि गुरुको अनुकरण गर्दै यी वाक्यहरू बोल्छन् : 'सबै बुद्ध तथा बोधिसत्त्वहरूले म प्रति कृपा राखुन् । गुरुले मप्रति कृपा राखुन् । आजदेखि म फलाना नाम गरेको व्यक्तिले बोधि प्राप्त नगरुञ्जेल मनुष्यहरूमा श्रेष्ठ बुद्धको शरणमा जान्छु, वैरागीहरूको लागि उत्तम धर्मको शरणमा जान्छु र गणोत्तम संघको शरणमा जान्छु । यसरी तीनचोटि भन्नुपर्छ ।

(आ) *विशिष्ट विधि* (१) प्रयोग, (२) मौल र (३) पृष्ठ गरी तीन चरणको हुन्छ ।

(१) प्रयोग चरणमा शिष्यले फूलहरूले निर्मित मण्डल कल्याणमित्रको रूपमा आश्रय लिन योग्य व्यक्तिलाई भेटस्वरूप चढाउँछ र उनलाई म त्रिरत्नको शरणमा जान चाहन्छु भनी निवेदन गर्छ । तत्पश्चात्, कल्याणमित्रलाई शिष्य महायान गोत्रको र सुपात्र हो भन्ने कुरामा विश्वास हुन्छ र शिष्यको प्रार्थनालाई स्वीकार्छन् । त्यसपछि पहिलो राति मै त्रिरत्नका











प्रतिमाहरूलाई अभिषिक्त गरी तयार पार्छन् र पूजा गरी शिष्यलाई शरण जाँदाका लाभहरू र नजाँदाका हानिहरू बताउँछन् ।

(२) दोश्रो राति मौल विधिको अनुष्ठान गरिन्छ । आफूसामु राखिएका त्रिरत्नका प्रतिमाहरूलाई साच्चैका त्रिरत्न सम्झेर तिनको पूजा एवं वन्दना गरिन्छ । त्यसपछि गुरुको अनुकरण गरी यी वाक्य बोलिन्छन् : सबै बुद्ध तथा बोधिसत्त्वहरूले ममाथि कृपा राखुन् । मेरो गुरुले ममाथि कृपा राखुन् । म फलाना नाम गरेको व्यक्ति मनुष्यहरूमा श्रेष्ठ भगवान् बुद्धको शरणमा जान्छु, वैरागीहरूका सर्वाधिक उत्तम स्थान निर्वाण एवं सुखरूपी धर्मको शरणमा जान्छु र गणोत्तम अवैवर्तिक बोधिसत्त्वहरूको संघको शरणमा जान्छु । यसरी तीनचोटि भन्नुपर्छ ।

त्यसपछि अभिसमय विषयहरूलाई आह्वान गरेर तिनलाई साँच्चैकैको त्रिरत्न मानी तिनको पूजा एवं वन्दना गर्नुपर्छ । हामीले गर्ने हरेक कार्यप्रति बुद्ध तथा बोधिसत्त्वहरू सचेत छन् भनी भावना गर्नुपर्छ । त्यसपछि फेरि त्रिशरणगमनका मन्त्र तीनचोटि जप्नुपर्छ ।

त्यसपछि तात्विक विषयलाई साँच्चिकैको त्रिरत्न मानी तिनको शुद्ध आशयले पूजा तथा वन्दना गर्नुपर्छ । समस्त धर्म शुरुदेखि नै आत्महिन, अलिकति पनि आफ्नै स्वभाव नभएको हुँदा हामीले बुद्ध, धर्म र संघलाई पनि यही दृष्टिले हेरी तिनको शरणमा जानुपर्छ । यही अक्षय, नित्य एवं शाश्वत शरण हो । जस्तो *अनवतप्तपरिपृच्छासूत्र* मा भनिएको छ :

> निरामिष (सांसारिक गतिविधिबाट मुक्त) चित्तले शरण लिने प्राणी को हो ? समस्त धर्महरूको आफ्नै अस्तित्व छैन भन्ने कुरा जानेर जसले बुद्धलाई रूप, निमित्त तथा धर्मको रूपमा नदेखी यथाभूत किसिमले देख्छ त्यो प्राणी नै बुद्धको शरणमा गएको हुन्छ । समस्त धर्मले धर्मधातुको मार्ग अनुगमन गर्छ भनेर जान्ने प्राणी धर्मको शरणमा गएको हुन्छ र संस्कृत तथा असंस्कृत धर्मलाई अद्वय ठान्ने प्राणी संघको शरणमा गएको हुन्छ ।











(३) तेश्रो राति *पृष्ठ अर्थात अन्तिम विधि* सम्पन्न हुन्छ । यसमा त्रिरत्नलाई (त्रिरत्नशरण विधि सम्पन्न भएकोले) धन्यवादज्ञापन गरिन्छ ।

७. **करणीय कर्म** : त्रिशरणगमन पश्चात् गरिने कर्मको सम्बन्धमा *महा-यानसूत्रालंकार* मा यस्तो उल्लेख पाइन्छ :

> सबै उपद्रव, अपाय, अनुपाय, सत्कायदृष्टि र हीनयानमा पतन
> हुनबाट त्रिशरणगमनले बचाउँछ यही उत्तम शरण हो ।[८]

*यसको अर्थ* : सामान्य शरणगमनले हामीलाई उपद्रव, अपाय (तीन दुर्गतिहरू), अनुपाय (दौर्मनश्य) र सत्कायदृष्टि (सबै चीजको अस्तित्व छन् भन्ने धारणा) मा पतन हुनुबाट बचाउँछ । विशिष्ट त्रिशरण गमनले हामीलाई हीनयान र त्यो भन्दा तल्लो यानहरूमा पतन हुनुबाट बचाउँछ ।



८. **शिक्षा** : शरणगमनको शिक्षालाई *त्रिविध विशेष शिक्षा, त्रिविध सामान्य शिक्षा* र *त्रिविध सभाग शिक्षा* जस्ता उपवर्गहरू समेत गरी नौ वर्गमा बाँड्न सकिन्छ ।



(१) पहिलो त्रिविध विशेष शिक्षामा यी बुंदाहरू पर्छन् : (अ) सदैव त्रिरत्नको पूजा गर्नमा आफूलाई समर्पित गर्नुपर्छ यहाँसम्म कि खानुअघि पनि त्रिरत्नकै पूजा गरेपछि मात्र खानुपर्छ । (आ) आफ्नो प्राण वा धनसम्पति नै गएपनि त्रिरत्नलाई त्याग गर्नुहुन्न र (इ) त्रिरत्नका गुणहरू सम्झी बारम्बार त्रिशरणगमन गरिरहनुपर्छ ।

(२) दोश्रो त्रिविध सामान्य शिक्षा अन्तर्गत यी बुँदाहरु पर्दछन् : (अ) बुद्धको शरण लिएपछि हामी अन्य देवताहरूको शरणमा जानुहुन्न । *महापरिनिर्वाणसूत्र* मा यसरी बताइएको छ :

> बुद्धको शरणमा जाने प्राणी वास्तविक कुशल शरणमा आश्रित
> हुने हुँदा उसले अरूको शरणमा जानैपर्दैन ।











(आ) धर्मको शरण लिएपछि हामीले अरू प्राणीहरूलाई हानि चोट पुग्ने कामहरू गर्नुहुन्न । जसरी एउटा सूत्रमा बताइएको छ :

आर्य धर्ममा जसले शरण लिएको हुन्छ
त्यसले अरूलाई हानि गर्ने, क्षति गर्ने कुरा
सोँच्दै सोँच्दैन ।

(इ) संघको शरण लिएपछि तीर्थिकहरूको शरणमा हामी जानुहुन्न । जसरी एउटा सूत्रमा भनिएको छ :

संघको शरणमा जो प्राणी गएको हुन्छ
त्यो तीर्थिकहरूप्रति आश्रित हुँदैन ।

(३) त्रिविध सभाग शिक्षा अन्तर्गत यी बुँदाहरू पर्दछन् : (अ) बुद्धको शरणमा गएपछि हामीले तथागतको प्रतिमादेखि लिएर टुटेका फुटेका तथागतको माटाका प्रतिमा[१]लाई पनि बुद्धरत्न कै भाव राखी आदर गर्नुपर्छ, (आ) धर्मको शरणमा गएपछि हामीले सद्धर्म ग्रन्थका एक पाना देखि लिएर त्यसको एउटा एउटा अक्षरलाई समेत धर्मरत्नको भाव राखी आदर गर्नुपर्छ, (इ) संघको शरणमा गएपछि हामीले कल्याणमित्रका चीवर देखि लिएर त्यसका एक टुक्रा टालोलाई पनि संघरत्नकै भाव राखी आदर गर्नुपर्छ ।

९. **अनुशंसा** : शरणगमनका आठवटा अनुशंसाहरू (लाभहरू) छन् : (१) हामी बौद्ध भएको नाताले बोधिसत्त्व कहलिन्छौँ, (२) सबै संवरहरूका आश्रय बन्छौँ, (३) हामीले पहिले गरेका सबै कुकर्महरू क्षय भएर जानेछन्, (४) मनुष्य वा अमनुष्यहरूद्वारा सृजित विघ्नबाधाहरूको असर हामीमा पर्नेछैनौँ, (५) आफूले चिताएका सबै चीजहरूको पूर्ति हुन्छ, (६) हामीले महापुण्यहरू लाभ गर्नेछौँ जो पछिका धर्म अभ्यासमा हेतु बन्नेछन्,











(७) हामी दुर्गतिमा पर्नेछैनौँ, (८) शीघ्र नै हामीले सम्यक् सम्बोधि लाभ गर्नेछौँ ।

**ग. प्रातिमोक्ष संवर** : तेश्रो आवश्यकता प्रातिमोक्ष संवर हो । द्रव्यको दृष्टिले प्रातिमोक्ष संवर चार प्रकारको हुन्छ तर आश्रयको दृष्टिले हेर्ने हो प्रातिमोक्ष संवर आठ प्रकारका हुन्छन् । यस ग्रन्थ व्यवहारिक मार्गबाट बोधिज्ञान प्राप्त गर्नेसित सम्बन्धित भएकोले यी आठ मध्ये उपोसथ एउटा छोडेर अरू सातैवटा आश्रयहरूको अनुगमन गर्नुपर्छ। सप्तविध प्रातिमोक्ष संवर यस प्रकार छन् : भिक्षु, भिक्षुणी, शिक्षामान, श्रामणेर, श्रामणेरिका, उपासक र उपासिका । *बोधिसत्वभूमि* मा पनि यही उल्लेख गरिएको पाइन्छ :

> समष्टिमा प्रातिमोक्ष संवर भन्नाले भिक्षु, भिक्षुणी, शिक्षामान, श्रामणेर, श्रामणेरिका, र गृहस्थहरूमा उपासक र उपासिका हुन् । यिनलाई गृहस्थ र प्रव्रजितको रूपमा लिइनुपर्छ ।[१०]




प्रस्थान चित्तोत्पाद पछि पनि प्रातिमोक्ष संवर आवश्यक हुन्छ र ? यसको जवाफ हो 'हुन्छ' । यसलाई यी तीन उदाहरणद्वारा राम्ररी जान्न सकिन्छ : १. उपमा, २. ग्रन्थ प्रमाण (आगम), ३. युक्ति ।

**१. उपमा** : उपमा यस प्रकार छ : जसरी एउटा चक्रवर्ती सम्राट बस्ने आसन वरिपरि मल, फोहर वस्तु, दुर्गन्धित बस्तुहरू राखिँदैनन् बरु त्यो कोठा राम्रोसित बढारेर सफा गरी अति सुन्दर रत्नहरू र अमूल्य चीजहरूले सिँगारिन्छ । ठीक त्यसैगरी बोधिचित्तलाई धारण गर्ने मन अकुशल काय, वाक र चित्तद्वारा असंयमित, कुसंस्कारका मलहरूले लिप्त नभई यी सबै अकुशल तत्वहरूबाट मुक्त शील संवरले सजिएको हुन्छ ।

**२. ग्रन्थ प्रमाण** : *महायानसूत्रालंकार* को 'बोधिचित्तोत्पाद' विषयक अध्याय हो जसमा भनिएको छ :











विषद (विपुल) संवर नै यसको प्रतिष्ठा हो ।[११]

यसको अत्तिरिक्त, उपवास व्रत पनि एउटा सानो संवर नै हो । त्यो संवर केवल एक दिनको लागि मात्र हुन्छ । तर त्यो विषद संवर होइन । तर माथिका सात संवरहरू त्यस्ता होइनन् । ती संवरहरू विषद हुन् । त्यसैले नै ती संवरहरूलाई बोधिचित्तोत्पादका प्रतिष्ठा (आधार) भनी भनिएका हुन् । यही कुरा *बोधिपथप्रदीप* मा पनि भनिएको छ :

जसले सदा यी सात प्रातिमोक्ष संवर
मध्ये कुनै एक संवरको
पालना गर्छ त्यो बोधिसत्त्व संवरले युक्त हुन्छ
अन्यले त्यसो हुँदैन ।[१२]

यसरी सप्तविध प्रातिमोक्ष संवरमध्ये कुनै एक वा अरूलाई बोधि-चित्तोत्पादका प्रतिष्ठा (आश्रय) भनिन्छ भन्ने कुरो स्पष्ट भयो ।

३. **युक्ति** : युक्तिको रूपमा भन्नुपर्दा प्रातिमोक्ष संवर अरूलाई हानि गर्ने बिचारलाई जरैदेखि परित्याग गर्नु हो । बोधिसत्त्व संवर अरूलाई हित गर्नु हो र अरूलाई हानि गर्ने बिचारलाई परित्याग नै नगरिकन अरूलाई हित गर्न सकिन्न ।

यसै सम्बन्धमा कोही भन्छन्, 'प्रातिमोक्ष संवर बोधिसत्त्व संवरको प्रतिष्ठा (आश्रय) नै हुनुपर्छ भन्ने जरुरी छैन । किनभने षण्ड (impotent), पण्ड (hermaphrodites) र देवादिहरूमा प्रातिमोक्ष संवरको उत्पाद हुन्न । तर बोधिसत्त्व संवर चाहिँ यिनीहरूमा हुन्छ । किनभने प्रातिमोक्ष संवर मृत्यु पश्चात नै त्यागिन्छ तर बोधिसत्त्व संवर मृत्युपश्चात पनि त्यागिन्न बरु रहिरहन्छ । यो धारणाको खण्डन यस प्रकार गर्न सकिन्छ । प्राति-मोक्ष संवरलाई विभिन्न आशयहरू लिएर पालना गरिन्छ । त्यसै बमोजिम यसलाई तीन वर्गमा विभाजन गर्न सकिन्छ :











(अ) जब यी संवरहरूलाई त्रिधातुक सुखको कामनाले ग्रहण गरिन्छ, यसलाई सुप्रणिधान शील (निजी स्वार्थ भएको) भनिन्छ ;

(आ) जब यी संवरहरूलाई आफ्नो मात्र दु:ख निवारण होस् भन्ने हे तुले ग्रहण गरिन्छ, त्यसलाई श्रावकहरूका नैष्क्रम्य (पलायनोन्मुख) शील भनिन्छ ;

(इ) जब अनुत्तर सम्यक सम्बोधि प्राप्तिको उद्देश्यले यी संवरहरूलाई ग्रहण गरिन्छ, त्यसलाई बोधिसत्त्व संवर भनिन्छ ।

यिनमध्ये पहिलो दुई (सुप्रणिधान र नैष्क्रम्य) बोधिसत्त्व संवरका प्रतिष्ठा (आश्रय) होइनन् । किनभने यी दुईटा षण्ड, पण्ड र देवहरूमा उत्पन्न हुन्नन्, र मृत्युपश्चात त्यागिन्छन् र एकपल्ट च्यूत भइसकेपछि तिनलाई पुनजीर्वित गर्न सकिन्न ; तर बोधिसत्त्वसंवर शील षण्ड, पण्ड र देवहरूका सन्ततिमा पनि हुन्छ ; यो मृत्युपछि पनि त्यागिन्न र एकपल्ट च्यूत भइ-सकेपछि पनि यसलाई पुनजीर्वित गर्न सकिन्छ ; त्यसैले यो संवर नै उत्पाद र स्थिति दुवैका प्रतिष्ठा (आश्रय) हो । त्यसैले *महायानसूत्रालंकार* मा यस्तो भनिएको छ :

> यो चित्तको प्रतिष्ठा के हो ? बोधिसत्त्व संवर नै यसको प्रतिष्ठा हो ।[१३]

यसो पनि भन्न सकिन्छ कि बोधिचित्तोत्पादका आश्रयको रूपमा प्राति-मोक्ष संवर आवश्यक हुन्छ तर स्थिति (maintainence) को लागि प्रातिमो क्ष संवर ऐच्छिक हुन्छ । उदाहरणार्थ अनाश्रव संवरको लागि ध्यान संवर को आवश्यकता पर्छ तर त्यसको स्थितिको लागि ध्यान संवरको उपस्थिति जरुरी छैन ।

बोधिसत्त्व प्रातिमोक्ष संवर ग्रहण गर्ने सम्बन्धमा भने त्यसो हुँदैन । हामीले सर्वप्रथम श्रावक शिक्षा ग्रहण गर्नुपर्छ । यसलाई विशिष्ट आशय (बोधिचित्त) ले ग्रहण गरिसकेपछि र जब त्यो हामीमा स्थायी भएर रहन्छ, त्यो बोधिसत्त्वसंवरमा परिवर्तित हुन्छ । भनाइको अर्थ ‘तल्लो भूमिबाट माथि











उँभो लाग्ने तर तल्लो भूमि छोडिहाल्ने चाँहि होइन' ; अर्थात् श्रावकका आशय छोडिएतापनि शिक्षा भने छोडिँदैन ।

यसप्रकार महायान गोत्रक, त्रिरत्नको शरणमा गएको, सप्तविध प्राति-मोक्ष संवरहरूमध्ये कुनै एकको पालना गरेको प्राणी नै बोधिचित्तोत्पादका आश्रय बन्छ ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
त्रिशरणगमन संवर
नामक अष्टम परिच्छेद समाप्त ।












# परिच्छेद ९
# बोधिचित्त परिग्रह

**II. स्वरूप** : अरूको कल्याण हुने चर्या (काम) गर्नको लागि सम्यक् सम्बोधि प्राप्त गर्ने कामना गर्नु नै बोधिचित्तोत्पादको स्वरूप वा सारतत्व हो । यसलाई *अभिसमयालंकार* मा यसरी व्यक्त गरिएको छ :

> अरूको हितका निमित्त सम्यक् सम्बोधिको कामना गर्नु
> बोधिचित्तोत्पाद हो ।[1]

**III. भेद** : बोधिचित्तोत्पादलाई तीन किसिमबाट वर्गीकृत गरिएको छ : १. उपमाको आधारमा, २. सीमाको आधारमा र ३. लक्षणको आधारमा

१. **उपमा** : पहिलो, अर्थात (उपमाको आधारमा बोधिचित्तको भेद) सामान्य पृथग्जन (साधारण प्राणी) देखि लिएर बुद्धत्त्व लाभ गरेका बुद्धहरूसम्मका बोधिचित्तमा हुने भेदलाई उपमाद्वारा आर्य मैत्रेयले *अभिसमयालंकार* मा यसरी देखाउनुभएको छ :

> पृथ्वी, स्वर्ण, चन्द्र, अग्नि,
> निधि, रत्नाकर, सागर,
> वज्र, पर्वत, औषधी, कल्याणमित्र,
> चिन्तामणि, सूर्य, संगीत,
> राजा, कोष, महामार्ग (राजमार्ग),
> यान, प्रसवणोदक (इनार),
> प्रतिध्वनि स्वर, नदी तथा मेघ –
> बाईसवटा उपमाहरू यी नै हुन् ।[2]











ती उपमाहरू छन्द (यथाभूत ज्ञानको अभिलाषा) देखि लिएर धर्मकाय बोधसम्म हुन्छन् र पाँच मार्गहरूसित गाँसिएमा यिनको देहायबमोजिम अर्थ निक्लन्छ ।

(१) छन्द सहितको बोधिचित्तोत्पाद पृथ्वी समान हुन्छ र त्यो नै सबै कुशल धर्महरूको आधार बन्छ । (२) आशय सहितको बोधिचित्तोत्पाद सुन समान हुन्छ र त्यो बोधि प्राप्त नहुञ्जेल बदलिन्न । (३) अध्याशय सहितको बोधिचित्तोत्पाद शुक्ल पक्षको चन्द्रमा समान हुन्छ र त्यसले सबै कुशल धर्महरूलाई बृद्धि गर्दै लान्छ । ती भेदहरू मुख्यतयाः मृदु, मध्य एवं अधिमात्र संभारमार्गका आदिकर्मिक भूमिमा हुने गर्दछन् ।

(४) प्रयोग सहित गरिएको बोधिचित्तोत्पाद अग्नि समान हुन्छ र त्यसले त्रिसर्वज्ञतालाई ढाक्ने आवरणहरूको इन्धनलाई जलाएर नष्ट पारिदिन्छ । यही प्रयोग मार्ग हो ।

(५) दान पारमिता सहितको बोधिचित्तोत्पाद महानिधि समान हुन्छ र त्यसले समस्त सत्त्व (प्राणी) हरूलाई सन्तुष्ट पारिदिन्छ । (६) शील सहितको बोधि चित्तोत्पाद रत्नाकर समान हुन्छ र त्यो नै गुण रत्नहरूको मूल आधार हो । (७) क्षान्ति पारमिता सहितको बोधिचित्तोत्पाद महासागर समान हुन्छ र सबै अनिष्ट वस्तुहरूद्वारा घेरिएता पनि त्यसमा कुनै हलचल आउँदैन । (८) वीर्य पारमितासहितको बोधिचित्तोत्पाद वज्र समान हुन्छ र यस्तो कडा हुन्छ कि फोर्नै सकिन्न । (९) ध्यान पारमिता सहितको बोधिचित्तो त्पाद पर्वतराज समान हुन्छ र छ इन्द्रियहरूको आक्रमणमा पनि त्यो डग्मगाउँदैन । (१०) प्रज्ञापारमिता सहितको बोधिचित्तोत्पाद ज्ञेयावरण तथा क्लेशावरणका रोगहरू निको पार्ने औषधी समान हो । (११) उपाय सहितको बोधिचित्तोत्पाद सत्त्व प्राणीहरूलाई कहिल्यै नत्यागने कल्याणमित्र समान हो । (१२) प्रणिधि पारमिता सहितको बोधिचित्तोत्पाद इच्छानुसार फल दिने चिन्तामणि समान हो । (१३) बल पारमिता सहितको बोधिचित्तोत्पाद सूर्य समान हो र यसले जो जो प्राणीहरूलाई दीक्षित गरिनु पर्ने हो ती सबैलाई परिपक्वरूपले दीक्षित गरिदिन्छ । (१४) ज्ञान पारमिता सहितको बोधिचित्तोत्पाद धर्मको सुमधुर संगीत समान हो किनकी यसले विनयजनहरूको आँकाक्षा











अनुरूप धर्मको उपदेश दिन्छ । यी दश विविधताहरू प्रमुदिता भूमिदेखि लिएर क्रमबद्धरूपले दशौँ भूमिसम्ममा समाहित हुन्छन् । दर्शनमार्ग तथा भावनामार्गमा यिनीहरूको विचरण क्षेत्र हुन्छ ।

(१५) अभिज्ञासहितको बोधिचित्तोत्पाद महाराज समान हुन्छ । यसले आफ्नो निर्वाध शक्तिले प्राणीहरूको हितसुखलाई मूर्त रूप दिन्छ । (१६) पुण्य एवं ज्ञान सहितको बोधिचित्तोत्पाद एक कोष्ठागार समान हो किनभने यसले पुण्य तथा ज्ञान सम्भारले त्यो कोष्ठागारलाई खचाखच भरिदिन्छ । (१७) बोधिपाक्षिक धर्म सहितको बोधिचित्तोत्पाद महामार्ग समान हो किनकी यस महामार्गमा एकले अर्कोलाई पछ्याउँदै सबै आर्यजनहरू हिड्छन् । (१८) समथ र विपश्यना सहितको बोधिचित्तोत्पाद एउटा यस्तो यान समान हो जो संसार वा निर्वाणमा नफसिकन एकनासले गुडिरहन्छन् । (१९) धारणी एवं प्रतिभान्सहितको बोधिचित्तोत्पाद एक जलकुण्ड जस्तै हो जो आफूले सुनेका वा नसुनेका चीजहरू जतिसुकै लामो समयसम्म धारण गरिराखे पनि पटक्कै थाक्दैन । यी सब प्रकारहरू बोधिसत्त्वका विशेष मार्ग अन्तर्गत सम्मिलित हुन्छन् ।

(२०) धर्मोत्सव सहितको बोधिचित्तोत्पाद मधुर स्वर समान हो जसलाई सुन्न मोक्षाकांक्षी विनयजनहरू औंधी रूचाउँछन् । (२१) एकयान सहितको बोधिचित्तोत्पाद नदीको प्रवाह सरह हो जो सदैव प्राणीहरूको लागि सहायकसिद्ध हुन्छ । (२२) धर्मकाय सहितको बोधिचित्तोत्पाद एउटा यस्तो बादल समान हो जसमा सत्त्व प्राणीहरू निर्भर हुन्छन् किनभने यसले तुषितमा बुद्धको वास देखि लिएर पछिका घटनाहरू समेटिएका बुद्धका जीवनका शृँखलाहरूलाई चित्रण गर्छ । यी तीन प्रकारका उपमाहरू बुद्ध भूमिमा समेटिन्छन् ।

यसरी यी बाइसवटा उपमाहरू आदिकर्मिक भूमि देखि लिएर बुद्धभूमि सम्मका छन् ।

२. **सीमा** : सीमाको आधारमा चार किसिमले बोधिचित्त उत्पाद गर्न सकिन्छ : (१) आधिमोक्षिक बोधिचित्तोत्पाद, (२) अध्याशयिक बोधिचित्तो-











त्पाद, (३) वैपाकिक बोधिचित्तोत्पाद र (४) आवरण वर्जित बोधिचित्तो-त्पाद । यिनमध्ये पहिलो अधिमुक्ति चर्या भूमिमा, दोश्रो प्रथम देखि लिएर सप्तम भूमिसम्ममा, तेश्रो अष्टम भूमि देखि लिएर दशम् भूमि सम्म एवं चौथो बुद्ध भूमि अन्तर्गत समेटिन्छन् । जसरी *महायानसूत्रालंकार* मा बताइएको छ :

> अधिमोक्षिक, शुद्ध अध्याशयपूर्ण, वैपाकिक
> आवरण वर्जित भूमिहरूमा
> बोधिचित्तोत्पाद गरिन्छ ।[३]

३. **लक्षण** : लक्षणको आधारमा बोधिचित्त दुई प्रकारका छन् : परमार्थ बोधिचित्त र संवृति बोधिचित्त । *सन्धिनिर्मोचनसूत्र* मा बताइएको छ :

> बोधिचित्त दुई प्रकारको हुन्छ : परमार्थ बोधिचित्त र संवृति बोधिचित्त

परमार्थ बोधिचित्त के हो त ? परमार्थ बोधिचित्त करूणा मिश्रित शून्यता हो जो प्रभास्वर, अकम्प्य एवं प्रपञ्चरहित हुन्छ । अघि भर्खर उल्लेख गरिएको सूत्रमा बताइएअनुसार :

> यो परमार्थ बोधिचित्त यस संसारभन्दा पर, प्रपञ्चरहित, प्रभास्वर, परमार्थको छवि, निर्मल, अकम्प्य सुनसान रातमा एकनाशले बलिरहेको बत्तीको ज्योति सरह तेजिलो हुन्छ ।

संवृति बोधिचित्त के हो ? त्यही सूत्रले भन्छ :

> करूणाले अभिप्रेरित भएर सबै सत्त्व प्राणीहरूलाई संसारबाट मुक्ति दिलाउने प्रतिज्ञा संवृत्ति बोधिचित्त हो ।











परमार्थ बोधिचित्तको उत्पत्ति धर्मताबाट हुन्छ भने *महायानसूत्रालंकार* का अनुसार संवृत्ति बोधिचित्तको उत्पत्ति संकेत तथा ग्रहण बाट हुन्छ (समादानसांकेतिक) । यदि परमार्थ बोधिचित्त कुन भूमिमा उत्पन्न हुन्छ भनेर सोध्ने हो भने यसको उत्तर हो पहिलो अर्थात प्रमुदिता भूमिबाट । यसलाई *महायानसूत्रालंकार टिका* मा उल्लेख गरिएको छ :

> परमार्थ बोधिचित्तोत्पाद प्रमुदिता नाम प्रथम भूमिमा हुने गर्छ ।[४]

संवृति बोधिचित्त दुई प्रकारको हुन्छ : (१) प्रणिधि चित्त र (२) प्रस्थान चित्त । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

> संक्षेपमा यो बोधिचित्तलाई दुई किसिमबाट चिन्नुपर्छ,
> बोधिप्रणिधि चित्त तथा बोधिप्रस्थान चित्त ।[५]



यी दुई बोधिप्रणिधि चित्त तथा बोधिप्रस्थान चित्तका विशेषताहरू सम्बन्धमा विभिन्न मतहरू पाइन्छन् ।

नागार्जुनको परम्परा जसको सूत्रपात आर्यमञ्जुश्रीबाट भएको थियो त्यसै परम्पराका एक शिष्य आचार्य शान्तिदेवको कथन अनुसार प्रणिधिचित्त कतै जाने इच्छा समान हुन्छ र सम्यक् सम्बोधि प्राप्तिको कामना हो भने प्रस्थान चित्त साँच्चिकै जानु सरह हो र बुद्धत्व प्राप्त गर्ने प्रयत्न हो । जस्तो *बोधिचर्यावतार* मा बताइएको छ :

> जसरी मान्छेले जाने इच्छा र साँच्चिकै जाने यी
> दुई बीचको भेदलाई चिन्दछ त्यसरी नै
> बुद्धिमान मानिसले क्रमशः यिनीहरूमा हुने भेदलाई चिन्दछन् ।[६]

आचार्य असङ्गको परम्परा जसको सूत्रधार आर्य मैत्रेयलाई मानिन्छ । त्यस परम्परका एक शिष्य आचार्य धर्मकीर्तिको कथन अनुसार प्रणिधिचित्त











सबै सत्व प्राणीहरूको कल्याणार्थ सम्यक सम्बुद्ध प्राप्त गर्छु भनेर सोच्दै त्यो अन्तिम लक्ष्य सम्म पुग्ने प्रतिज्ञा गर्नु हो भने प्रस्थान चित्त बुद्धत्वको हेतुका रूपमा रहेका षट्पारमिताको अभ्यास गर्छु भनेर सोच्दै त्यो हेतु प्राप्त गर्ने प्रतिज्ञा गर्नु हो । यसको पुष्टि *अभिधर्मसमुच्चय* मा गरिएको पाइन्छ :

> बोधिचित्तोत्पाद दुई प्रकारले गर्न सकिन्छ : सामान्य तथा विशेष । सामान्य बोधिचित्तोत्पाद म अभिसंबुद्ध बन्न सकूँ भन्ने कामना हो भने विशेष बोधिचित्तोत्पाद शीलबाट शुरू हुने र प्रज्ञामा गएर टुङ्गिने पारमिताहरूमा म आफूलाई पोख्त पार्न सकूँ भन्ने कामना हो ।

अब उपमा, सीमा तथा लक्षणको आधारमा गरिने बोधिचित्तोत्पाद विषयक मेरो छलफल यही टुङ्गिन्छ ।



**IV. आलम्वन** : बोधिचित्तोत्पादका लागि आलम्वनहरू हुन् : *बोधि* र *सत्वप्राणीहरूको कल्याण* । तसर्थ *बोधिसत्त्वभूमि* मा यस्तो भनिएको छ :



> तसर्थ बोधिचित्तोत्पादका आलम्वनका रूपमा बोधि तथा सत्त्व प्राणीहरूको कल्याण छन् ।[७]

बोधिलाई आलम्वनको रूपमा प्रयोग गर्नुको मतलब महायानी ज्ञानको खोजी गर्नु हो । यसलाई पनि *महायानसूत्रालंकार* को 'बोधिचित्तोत्पाद' अध्यायमा उल्लेख गरिएको छ :

> यसको आलम्वन ज्ञानको खोजी हो ।[८]

सत्त्व प्राणीहरूलाई आलम्बनको रूपमा प्रयोग गरिनुको अर्थ के हो भने सत्त्व प्राणीहरू एक वा दुई मात्र हुँदैनन्, उनीहरू त पुरै आकाशै ढाक्ने











गरी अनन्त एवं अपरिमाण संख्यामा हुन्छन् । बोधिचित्तोत्पाद गर्नाले कर्म र क्लेशको वशमा परेर हुन गएको दुःखबाट उनीहरूलाई छुटकारा मिल्दछ । जस्तो *भद्रचर्या प्रणिधान* मा उल्लेख गरिएको छ :

> आकाशको अन्त भएपछि मात्र, सत्त्व (प्राणी) हरूको अन्त भएपछि मात्र वा कर्म वा क्लेशको अन्त भएपछि मात्र मेरो प्रणिधानको पनि पूर्ति तथा अन्त हुनेछ ।[९]

**V. हेतु** : बोधिचित्त ग्रहण गर्नाको हेतु *दशधर्मकसूत्र* मा दिइएको छ :

> यस्तो चित्त चार हेतुहरूबाट बन्ने गर्छ : (क) यस चित्तका अनुशंसाहरू थाहा पाएर, (ख) तथागतप्रति श्रद्धा जागृत भएर, (ग) सत्त्वहरूको दुःख देखेर, (घ) कल्याणमित्रहरूद्वारा प्रेरित भएर ।




*बोधिसत्त्वभूमि* का अनुसार :

> (क) गोत्रसंपत् बोधिचित्तोत्पादका लागि प्रथम हेतु हो भने (ख) बुद्ध, बोधिसत्व तथा कल्याणमित्रहरूको परिग्रह दोश्रो हेतु हो, (ग) सत्त्वप्रति करूणा तेश्रो हेतु हो र (घ) संसारको दुःख तथा दुष्कर चर्याको दुःख जतिसुकै दीर्घकालीन भएपनि, जतिसुकै फरक फरक भएपनि, जतिसुकै कठोर भएपनि र जतिसुकै अनन्त भएपनि त्यसबाट भयभीत नहुनु चौथो हेतु हो ।[१०]

*महायान सूत्रालंकार* का अनुसार :

> मित्रबल, हेतुबल, मूलबल, श्रुतबल एवं कुशलमूलको अभ्यासद्वारा उत्पाद गरिएको बोधिचित्तोत्पाद अरूले संकेत गरे अनुसार दृढ वा कमजोर हुनेगर्छ ।[११]











यसको अर्थ के हो भने : अरूले संकेत गरे अनुसार बोधिचित्तोत्पाद तथा संकेतबाट ग्रहण गरिएको बोधिचित्त अर्थात हामीलाई अरूहरूले देखाएकाले हामीले त्यो बोधिचित्त ग्रहण गरेका छौँ । यो संवृति बोधिचित्त हो र कल्याणमित्रका उपदेशबाट यसको उत्पत्ति हुन्छ । 'हेतुबलद्वारा' को तात्पर्य के हो भने बोधिचित्त गोत्रको बलले पनि उत्पन्न हुन्छ (हेतुको प्रबलता अनुसार त्यो बल धेरै वा क्षीण हुने गर्छ ।) 'कुशलमूलको बलद्वारा' को अर्थ के हो भने बोधिचित्त त्यो गोत्रद्वारा प्रसारित सद्धर्मको प्रभावले पनि उत्पन्न हुन्छ । 'श्रुतबलद्वारा' को अर्थ के हो भने धर्मदेशनालाई निरन्तररूपले सुनिरहँदाखेरी पनि बोधिचित्तोत्पाद हुन्छ । 'कुशलमूलको अभ्यासद्वारा' को अर्थ के हो भने बोधिचित्त यस जीवनमा धर्मलाई सुन्नाले, धारण गर्नाले र अभ्यास गर्नाले पनि उत्पन्न हुन्छ । र यस बाहेक, बोधिचित्त मित्रको बलले उत्पन्न भए कमजोर अथवा अदृढ हुन्छ भने हेतु बल वा अरू बलहरूद्वारा उत्पन्न भए दृढ हुन्छ ।

परमार्थ बोधिचित्तोत्पादका हेतु निम्न शब्दहरूमा पाइन्छ :

जब संबुद्धलाई सही प्रकारले उपासना गरिन्छ
जब पुण्यसंभार तथा ज्ञानसंभार प्राप्त भैसकेका हुन्छन्
जब निर्विकल्प धर्म ज्ञानको उदय हुन्छ
तब बोधिचित्तोत्पाद परमार्थ बोधिचित्तोत्पाद मानिन्छ ।[१२]

अर्को शब्दमा, परमार्थ बोधिचित्तको उत्पाद आगम, प्रतिपत्ति (अभ्यास) एवं अधिगम (Realization) विशेषबाट हुन्छ ।

**VI. स्थान** : बोधिचित्तोत्पाद गर्न कहाँ कुन स्थानमा प्रतिज्ञा गर्ने भन्ने कुरो त्यस ठाउँमा (क) कल्याण मित्र छ वा (ख) छैन भन्ने कुरामा निर्भर हुन्छ ।

आचार्यलाई भेट्न जाँदा हाम्रो जीवन वा ब्रह्मचर्यामा कुनै वाधा वा खतरा उत्पन्न हुँदैन भने जतिसुकै टाढा जानुपरेपनि हामीले गएर आचार्यलाई भेट्नैपर्छ र त्यहाँ बोधिचित्तोत्पाद गर्ने प्रतिज्ञा गर्नैपर्छ । यस











आचार्यका लक्षणहरू के हुन् भने उनी संवर प्रदान गर्ने विधिमा दक्ष हुनुपर्छ, विनयको शिक्षा प्राप्त तथा विनयमै अक्षुण्णरूपले स्थित भएको हुनुपर्छ, यसको अत्तिरिक्त उनले शरीर र वाणीसित सम्बद्ध विज्ञप्तिहरूको अर्थ बुझ्न सक्ने हुनुपर्छ र साँसारिक प्रपञ्चहरूलाई महत्व नदिएर आफ्ना शिष्यहरूलाई करूणाभावले पालन गर्ने हुनुपर्छ। *बोधिपथप्रदीप* मा भनिएझैं :

> जसमा सम्यक लक्षणहरू भरिएको हुन्छ
> जसले एक सदगुरूबाट संवर लिएका हुन्छन्
> जो संवर दिने विधिमा दक्ष हुन्छन्
> जसले संवर धारण गरिराख्छन्
> जसले धैर्यपूर्वक तथा करूणापूर्वक संवर दिन्छन्
> उनैलाई सदगुरु भनेर चिनिनुपर्छ।[१३]

यस विषयमा *बोधिसत्वभूमि* मा यस्तो भनिएको छ :

> बोधिचित्तोत्पाद गर्ने सङ्कल्प लिने बोधिसत्त्व समान धर्मको हुनुपर्छ, विद्वान हुनुपर्छ र वाक्‌विज्ञप्ति (मन्त्रहरू) को अर्थ बुझ्न वा जान्न सक्ने हुनुपर्छ।[१४]

यदि गुरुकहाँ जाँदा हाम्रो ब्रह्मचर्य वा जीवनमा विघ्नवाधा हुने आशंका छ भने नजीकै भएपनि त्यो गुरु उपस्थित नरहेको नै भनिन्छ। यसको सट्टा बुद्धको प्रतिमाको सामुन्ने बसेर प्रणिधि वा प्रस्थान बोधिचित्तको जप तीन पटक गरेको खण्डमा हामीलाई प्रणिधि वा प्रस्थान बोधिचित्त प्राप्त हुन्छ। त्यसैले *बोधिसत्वभूमि* मा भनिएको छ :

> यदि यी सब गुणहरू भएका कुनै पनि व्यक्ति नभेट्टिएमा बोधि-सत्त्वले बुद्धको प्रतिमाको सामुन्ने बसेर बोधिसत्त्वशील संवर उपयुक्तढङ्गले म आफै लिन्छु भनी प्रणिधान गर्नुपर्छ।











गुरु र बुद्धको मूर्ति दुवै नभेट्टिएमा, हामीले बुद्ध र बोधिसत्त्वहरू माथि आकाशमा छन् भनी कल्पना गरेर तीन पटक यो मन्त्र भन्नुपर्छ । यसबारे *शिक्षासमुच्चय* मा यसो भनिएको छ :

> यदि कुनै पनि त्यस्तो गुरु छैन भने दशै दिशाका बुद्ध र बोधिसत्त्वहरू माथि आकाशमा छन् भनी कल्पना गरेर आफूले नै बोधिसत्त्व शील संवर लिनुपर्छ ।

**VII. विधि** : सिद्ध, महापण्डितहरूले बताएर गएका उपदेशहरूमा बोधिचित्त ग्रहण गर्ने अनेक तरीकाहरू पाइन्छन् । तर यो ग्रन्थमा केवल मञ्जुश्रीबाट सुरु भएको नागार्जुनको गम्भीर परम्पराका प्रर्वत्तक शान्तिदेव र मैत्रेयबाट सुरु भएको असङ्गको वैपुल्य परम्पराको प्रर्वत्तक धर्मकीर्तिका विधिहरूको मात्र चर्चा गरिनेछ ।



**क. आचार्य शान्तिदेव** : आचार्य शान्तिदेवका अनुसार बोधिचित्तोत्पाद गर्ने तीन वटा चरणहरू छन् । (१) प्रयोग, (२) मौल, (३) पृष्ठ ।



(१) **प्रयोग** : प्रयोग विधिका पनि ६ वटा उपशीर्षकहरू छन् : पूजा अर्पण, पाप देशना, पुण्यानुमोदन, धर्मचक्र प्रर्वत्तन गर्नको लागि अध्येषणा गर्नु, निर्वाणमा प्रवेश नगर्न याचना गर्नु, र कुशलमूलहरू सबैको परिणामना गर्नु ।

(१.१) *पूजा अर्पण* : पूजा अर्पणमा दुईवटा वस्तुहरू समावेश हुन्छन् । (१.१.१) आश्रय, र (१.१.२) पूजा

(१.१.१) आश्रय : आश्रय आफ्नै अगाडि हुन पनि सक्छ र नहुन पनि सक्छ किनकी बुद्धको पूजा जुनसुकै अवस्थामा गरेपनि त्यत्तिकै पुण्यकारी हुनेछ चाहे बुद्धको प्रतिमा अगाडि गरिएको होस् या नहोस् त्यसले केही फरक पर्ने छैन । यस सम्बन्धमा *महायानसूत्रालंकार* मा यस्तो भनिएको छ ।











> दुई संभारहरू (पुण्य संभार र ज्ञान संभार) परिपूर्ण गर्नका लागि प्रसन्न मनले बुद्धहरू तिम्रो सामु नभए पनि उहाँहरूलाई चीवर दान दिनू ।[१५]

(१.१.२) पूजा : पूजा दुई प्रकारका छन् : उत्तर पूजा र अनुत्तर पूजा । यी मध्ये उत्तर पूजा पनि दुई प्रकारका छन् : आमिष पूजा र प्रतिपत्ति पूजा ।

पहिलो, उत्तर पूजा भन्नाले हात जोडी विन्ती गरेर पूजा गर्नु, स्तुति गान गाई पूजा गर्नु पूजा सामग्रीहरूलाई उचित ढङ्गले सजाएर पूजा गर्नु, कसैको स्वामित्वमा नरहेको वस्तु दान गरेर पूजा गर्नु, शरीर अर्पण गरेर पूजा गर्नु हो । प्रतिपत्ति पूजा भन्नाले महामुद्राको दिव्य कायको विषयमा भावना गर्नु र र बोधिसत्त्व समाधिद्वारा प्राप्त हुने (देवता, मण्डल आदि) का पूजा अर्पण गर्नु हो ।

अनुत्तर पूजा दुई किसिमका हुनसक्छन् । सालम्बन पूजा र निरालम्बन पूजा । सालम्बन पूजा भन्नाले बोधिचित्तको भावना गर्नु हो । जस्तो भनिएको छ :

> विज्ञजनहरूले बोधिचित्तको भावना गरेर त्यसको अभ्यास गर्दछन् । वास्तवमा त्यही बुद्ध र बोधिसत्त्वहरूको पूजा गरेको सरह हो । त्यही नै सर्वोत्तम पूजा हो ।

निरालम्बन पूजा भन्नाले अनात्मको भावना गर्नु हो जुन सर्वोत्तम पूजा हो । जस्तो *सुस्थितमतिदेवपुत्रपरिपृच्छापरिवर्त* मा भनिएको छ :

> बोधिको कामना गर्ने बोधिसत्त्व गङ्गा नदीका
> वालुवा जत्तिकै असंख्य कल्पहरूसम्म
> बुद्धहरू नरोत्तमहरूलाई पुष्प, धूप, भोजन र पेय चढाएर
> पूजा गरेको गरेकै गरिरहनु भन्दा पनि
> यदि उसले आत्मा, प्राण र पुद्गल भन्ने चीज कतै पनि भेट्टिदैन











भन्ने शिक्षा प्राप्त गरेर
त्यसमा प्रभास्वर क्षान्ति ज्ञान प्राप्त गर्छन् भने
उसले बुद्धहरूको सबैभन्दा उत्तम पूजा गरेको मानिनेछ ।

यस सम्बन्धमा *महासिंहनादसूत्र* मा यस्तो भनिएको छ :

जसले संज्ञा र निमित्तका विचारहरू उत्पन्न गर्दैन उसले त्याग वा ग्रहण यी दुवै अद्वय भावनाबाट रहित भएर तथागतको पूजा गर्छ । मित्रहरू हो ! तथागतको शरीरको लक्षण नै नि:स्वभाव भएको हुँदा उनको शरीरलाई सस्वभाव को रूपमा हेर्नेले उनको पूजा गर्न सक्दैन ।

पूजाविधि सम्बन्धी वर्णन यहीँ समाप्त हुन्छ ।

(१.२) *पापदेशना* : पापदेशना भन्नाले हामी के बुझ्छौं भनें सामान्यतया: पाप वा पुण्य सबै समुत्थापक चित्त (मनको आशय) मा निर्भर गर्ने कुर ाहरू हुन् । त्यसैले मन नै सबैथोक अर्थात मालिक हो । काय र वाक त चित्तका नोकरहरू सरह हुन् । जस्तो *रत्नावली* मा भनिएको छ ।

सबै धर्महरू भन्दा मन पहिले आउने हुँदा यसलाई मालिक भनिन्छ ।[१६]

त्यसैले, जब मनमा राग, द्वेष, मोह इत्यादि मलहरू हुन्छन्, तब पाँच आनन्तर्य, पाँच उपानन्तर्य, दश अकुशल कर्महरू गरिने हुन्छन्, शील संवर तोडिने हुन्छन् । अथवा हामीले अरूहरूलाई यस्तो कर्म गर्न उक्साउँछौं अनि तिनीहरूको कर्ममा खुशी हुन्छौं । यी सबैलाई अकुशल कर्म भनिन्छ । यति मात्र होइन । यस्तो चित्तले सद्धर्मको श्रवण, चिन्तन र भावना गर्नु पनि अकुशल नै हो जसको फलस्वरूप दु:ख उत्पन्न हुन्छ । यस बारे *रत्नावली* मा यस्तो भनिएको छ :











राग, द्वेष र मोहले गरिएका कर्महरू सबै अकुशल हुन् ।
अकुशल कर्मले गर्दा सबै दु:ख र दुर्गतिहरूको उत्पत्ति हुन्छ ।[१७]

यस्तै *बोधिचर्यावतार* मा पनि भनिएको छ :

पापकर्म (अकुशल कर्म) ले दु:ख नै हुन्छ
त्यसबाट कसरी उम्कने ?
म जस्तो पापीले त दिन रात
यस्तै चिन्तन गरिराख्नु नै उपयुक्त छ ।[१८]

तसर्थ हामीले गरेका पाप वा अकुशल कर्महरूको प्रायश्चित गर्नु अति जरुरी छ । तर के पश्चाताप (पाप देशना) गर्नाले हाम्रो परिशुद्धि निश्चित हुन्छ त ? हुन्छ । *महापरिनिर्वाणसूत्र* मा भनिए झैं :



कुनै प्राणीले पाप गरेर पछि पश्चाताप गर्छ भने जलशोधक मणि छुनासाथ हिले पानी सङ्लो भए जस्तै वा बादलबाट विस्तारै निस्केको चन्द्रमा जस्तै उसको पनि परिशुद्धि हुनेछ ।



तथा :

जति जति पापको पश्चाताप गरिन्छ, त्यति त्यति नै उसको परिशुद्धि हुँदै जान्छ र अन्ततः उसको पाप पूरै शोधन हुनेछ ।

पाप देशना गर्ने कसरी त ? यसको जवाफ हो चार धर्म वा बल द्वारा पाप देशना गर्नु । *चतुधर्मनिर्देशसूत्र* मा बताइएको छ :

हे मैत्रेय, बोधिसत्त्वले चार बल प्राप्त गरेको खण्डमा उनका कृत तथा संगृहित पापहरू नाश भएर जानेछन् । ती चार











बलहरू के के हुन् ? ती हुन् 1. विदुषण बल, 2. प्रतिपक्ष बल,
3. आश्रय बल, 4. समुदाचार बल ।[१९]

1. विदुषण बल : विदुषण बल भन्नाले आफूले गरेका पापहरूको गहिरो पश्चाताप प्रकट गर्नु हो र बुद्ध र आर्य संघका सामु बसी प्रायश्चित गर्नु हो । यस्तो पश्चाताप कसरी प्रकट गर्न सकिन्छ त ? पश्चाताप तीन प्रकारले गर्न सकिन्छ : अ) वेकारमा पाप गर्न पुगेछुँ भन्ने महशुस गरेर, आ) आफूले गरेको पापको भयंकर परिणामबारे बुझेर र इ) जति सक्यो चाँडो यसको फलबाट आफू मुक्त हुनुपर्ने आवश्यकतालाई जानेर ।

अ) यिनमध्ये पहिलोको अर्थ के हो भने मैले कहिले शत्रुहरूलाई वशमा पार्न पाप गरेँ, कहिले मित्रलाई रक्षा गर्न, कहिले आफ्नो शरीरको रक्षा गर्न र कहिले धन कमाउन पाप गरेँ । तर म मरेर परलोक जाने बेलामा यी मित्र, शत्रु, मेरो आफ्नो सामान, मेरो आफ्नै शरीर र धनसम्पत्ति केही पनि मसित आउनेछैनन् । मसित आउने त मेरा पापको छायाँ मात्र हो र म जहाँ जन्मेपनि कसाही जस्तै सधैं मेरो पछि लागिरहनेछ । *वीरदत्तगृहपतिपरिपृच्छासूत्र* मा भनिए झैं :

बाबु, आमा, दाजुभाई, दिदीबहिनी,
छोराछोरी, पत्नी, नोकर, धनसम्पत्ति,
नातागोताहरू कोही पनि मृतकको पछि लाग्दैनन् ।
पछि लाग्ने त आफ्ना राम्रा नराम्रा कर्महरू मात्र हुन् ।

तथा :

यस्तो महादुःखको घडि आएपछि, मेरा सन्तानहरू
मेरा शरण हुन्नन् । मेरी पत्नी मेरो शरण हुँदिनन् ।
मैले एक्लै त्यो महादुःख भोग्नु पर्नेछ। उनीहरू कसैले त्यसलाई
बाँडेर लिन्नन् ।











*बोधिचर्यावतार* मा पनि भनिएको छ :

> मैले प्रिय (साथी) र अप्रिय (शत्रु) हरूका निमित्त धेरै पापहरू गरें
> त्यसबेला सबैथोक छाडेर एक दिन मैले मर्नुपर्छ भन्ने यादै भएन ।
> मित्र, शत्रु, म आफै र सबैथोक एकदिन नाश भएर जानेछौं ।[२०]

तसर्थ, मैले मित्रको लागि पाप गरें, शत्रुको लागि पाप गरें, मेरो जीउलाई सुरक्षा दिनको लागि पाप गरें र आफ्नो खुशीको लागि पाप गरें तथापि यी चारै चीज त सँधै मसित रहने वाला छैनन् । पाप भनेको असाध्यै भयङ्कर हुँदोरहेछ र त्यसले रत्तिभर पनि सुख दिँदैन भन्ने भावना मनमा जगाएर हामीले गहिरो पश्चाताप प्रकट गर्नुपर्छ ।

आ) यदि कसैले म पापसाप केही जान्दिन र यसले मलाई केही हानि हुँदैन भनी सोच्यो भने उसले तुरुन्तै आफ्नो विचार बदल्नुपर्छ र पापको भयङ्कर परिणामबारे महशुस गरेर वा बुझेर गहिरो पश्चातापको भावना जागृत गर्नुपर्छ । यो दुःस्वप्न समानको भयङ्कर परिणाम तीन चोटि हामीले देख्छौं । i. जब मृत्यु आइपुग्छ, ii. जब मरणासन्न अवस्थामा पुग्छौं, र iii. मृत्युपश्चात् ।

i. पहिलो, मर्ने बेलामा पापीहरूले यस्तो असह्य पीडाको अनुभव गर्छन् मानौं उनीहरूका शरीरको प्रमुख अङ्ग नै छेडिएको होस् । जस्तो भनिएको छ :

> यहाँ म मृत्यु शैय्यामा परिरहेको छु ।
> मेरा आफन्तहरू धेरै मेरो वरिपरि बसिराखेका छन् ।
> तैपनि म एक्लैले यो सबै प्राणघातक पीडा झेल्नुपर्छ ।[२१]

ii. मर्नेबेला आफूले गरेका पापहरूको फल कति घातक हुँदोरहेछ भनेर चाल पाउँछौ । भनाइको अर्थ कालो र विभत्स यमले हाम्रो घाँटीमा पाशो हाली हामीलाई नरकसम्म तानी घिसार्दै लान्छ । त्यहाँ दण्ड, तलवार











र अरू धारिलो हतियारहरू बोकेका डरलाग्दा यक्षहरूको अति तीव्र यातनाबाट हामीले अत्यधिक दुःख र कष्ट भोग्नु पर्छ। जस्तो भनिएको छ :

> यमदूतद्वारा समातिएपछि यी मित्र र आफन्तहरूको के प्रयोजन् ?
> पुण्य मात्र त्यसबेला शरण हुन सक्छ ।
> तर पुण्य भने हामीले कमाएकै छैनौं ।[२२]

*शिष्यलेख* मा भनिएको छ :

> हाम्रो घाँटीमा कालको पाशो लगाएर भयङ्कर यमदूतहरूले
> हामीलाई घिसार्दै तानेर लान्छन् र कुट्नसम्म कुट्छन् ।

यदि यमदूतदेखि डराउँदिन भनी तिमी सोँच्छौँ भने *बोधिचर्यावतार* का यी शब्दहरू याद राख्नू :




> अङ्गप्रत्यङ्ग सबै काटकुट गर्न लगिन आँटेको मानिस थर थर काँप्न थाल्छ, उसको मुख सुख्खा हुन थाल्छ, उसका आँखा डरले टोलाउन थाल्छन्, कान चौकन्ना हुन्छ उसको रूपै अर्कै हुन्छ भने साँच्चै भयंकर रोग लागेर हाम्रो छाला नै खुम्चिने गरी तर्साउने अति भयङ्कर रूप भएका यमदूतले हामीलाई समात्दाखेरी हाम्रो के दशा हुने हो ?[२३]

iii. पापको भयङ्कर परिणाम भन्नाले जब हामी नरकमा खस्छौँ वा पतन हुन्छौँ, हामीलाई भतभती उमालेर तताइन्छ, त्यस्तो असह्य पीडा भोग्नुपर्छ हामीले । यस कहालीलाग्दो भयका विषयमा यस्तो भनिएको छ :

> नरकको बारे सुन्दा, देख्दा, संझिदाखेरी, पढ्दाखेरी वा चित्र कोर्दा-खेरी त हामीलाई ठूलो डर लागेर एकदम असह्य हुनथाल्छ











> भने, त्यो महाभय आउँदा हामीले साँच्चिकै असह्य दुःख भोग्नुपर्दा, हाम्रो दशा के हुने हो ? *सुहृल्लेख* - ८४

तसर्थ, पापका फल यतिका कहालीलाग्दा भएका कारणले हामीले पश्चातापको भावना जागृत गर्नुपर्छ ।

इ) पापदेशना त पछि गरेपनि हुन्छ नि भनेर सोंच्नु महामूर्खता हुनेछ । हामीले जति सक्यो उत्ति चाँडो पापको देशना गरिहाल्नुपर्छ । किनभने हाम्रो पाप शोधन हुन नपाउँदै मृत्यु आइपुग्न सक्छ । जस्तो भनिएको छ :

> मैले पाप देशना गर्न नपाउदैं म मर्न सक्छु ;
> मलाई तुरुन्त पापबाट मुक्त हुन मद्दत गर्नुहोस् ।[२४]

पापको प्रायश्चित गर्न नपाउँदै मर्दिन भनेर कसैले भन्यो भने मृत्यु अनिश्चित छ भन्ने तथ्य उसले थाहा पाओस्, उसले पापको प्रायश्चित गरोस् या नगरोस् त्यो यमराजले हेरिराख्दैन, त्यसले त पहिलो भेटमै प्राण टपक्क टिपी लैजान्छ । जस्तो बताइएको छ :

> यो विश्वासघाती मृत्युले हामीले सुकर्म
> गरेको या नगरेको भन्ने जाँच गर्दैन,
> स्वस्थ या अस्वस्थ छु भनेर
> यसलाई विश्वास गर्नै सकिदैन ।
> यो त अकस्मात आईलाग्छ ।[२५]

तसर्थ, जीवन, विशेष गरी आयुमा कुनै भरोसा नराखी हाम्रो पापको क्षय हुन नपाउँदै हामी मर्न सक्ने हुँदा जति सक्यो चाँडो पापको प्रायश्चित गरिहाल्नुपर्छ । अहिले पापदेशना गर्ने अवसर प्राप्त हुँदा त्यसको पूर्ण सुदुपयोग गरिहाल्नुपर्छ । माथि उल्लेखित तीन कारणहरूले हामीले मनमा











घोर पश्चाताप प्रकट गरिसकेपछि अब हामीले कुनै विशेष वा सामान्य आश्रयको सामु आफ्नो पापको प्रायश्चित (देशना) गर्नुपर्छ । यसरी पश्चातापद्वारा पाप शुद्धि गर्नु भनेको त्यस्तो कटु भाषी साहूकहाँ गएर फेरी ऋण मिनाहाको लागि अनुरोध गर्नु हो जसको ऋण हामीले तिरेका छैनौं । ९ सय उन्नान्सय मानिसहरू मारेका अङ्गुलिमालले त विदुषण बलको प्रयोगले आफ्नो पापबाट मुक्त भएर पछि अर्हत फल प्राप्त गर्न सके । जस्तो *सुहृल्लेख* मा लेखिएको छ :

> पहिले प्रमादी भएर पनि पछि अप्रमादी बन्न सक्यो भने
> बादलको पछाडिबाट निक्लेको चन्द्र झैं देदिप्यमान हुनेछ ।
> जसरी नन्द, अङ्गुलीमाल, अजातशत्रु र उदयन भए । *सुहृल्लेख* - १४

2. प्रतिपक्ष बल : प्रतिपक्ष बल भन्नाले कुशलमूल वा पुण्यको कार्य गर्नु हो । यसले गर्दा आश्रवहरू रोकिनेछन् । यस बारेमा *अभिधर्मसमुच्चय* मा पनि भनिएको छ :

> प्रतिपक्ष कर्मलाई कुकर्मलाई भन्दा धेरै नै बलियो अस्त्रको रूपमा हेरिनुपर्छ । किनभने प्रतिपक्षले फललाई बदल्ने काम गर्दछ भने कुकर्मले फललाई जन्माउछ ।

*सर्वतथागतगुह्यमहागुह्यकोशाक्षयनिधदीपमहाप्रतपसाधनतन्त्रज्ञाना-श्चर्याद्युतिचक्र* मा यस्तो बताइएको छ :

> शून्यताको भावनाले पापको शुद्धि हुन्छ ।

*वज्रच्छेदिका* मा भनिएको छ :

> गम्भीर सूत्रहरूको पाठ गर्नाले पापको शुद्धि हुन्छ ।











*त्रिसमयव्यूहराज* र *सुबाहुपरिपृच्छातन्त्र* का अनुसार :

मन्त्रहरू पाठ गर्नाले पापको शुद्धि हुन्छ ।

*पुष्पकूटनामधारणी* को अनुसार :

तथागतको स्तूपको पूजा गरेमा पापको शुद्धि हुन्छ,

*तथागतप्रतिमापरिच्छेद* का अनुसार :

बुद्धको प्रतिमा स्थापित गरेर, धर्मपर्याय सुनेर, पढेर, त्यसको प्रतिलिपी उतारेर र अन्य पुण्य कार्यहरू गरेर पापको शुद्धि गर्न सकिन्छ ।



*विनयागमोत्तरविशेषागमप्रशनवृत्ति* का अनुसार :



कुशल मूल वा पुण्य कर्मले पापको
क्षय गर्ने व्यक्ति यस संसारमा बादलबाट
निस्केको सूर्य वा चन्द्र झैँ चम्किन्छ ।

तरपनि, तिमीले प्रश्न गरौला प्रतिपक्षरूपमा पुण्य वा कुशल कर्महरू गरेर पापहरूको शोधन गर्ने व्यक्तिले त जति पाप गरेको थियो त्यति नै पुण्य गर्नुपर्ला नि त ? होइन, त्यसो होइन । किनकी *महापरिनिर्वाणसूत्र* मा भनिए झै :

एउटा कुशल कर्म गर्नाले धेरै अकुशल कर्महरूको क्षय हुन्छ ।

तथा,











एउटा सानो वज्रले अति नै विशाल पर्वतलाई टुक्रा टुक्रा पारिदिन सक्छ, एउटा सानो आगोले घाँस, काठहरू जलाएर खरानी पारिदिन सक्छ, अलिकति विषले थुप्रै प्राणीहरूको ज्यान लिन सक्छ, त्यसरी नै एउटा सानो कुशल कर्मले महापापलाई मेटाइदिन सक्छ त्यसैले त्यो साँच्चिकै बलियो प्रतिपक्ष हो ।

*सुवर्णप्रभासोत्तमसूत्र* का अनुसार :

हजारौँ कल्पसम्म अति दारुण पाप गरेको प्राणीले एक पटक मात्र भएपनि पापदेशना गरेपछि उसका सबै पाप नष्ट भएर जानेछन् ।[२६]

प्रतिपक्ष बलको प्रयोगले पाप शुद्धि गर्नु भनेको मलमूत्रको दलदलमा फसेको व्यक्तिले सो दलदलबाट निस्केर राम्रो सँग नुहाई धुवाई गरेर अति सुगन्धित तेल आफ्नो जीउभरी घस्नु सरह हो । धेरै समय पहिले बालक उदयनले आफ्नै आमाको हत्या गरेका थिए । तैपनि प्रतिपक्ष बलको सहाराले उनी पापबाट मुक्त भई श्रोत्तापन्न भूमिसम्म पुगी देवतुल्य प्राणी बन्न सफल भए । ग्रन्थहरूमा लेखिए झैं :

पहिले प्रमादी भएर पनि पछि अप्रमादी बन्न सक्यो भने
बादलको पछाडिबाट निक्लेको चन्द्र झैं देदिप्यमान हुनेछ ।
जसरी नन्द*, अङ्गुलीमाल**, अजातशत्रु*** र उदयन**** भए ।

*सु.लेख* - १४

3. प्रत्यापत्ति बल : प्रत्यापत्ति बल भन्नाले पापको भयङ्कर परिणाम देखि भयभीत भएर अबदेखि पाप गर्न रोक्नु हो । जस्तो भनिएको छ :

हे नायकगण, म आफूले गरेका पापको क्षमा माग्छु । पाप गर्नु भनेको सार्है भयङ्कर रहेछ । अबदेखि म कदापि पाप गर्दिन ।[२७]











यस प्रकार प्रत्यापत्ति बल भनेको भयङ्कर नदीको प्रवाहलाई अर्कै दिशातर्फ मोड्नु सरह हो । पहिले नन्द स्त्रीसँग अत्यन्तै मोहित थिए, तै पनि प्रत्यापत्ति बलको सहाराले उनी आफ्नो पापबाट मुक्त भएर पछि अर्हत नै भएर छाडे । जस्तो ग्रन्थहरूमा लेखिएको छ :

> पहिले प्रमादी भएर पनि
> पछि अप्रमादी बन्न सक्यो भने
> बादलको पछाडिबाट निक्लेको चन्द्र झैं देदिप्यमान हुनेछ ।
> जसरी नन्द, अङ्गुलीमाल, अजातशत्रु र उदयन भए । *सुहृल्लेख* - १४

4. आश्रय बल : आश्रय बल भन्नाले त्रिरत्नमा शरण लिनु र बोधिचित्तोत्पाद गर्नु हो । त्रिरत्नमा शरण लिएर पाप शोधन गर्ने कुरा *सूक-रिकावदान* मा बताइएको छ :





> बुद्धमा शरण लिने प्राणी दुर्गतिमा पतन हुँदैन ।
> उसले देहत्याग गरिसकेपछि देवदेह प्राप्त गर्दछ ।[२८]

*महापरिनिर्वाणसूत्र* का अनुसार :

> त्रिरत्नमा शरण लिनाले
> निर्भयता प्राप्त हुन्छ ।

बोधिचित्तोत्पाद गरेर पाप शोधन गर्ने कुरा *आर्यगण्डव्यूहसूत्र* मा बताइएको छ :

> सबै अकुशल धर्महरूलाई नाश गर्नमा यो अधोभूमि समान छ र सबै अकुशल कर्महरूलाई जलाउनमा यो प्रलय कालको अग्नि समान छ ।











*बोधिचर्यावतार* का अनुसार :

> जसरी पराक्रमी शूरवीर पुरुषमा आश्रय लिँदा
> सबै खालका डरहरूबाट मुक्त भइन्छ,
> त्यस्तै बोधिचित्तमा आश्रय लिँदा जस्तै
> ठूला पाप गरेको भएपनितर्न सकिन्छ,
> तैपनि बाल अञ्जानहरूले बोधिचित्तको आश्रय किन लिँदैनन् ?[२९]

तसर्थ बोधिचित्तोत्पाद गरेर पाप शोधन गर्नु भनेको दरिद्र नोकर आफ्नो मालिकको शरणमा पुग्नु सरह हो अथवा मन्त्रको मद्दतले विष मुक्त पार्नु सरह हो । पहिले अजातशत्रुले आफ्नै पिताको हत्या गरे । पछि आश्रयबलको सहाराले उनी आफ्नो पापबाट मुक्त भएर बोधिसत्त्व बने । जस्तो ग्रन्थहरूमा लेखिएको छ :




> पहिले प्रमादी भएर पनि
> पछि अप्रमादी बन्न सक्यो भने
> बादलको पछाडिबाट निक्लेको चन्द्र झैं देदिप्यमान हुनेछ ।
> जसरी नन्द, अङ्गुलीमाल, अजातशत्रु र उदयन भए । *सुहृल्लेख* - १४

यी हरेक बलले अलग अलग किसिमले पापको शोधन गर्छ, यी चारै बल मिलेर काम गऱ्यो भने के हुन्छ त ? त्यसरी पाप देशना गरियो भने त्यसको (परिशुद्धिको) लक्षण उसको सपना मै देखा पर्नेछ । *चुन्दधारणी* मा भनिए झैं :

> जब कुनै व्यक्ति आफूले गरेका पापबाट मुक्त हुन्छ, तब त्यसको लक्षण उसको सपना मै देखा पर्छ जस्तै – सपनामा वान्ता गरेको देख्नु, दुध वा दही पिएको देख्नु, सूर्य र चन्द्र देख्नु, आफू हावामा हिँडेको देख्नु, दनदन्ती आगो बलिराखेको











देख्नु, भैँसी वा कालो वस्त्र पहिरिएका बलवान मानिसमाथि
विजय प्राप्त गरेको देख्नु, भिक्षु र भिक्षुणीहरूका संघ देख्नु,
दुध निस्किने पहाड चढेको देख्नु, हात्ती, साँढे, पहाड, सिँहासन
र प्रासादमा चढेको देख्नु, धर्म सुनिराखेको देख्नु ।

पापदेशनाबारे वर्णन यही समाप्त हुन्छ ।

(१.३) पुण्यानुमोदन : पुण्यानुमोदन गर्नु भन्नाले सबै प्राणीहरूले भूत, वर्तमान र भविष्य कालमा गरेका वा गर्ने पुण्य वा कुशल कर्मको आफूले अनुमोदन गर्ने भद्र चेष्टा गर्नु हो । जतिपनि कुशलमूलहरू स्थापित गरिए तीन कालमा ती सबैप्रति अनुमोदनको भावना गरिनुपर्छ । असंख्य अनगिन्ती र अचिन्त्य बुद्धहरू विभिन्न लोकधातुहरूमा उत्पन्न भएदेखि उहाँहरूले पहिले बोधिचित्तोत्पाद गरेर दुई संभारहरू प्राप्त गरेदेखि, दुई आवरणहरूलाई नष्ट गरेदेखि बोधि प्राप्त नगरेसम्म जति पनि कुशलमूलहरू सञ्चय गर्नुभयो, धर्मचक्रप्रर्वतन गरेर सबै प्राणीहरूलाई विनीत गरिसकेर परिनिर्वाण नलिएसम्म उहाँहरू जति पनि कुशलमूलहरूको सञ्चय गर्नुभयो, निर्वाणपछि पनि जब सम्म धर्मशासन टिकिरह्यो तबसम्म सञ्चय भएका सबै कुशलमूलहरू, यस लोकमा प्रार्दुभाव भएका प्रत्येक बुद्ध र श्रावकहरूले गरेर गएका कुशलमूलहरू र पृथग्जनहरूले गरेका कुशलमूलहरू सबैको अनुमोदन गरिनुपर्छ ।

यस प्रकारले हामीले भूतमा गरिएका तथा भविष्यमा गरिने कुशलमूलहरूको अनुमोदन गर्नुपर्छ । जस्तो भनिएको छ :

म तारणी (बुद्ध) हरूको बोधिको अनुमोदन गर्छु र
बुद्धपुत्रहरूका भूमिहरूको अनुमोदन गर्छु ।[३०]

पुण्यानुमोदन बारे वर्णन यहीँ समाप्त हुन्छ ।

(१.४) अध्येषणा : धर्मचक्र प्रवर्त्तन गर्नाका लागि अध्येषणा गर्नु भन्नाले के बुझिन्छ भने दश दिशाहरूमा अझ पनि धेरै बुद्धहरू छन् जसले











धर्म रत्नप्रति आदर भाव जगाउन र अध्येषकलाई पुण्य संभार गराउनको लागि धर्मोपदेश गरिरहेका छैनन् । उनै बुद्धहरूतर्फ लक्षित गरी हामीले उहाँहरूलाई धर्मचक्र प्रवर्त्तनका लागि अध्येषणा गर्नुपर्छ । जस्तो भनिएको छ :

हे दश दिशाका बुद्धहरू !
म हात जोडी प्रार्थना गर्दछु,
कृपया धर्मको ज्योति बालिदिनुहोस्
जसले गर्दा सत्त्वहरूका दु:खरूपी
अन्धकारलाई नाश पार्न सकियोस् ।[३१]

(१.५) याचना : परिनिर्वाण नलिनका लागि याचना गर्नु भन्नाले के बुझिन्छ भने अझ पनि दश दिशाहरूमा धेरै बुद्धहरू छन् जो नित्यता (शाश्वतता) माथि विश्वास गर्नेहरूको दृष्टि मिथ्या सावित गर्न वा अल्छीहरूमा वीर्यको भावना जगाउनको लागि निर्वाण लिन तयार भइ बसिराखेका छन् । उनै बुद्धहरूतर्फ लक्षित गरी हामीले उहाँहरूलाई निर्वाण नलिनका लागि याचना गर्नुपर्छ । जस्तो भनिएको छ :

हे निर्वाणोन्मुख बुद्धहरू !
म हात जोडी प्रार्थना गर्दछु,
कृपया अनगिन्ती कल्पहरूसम्म
जीवित रहनुहोस्, ताकी यो जगत्
अन्धकारमा डुब्न नपरोस् ।[३२]

(१.६) कुशलमूलहरूको परिणामना : अहिलेसम्म मैले संग्रह गरेका सबै कुशलमूलहरू सत्त्वहरूमा अर्पण गर्छु र ती कुशलमूलहरूले सबै सत्त्वहरूका दु:ख हटेर जाउन्, र उनीहरूले सुख र सुखै सुख प्राप्त गरुन् । यहाँ यस्तो भनिएको छ :











मैले जति पनि कुशलमूलहरू संग्रह गरेँ
ती सबैले सबै सत्त्वहरूको दुःख हटाउन् ।[३३]

यसैलाई पुण्यको परिणामना भनिन्छ । कुशलमूलको परिणामना बारे विवरण यहीँ समाप्त हुन्छ ।

(२) **मौल** : मौल विधि *शिक्षासमुच्चय* मा बताइए बमोजिम सङ्कल्प वचनलाई बारंबार दोहऱ्याउनु हो । *शिक्षा समुच्चय* का अनुसार बोधिसत्त्व आर्य मञ्जुश्री अम्ब नाम गरेका राजा भएका बेला मेघनादघोष बुद्धकहाँ गएर उहाँबाट बोधिचित्तोत्पादका साथसाथै बोधिसत्त्व संवरका शिक्षाहरू प्राप्त गर्नुभएको थियो । त्यसरी नै हामीले पनि ती दुबै उपदेशहरू प्राप्त गर्नुपर्छ । जस्तो भनिएको छ :

जबसम्म आदि र अन्त नभएको
यस संसार रहन्छ
तबसम्म म सबै सत्त्वहरूको
हितमै समर्पित भई बाँचिरहनेछु ।
म शास्ताका सामु बोधिचित्तोत्पाद गर्छु ।[३४]

उपर्युक्त वा यस्तै वचनहरू हामीले तीनपल्ट भन्नुपर्छ । अथवा बोधि-चर्यावतार का निम्नलिखित श्लोक पाठ गरेर पनि हामीले बोधिचित्तको शिक्षा लिन सक्छौँ ।

जसरी विगतका सुगतहरूले बोधिचित्त उत्पाद गरेर
बोधिसत्त्व शिक्षामा क्रमशः स्थित हुँदै गएका थिए
त्यसरी नै मैले पनि सत्त्वहरूको हितका लागि
बोधिचित्त उत्पाद गरेर बोधिसत्त्व
शिक्षामा क्रमशः रहँदैजानेछु ।[३५]











यो पनि तीन चोटि भन्नुपर्छ ।

यदि तिमी बोधिचित्तोत्पाद बेग्लैकिसिमले गर्न चाहन्छौ र बोधिसत्त्वसंवर पनि बेग्लै किसिमले लिन चाहन्छौ भने बोधिचितोत्पाद वा बोधिसत्त्वसंवर जुन चाहन्छौ त्यही रोजेर पाठ गर्नुपर्छ ।

मौल विधि सम्बन्धी यो विवरण यहीँ समाप्त हुन्छ ।

(३) **पृष्ठ विधि** : पृष्ठ विधि अन्तर्गत हामीसामु भएका महान लक्ष्यलाई ध्यानमा राखी हामीले ठूलो कृतज्ञता ज्ञापन गर्दै त्रिरत्नको पूजा गर्नुपर्छ र अत्यन्तै ठूलो प्रीति एवं उत्साह जगाउनुपर्छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

> बोधिचित्त उत्पाद भइसकेपछि
> बुद्धिमान व्यक्तिले त्यसको उत्तरोत्तर प्रगतिका लागि
> त्यसलाई यस प्रकार उत्साहित गर्नुपर्छ ।[३६]




शान्तिदेवका परम्परा अनुसार व्याख्या गरिएको प्रयोग, मौल र पृष्ठ विधि यहीँ समाप्त हुन्छन् ।

**ख. धर्मकीर्ति** : मैत्रेयबाट सुरु भएको असङ्गको वैपुल्य परम्पराको प्रर्वत्तक धर्मकीर्तिका विधिहरू अन्तर्गत दुइवटा शीर्षकहरू छन् । (१) बोधि प्रणिधि चित्तको उत्पाद, (२) बोधि प्रस्थान चित्तको ग्रहण ।

(१) **बोधि प्रणिधि चित्तको उत्पाद** : यसका तीन शीर्षकहरू छन् : (१.१) प्रयोग, (१.२) मौल, (१.३) पृष्ठ ।

(१.१) प्रयोग : यसका पनि तीन वर्गहरू छन् : अ) अनुरोध, आ) संभार सञ्चय, इ) विशेष शरणगमन ।

अ) अनुरोध : अनुरोध यस प्रकार गर्न सकिन्छ । बोधिचित्तोत्पाद गर्न इच्छुक व्यक्ति अपेक्षित गुणहरूले युक्त भएका कल्याणमित्रकहाँ पुग्नुपर्छ र











हात जोडी उनलाई प्रणाम गर्नुपर्छ। कल्याण मित्रले पनि आफ्नो शिष्यलाई यसरी उपदेश दिन्छन् कि शिष्यमा संसारप्रति वैराग भाव उत्पन्न भएर सबै सत्त्वहरूप्रति करूणा जागृत हुन्छ र बुद्धत्व प्राप्त गर्ने इच्छा लिएर त्रिरत्नमा ठूलो श्रद्धा राखी आफ्नो गुरुप्रति प्रवल भक्ति राख्छ। त्यसपछि गुरुले भनेका यी शब्दहरू उसले पनि दोहऱ्याउँछ : 'हे गुरु ! ममाथि कृपा राख्नुहोस् । जसरी अतीतका तथागत, अर्हत, सम्यक्सम्बुद्ध तथा महाभूमिमा स्थित बोधिसत्त्वहरूले सर्वप्रथम अनुत्तर सम्यक् सम्बोधिको चित्त उत्पन्न गर्नुभयो, त्यसरी नै मैले (यो यो नाम गरेको) पनि त्यो चित्त उत्पन्न गर्न पाऊँ। कृपया त्यसको लागि मलाई मद्दत गर्नुहोस् ।' यसरी उसले तीनचोटि भन्नुपर्छ।

आ) संभार सञ्चय : त्यसपछि हाम्रो गच्छे अनुसार हामी आचार्यलाई आफू सामु भएका साधनहरूले पनि पूजा गर्न सक्छौँ नभए मन मनै पनि पूजा गर्न सक्छौँ। हामीले श्रामणेरका संवरहरू उपाध्याय वा आचार्यबाट प्राप्त गर्न सक्छौँ जबकी भिक्षु संवर हामीलाई संघबाट प्राप्त हुन्छ। दुइटै प्रकारको बोधिचित्त पुण्यसंभारको सञ्चयबाट प्राप्त हुन्छ। हामी सम्पन्न छौँ वा हामीसँग धेरै धन सम्पत्ति छ भने अलिकति मात्र पूजाभेटी चढाएर पुग्दैन, आफ्नो सामर्थ्य अनुसार यथासम्भव धेरै चढाउनुपर्छ। पहिलेका बोधिसत्त्वहरू जो निकै धनी थिए एक करोड विहारहरू दान दिएर बोधि-चित्तोत्पाद गरेर गए। यो कुरा *भद्रकल्पिक सूत्र* मा बताइएको छ :

> जब सुगत यशोद जम्बुद्वीपका राजा थिए
> उनले चन्द्रकेतु तथागतलाई एक करोड विहारहरू
> दान गरेर प्रथम पटक बोधिचित्त उत्पाद गरे।

हामी त्यति धनी छैनौँ (वा मध्यम वर्गीय छौँ) भने आफ्नो गच्छे अनुसार पूजाभेटी चढाउनुपर्छ। त्यति सम्पन्न नभए पनि पहिलेका बोधिसत्त्वहरूले केही न केही दान दिएर गए। दियो बाल्नलाई एउटा घाँस चढाएर पनि उनीहरूले बोधिचित्तोत्पाद गरेर गए। यो कुरा ग्रन्थमा पनि बताइएको छ :











> नगरमा रहँदाखेरी सुगत अर्चिष्मानले तथागत अनन्तप्रभलाई घाँसको दीप चढाएर पहिलो पटक बोचिधित्त उत्पाद गरे ।[३७]

विपन्नै भएपनि हामीले पूजाभेटी चढाउनै नसक्ने चाँही होइन । श्रद्धापूर्वक तीन पल्ट हात जोडेर बोधिचित्त गरेपनि पुग्छ । पहिलेका बोधिसत्त्वहरूसित एक पैसा थिएन । तैपनि उनीहरूले तीनपटक सश्रद्धा हात जोडेर बोधि-चित्तोत्पाद गरे । जस्तो ग्रन्थमा पनि भनिएको छ :

> सुगत गुणमालले तथागत ललितपतिलाई तीन पटक हात जोडेर प्रणाम गरी पहिलो पल्ट बोधिचित्त उत्पाद गरे ।

(इ) विशेष शरणगमन : विशेष शरणगमन पनि अगाडिको परिच्छेद ८ मा वर्णन गरेबमोजिम नै हो ।

(१.२) मौल : - मौलविधि अन्तर्गत गुरुले शिष्यलाई यसरी शिक्षा दिन्छन् : जवसम्म आकाश रहन्छ, सत्त्वहरू रहन्छन्, जवसम्म सत्त्वहरू रहन्छन्, तवसम्म क्लेशहरू हुन्छन्, जबसम्म क्लेशहरू रहन्छन्, दुष्कर्महरू गरिनै रहने हुन्छन्, जबसम्म दुष्कर्महरू भइरहन्छन् तवसम्म दुःखै दुःख मात्र हुनेछ ; सबै दुःख भोगिरहेका सत्त्वहरू हाम्रा आमाबाबु हुन्, आमाबाबु भएका कारणले तिनीहरूको हामीप्रति धेरै नै कृपा रहिआएको छ, र अब उनीहरू नै संसारको महासागरमा डुबी असीम दुःख भोगिराखेका छन्, उनीहरूलाई बचाइदिने कुनै रक्षक छैन, अत्यन्तै दुःखी छन् र आफ्ना क्लेशहरूका कारण अझ डरलाग्दा फलहरू भोग्नुपर्नेछन् । त्यसैले उनीहरूलाई बेलैमा ती दुःखहरूबाट उद्धार गरिनुपर्छ र सुखी तुल्याउनु पर्छ । यस्तो सोचेर गहिरो करूणा उत्पन्न गर्न र त्यो करूणालाई हाम्रो हृदयमा दऱ्हो किसिमले अंङ्कित गर्न गुरुले हामीलाई उपदेश दिन्छन् । त्यसैले हामीले यस्तो सोच्नुपर्छ : उनीहरूको हितको लागि कार्य गर्ने क्षमता ममा छैन, त्यसैले आफैलाई क्षमतावान् बनाउन म कुनै पनि दोष नभएको गुणै गुण भएको र सबै सत्त्वहरूको लागि कार्य गर्न सक्षम पार्ने बोधि प्राप्त गर्छु ।











त्यसपछि शिष्यले गुरुको पछि पछि तीनपल्ट यो कुरा दोहऱ्याउनु पर्छ : 'ममाथि दश दिशाका बुद्धहरूले कृपा राखुन् । म फलाना नाम गरेका व्यक्तिले यो तथा अन्य जन्महरूमा गरेका दानद्वारा, शीलद्वारा र भावनाद्वारा जति पनि कुशल कर्म गरेँ, वा गर्न लगाएँ, वा तिनको अनुमोदन गरेँ, त्यसको पुण्यले जसरी तथागत अर्हत सम्यक्सम्बुद्ध भगवान्, र महाभूमिस्थ बोधिसत्त्वहरूले पहिलो पटक अनुत्तर सम्यक् सम्बोधिको चित्त उत्पाद गरे मैले पनि सम्यक् सम्बोधिको चित्त उत्पाद गर्छु जसले गर्दा अतीर्ण (अहिलेसम्म तर्न नसकेका) सत्त्वहरूले तर्न सकून्, अमुक्त (अहिलेसम्म मुक्ति पाइनसकेका) सत्त्वहरू मुक्त होउन् र अनाश्वस्त सत्त्वहरू आश्वस्त होउन् र निर्वाण पाइनसकेका सत्त्वहरूले निर्वाण प्राप्त गरुन् ।' तीन चोटि उच्चारण गरेर त्यसै बमोजिम कार्य गर्नुपर्छ ।

यस संकल्पमा प्रयोग भएका अतीर्ण सत्त्व (तर्न नसकेका सत्त्वहरू) भनेका नरक, प्रेत र तिर्यक योनिका सत्त्वहरू हुन् । तिनीहरूले महासमुद्ररूपी दुर्गतिका दु:खलाई अझसम्म पनि तर्न सकेका छैनन् ।

'तर्न सकून्' भन्नाले उनीहरूले दुर्गति तरेर देव तथा मनुष्यहरूका सुगति पाउन् भन्ने हो ।

'अमुक्त सत्त्व' भनेका देव र मनुष्यहरू हुन् जो अझै क्लेशको बन्धनले जकडिएका छन् ।

'मुक्त होउन्' भन्नाले ती सत्त्वहरूले निश्रेयश मार्ग प्राप्त गरुन् वा क्लेशको बन्धनबाट मुक्त भएर निर्वाण प्राप्त गरुन भन्ने हो ।

'अनाश्वस्त सत्त्वहरू' भनेर श्रावक र प्रत्येकबुद्धहरूलाई भनिएका हुन् किनभने उनीहरूले महायानमा आश्रय लिइरहेका छैनन् ।

'आश्वस्त होउन्' भन्नाले उनीहरूले बोधिचित्तोत्पाद गरेर महायानको दर्शन र चर्याको श्वास फेरेर दश भूमि प्राप्त गरुन् भन्ने हो ।

'निर्वाण पाइनसकेका' भनेर ती बोधिसत्त्वहरूलाई भनेका हुन् जसले अझ सम्म पनि अप्रतिष्ठित निर्वाण प्राप्त गरेका छैनन् ।

'निर्वाण पाउन्' भन्नाले भूमिहरूमा क्रमश: उभो बढ्दै अन्ततोगत्वा अप्रतिष्ठित निर्वाण अर्थात बुद्धत्व प्राप्त गरुन् भन्ने हो ।











'जसले गर्दा' भन्ने बाक्यांशले बुद्ध भएर आफ्नो कार्य पूर्ण गर्ने लक्ष्यलाई जनाएको छ ।

(१.३) पृष्ठः पृष्ठमा हामीसामु रहेको महान लक्ष्यलाई ध्यानमा राखी ठूलो हर्ष र उत्साहको भावना जागृत गराइन्छ । यसलाई बोधिसत्त्व शिक्षा भनिन्छ । यस्तो चित्त उत्पाद गर्नेलाई नै बोधिसत्त्व भनिन्छ ; सबै सत्त्वहरूको हितको लागि बोधिज्ञान प्राप्त गर्ने चित्त त्यहीँ हो । बोधिप्राप्त भएपनि सबै सत्त्वहरूको उद्धार गर्नु हो । यसमा बोधि र सत्त्वहरूलाई आलम्वनको रूपमा प्रयोग गरेर सबै सत्त्वहरूका हितका लागि करूणापूर्वक महा उत्साह जागृत गरिन्छ ।

बोधिप्रणिधि-चित्त सम्बन्धी विवरण यहीँ समाप्त हुन्छ ।

(२) **बोधि प्रस्थान चित्तको ग्रहण** : यसका पनि तीन शीर्षकहरू छन् । (२.१) प्रयोग, (२.२) मौल, (२.३) पृष्ठ ।

(२.१) प्रयोग : - यसका दश भेदहरू (वर्गहरू) छन् : 1. अनुरोध, 2. कठिनाइहरूबारे प्रश्न, 3. लघु एवं गुरू आपत्तिहरूको वर्णन, 4. संवर तोडिँदाको दोष, 5. संवर ग्रहण गर्नुको उपयोगिता (अनुशंसा), 6. संभार सञ्चय, 7. संवर लिँदाखेरी आउनसक्ने कठिनाई वा वाधाहरूबारे प्रश्न, 8. प्रोत्साहन, 9. अध्याशय चित्त, 10. संक्षेपमा बोधिसत्त्व शिक्षाको वर्णन ।

(२.२) मौल (चर्या) : मौल विधि यस प्रकार छ : शिष्यले संवर ग्रहण गर्ने इच्छा प्रकट गरिसकेपछि गुरुले उसलाई तीन पटक प्रश्न गर्छन् : 'हे फलाना नाम गरेका कुलपुत्र ! के तिमी म फलाना नाम गरेको बोधिसत्त्व, दश दिशाका लोकधातुहरूमा रहेका अतीत र वर्तमान कालका समस्त बोधिसत्त्वहरूका शिक्षा र शील ग्रहण गर्न चाहन्छौ ? जुन शिक्षा र शील कुशलमूल स्थापित गर्नका लागि एवं समस्त सत्त्वहरूको हितका लागि अतीतका सबै बोधिसत्त्वहरूले ग्रहण गरे, भविष्यका बोधिसत्त्वहरूले ग्रहण गर्नेछन् र वर्तमान बोधिसत्वहरूले पनि गर्छन् । तीन पटक शिष्यले यो बाक्य बोलेर आफ्नो स्वीकृति जनाउनुपर्छ ।











(२.३) पृष्ठ : पृष्ठका छ भेदहरू छन् : 1. ज्ञान पाउनका लागि निवेदन गर्ने, 2. तात्विक ज्ञान प्राप्त गर्नाका अनुशंसाहरू, 3. संवरहरूलाई जथाभावी प्रकाश नगर्ने (अरूहरूलाई नभन्ने), 4. संक्षेपमा बोधिसत्त्वका शिक्षाहरूको बारेमा अवगत गराउनु, 5. कृतज्ञता ज्ञापन गर्ने पूजा र 6. पुण्यको परिणामना ।

प्रस्थान बोधिचित्त ग्रहण सम्बन्धी विवरण यहीँ समाप्त हुन्छ ।

यो धर्मकिर्तीको परम्परा अनुसार व्याख्या गरिएको बोधिचित्त प्रस्थान चित्त ग्रहण गर्ने विधि हो ।

**VIII. अनुशंसा (फाइदाहरू)** : बोधिचित्तोत्पादका दुई अनुशंसाहरू छन् । १. गन्न सकिने (गणनीय) अनुशंसा, र २. गन्न नसकिने (अगणनीय) अनुशंसा

**१. गणनीय अनुशंसा** : यसका पनि दुई भेदहरू छन् : १.१) प्रणिधि बोधिचित्तोत्पादको अनुशंसा र १.२) प्रस्थान बोधिचित्तोत्पादको अनुशंसा

**१.१) प्रणिधि बोधिचित्तोत्पादको अनुशंसा** : यसका आठ अनुशंसाहरू छन् : 1. महायानमा प्रवेश हुन पाउनु, 2. बोधिसत्त्वका सबै शिक्षाहरूको आश्रय बन्नु, 3. सबै पापहरूको विनाश, 4. सम्यक् सम्बोधिको मूल स्थापित हुनु, 5. असीम पुण्य प्राप्त हुनु, 6. सबै बुद्धहरू हामीहरूसँग अत्यन्तै प्रसन्न हुने, 7. हामी सबै सत्त्वहरूका लागि उपयोगी हुने, र 8. हामीलाई शीघ्र नै सम्यक् सम्बोधि लाभ हुने । अब म यी अनुशंसाहरूलाई अझ विस्तृतरूपले व्याख्या गर्नेछु :

1. महायानमा प्रवेश हुन पाउनु : बोधिचित्त उत्पाद नगरेसम्म कुनै मानिस जतिसुकै उत्कृष्टरूपले चर्या सम्पन्न भएपनि महायानमा प्रवेश गरेको हुँदैन । महायानमा प्रवेशै नगरी बोधि प्राप्त हुने त कुरै आउँदैन । तर बोधिचित्तोत्पाद गर्नासाथ उसले महायानमा प्रवेश गरेको हुन्छ । यसलाई *बोधिसत्त्वभूमि* मा पनि भनिएको छ :











> बोधिचित्त उत्पाद गरेको लगत्तै बोधिसत्त्व अनुत्तरबोधि-महायानमा प्रवेश पाउँछन् ।[३८]

2. बोधिसत्त्वका सबै शिक्षाहरूको आश्रय बन्नु : प्रणिधि बोधिचित्तबाट आरम्भ हुने बुद्धत्व प्राप्त गर्ने इच्छा नै नभएको मानिसले बोधिसत्त्व शिक्षाका तीन शीलहरू कदापि अभ्यास गर्न सक्दैन । बुद्धत्व प्राप्त गर्ने कामना भएमात्र तीन शीलहरू उत्पन्न हुन्छन् । त्यही नै बोधिसत्त्व शिक्षा-का आश्रय बन्छन् । यही कुरालाई *बोधिसत्त्वभूमि* मा पनि लेखिएको छ :

> बोधिचितोत्पाद बोधिसत्त्वका शिक्षाहरूको आश्रय हो ।[३९]

3. सबै पापहरूको विनाश : पापको प्रतिपक्ष पुण्य वा कुशलमूल हो । पुण्यमा पनि सर्वश्रेष्ठ पुण्य बोधिचित्त हो । त्यो नै सुनिश्चित प्रतिपक्ष हो जसले सबै विपक्ष (पाप) हरूलाई नाश गरिदिन्छ । जस्तो भनिएको छ :

> प्रलयको अग्नि झैं यो प्रतिपक्षले अति भयङ्कर पाप पनि क्षणभर मै जलाइदिन्छ ।[४०]

4. सम्यक् सम्बोधिको मूल स्थापित हुनु : जमीनरूपी सत्त्वहरूको चित्तसन्तानमा मैत्री र करूणाको जलले सिँचेर यस बीऊरूपी बोधिचित्तलाई रोपिन्छ, सैँतीस बोधिपाक्षिक धर्मका हाँगाहरू पलाएर आउछन् तिनबाट सम्यक् सम्बोधिरूपी फल पाकेपछि त्यसले सत्त्वहरूको हित र सुख हुन्छ । *बोधिसत्त्वभूमि* मा भनिए जस्तै :

> अतः चित्तोत्पाद अनुत्तर सम्यक् सम्बोधिको मूल (आधार) हो ।[४१]

5. असीम पुण्य प्राप्त हुनु : यस सम्बन्धमा *वीरदत्तपरिपृच्छासूत्र* मा यस्तो उल्लेख गरिएको छ :











बोधिचित्तबाट जुन पुण्य प्राप्त हुन्छ
यदि त्यसको कुनै रूप भए त्यसले
सम्पूर्ण आकाशलाई नै भरिदिने थियो होला,
अझ त्यो भन्दा पनि अधिक हुने थियो होला ।[४२]

6. सबै बुद्धहरू हामीहरूसँग अत्यन्तै प्रसन्न हुनु : यस सम्बन्धमा *वीर-दत्तपरिपृच्छासूत्र* मै यस्तो उल्लेख गरिएको छ :

गङ्गा नदीमा बालुवाका जति कणहरू छन्,
त्यत्ति नै संख्याका बुद्धक्षेत्रहरूलाई यदि कसैले
रत्नै रत्नले भरेर त्यहाँका सबै बुद्धहरूलाई भेटस्वरूप चढाउँदा
उसलाई जति पुण्य प्राप्त हुँदाहुन्
ती भन्दा पनि कैयौँ गुणा अधिक पुण्य
उसले दुवै हात जोडी प्रणाम गरेर बोधिचित्तोत्पाद गर्दा पाउँछ ।
यो सबैभन्दा विशेष किसिमको पूजा हो,
जसको कुनै पनि अन्त हुँदैन ।[४३]

7. हामी सबै सत्त्वहरूका लागि उपयोगी हुनु : यस सम्बन्धमा *गण्डव्यूहसूत्र* मा यस प्रकार बताइएको छ :

बोधिचित्तोत्पाद आश्रय (आधार) समान हो किनभने यो सबै प्राणीहरूका लागि हितकर छ ।

8. हामीलाई शीघ्र नै सम्यक् सम्बोधि लाभ हुनु : यस सम्बन्धमा *बोधिसत्त्वभूमि* मा यसरी भनिएको छ :

जब यो चित्तको उत्पन्न हुन्छ, त्यस सत्त्वले दुईमध्ये कुनै पनि अन्तमा टाँसिदैन, बरु उसले सम्यक् सम्बोधि नै हासिल गर्छ ।











१.२) **प्रस्थान बोधिचित्तोत्पादका अनुशंसा** : प्रस्थान बोधिचित्त उत्पन्न गर्नाका दश फाइदा (अनुशंसा) हरू छन् । यिनमध्ये आठ त प्रणिधि बोधिचित्त उत्पन्न गर्नाका फाइदाहरू नै हुन् जसको वर्णन माथि नै गरिसकिएको छ, बाँकी दुई फाइदाहरू हुन् : 9. अविच्छिन्नरूपले हाम्रो आफ्नो हित भइरहने, 10. नाना प्रकारले अरुलाई हित हुने ।

9. अविच्छिन्नरूपले हाम्रो आफ्नो हित भइरहनेः हामीलाई यसरी निरन्तररूपले हित भइरहन्छ : कुनै व्यक्तिमा प्रस्थान चित्त उत्पन्न भइसके-पछि परिवर्तनहरू आउन थाल्छन् । ऊ पहिलेको जस्तो रहन्न । ऊ चाहे निदाइरहेको होस्, बेहोश भइरहेको होस्, वा जतिसुकै अप्रमादी होस्, वा जस्तोसुकै अवस्थामा पनि उसको पुण्यधारा सदा अविरल अविच्छिन्नरूपले प्रवाहित भइ नै रहन्छ । जस्तो *बोधिचर्यावतार* मा बताइएको छ :

जबदेखि बोधिप्रस्थान चित्तलाई ग्रहण गरिन्छ
तबदेखि सुत्ने, खाने, बस्ने जस्ता खालका सामान्य
दैनिक क्रियाकलापहरू गरिरहँदा पनि,
ध्यानमा नरहेकै अवस्थामा पनि
आकाश झैँ अथाह पुण्यधारा
अविच्छिन्नरूपले प्रवाहित भइ रहेकै हुन्छ ।[४४]

10. नाना प्रकारले अरुलाई हित हुने : यसको अर्थ के हो भने समस्त सत्त्वहरूको दुःख हटेर जानेछ । उनीहरू सुखी हुन्छन् र उनीहरूका क्लेश-हरू नष्ट हुन्छन् । *बोधिचर्यावतार* मा भनिएको छ :

अनेक थरीका दुःखहरूले पीडित भइराखेका सुख चाहने
प्राणीहरूका सबै प्रकारका दुःख र पीडाहरू जसले शान्त गराँउदछ,
अनि सबै किसिमका सुखहरूले पनि सन्तुष्ट पार्छ,
र तिनीहरूको मोह पनि हटाइदिन्छ,
त्यस्तो बोधिसत्त्व समान सज्जन कहाँ पाइन्छ ?











उनी समान उत्तम मित्र अन्त कहाँ पाइन्छ ?
त्यसबाट मिल्ने पुण्यसमानको
पुण्य अरू केबाट मिल्छ ?[४५]

२. **बोधिचित्तोत्पादका अगणनीय अनुशंसा** : दोश्रो “अगणनीय अनुशंसा” भन्नाले हामी के बुझ्छौं भन्दा यस बोधिचित्तोत्पादको समयदेखि लिएर बोधि प्राप्ति नभएसम्म जति पुण्य हामीलाई प्राप्त हुन्छ, तिनलाई गनेर साध्य हुँदैन, अर्थात् अगणनीय छन् ।

**IX. परिहाणि** : बोधिचित्तलाई त्याग गरेमा हुने दोष (वेफाइदा) हरू : बोधिचित्तलाई त्यागेमा हुने दोष (वेफाइदा) हरू तीनवटा छन् : दुर्गतिमा पतन हुने, परार्थ क्रियाको परिहाणि र भूमि प्राप्त हुनमा समय लाग्ने

दुर्गतिमा पतन : पहिलो दोष, दुर्गतिमा पतनलाई हामीले यसरी बुझ्न सक्छौं : प्रतिज्ञा गरेर त्यसको पालना नगर्ने वा त्यसलाई तोड्ने व्यक्तिले बोधिचित्तलाई आफैबाट अलग्याइरहेको हुन्छ र प्राणीहरूलाई धोखा दिइ-राखेको हुन्छ । जसको फलस्वरूप उसको जन्म दुर्गतिमा हुन्छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

मैले प्रतिज्ञा गरिसकेको छु
अब त्यसलाई कर्मद्वारा पूरा गरेर देखाइन भने
मैले सबै प्राणीहरूलाई ठगिरहेको हुनेछु
अनि त्यो बेला मेरो गति के होला ?[४६]

दोश्रो, अर्थात परार्थ क्रियाको त्याग : यस्ता दोषहरू भएमा हामीले अरूको हित गर्न सक्दैनौं । तसर्थ, भनिएको छ :

किनकी जब त्यस्ता आपत्ति वा दोष हुन्छन्
प्राणीहरूलाई हित गर्ने कार्य हुन सक्दैन ।[४७]











तेश्रो, वा भूमि प्राप्तिमा समय लाग्ने : यसको बारे यस्तो भनिएको छ :

> बोधिचित्तको बल र आपत्ति दोष बल दुवै हुँदा
> प्राणीहरू यहीँ संसारमा रुमल्लिरहन्छन्
> र बोधिसत्त्व भूमि प्राप्त गर्नमा
> तिनीहरूले धेरै समय लगाउँदछन् ।[४८]

**बोधिचित्तको त्यागका कारण** : दुई कारणले बोधिचित्तको त्याग भएको मानिन्छ :

१. प्रणिधि बोधिचित्तको त्याग
२. प्रस्थान बोधिचित्तको त्याग

तीमध्ये पहिलो अर्थात प्रणिधि बोधिचित्तको त्याग भनेको प्राणीहरूलाई त्याग्नु, चार अकुशल (काला) धर्महरूमा संलग्न हुनु र विपरित चित्त उत्पन्न गर्नु हो जसबाट प्रणिधि बोधिचित्त त्यागिन्छ ।

प्रस्थान बोधिचित्तको त्याग : यस सम्बन्धमा *बोधिसत्त्वभूमि* मा यसरी व्याख्या गरिएको छ :

> धेरै क्लेशहरूको वशमा परी चार पाराजयिक दुष्कर्म (चार पाराजयिक स्थानीय पर्यवस्थान) हरू गरेका खण्डमा बोधि-चित्तको परिहाणि वा त्याग भएको भनिन्छ । जबकि मध्यम र मृदु (धेरै साना) दुष्कर्मले केवल कलंकित मात्र भएको ठहरिन्छ ।

त्यस्तै, *संवरविंशक* मा यसरी बताइएको छ :

> माथि भनिएका दुष्कर्म बाहेक, प्रणिधि बोधिचित्तबाट विमुख भएपछि प्रस्थान बोधिचित्तको परिहानि (त्याग) हुन्छ ।











*विनिश्चयसंग्रह* मा भनिएझैं,

> बोधिचित्तको त्याग वा परिहाणि हुनलाई चारवटा कारणहरू हुन जरुरी छ । पहिलो दुइटाले 'शिक्षालाई त्याग्ने' कुरालाई जनाउँछ भने बाँकी दुइटाले मिथ्या दृष्टि उत्पन्न गर्नुलाई जनाउँछ ।

शान्तिदेवले भन्नुभएको छ :

> बोधिविरोधी चित्त वा विपरीत चित्त उत्पन्न गर्नाले पनि संवर को परिहाणि वा त्याग हुन्छ ।

**X. प्रत्यापत्ति** : प्रणिधि बोधिचित्त गुम्न गएपनि त्यसलाई फेरी ग्रहण गरेर पुर्नबहाली गर्न सकिन्छ । तर यदि प्रणिधि बोधिचित्त गुमेको कारणले प्रस्थान बोधिचित्त त्यागिन्छ भने प्रणिधि बोधिचित्तलाई पुर्नबहाली वा पुर्नग्रहण गर्नासाथ प्रस्थान बोधिचित्तको पनि स्वतः पुर्नबहाली हुन्छ । त्यसो नभएर अर्कै कारणले त्यागिन्छ भने त्यस्तो चित्तलाई फेरी ग्रहण गर्नुपर्छ । यदि चार मृदु र मध्यम स्थानीय पर्यवसान (चार पाराजयिक दुष्कर्महरू) हुन गएका छन् भने ती दुष्कर्महरूको देशना गर्नु नै पर्याप्त हुन्छ । जस्तो *संवरविंशक* मा भनिएको छ :

> संवर त्यागिएमा त्यसलाई पुनः ग्रहण गर्नुपर्छ । मध्यम दोष भएमा, ३ जना बोधिसत्त्वहरूका अगाडि पापदेशना गर्नुपर्छ । मृदु दोष भएमा, १ जना बोधिसत्त्वको अगाडि पापदेशना गरेपुग्छ । मैले जस्तै चित्तलाई कलुषित हुन नदिइ सधैं शुद्ध राख्नू ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
बोधिचित्त परिग्रह नामक नवम् परिच्छेद समाप्त ।









# परिच्छेद १०
# बोधिचित्तको अभ्यास

**XI. शिक्षा वा अभ्यास** : बोधिचित्तोत्पाद गरिसकेपछि दुई प्रकारको शिक्षा वा अभ्यास सुरु हुन्छ जुन यस प्रकार छन् :

क. प्रणिधि बोधिचित्तको अभ्यास
ख. प्रस्थान बोधिचित्त को अभ्यास

**क. प्रणिधि बोधिचित्तको अभ्यास** : बोधि प्रणिधि चित्तलाई बुझ्न निम्न साराँश सहायकसिद्ध हुनेछ ।




निम्न पाँच कार्यहरूले बोधिप्रणिधि चित्तको
अभ्यासलाई पूर्णता दिन्छन् :
कुनैपनि सत्त्वलाई परित्याग नगर्नु,
यस बोधिचित्तका अनुशंसालाई स्मरण गरिराख्नु,
दुई सम्भारहरूको सञ्चय गर्नु,
बारम्वार यस चित्तको अभ्यास गर्नु,
चार कृष्ण धर्महरूलाई परित्याग गर्नु र
चार शुक्ल धर्महरूलाई ग्रहण गर्नु ।

यिनमध्ये पहिलो प्रणिधि बोधिचित्तलाई नत्याग्ने (अपरिहानि) उपाय हो । दोस्रो त्यो उपाय हो जसले गर्दा त्यो बोधिचित्त क्षीण हुँदैन ; तेस्रो त्यसलाई मजबुत पार्ने उपाय हो भने चौथो त्यस बोधिचित्तलाई अझ गहिरो पार्ने र अझ वृद्धि गर्ने उपाय हो र पाँचौ कार्य त्यो उपाय हो जसले गर्दा त्यसलाई (बोधिचित्तलाई) बिर्सन सकिँदैन ।











१. **कुनैपनि सत्त्वलाई परित्याग नगर्नु** : बोधिचित्तलाई हानि नगर्ने (अपरिहानि) उपाय वा सत्त्वहरूलाई परित्याग नगर्ने उपायको उल्लेख *अनवतप्तनागराजपरिपृच्छा सूत्र* मा यसरी गरिएको छ :

यदि कुनै बोधिसत्त्वले एउटा धर्म पाएको खण्डमा उनी सर्वाकार
धर्मले युक्त बुद्धका समस्त धर्महरूलाई ग्रहण गर्न सक्षम हुन्छन् ।
त्यो के हो ? त्यो हो सत्त्वहरूलाई परित्याग नगर्ने भावना ।

सत्त्वलाई परित्याग गर्नु भन्नाले आफूलाई हानि गर्ने ब्यक्तिको बारेमा सोंच्दै नसोंच्नु र मौका मिलेमा आफ्नो रिस मरिसकेपछि पनि उसलाई हित वा अपकार केही नगर्ने संकल्प गर्नु हो । समस्त सत्त्वहरूलाई परि-त्याग अथवा एक सत्त्वलाई मात्र परित्याग गर्नेलाई हामी उक्त परित्याग भन्न सक्छौं ? यसको जवाफ हो श्रावक र प्रत्येक बुद्धहरूलाई छोडेर चील र गिद्धहरूले समेत त्यसो गर्न सक्दैनन् । तसर्थ एउटा मात्र सत्त्वलाई परित्याग गर्नाले पनि यदि एक प्रहरमै प्रतिपक्षको प्रयोगले त्यसलाई परिशुद्ध नगरिएमा बोधिचित्तको परिहानि हुन सक्छ । सत्त्वहरूलाई त्यागेर अरू नै शिक्षा अपनाउने पनि र आफैलाई बोधिसत्त्व भन्दै पनि हिड्ने यो सर्वथा तर्क असम्मत कुरो हो । यो त आफ्नो एक्लो सन्तानलाई मारेर उसका सामानहरूको रक्षा गर्नु सरह हो । तसर्थ सत्त्वहरू हामीलाई उप-योगी भएका हुँदा उनीहरूलाई परित्याग गरेर हामीले कसरी बोधिचित्तको परिहानि हुन दिन सक्छौं ? यस्तो चित्तको परिहानि अरूलाई अपकार वा दु:ख दिएर हुने हुँदा, हामी सबैले अझ धेरै करुणा जागृत गरेर सत्त्वहरूको हित सुख हुने कार्य गर्नुपर्छ । यही नै वास्तवमा आर्यजनहरूको धर्मचर्या हो । जस्तो भनिएको छ :

उपकारको बदलामा हानि (अपकार) गरिएता पनि
जसले त्यस अपकारको बदला महाकरुणाले
प्रेरित भई उपकारले चुकाउँछ











ऊ नै यस जम्बुद्वीपको
उत्तम पुरुष कहलिने छ ।

२. **बोधिचित्तका अनुशंसालाई स्मरण गरिराख्नु** : बोधिचित्तलाई क्षीण हुनबाट कसरी बँचाउने भन्ने कुरा वा बोधिचित्तको अनुशंसालाई *बोधि-पथप्रदिप* मा यसरी बताइएको छ :

बोधि प्रणिधि चित्तको उत्पादमा
जे जे गुणहरू छन् तिनलाई
मैत्रेयद्वारा गण्डव्यूह सूत्रमा प्रकाशित गरिएको छ ।[1]

त्यस सूत्रमा बोधिचित्तोत्पादका दुई सय तीस अनुशंसाहरू बताइएका छन् : तर यहाँ चारवटा प्रमुख अनुशंसामा ती सबैलाई समेटिएको छ ।

शब्दहरू (वाक्यहरू) जस्तो, 'हे कुलपुत्र ! बोधिचित्त सबै बुद्धधर्महरूको बीज समान हो' र यसले सबै दरीद्रता निवारण गरिदिने हुनाले यो वैश्रवण (कुवेर) समान छ' इत्यादि इत्यादि, अरू यस्तै अनुशंसाहरू आफ्नो लागि प्रयुक्त छन् ।

यसले समस्त जगतलाई रक्षा गर्ने हुनाले यो एक निलय (स्थान) समान हो र 'सबै सत्त्वहरूको आश्रय भएबाट यो एक आश्रय समान हो' इत्यादि इत्यादि । यस्तै अरु अनुशंसाहरू अरुहरूका लागि प्रयुक्त छन् ।

यसले क्लेशरूपी शत्रुमाथि विजय प्राप्त गर्ने हुनाले यो भाला समान हो र 'यसले दु:खको वृक्षलाई ढाल्ने हुनाले यो बञ्चरो समान हो । र अरू यस्तै अनुशंसाहरू सबै बोधिविरोधी तत्त्वहरूलाई नाश गर्नका लागि प्रयुक्त छन् ।

सबै आशाहरू पूरा गरिदिने हुनाले यो एक भद्रकलश सरह हो र सबै इच्छाहरूलाई साकार पारिदिने हुनाले यो एक चिन्तामणि समान हो इत्यादि इत्यादि र यस्तै अरु अनुशंसाहरू सबै बोधि अनुकूल तत्त्वहरूलाई उपलब्ध गराउनका लागि प्रयुक्त छन् ।











माथि उल्लेखित समस्त अनुशंसा वा गुणहरूलाई स्मरण गर्नाले यस बोधिचित्तको महत्त्वलाई बुझिन्छ र यसलाई अत्युत्तम सम्पत्तिको रूपमा पुजिनेछ । यसरी अभ्यास गर्दा त्यो बोधिचित्त क्षय हुन सक्दैन । त्यसैले हरेक दिन कम्तीमा एक एक पटक यसलाई स्मरण गरिराख्नु पर्छ ।

३. **दुई सम्भारहरूको सञ्चय गर्नु** : वरबोधिचित्त उत्पन्न गर्ने उपाय वा दुई संभारहरूको प्राप्तिका विषयमा *बोधिपथप्रदीप* मा बताइएको छ :

> यसको मूल कारण नै पुण्य र ज्ञान संभार हो ।[२]

'पुण्य संभार' दश धर्मचर्या र चार संग्रह वस्तु हो । जबकी ज्ञान संभार-को अर्थ त्रिमण्डल विशुद्धी आदि प्रज्ञांश हो । यस प्रकार दुई संभारहरू प्राप्त गर्नाले बोधिचित्तलाई बल प्राप्त हुन्छ । दुई संभारहरू प्राप्त गरेर हरेक प्रहरमा एक चोटि मन्त्र जपेर तिनलाई मजबुत पार्नुपर्छ । *सम्भार परिकथा* मा यसरी लेखिएको छ :

> बोधिसत्त्वले सदैव यो सोँचिराख्नु पर्छ कि आज म पुण्य र ज्ञान संभारको सञ्चय गर्छु र सबै सत्त्वहरूको हित हुने काम गर्छु ।

४. **बोधिचित्ताभ्यास** : बोधिचित्तलाई वृद्धि र विस्तार गर्ने वा बोधि-चित्ताभ्यासको विषयमा *बोधिपथप्रदीप* मा यस्तो बताइएको छ ।

> बोधिप्रणिधि चित्त उत्पन्न गरिसकेपछि
> अनेक परिश्रम गरेर यसलाई बढाउनुपर्छ ।[३]

यसको अभ्यास तीन प्रकारका शुद्धिहरू गरेर गर्न सकिन्छ : बोधि-चित्तको हेतु शुद्धि, मौल बोधिचित्तको शुद्धि र चर्या बोधिचित्तको शुद्धि । यी तीन परिशुद्धिद्वारा बोधिचित्तलाई सम्बर्द्धन गरिन्छ ।











पहिलो शुद्धिको अर्थ हरेक प्रहर मैत्री र करुणाले युक्त भई सत्त्वहरूको चिन्तनमा डुबिराख्नु हो ।

यसो गर्दा मौल बोधिचित्तको परिशुद्धि हुन्छ । हरेक दिन र रात तीन तीन पल्ट सबै सत्त्वहरूका निमित्त बुद्धत्व प्राप्त गर्ने इच्छाले प्रेरित भई हरेक प्रहरमा एक एक पल्ट बोधिचित्तोत्पाद गरेर हामीले देहायबमोजिमका शब्दहरू बारम्वार भनिराख्नुपर्छ :

> मैले बोधि प्राप्त नगरेसम्म म
> बुद्ध, धर्म र आर्य संघको शरणमा जान्छु
> दान र अरु पुण्यहरू गरेको फलस्वरूप
> म लोक कल्याण हेतु बुद्ध बन्न सकूँ ।[४]

चर्या बोधिचित्तको परिशुद्धि दुई किसिमले हुन सक्छ : परहितको दृष्टिले चित्त शुद्धि र स्वहितको दृष्टिले चित्तशुद्धि । पहिलो किसिमको चित्तशुद्धि हामीले तीनै काल (भूत, वर्तमान र भविष्य) मा गरेका र गर्ने कुशलमूलहरू, हाम्रो आफ्नै शरीर, र सुख धन–सम्पतिहरू अरूहरूको सुख र हितको लागि परिणामित गर्नु हो । दोस्रो किसिमको चित्तशुद्धि सधै शीलहरूको पालना गरेर पाप र क्लेशबाट टाढा रहनु हो ।

**५. चार अकुशल (काला) धर्महरूको परित्याग र चार कुशल (शुक्ल) धर्महरूको ग्रहण** : बोधिचित्तलाई नबिर्सने उपाय वा चार काला धर्महरूलाई परित्याग गरेर चार शुक्ल धर्मलाई ग्रहण गर्ने विषयमा *बोधिपथप्रदीप* मा लेखिएको छ :

> जन्मजन्मान्तर सम्म त्यसलाई
> स्मरण गरिराख्नको निमित्त
> त्यो शिक्षा (अभ्यास) को
> परिपालना गरिनुपर्छ ।[५]











त्यो शिक्षालाई *काश्यपपरिवर्तसूत्र* मा व्याख्या गरिएको पाइन्छ :

> चार अकुशल धर्महरू के के हुन् ? हे काश्यप, यी चार अकुशल धर्मले युक्त भएमा बोधिसत्त्वले बोधिचित्तलाई नै बिर्सन्छन् । संक्षेपमा ती चार अकुशल धर्महरू हुन्, गुरु र कुनै पूज्य व्यक्तिलाई धोखा दिनु ; पश्चाताप हुनुपर्ने कारणै नभए पनि कुनै व्यक्तिको मनमा पश्चाताप उत्पन्न गराउनु ; द्वेषको वशमा परेर बोधिचित्तले युक्त कुनै बोधिसत्त्वलाई अपशब्दहरू भन्नु र सत्त्वहरूसित धूर्ततापूर्ण व्यवहार गर्नु ।

> चार शुक्ल धर्महरू के के हुन् ? हे काश्यप, बोधिसत्त्व यी चार शुक्ल धर्मले युक्त भएमा जुनसुकै जुनीमा जन्मिए पनि उनमा बोधिचित्त अभिव्यक्त भइराखेको हुन्छ र बोधिमण्डपमा अवस्थित नभएसम्म उनले त्यसलाई कदापि बिर्सने छैनन् । ती चार शुक्लधर्महरू हुन्, आफ्नै ज्यान बचाउनु पर्ने भए पनि जानि जानिकन एउटा पनि झुठो कुरा नबोल्ने ; समस्त सत्त्वहरूलाई कुशलमूलका मार्ग विशेष गरेर महायान अभिमत कुशलधर्ममा प्रतिस्थापित गर्नु । बोधिचित्तले युक्त बोधिसत्त्वलाई बुद्ध समान ठानेर उनका गुणहरूलाई दश दिशाहरूमा प्रचार प्रसार गर्नु ; सबै सत्त्वहरूलाई छलकपटरहित भावनाले स्नेह गर्नु ।

*प्रथम अकुशल (कालो) धर्मको अर्थ यस प्रकार छ* : यदि कुनै व्यक्तिले धोखा दिने उद्देश्यले गुरु, उपाध्याय, आचार्य, दाता आदि पूज्यजनहरूलाई झुठो बोलेर भ्रमित गर्छ, त्यो सुनेर उनीहरू प्रसन्न होउन् या नहोउन्, गौरवान्वित होउन् या अपमानित होउन् र त्यसको परिणाम ठूलो होस् या सानो, त्यस पापलाई घन्टाभरमा प्रतिपक्षको प्रयोगले प्रतिकार गरिएन भने बोधिचित्तको परिहाणि हुन्छ । यसको प्रतिपक्ष प्रथम शुक्ल धर्म हो अर्थात











आफ्नै ज्यान बँचाउनुपर्ने स्थितिमा पनि जानिजानि कदापि झुठो नबोल्नु हो र सधैँ सत्यतालाई कायम गरिराख्नु हो ।

*दोस्रो अकुशल धर्मको अर्थ यस प्रकार छ* : अरूले कुशल कर्म गरेकोमा उसलाई पछुतो महसुस गराउने प्रयत्न मात्र गरेमा पनि त्यस पापलाई घन्टाभरमा प्रतिपक्षको प्रयोगले प्रतिकार नगरिएमा बोधिचित्तको परि-हाणि हुन्छ । यसको प्रतिपक्ष दोस्रो प्रकारको शुक्ल धर्म हो अर्थात सबै सत्त्वहरूलाई कुशलमूल विशेष गरेर महायान अभिमत कुशल धर्महरूमा प्रतिस्थापित गर्नु हो ।

*तेस्रो अकुशल धर्म यस प्रकार छ* : द्वेषको वशमा परेर बोधिचित्तले युक्त कुनै व्यक्तिलाई अपशब्द (दुर्वचन) बोल्नु अकुशल धर्म हो । त्यो दुर्वचन उसको रूप वा आचरणका दोषको बारेमा बोलिएको होस्, गोप्य तरीकाले उसका कुनै दोषका बारेमा बोलिएको होस्, नम्रतापूर्वक वा खुल्लारूपले वा मनमनै बोलिएको होस्, कठोरतापूर्वक बोलिएको होस्, सबैले सुन्नेगरी बोलिएको होस् वा नसुन्ने गरी बोलिएको होस्, त्यो बोलेपछि उसलाई प्रशन्नता होस् या नहोस्, यदि घन्टाभरमै त्यो पापलाई प्रतिपक्षको प्रयोग-ले प्रतिकार गरिएन भने बोधिचित्तको परिहाणि हुन्छ । यसको प्रतिपक्ष तेस्रो प्रकारको शुक्ल धर्म अर्थात बोधिचित्तले युक्त बोधिसत्त्वलाई साक्षात् बुद्ध ठानेर उनका गुणहरूलाई दश दिशाहरूमा प्रचार प्रसार गर्नु हो ।

*चौँथो अकुशल धर्म यस प्रकार छ* : चौँथो अकुशल धर्म कुनै सत्त्वलाई छल्ने, धोखा दिने उद्देश्यले ठग्नु हो । ठगिएको व्यक्तिले आफू ठगिएको कुरा थाहा पाओस् या नपाओस्, त्यसबाट उसलाई क्षति पुगेको होस् वा नहोस्, यदि त्यो पापलाई घन्टाभरमा प्रतिपक्षको प्रयोगले प्रतिकार गरिएन भने बोधिचित्तको परिहाणि हुन्छ । यसको प्रतिपक्ष चौथो प्रकारको शुक्ल धर्म हो अर्थात सत्त्वहरूलाई स्नेह गर्नु । अर्को शब्दमा आफ्नो हित नसोँची अरुहरूलाई हितसुख प्रदान गर्ने इच्छा र अभिलाषा ।

**सद्धर्मचिन्तामणि–मुक्तिरत्नालंकार** अन्तर्गत
बोधिप्रणिधि चित्तोत्पाद नामक दशम् परिच्छेद समाप्त ।









# परिच्छेद ११

## प्रस्थान बोधिचित्तको अभ्यास :षड्पारमिता

**ख. प्रस्थान बोधिचित्तको अभ्यास** : बोधिप्रस्थान चित्तको उत्पादका तीन शिक्षाहरू छन् : अधिशील शिक्षा, अधिसमाधि शिक्षा र अधिप्रज्ञा शिक्षा । *बोधिपथप्रदिप* मा बताइएको छ :

बोधि प्रस्थान चित्तका साथ संवरमा स्थित भई
जब कुनै व्यक्ति शील आदि शिक्षामा सुशिक्षित हुन्छ
तब शील आदि तीन शिक्षाहरूप्रति उसको आदर बढेर आउँछ ।[१]

अधिशील शिक्षाहरू दान, शील एवं क्षान्ति (पारमिताहरू) हुन्, अधिसमाधि ध्यान (पारमिता) हो र अधिप्रज्ञा प्रज्ञा (पारमिता) हो । वीर्य (पारमिता) तीनै शिक्षाहरूका सहयोगी हो । जस्तो *महायानसूत्रालंकार* मा बताइएको छ :

तीन शिक्षाहरूको आधारमा बुद्धले
छ वटा पारमिताहरूको देशना गर्नुभएको छ ।
पहिलो तीन पारमिता प्रथम शिक्षा हो र
अन्तिम दुई पारमिताहरू बाँकी दुई शिक्षाहरू हुन् ।
एउटा पारमिता ती तीनओटै शिक्षासित सम्बद्ध हुन्छ ।[२]

तसर्थ संक्षेपमा,

छ शीर्षकहरूले प्रस्थान चित्तोत्पादका शिक्षालाई निर्धारित गर्छन् । ती हुन् :











दान, शील, क्षान्ति,
वीर्य, ध्यान र प्रज्ञा

यसको बारेमा *सुबाहुपरिपृच्छा सूत्र* मा यस्तो भनिएको छ :

> हे सुबाहु ! शीघ्र अभिसंबोधि प्राप्त गर्न चाहने बोधिसत्व महासत्त्वले यी छ पारमिताको सदा अभ्यास गरिराख्नु पर्छ। ती छवटा पारमिता के के हुन् ? दान पारमिता, शील पारमिता, क्षान्ति पारमिता, वीर्य–पारमिता, ध्यानपारमिता र प्रज्ञापार-मिता ।

यी छ पारमिताहरूलाई दुई किसिमले जान्नुपर्छ : संक्षिप्त व्याख्या द्वारा एवं विस्तृत व्याख्याद्वारा

छ पारमिताहरूलाई संक्षिप्तरूपले व्याख्या गर्दा निम्नलिखित शीर्षकहरू सहायकसिद्ध हुनेछन् ।

छ वटा शीर्षकहरूमा छ पारमिताहरू संगृहित छन् :
संख्या निर्धारण, क्रम निर्धारण, लक्षण, निरूक्ति,
प्रभेद एवं संग्रह

१. **संख्या निर्धारण** : पारमिताहरूका संख्या निर्धारण अभ्युदय (सुगति) र निश्रेयस (मोक्ष) को आधारमा हुन्छ ; अभ्युदय र निश्रेयसका तीन तीन वटा प्रयोजन (पारमिताहरू) हुन्छन् । अभ्युदयका तीनवटा पारमिताहरू यस प्रकार छन् ; सुखभोग गराउने दान पारमिता, सुन्दर शरीर प्राप्त गर ाउने शील पारमिता र सत् कुटुम्बका लागि क्षान्ति पारमिता । निश्रेयसका तीन पारमिताहरू यस प्रकार छन् ; गुणमा वृद्धि ल्याउने वीर्य पारमिता, शमथको लागि ध्यान पारमिता र विपश्यनाको लागि प्रज्ञापारमिता । *महायानसूत्रालंकार* मा यस्तो भनिएको छ :











अभ्युदयका सम्पदहरू यी हुन् :
भोग, शरीर र कुटुम्ब[३]

२. **क्रम निर्धारण** : सत्त्वको सन्ततिमा पारमिताहरू उत्पन्न हुने क्रम यस प्रकार छ । दानपारमिताद्वारा सुख, धनसम्पत्तिहरू निसंकोचपूर्वक वा परवाह नगरीकन अरूहरूलाई दिएको दियै गरिसकेपछि हामी शील पारमितातर्फ अग्रसर हुन्छौँ । शीलपारमिताबाट हामी क्षान्ति पारमितातर्फ लाग्छौ । क्षान्तिले युक्त भइसकेपछि हामी वीर्यको अनुष्ठानमा सक्षम हुन्छौँ । वीर्यको अनुष्ठानमा सक्षम भइसकेपछि हामीले समाधि (ध्यान) बल प्राप्त गर्छौँ र ध्यान गर्दै जाँदा हामीलाई प्रज्ञा प्राप्त भएर तत्त्वको यथावत ज्ञान हुन्छ ।

पारमिताको क्रम भन्नाले हिनबाट उत्कृष्टमा क्रमिकरूपले उँभो लाग्दै जानु पनि हो । यसको अर्थ स्थूलबाट सूक्ष्मसम्म उकास्दै लैजानु पनि हो । अभ्यास गर्न सजिलो स्थूल नै पहिले आउँछ र अभ्यास गर्न अत्यन्तै गाऱ्हो सूक्ष्म पछि मात्र आउँछ । जस्तो *महायानसूत्रालंकार* मा भनिएको छ :

पूर्वको आधारमा परको उत्पत्ति,
हीन एवं उत्कृष्ट स्थिति र स्थूल र सूक्ष्मताको आधारमा
यिनको क्रमलाई निर्धारित गरिएको छ ।[४]

३. **पारमिताका लक्षण** : दानादि पारमिताहरूको लक्षण चार प्रकारका छन् : बोधिप्रतिकूल तत्त्वहरूलाई नाश गर्ने, निविर्कल्प ज्ञान जागृत गराउने, सबै इच्छाहरूलाई परिपूर्ति गरिदिने र तीन प्रकारले सत्त्वहरूलाई परिपाक गर्ने अर्थात परिपक्व तुल्याउने । *महायानसूत्रालंकार* मा यस्तो बताइएको छ :

दानपारमिताले विपक्ष तत्त्वहरूलाई नष्ट गरिदिएर
निर्विकल्प ज्ञान उत्पाद गर्छ,











सबै इच्छाहरूलाई परिपूर्ति गरिदिएर
यसले तीन प्रकारले सत्त्वहरूलाई परिपक्व तुल्याइदिन्छ ।[५]

४. **निरूक्ति** : पारमिताको निरूक्ति यस प्रकार छ : दरिद्रतालाई निर्मूल गर्ने हुनाले दान, शीतलता प्रदान गर्ने हुनाले शील, क्रोधलाई शमन गर्ने हुनाले क्षान्ति, कुशलधर्म सित सम्पर्क गराउने हुनाले वीर्य, मनलाई अध्यात्मता धारण गराउने हुनाले ध्यान, र परमार्थ सत्यको बोध हुने हुनाले प्रज्ञा भनिएका हुन् । संसारलाई पार गरेर निर्वाणसम्म पुऱ्याइदिने भएकाले यिनलाई पारमिता भनिन्छ । जस्तो *महायानसूत्रालंकार* मा भनिएको छ :

दरिद्रतालाई हटाउने, शीतलता प्राप्त गराउने र क्रोधलाई शमन गर्ने, मनलाई अध्यात्मतामा स्थिर राख्ने, परमार्थको बोध गराउने हुनाले दानादि भनी चिनिन्छ ।[६]





५. **पारमिताहरूको प्रभेद** : हरेक पारमिताहरू ६/६ उपवर्गहरूमा विभाजित गरिएका हुन्छन् जस्तै दानको दान, दानको शील इत्यादि त्यसैले जम्मा ३६ भेदहरू छन् । यस सम्बन्धमा *अभिसमयालंकार* मा बताइएको छ :

दान आदिका छ-छ भेदहरू हुन्छन् ।
हरेकका संग्रहलाई सन्नाहप्रतिपति भनिन्छ
जो यथाक्रम अनुसार
छ उपवर्गहरूमा विभाजित हुन्छ ।[७]

६. **संग्रह** : पारमिताहरूको संग्रह भन्नाले पारमिताहरू दुई संभारहरूमा समावेश हुनु हो । दान र शीलको संग्रह पुण्य संभार अन्तर्गत हुन्छ र प्रज्ञाको संग्रह ज्ञान–संभार अन्तर्गत हुन्छ । क्षान्ति, वीर्य र ध्यान दुइटै संभारहरूमा संगृहित हुन्छन् । जस्तो *महायानसूत्रालंकार* मा बताइएको छ :











दान र शील पुण्यसंभारमा प्रज्ञा ज्ञानसंभारमा संगृहित हुन्छन्,
जब कि अन्य तीन दुइटैमा संगृहित हुन्छन् ।[८]

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
षट्पारमिताहरूको व्यवस्था सम्बन्धी निर्देश
नामक एकादश परिच्छेद समाप्त ।













# परिच्छेद १२
# दान पारमिता

दान पारमितालाई संक्षेपमा ६ वटा शीर्षकहरूमा अध्ययन गर्न सकिन्छ :

दान पारमिता सम्बन्धी गुण तथा दोषहरूको समीक्षा,
दानपारमिताको स्वरूप,
भेद, हरेक भेदको लक्षण, उपचय, विशुद्धि र फल ।

१. **गुण तथा दोषहरूको समीक्षा** : हामीले के थाहा पाउनुपर्छ भने दान नदिने प्राणीहरू यस जुनीमा सधै दरीद्र भएर बाँच्नुपर्ने हुन्छ र कथं कदाचित मनुष्य भएरै जन्मिएता पनि तिनीहरू सधै दुःखी हुन्छन् । तर प्रेतहरू माझ बस्नुपर्ने संभावना धेरै हुन्छ । *प्रज्ञापारमितासञ्चयगाथा* मा भनिएझैं :

कञ्जुस व्यक्ति प्रेत लोकमा जन्मिन्छ
र कथं कदाचित ऊ मनुष्य भएरै जन्मिएता पनि
त्यो जुनीमा ऊ सधै दुःखी र दरिद्र हुने हुन्छ ।[1]

यसै सम्बन्धमा *विनयागमोत्तर विशेषागमप्रश्नवृत्ति* मा यस्तो भनिएको छ :

प्रेतले श्रोणकोटीकर्ण[2]लाई दिएको उत्तर यस्तो थियो : -
"अत्यन्तै लोभी र कञ्जुस भएर
हामी एउटा तुच्छ दान पनि अरूलाई दिन्नौं
जसको फलस्वरूप हामी प्रेतलोकमा जन्मिन पुग्छौं ।"











अर्को कुरा, हामी दानी भएनौँ भने हामीले परकल्याणको लागि पनि कार्य गर्न सक्दैनौँ, जसले गर्दा हामीलाई बोधि प्राप्त हुँदैन। जस्तो भनिएको छ :

> दानको अभ्यास बिना, कुनैपनि प्राणीले सम्पत्ति प्राप्त गर्न सक्तैन, तसर्थ ऊबाट सत्त्व संग्रह (प्राणीलाई आकर्षित गर्नु) पनि हुन सक्दैन भने उसले बोधि प्राप्त गर्ने त परै छ।

यसको ठीक उल्टो यदि कोही व्यक्ति दानी छ भने उसले सबै जुनी-हरूमा धनी भएर सुख प्राप्त गर्छ। *प्रज्ञापारमितासञ्चय गाथा* मा यस तथ्यलाई यसरी दिइएको छ :

> दानले गर्दा कुनै पनि बोधिसत्त्व प्रेत योनिमा पतन हुँदैन,
> यसले नै दरिद्रता र सबै क्लेशहरूलाई नाश गरिदिन्छ।
> बोधिसत्त्व चर्या गरिरहँदा उसले अपार सम्पत्ति प्राप्त गर्नेछ।[३]

यसै कुरालाई लिएर *सुहृल्लेख* मा यस्तो बताइएको छ :

> दानको अभ्यास विधिवत् तवरले गरिरहनुपर्छ।
> परलोकमा दानभन्दा ठूलो मित्र अरू हुनेछैन। *सुहृल्लेख* - ६

*मध्यमकावतार* मा पनि यस्तै उल्लेख गरिएको छ :

> सबै प्राणी सुख चाहन्छन्,
> धनबिना कोही पनि प्राणी सुखी रहन्नन्
> धन पनि दानबाटै प्राप्त हुने तथ्यलाई जानेर
> शाक्यमुनि बुद्धले सर्वप्रथम
> दानको विषयमा नै वर्णन गर्नुभयो। १/१०











अर्को कुरा, जब हामी दानी हुन्छौं, हामीले पर कल्याणको लागि कार्य गर्न सक्छौं । दानद्वारा सत्त्व संग्रह गरेर (आकर्षित गरेर) उनीहरूलाई सद्धर्ममा प्रतिष्ठित गर्न सकिने हुन्छ । जस्तो बताइएको छ :

> दुःख भोगिरहेका सत्त्वहरूलाई दानद्वारा पूर्णरूपले परिपक्व (परिपाक) गर्न सकिन्छ ।[४]

फेरि, दानको अभ्यास गरिरहेका (दानी व्यक्ति) लाई बोधि प्राप्त गर्नु कठिन कुरो होइन । जस्तो *बोधिसत्त्वपिटक* मा पनि बताइएको छ :

> दानको अभ्यास गर्नेहरूलाई बोधि प्राप्ति त्यति कठिन कार्य होइन ।

*रत्नमेघसूत्र* मा भनिए झैँ :

> दान भनेकै बोधिसत्त्वको बोधिज्ञान हो ।

अन्ततः, *गृहपति-उग्रपरिपृच्छासूत्र* मा दान दिँदाको गुण र दान नदिँदाको दोष दुवैलाई तुलनात्मकरूपमा यसरी प्रस्तुत गरिएको छ :

> जुन धनलाई मैले दान दिएँ, त्यो मेरो हो, तर जुन मैले आफ्नो घरमा राखिराखेको छुँ, त्यो मेरो होइन । दानस्वरूप दिइसकेको वस्तु (धन इत्यादि) लाई बचाइराख्नु वा सुरक्षा गरिराख्नु पर्दैन । तर घरमा राखिराखेको वस्तुलाई सुरक्षा गर्नुपर्छ । दान दिएर पठाइसकेको वस्तुको विषयमा कुनै भय लिनु पर्दैन । तर घरमा राखिराखेको वस्तु संधै भयको कारण बनिरहन्छ । दानस्वरूप दिइसकेको वस्तुले हामीलाई बोधिनिकट पुऱ्याउँदछ भने आफ्नो घरमा थुपारिराखेको वस्तु मारको दिशातर्फ लैजाने











> मार्ग हो । दानको अभ्यासले विशाल सम्पत्ति प्राप्त हुन्छ ; घर मा राखिइएको वस्तु (सम्पत्ति) ले विशाल सम्पत्तिमा परिवर्तित हुन्न । दान दिएको वस्तु अक्षय हुन्छ भने घरमा राखिराखेको वस्तुको क्षय निश्चित छ । इत्यादि....

२. **दानपारमिताको स्वरूप** : अनाशक्त भावले वा आशक्ति रहित भएर दान दिनु नै दानपारमिताको स्वरूप हो । जस्तो *बोधिसत्त्वभूमि* मा बताइएको छ :

> दानको स्वरूप के हो ? आशक्ति वा लोभबाट
> मुक्त स्वस्फूर्त चित्त र सो चित्तस्थिति
> वा मनस्थितिले युक्त भई
> दान दिनु नै दानको स्वरूप हो ।[५]



३. **भेद** (**वर्गीकरण**) : दान ३ प्रकारले दिन सकिन्छ : क. आमिष दान (भौतिकवस्तुको दान), ख. अभयदान, र ग. धर्म दान ।



आमिष दानले अरूको शरीरलाई सुदृढ गरिदिन्छ, अभयदानले अरूको जीवनलाई सुदृढ बनाइदिन्छ भने धर्मदानले अरूको चित्त (मन) लाई नै सुदृढ पारिदिन्छ । पहिलो दुईप्रकारका दानले अरूलाई यस जुनीमा मात्र सुख प्रदान गर्दछन् भने अन्तिम दान वा धर्म दानले अर्को जुनीमा पनि अझै सुखी नै हुन्छ ।

४. **हरेक भेदका लक्षण** :

**क. आमिष दान** : आमिष दान दुई किसिमले दिन सकिन्छ । अ. अनुचित दान र आ. उचित दान ।

तिनमध्ये पहिलो दान अर्थात अनुचित दानलाई त्याग्नुपर्छ र दोश्रो दान अर्थात उचित दानको अभ्यास गर्नुपर्छ ।











**अः अनुचित दान** : अनुचित दान अन्तर्गत चार उपवर्गहरू छन् :

1. अनुचित आशय
2. अनुचित वस्तु,
3. अशुद्ध ग्राहक वा क्षेत्र, र
4. अनुचित दान दिने तरिका ।

1. *अनुचित आशय* : अनुचित आशय भन्नाले गलत (विपरीत) र हीन आशय हो । पहिलो, अरूलाई हानि पुऱ्याउन, आफ्नो यस जुनीमा प्रशंसा इज्जत पाउन, अर्कासित प्रतिस्पर्धा गर्न वा अरूको देखासिकी गर्नको लागि दान दिनु अशुद्ध आशयले दान दिनु हो । बोधिसत्त्वले यी तीनैवटा अशुद्ध आशयहरूलाई त्यागिदिनुपर्छ । यसैलाई *बोधिसत्त्वभूमि* मा यसरी प्रस्तुत गरिएको छ :




अरूलाई मार्न, बन्धनमा पार्न, सजाँय दिन,
कैद गर्न वा देशनिकाला गर्न
बोधिसत्त्वले दान दिनु हुँदैन ।
यश र प्रशंसाको लागि पनि
बोधिसत्त्वले दान दिनु हुन्न ।[६]
अरूसँग प्रतिस्पर्धा गर्न पनि
बोधिसत्त्वले दान दिनु हुन्न ।

दोश्रो, अर्को जुनीमा आफू दरिद्र भएर बाँच्न नपरोस् भन्ने उद्देश्य लिएर वा दरिद्रताको भयले दान दिनु, अर्को जुनीमा मनुष्य, देव वा त्यस्तै कुनै सुगतिमा जन्मिने इच्छाले दान दिनु हीन आशयले दान दिनु हो । यी दुइटै आशय बोधिसत्त्वले त्याग्नुपर्छ । जस्तो भनिएको छ :

बोधिसत्त्वले पछि दरिद्रताको भयले प्रेरित भई दान दिन्नन् ।[७]











तथा :

> इन्द्र हुनको लागि, चक्रवर्ती सम्राट हुनको लागि
> वा ईश्वर हुनको लागि दान दिँदैनन् ।[८]

2. *अनुचित वस्तु* : दान दिँदा त्याग्नुपर्ने अर्को अशुद्धतालाई बोधि-सत्त्वभूमि मा वर्णन गरिएको पाइन्छ । तर संक्षेपमा भन्नुपर्दा अशुद्ध वा अनुचित वस्तु दान दिनुको अर्थ विष, आगो, हतियार इत्यादि दान दिनु हो । कुनै प्राणीले त्यस्ता वस्तु मागेकै खण्डमा पनि बोधिसत्त्वले त्यस्ता अशुद्ध वस्तुहरू दान दिनु हुन्न । *रत्नावली* मा यस्तो बताइएको छ :

> कसैलाई विषै काम लाग्ने वा हितकर हुन्छ भने
> उसलाई विष पनि दिनुपर्ने हुन्छ ।
> कसैलाई स्वादिष्ट वा उत्तम भोजनले हित गर्दैन भने
> उसलाई त्यो भोजन दिनु हुँदैन ।
> जसरी सर्पले औंलामा टोक्दा औंलालाई
> काटेर फाल्नु नै श्रेयस्कर हुन्छ
> आफूलाई अप्ठ्यारो लागेता पनि
> यदि त्यसले अरूलाई हित नै गर्छ भने
> हामीले त्यस्ता कार्य पनि गर्नुपर्छ
> भनेर भगवान् बुद्धले भन्नुभएको छ ।[९]

कुनै जंगली जन्तुको शिकारको लागि जाल अथवा धनुवाण मागेको खण्डमा बोधिसत्त्वले त्यस्ता चीज दिन्नन् । संक्षेपमा अरूलाई हानि हुने वा दुःख हुने कुनै पनि वस्तु बोधिसत्त्वले दिन हुन्न । उनले आफ्नै आमाबाबुलाई दान दिँदैनन् वा बन्धकमा राख्दैनन् । आफ्ना छोराछोरी, पत्नी वा अरू आफन्तहरूलाई उनीहरूको हार्दिक सहमति बेगर कसैलाई दान दिएर पठाउँदैनन् । उनी आफू निकै धनी छन् भने उनले आफूले











सञ्चय गरेका खालि सानातिना वस्तुहरू मात्र दान दिँदैनन् र कुनै विशेष प्रयोजनको लागि उनले सम्पत्ति थुपारेर दान दिने पनि होइन ।

3. *अशुद्ध ग्राहक वा क्षेत्र* : अशुद्ध ग्राहक वा क्षेत्रको तात्पर्य के हो भने मारकायिक देवतालाई क्षति पुऱ्याउन वा विवश पार्न कसैले आफ्नो तन्त्रमन्त्र विद्याको लागि बोधिसत्त्वको शरीर वा अङ्गप्रत्यङ्ग मागेको खण्डमा बोधिसत्त्वले आफ्नो शरीर वा अङ्ग काटेर दिँदैनन् । मारले समातेको वा होश गुमेको व्यक्तिलाई पनि बोधिसत्त्वले आफ्नो शरीर वा अङ्ग काटेर दान दिँदैनन् किनकी उनीहरूको लागि शरीरको आवश्यकता नै हुँदैन र उनीहरूको चित्त पनि आफ्नो वशमा हुँदैन । बोधिसत्त्वले पेटू (जति खाएपनि नअघाउने) वा जड्याहालाई पनि खाद्य वा पेय वस्तुहरू दान दिनु हुँदैन ।

4. *अनुचित दान दिने तरिका* : अनुचित दान दिने तरिका भन्नाले हामी के बुझ्छौं भन्दा हामीले मन नलागी नलागी दान दिनु हुँदैन अथवा जुन वस्तु दान दिँदाखेरी हाम्रो मनमा खुशी अथवा प्रसन्नता रहँदैन, अर्थात हामी खिन्न वा क्रोधी भएर दान दिनुहुन्न अथवा कुनै खराब व्यक्तिलाई तिरस्कारपूर्ण र अमित्रवत् भावले दान दिनुहुन्न ; वा कुनै माग्ने मान्छेलाई गाली गरेर, धम्काएर वा मनमै चोट पुग्नेगरी अपशब्द बोलेर दान दिनुहुन्न ।

**आ. उचित (शुद्ध) दान** : शुद्ध दानको अभ्यास गर्दाखेरी तीनवटा कुरामा ध्यान दिनुपर्छ : 1. वस्तु (दान दिने वस्तु), 2. ग्राहक वा क्षेत्र र 3. उपाय

1. *वस्तु (दान दिने वस्तु)* : दान दिने वस्तु दुई प्रकारका हुन्छन् : 1.1. आध्यात्मिक वस्तु, र 1.2. वाह्य वस्तु

1.1. आध्यात्मिक वस्तु आफ्नै शरीरसँग सम्बन्धित हुन्छ । *नारायण-परिपृच्छासूत्र* मा बताइए अनुसार,

> यदि आवश्यक परेको खण्डमा वा कसैले माग्न आएमा म उसलाई आफ्नै हात, खुट्टा, मासु, रगत र मेरो शरीरको अरू अङ्गहरू दिन तयार छु ।











अपितु, बोधिसत्त्व अझै आदिकर्मिक (सुरुसुरुको अवस्थामा) नै छ वा स्व-परसमतालाई राम्ररी बोध गरेको छैन भने उसले आफ्नो शरीर मनमनै समर्पण गर्न सक्छ तर शरीरका अङ्गहरू नै काटेर दिनु हुन्न । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

> करुणाको शुद्ध आशय नभइकनै
> यो शरीरलाई त्याग गर्नुहुँदैन ।
> यदि त्यसले सत्त्वहरूको हित हुन्छ भने
> वा यो र अन्य जन्ममा परम उद्देश्य
> अर्थात् बुद्धत्व प्राप्तिको अभ्यासका लागि
> आधार खडा गर्छ भने मात्र शरीरको त्याग गर्नुपर्छ ।[१०]

1.2. वाह्य वस्तु : वाह्य वस्तु भन्नाले धर्म अनुसार प्राप्त भएका खाद्य, पेय, वस्त्र, वाहन, सन्तान, पत्नी इत्यादि सबै हुन् । जस्तो *नारायण परिपृच्छासूत्र* मा भनिएको छ :

> वाह्य वस्तु धन, अन्न, चाँदी, सुन, रत्न, अलंकार, घोडा,
> हात्ती, छोरा-छोरी हुन् ।

भगवान् बुद्धले गृहस्थ बोधिसत्त्वहरूलाई आध्यात्मिक एवं वाह्य दुवै वस्तुहरू दान दिन सक्ने अनुमति दिनुभएको छ । *महायानसूत्रालंकार* मा यस्तो भनिएको छ :

> बोधिसत्त्वले अरूलाई दिन नसक्ने कुनै चीज छैन –
> चाहे त्यो शरीर होस्, धनसम्पत्ति होस् या जेसुकै होस् ।[११]

त्रिचीवर बाहेक प्रव्रजित बोधिसत्त्व (गृह त्याग गरेर भिक्षु वा भिक्षुणी भइसकेका बोधिसत्त्व) ले अन्य सबैथोक दानस्वरूप दिन सक्छन् । उनलाई











त्रिचीवर दान गर्ने अनुमति हुँदैन । यही कुरा *बोधिचर्यावतार* मा पनि भनिएको छ :

> तीन चीवर बाहेक बोधिसत्त्वले
> जेसुकै दानस्वरूप दिन सक्छन् ।[१२]

यदि चीवर नै दिइयो भने हाम्रो परार्थ क्रियामा हानि हुन सक्छ ।

2. ग्राहक वा क्षेत्र : ग्राहक चार प्रकारका हुन्छन् : 2.1. विशेष गुण भएका ग्राहक जस्तै कल्याणमित्र, त्रिरत्न इत्यादि, 2.2. हामीलाई विशेष किसिमले उपकार गर्ने ग्राहक जस्तै आमा बाबु इत्यादि, 2.3. दुःखको कारणले विशेष भएका ग्राहक जस्तै रोगी, अनाथ इत्यादि र 2.4. अपकार वा हानि गर्ने (प्रवृतिका) कारणले विशेष भएका ग्राहक जस्तै शत्रु, आदि । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :



> गुण एवं उपकारी क्षेत्रमा...[१३]



3. उपाय : दानको उपाय दुइटा छन् : शुद्ध आशय सम्पन्न भएर दान दिनु र प्रयोग सम्पन्न भएर दान दिनु । पहिलो, अर्थात् शुद्ध आशय सम्पन्न भएर दान दिनुको अर्थ बोधि प्राप्तिको लागि सत्त्वहरूको कल्याणार्थ करुणाले अभिप्रेरित भएर दान दिनु हो । दोश्रो, अर्थात् प्रयोग सम्पन्न भएर दान दिनुको अर्थ *बोधिसत्त्व भूमि* ले यसरी स्पष्ट गरेको छ :

> बोधिसत्त्वले श्रद्धापूर्वक, सत्कारपूर्वक
> उचित समयमा अरूलाई अहित
> नहुनेगरी आफ्नै हातले दान दिइरहन्छन् ।

माथिको उक्तिमा पहिलो गुण अर्थात श्रद्धाले यहाँ के जनाउँछ भने दान दिनु भन्दा पहिले दाता बोधिसत्त्वको मन प्रसन्न हुन्छ, दान दिइ-











रहेको बेला पनि प्रसन्न हुन्छ, र दान दिइसकेपछि पनि प्रसन्न नै रहन्छ । दान दिइसकेपछि उनमा कुनै पछुतो हुँदैन । 'सत्कार' शब्दको तात्पर्य के हो भने बोधिसत्त्वले आदरपूर्वक नै दान दिन्छन् । 'आफ्नै हातले' अर्थात् बोधिसत्त्वले अरूलाई दान दिन अऱ्हाउँदैनन्, अरूको सहायताबिना आफै दिन्छन् । 'उचित समयमा' अर्थात् जब बोधिसत्त्वसँग दान दिने वस्तु हुन्छ, तब उनले दान दिन्छन् । 'अरूलाई अहित नहुनेगरी' अर्थात् त्यो दानले गर्दा उनको परिवार वा तिनको सम्पत्तिमा कुनै क्षति नहोस् । आफ्नै सम्पत्ति भएपनि यदि तिनलाई दान दिइसकेपछि परिवारका अन्य सदस्यहरूले "तिमीले किन दियौ" भनी रुँदै कराउँदै आपत्ति जनाउँछन् वा तिनीहरूको चित्त दुख्छ भने त्यसो गर्नुहुन्न । अर्काको लुटेका, ठगिएका, र छिनेर ल्याएका वस्तुहरू पनि दान गर्नुहुँदैन । जस्तो *अभिधर्मसमुच्चय* मा बताइएको छ :

> निष्पक्ष भएर बारंबार दान दिनाले र सबै इच्छालाई परिपूर्ण गरेर दान दिनाले..........

यहाँ, 'बारंबार दान दिनु' भनेको दाताको एउटा विशेष गुण वा विशेषता हो जस अनुसार उसले बारंबार दान कर्म गरिरहन्छ। 'निष्पक्षरूपले दान दिनु', यस वाक्यांशले याचकसँग सम्बन्धित उसको विशेषतालाई ईंगित गर्दछ । दाताले कसैलाई काखा, कसैलाई पाखा गरेर अर्थात पक्षपातीपूर्ण भावनाले दान दिँदैन । 'कुनै विशेष वस्तुप्रतिको इच्छालाई परिपूर्ण गर्नु' भन्नाले के बुझिन्छ भने दाताले याचकका इच्छाहरू र चाहनाबमोजिम नै दान गर्छ ।

आमिष दानको व्याख्या यहीं समाप्त हुन्छ ।

**ख. अभयदान** : अभयदान भन्नाले डाँकू, जंगली जनावर, रोग, जल इत्यादि को कारणले भयभीत भएका सत्त्वहरू (प्राणीहरू) लाई शरण दिनु हो । जस्तो *बोधिसत्त्वभूमि* मा भनिएको छ :











> अभयदान भन्नाले सिंह, बाघ, गोही, राजा, डाँकू, आँधीवेहरी वा अन्य प्रकोपबाट भयभीत भएकाहरूलाई शरण दिनु भन्ने बुझिन्छ ।[१४]

अभयदानको व्याख्या यहीं समाप्त हुन्छ ।

**ग. धर्म दान** : धर्मदानलाई हामी चार विषयहरूमा बाड्न सक्छौँ : अ. दानको विषय (पात्र), आ. आशय, इ. मौल अर्थात तरीका, र ई. धर्म दान गर्ने विधि ।

**अ. दानको विषय (पात्र)** : धर्मदान त्यस्ता ब्यक्तिहरूलाई गरिनुपर्छ जसलाई धर्मको आवश्यकता परेको होस्, जसमा धर्मप्रति आदर छ र जसले धर्मको व्याख्या गर्छ ।



**आ. आशय** : अकुशल सबैलाई त्याग गर्ने र कुशल सबैलाई ग्रहण गर्ने हाम्रो आशय हुनुपर्छ । अकुशल आशय त्याग्ने भन्नाले हामीले भौतिक कामनाहरू जस्तै धनसम्पत्ति, यश, प्रशंसा र अन्य सांसारिक लाभहरू सबै प्रतिको कामना इच्छाहरूबाट आफ्नो मनलाई मुक्त गरेर धर्मदान दिनु-पर्छ । यही कुरालाई *प्रज्ञापारमितासंचयगाथा* मा यसरी दर्शाइएको छ :



> कुनैपनि भौतिक कामनाहरू मनमा नलिई उनले (बोधिसत्त्वले) लोक (संसार) लाई धर्मदान गर्छन् ।[१५]

यस्तै, *काश्यपपरिपृच्छासूत्र* मा पनि भनिएको छ :

> विशुद्ध एवं निरामिष चित्त (भौतिक कामनाहरूबाट मुक्त भएको शुद्ध चित्त) ले धर्मदान गर्ने कुरालाई नै भगवान् बुद्धले बताउनुभएको छ ।











विशुद्ध आशय राख्नुको मतलव करुणाले अभिप्रेरित भएर धर्मको व्याख्या गर्नु हो । जस्तो *प्रज्ञापारमितासञ्चयगाथा* मा भनिएको छ :

> उनले (बोधिसत्त्वले) दु:खलाई हटाउनको निमित्त नै धर्मदान गर्छन् ।[१६]

**इ. मौल वा मूलभूत कुरा** : धर्म देशना वा धर्म दान यसरी गर्नुपर्छ कि सूत्र र अन्य ग्रन्थहरूको अर्थ यथावत नै रहोस् वा नबाङ्गियोस् । *बोधिसत्त्वभूमि* मा भनिएझैँ,

> अर्थलाई नबङ्गचाइकन तर्कयुक्त वा न्यायसङ्गत ढङ्गले धर्मको व्याख्या गर्नू जसले गर्दा शिष्यहरूले त्यसको शिक्षालाई दृढतापूर्वक धारण गर्न सकियुन्, त्यो नै धर्मदान हो ।[१७]




**ई. धर्म दान गर्ने विधि** : कसैले हामीलाई धर्मदानको लागि आग्रह गऱ्यो भन्दैमा तुरुन्तै उसलाई धर्मको व्याख्या गरिहाल्नु हुँदैन। जस्तो *चन्द्रप्रदीपसूत्र* मा भनिएको छ :

> जब कसैले तिमीलाई धर्मदान गर्नको
> लागि आग्रह गर्छ
> त्यसबेला, तिमीले सर्वप्रथम
> 'मैले राम्ररी अध्ययन गरेकै छैन' भन्नसक्नुपर्छ,[१८]

तथा पुनश्च :

> तुरुन्तै केही भनिहाल्ने होइन,
> त्यो याचक वा अनुरोध गर्ने व्यक्तिलाई
> राम्ररी जाँचिसकेपछि मात्र, वा











> उसलाई राम्रोसित चिनेपछि मात्र धर्मको व्याख्या गर्नुपर्छ,
> त्यसबेला, उसले अनुरोध नगरीकनै पनि
> उसलाई धर्मको व्याख्या गर्न सकिन्छ ।[१९]

धर्मको देशना कुनै स्वच्छ तथा मनोरम ठाउँमा गरिनुपर्छ । *सद्धर्म-पुण्डरीक सूत्र* का अनुसार,

> कुनै स्वच्छ तथा मनोरम स्थानमा फराकिलो तथा आरामदायी
> आसनमा बसेर धर्म(को) देशना गर्नुपर्छ ।[२०]

त्यस्तो ठाउँमा धर्मासनमा आसीन भएर हामीले धर्मको व्याख्या गर्नुपर्छ। जस्तो भनिएको छ :

> विभिन्न प्रकारका विछ्यौनाहरू बिछ्याएको
> पादयुक्त आसनमा बसेर.....[२१]

हामी आफै पनि स्नान गरी राम्रो सुकिलो वस्त्र लगाएर पूर्णरूपले स्वच्छ हुनु जरुरी छ । अनि शुद्ध चित्तले बडो सावधानीपूर्वक धर्मको व्याख्या गर्नुपर्छ । यसलाई *सागरमतिपरिपृच्छासूत्र* मा यसरी प्रष्टचाइएको पाइन्छ :

> धर्मको व्याख्या गर्ने अर्थात धर्मदान गर्ने व्यक्ति शुद्ध, अत्यन्तै
> सावधानी (शोभन), राम्ररी नुहाएको र राम्रो वस्त्र पहिरिएको
> हुनुपर्छ ।

यस्तै वरिपरिको पर्यावरण पनि त्यस्तै स्वच्छ र शुद्ध हुनु जरुरी छ । श्रोताहरू सबैको उपस्थिति भइसकेपछि आसन ग्रहण गर्दा वा गर्ने समयमा सर्वप्रथम कुनै प्रकारका विघ्नबाधा नआउन् भन्नाको लागि मार-











शक्ति विनाशक मन्त्र पाठ गर्नुपर्छ जुन *सागरमतिपरिपृच्छासूत्र* मा यसरी दिइएको छ :

तद्यथा । शमे शमवति । शमितशत्रुं । अंकुरे । मंकुरे । मार-जिते । करोटे । केयूरे । तजोवति । ओलोयनि । विशुद्ध-निर्मले । मलापनये । खुखुरे । ख ख ग्रसे । ग्रसने । ओ-मुखि । परमुखि । अमुखि । शमित्वनि । सर्वग्रहबन्धनानि । निगृहित्व । सर्वपारप्रवादिन । विमुक्तमारपाश । स्थापित्व । बुद्धमुद्र । अनुगतिता । सर्वमारे । सर्वपारप्रवादिन । विमुक्तमार पाश । स्थापित्व । बुद्धमुद्र । अनुगतिता । सर्वमारे । बु(पु)चरित परिशुद्धे । विगच्छन्तु । सर्वमारकर्मणि । सागरमति ।

अर्थ : शान्ति, शान्ति, शत्रुशमणकर्ता, मारविजेता, खप्पर को माला धारण गरेका, तेजवान्, चारैतर्फ दृष्टि पुऱ्याइ-रहेका, विशुद्ध, निर्मल, सबै दाग मलहरूलाई हटाइदिने, सर्वत्र हेरिरहेका, सबै ग्रह दुष्टतालाई बन्धनमा पारेका, मारको पाशबाट मुक्त भएका, पूर्णरूपले विशुद्ध देव तपाईं ! मारद्वारा सृजित सबै विघ्नवाधाहरू हटिएर जाउन् । हे सागरमति, दोहऱ्याई तेहऱ्याईकन यो मन्त्र जपिसकेपछि मात्र धर्मको व्याख्या गरेमा मारकायिक देवताहरू विघ्नवाधा डाल्न सयौं योजनको परिधिभित्र सम्म आउन नसक्ने हुन्छन् । कोही आइहालेपनि तिनीहरू विघ्नवाधा डाल्न सक्षम हुनेछैनन् । यो मन्त्र जपिसके पछि सबैले सुन्नेगरी संयमित स्वरले धर्मको व्याख्या गर्नुपर्छ ।

धर्मदानको व्याख्या यहीँ समाप्त हुन्छ ।

५. **उपचय (वृद्धि)** : उपर्युक्त तीन प्रकारका दान अलि अल्प (थोरै) भएको जस्तो लाग्यो भने तिनलाई वृद्धि गर्न सकिन्छ, वृद्धि गर्ने उपाय पनि छ ।











*बोधिसत्त्वपिटक* मा भनिएको छ :

> हे शारिपुत्र, एक बुद्धिमान् (निपुण) बोधिसत्त्वले
> सानो दानलाई पनि विपुलता (विशालता) मा
> परिणत गर्न सक्छन् । उनले ज्ञानको बलले त्यसलाई बढाउँछन्,
> प्रज्ञाको बलले विपुल (विशाल) पार्छन् र
> परिणामनाले अपरिमित (असीम) पार्छन् ।

यहाँ 'ज्ञानको बलले दानलाई वृद्धि गर्नु' भन्नाले के बुझिन्छ भने बोधिसत्त्वले त्रिमण्डललाई एकदम परिशुद्धरूपले जानेका हुन्छन् बुझेका हुन्छन् अर्थात् उनले दाता, वस्तु र दान लिने व्यक्ति तीनै माया समान छन् भनी राम्ररी जानेका हुन्छन् ।

'प्रज्ञाको बलले दानको पुण्यलाई विशाल बनाउनु' वाक्यांशलाई यसरी बुझ्न सकिन्छ : बोधिसत्त्वले जेसुकै दान गरेपनि त्यसको उद्देश्य सबै सत्त्व (प्राणी) हरूलाई बुद्धत्व पदमा प्रतिष्ठित गर्नु हो । न उनमा दान दिएको वस्तुप्रति आशक्ति हुन्छ न त दान दिएर कुनै फल वा लाभको नै कामना गर्छन् । यसले गर्दा उनको पुण्य विशाल हुनजान्छ । जस्तो *प्रज्ञा-पारमितासञ्चयगाथा* मा भनिएको छ :

> आफूले दान गरेको वस्तुमा आशक्ति भाव नराख्ने बोधिसत्त्वले
> कदापि दान गरेबापत कुनै फलको आशा पनि राख्दैनन् ।
> यस अर्थमा, त्यागमा निपुण भएका बोधिसत्त्वले सबैथोक दिन
> सक्छन् वा सर्वत्यागी हुन्छन् । त्यसो हुँदा अत्यन्तै क्षुद्र वा
> सानो वस्तु नै दान गरेको किन नहोस्, त्यसको पुण्य अत्यधिक
> विशाल नै हुन्छ ।[२२]

'परिणामनाको बलले पुण्यलाई असीम बनाउनु' भन्नाले के बुझिन्छ भने जब पुण्यलाई हामीले सबै सत्त्वहरूको हितको लागि अनुत्तर बोधिमा











परिणामना गर्छौं, त्यो अपरिमित हुनजान्छ । तसर्थ *बोधिसत्त्वभूमि* मा भनिएझैँ,

> बोधिसत्त्वले फलको कामनाले दान दिन्नन्, बरु त्यसलाई अनुत्तर सम्यक् सम्बोधिमा परिणामना गर्छन् ।

परिणामनाले दानको फललाई मात्र अभिवृद्धि गर्ने नभएर त्यो अक्षय (अविनाशी) पनि हुनपुग्छ । जस्तो *अक्षयमतिपरिपृच्छासूत्र* मा हामी पढ्छौं :

> हे शारिपुत्र, जसरी महासागरमा खसेको एक थोपा पानी कल्पको अन्तसम्म पनि त्यहीँ रहिरहन्छ अर्थात सुकेर जाँदैन, त्यसरी नै, बोधिमा परिणामना गरिएका कुशलमूलहरू पनि बुद्धत्वको प्राप्ति नभएसम्म कदापि नष्ट भएर जाँदैनन् ।



६. **दानपारमिताको विशुद्धि** : *शिक्षासमुच्चय* ग्रन्थमा दानपारमिताको बिशुद्धिका बारे यस्तो कथन छ :



> शून्यता र करुणाको सारलाई अभिव्यक्त गर्ने चेष्टाले पुण्यको शोधन हुन्छ ।[२३]

उपर्युक्त तीन प्रकारका दानलाई शून्यताले थामेपछि संसारको अभ्यूदय हुँदैन र करुणाले थामेपछि हीनयानको हेतु बन्दैन । यसर्थ त्यसैमा दानको विशुद्धि निहित हुन्छ र अप्रतिष्ठित निर्वाणको कारकतत्त्व पनि त्यही हो ।

'दानलाई शून्यताको टेवा' सम्बन्धमा *रत्नचूडपरिपृच्छासूत्र* मा यस्तो भनिएको छ :

> दानलाई चार मुद्रा (छाप) ले मुद्रित गर्नुपर्छ । ती चार मुद्राहरू के के हुन् ? *आध्यात्मिक (भित्रि) कायको शून्यता, बाह्य वस्तु*











*(धन इत्यादि) को शून्यता, विषयलाई उपभोग गर्ने चित्तको शून्यता* र *बोधिरूपी धर्मको शून्यता*। यी चार मुद्राहरूले मुद्रण गरेर दानको अभ्यास गर्नुपर्छ ।

'करुणाको टेवा' भन्नाले के बुझिन्छ भने हामी दान दिन्छौँ किनभने हामीले सामान्य वा विशिष्ट प्राणीहरूका दुःख सहन सक्दैनौँ ।

७. **दानपारमिताको फल** : दानपारमिताको परमार्थ र संवृति दुवै फल हुन सक्छन् । दानको परमार्थ फलस्वरूप प्राणीले अनुत्तर सम्यक् सम्बोधि प्राप्त गर्छ । जस्तो *बोधिसत्त्वभूमि* मा भनिएको छ :

अतः, बोधिसत्त्वले दान पारमिताको
अभ्यासलाई पूर्ण गरेर
अनुत्तर सम्यक् सम्बोधि प्राप्त गर्छन् ।[२४]




संवृति फल भन्नाले यो बुझ्नुपर्छ कि आमिष (भौतिक) दानको फलस्वरूप प्राणीले इच्छा नै नगरे पनि जीवनमा संमृद्धि सम्पन्नता पाउँन सक्छन् । यो बाहेक, उसले दानद्वारा मानिसहरू (शिष्यहरू) लाई आकर्षित गर्छ र उनीहरूलाई सत्मार्ग (बोधिचर्या) मा लाग्न प्रेरणा दिन्छ । जस्तो *प्रज्ञापारमितासंचयगाथा* मा भनिएको छ :

दानले गर्दा बोधिसत्त्व प्रेत योनिमा पतन हुँदैनन्,
दानले गर्दा नै उनले दरिद्रता र
सबै क्लेशहरूलाई नाश गर्छन् ।
यस जुनी (बोधिसत्त्व चर्याको समय)मा
उनले अपार सम्पत्ति प्राप्त त गर्छन् नै
दानले गर्दा नै उनले दुःखीत
प्राणीहरूलाई उद्धार गर्छन् ।[२५]











*बोधिसत्वभूमि* मा पनि यस्तै उल्लेख गरिएको छ :

अन्न (भोजन आदि) को दानले व्यक्ति बलियो हुन्छ,
वस्त्रको दानले ऊ सुन्दर वर्णको हुन्छ,
वाहनको दानले ऊ सदा सुखी रहने हुन्छ,
बत्तीको दानले उसको आँखा तेजिलो हुन्छ ।

अभयदान गरेको फलस्वरूप मानिसलाई मार तथा विघ्नबाधाहरूले छुन सक्दैनन् । *रत्नावली* मा भनिएझैँ,

डराएकाहरूलाई अभय दान गर्नाले
सबै मारहरूका प्रभावबाट मुक्त भइन्छ ।[२६]

धर्मदान गरेर हामी बुद्धहरूसित शीघ्र नै भेट्न सक्छौँ, उहाँहरूको साथमा लागी हामीले चिताएका सबैथोक अति शीघ्र नै प्राप्त गर्न सक्छौँ । जस्तो *रत्नावली* मा भनिएको छ :

धर्म सुन्न इच्छुक व्यक्तिलाई धर्मदान गरेर
उसका आवरणहरू हटाइदिनाले
हामी बुद्धगणमा सम्मिलित भई
चिताएका सबैथोक शीघ्र नै प्राप्त गर्छौं ।[२७]

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
**दानपारमिता**
नामक द्वादश अध्याय समाप्त ।









# परिच्छेद १३
# *शील पारमिता*

शील पारमिताको विषयवस्तुलाई सात शीर्षक अन्तर्गत संगृहित गर्न सकिन्छ :

गुण एवं दोषको निर्देश, स्वरूप, भेद,
हरेक भेदको लक्षण, उपचय, विशुद्धि र फल ।

१. **गुण तथा दोषको निर्देश** : कुनै व्यक्ति दानी भएर पनि यदि उसमा शील छैन भने उसले देव तथा मनुष्यको विशुद्ध एवं पूर्ण शरीर प्राप्त गर्न सक्दैन । यही तथ्यलाई *मध्यमकावतार* मा यसरी भनिएको छ :

दानको अभ्यास गरेकोले कोही व्यक्ति सम्पन्न भएता पनि
यदि उसको शीलरूपी खुट्टा नै भाँचेको छ (शीलको अभ्यास
गर्दैन) भने ऊ दुर्गतिमा पतन हुनेछ ।  २/४

अर्को कुरा, शील नै भएन भने त्यो मान्छे सद्धर्मको सम्पर्कमा पनि आउन सक्दैन । जस्तो *शीलसंयुक्तसूत्र* मा भनिएको छ :

जसरी अन्धो मान्छेले केही रूप देख्न सक्दैन
त्यसरी नै शीलको अभावमा मानिसले
धर्मलाई देख्न सक्दैन ।

फेरि, शीलको अभावमा हामी त्रिधातु संसारबाट मुक्त हुन पाउँदैनौँ । यो कुरालाई त्यही सूत्रमा यसरी दर्शाइएको छ :











जसरी खुट्टा नभएको मान्छे हिँड्डुल गर्न सक्दैन
त्यसरी नै शील नभएको मान्छे मुक्त हुन सक्दैन ।

अन्ततः हामीले सम्यक् सम्बोधि पनि प्राप्त गर्न सक्दैनौँ किनभने बुद्धत्वको मार्ग अधूरो रहने भयो ।

त्यसको ठीक विपरीत यदि हामी शीलवान् छौँ भने हामीले शरीर सम्पद् (उपयुक्त पूर्ण शरीर) प्राप्त गर्न सक्छौँ । *प्रज्ञापारमितासंचयगाथा* मा भनिएझैँ,

शीलले गर्दा प्राणी तिर्यक योनीमा जन्मिदैन
र आठ अक्षण दोषलाई पनि निवारण गर्न सक्छ
उसले सदा क्षण सम्पद प्राप्त गर्छ ।[1]

शीलवान् भयौँ भने हामीले समस्त कुशल र सुखको बीऊ रोप्न सक्छौँ । यसलाई *सृहल्लेख* मा यसरी दिइएको छ :

समस्त चराचर वस्तुको आश्रय पृथ्वी भएजस्तै
सबै गुणहरूको आश्रय शील हो । *सृहल्लेख - ७*

हामी एक उब्जाउ धर्ती सरह हौँ जहाँ समस्त गुणहरू प्रचुर मात्रामा फल्छन् । यो कुरालाई *मध्यमकावतार* मा यसरी व्यक्त गरिएको छ :

शीलरूपी भूमिमा कुशल गुणहरू फल्दाखेरी
हामीले तिनका उब्जनी वा फलहरूलाई
निरन्तर उपभोग गर्न सक्छौँ । २/६

शीलवान् हुँदा हामीलाई अनेक समाधिमुखहरू प्राप्त हुन्छन् । चन्द्रप्रदीपसूत्र मा बताइए झैँ,











शीघ्र नै मानिसले असंक्लिष्ट समाधि प्राप्त गर्छ ;
यो बिशुद्ध शीलकै अनुशंसा हो । *परिवर्त २८*

त्यति मात्र होइन, शीलवान् व्यक्तिले जे जस्तोसुकै प्रणिधान गरेपनि ती सबै पूरा हुन्छन् । यस विषयमा *पितापुत्रसमागम सूत्र* यस्तो भन्छ :

जसले विशुद्ध शीलको पालना गर्छ
उसका सबै प्रणिधानहरू पूरा हुन्छन् ।

अन्ततः शीलवान् व्यक्तिको लागि बोधिको प्राप्ति पनि सुलभ हुन जान्छ । त्यही सूत्रमा हामी पढ्छौं :

विशुद्ध शीलले धेरै हितकर फलहरू दिन्छ ।
त्यसले गर्दा बोधिको प्राप्ति त्यति गाऱ्हो हुँदैन ।





माथि उल्लेखित भन्दा पनि धेरै अन्य गुणहरू पनि छन् । जस्तो *शीलसंयुक्तसूत्र* मा भनिएको छ :

शीलवान् व्यक्ति बुद्धको प्रादुर्भाव भएको बेला उहाँको सम्पर्कमा आउन सक्छ । शीलवान् व्यक्ति सबैभन्दा राम्रो अलंकार हो । शीलवान् व्यक्ति सबै सुखको मुहान् हो । शीलवान् व्यक्ति सम्पूर्ण जगतकै प्रशंसनीय बन्नपुग्छ । इत्यादि

२. **शीलको स्वरूप** : शीलको स्वरूप अन्तर्गत चारवटा गुणहरू पर्दछन् जसलाई *बोधिसत्वभूमि* मा यसरी बुदाँगत तवरले प्रस्तुत गरिएका छन् ।

शीलको स्वरूप चार गुणहरूले युक्त छ भनेर जान्नुपर्छ । ती चार गुणहरू के के हुन् ? अरुबाट सही (सम्यक्) ढङ्गबाट शील











> ग्रहण गर्नु, विशुद्ध आशय, केही कारणवश् शील तोडियो भने त्यसलाई पुनर्निर्माण वा मर्मत (प्रत्यापत्ति) गर्ने, बडो सचेत एवं श्रद्धावान् भएर कुनैपनि शीललाई तोड्न नदिने ।[२]

यी चार गुणहरूलाई ग्रहण र रक्षा गरी दुई शीर्षकमा राख्न सकिन्छ । माथिल्लो उक्तिमा पहिलो गुण अर्थात अरूबाट सही (सम्यक्) ढङ्गबाट शील ग्रहण गर्नु 'ग्रहण' शीर्षक मा राख्न सकिन्छ भने बाँकी तीनवटा गुणहरूलाई 'रक्षा' शीर्षकमा संगृहित गर्न सकिन्छ ।

३. **शीलका भेद** : शीलका तीन भेदहरू छन् । ती हुन् : क. संवर शील, ख. कुशलधर्मसंग्राहक शील र ग. सत्त्वार्थक्रिया शील । तिनमध्ये पहिलो शील अर्थात संवर शीलले चित्त (मन) लाई वशमा राखी दृढ र स्थिर पार्छ, दोश्रो शील अर्थात कुशलधर्मसंग्राहक शीलले हाम्रो चित्तमा निहित भएका धर्मका गुणहरूलाई परिपक्व बनाइदिन्छ र तेश्रो शील अर्थात सत्त्वार्थक्रिया शीलले भने समस्त सत्त्वहरूलाई परिपाक (परिपक्व) गर्छ ।

**४. हरेक भेदका लक्षण**

**क. संवर शील** : संवर शीललाई हामीले अ. साधारण र आ. असाधारण गरी दुई वर्गमा बाँड्न सक्छौं ।

**अ. साधारण शील** : साधारण शील भन्नाले सात प्रकारका प्रातिमोक्ष शीललाई जनाउँदछ । जस्तो *बोधिसत्त्वभूमि* मा यस्तो उल्लेख छ :

> प्रातिमोक्ष शील अन्तर्गत सम्यक् ढङ्गले सात किसिमले शील ग्रहण गर्न सकिन्छ । ती सात हुन् : भिक्षु, भिक्षुणी, शिक्षामान, श्रामणेर, श्रामणेरिका, उपासक र उपासिका । तिनलाई पनि गृहस्थ र प्रव्रजित गरी दुइ वर्गमा विभाजन गर्न सकिन्छ ।[३]











ती सबैबाट अरुलाई हानि गर्ने कार्य हुँदै हुदैन । प्रातिमोक्ष संवर आफूलाई मात्र हित हुने संवर हो जबकी बोधिसत्त्वहरूले त अरूलाई हित गर्न शीलको पालना गर्छन् । *नारायणपरिपृच्छा सूत्र* मा भनिएको छ :

> बोधिसत्त्वले राज्यको लागि शीलको पालन गर्ने होइन, न स्वर्गको लागि, न त इन्द्रको पदको लागि, न त ब्रह्माको पदको लागि, न त धनसम्पत्तिको लागि, न त ईश्वरको पदका लागि, न त ऐश्वर्यको लागि वा न त सुन्दर रूपकै लागि शीलको पालना गर्छन् । यसरी नै नरकमा जन्मिने डरले उनले शीलको पालना गर्दैनन् न त पशुलोकमा जन्मिने भयले । न त यमलोकमा जन्मिने भयले उनले शीलको पालना गर्छन् । तिनको ठीक विपरीत उनले त सबै सत्त्वहरूलाई बुद्धत्वसम्म पुऱ्याउन शीलको पालना गर्छन् । सबै सत्त्वहरूको हित र सुखको निमित्त नै उनले शीलको पालना गर्छन् ।

**आ. असाधारण संवर शील** : असाधारण संवर शीलको सम्बन्धमा आचार्य शान्तिदेवले *आकाशगर्भसूत्र* लाई आधार मानेर यस्तो भन्नुभएको छ : "राजाका पाँच मूल आपत्ति, मन्त्रीका पाँच मूल आपत्ति र आदिकर्मिक (भर्खरको साधक) का आठ मूल आपत्ति गरी जम्मा अठाह्र मूल आपत्तिहरू छन् । यी अठारै मूलापत्तिहरू र चौध प्रहाणका शिक्षाहरूको अभ्यास गर्नु नै असाधारण संवर शील हो । जस्तो भनिएको छ :

1. त्रिरत्नका सम्पत्ति चोर्नुलाई पाराजयिक आपत्ति[४] भनिएको छ ;
2. सद्धर्मलाई परित्याग गर्नुलाई बुद्धले दोश्रो मूल आपत्ति भन्नुभएको छ ;
3. कुनै भिक्षु दुःशील (शीलभ्रष्ट) नै भएपनि, उसको काषाय वस्त्र (चीवर) छिनेर लिई उसलाई पिटेर बन्धनागार (जेल) मा हाल्ने कार्य पनि मूल आपत्ति मै गनिन्छ ;











4. उसलाई भिक्षुत्वबाट विमुख पार्ने
5. पाँच आनन्तरीय (पाँच महापाप) मध्ये कुनै महापाप गर्नु ;
6. मिथ्यादृष्टि राख्नु ;
7. गाउँ र शहरलाई ध्वस्त पार्नु[५] इत्यादिलाई बुद्धले मूल आपत्ति भन्नुभएको छ ;
8. अपरिपक्व (अव्युत्पन्न) हरूलाई शून्यताको गम्भीर उपदेश दिनु ;
9. संबुद्धत्वको अधिकारी सत्त्वलाई संबोधिबाट विमुख गर्नु ;
10. महायानमा ल्याउन कसैलाई प्रातिमोक्ष संवरलाई त्याग गराउनु ;
11. 'श्रावक यानमा राग आदिको प्रहाण हुँदैन' भनी ठान्नु र अरूलाई पनि त्यसरी नै ठान्न प्रेरित गर्नु ;
12. आफ्ना गुणहरूको बखान गर्नु ;
13. लाभ, सम्मान र प्रशंसा पाउन अरुलाई निन्दा बेइज्जत गर्नु
14. आफूसँग नभइकनै कसैलाई 'मसँग गम्भीर ज्ञान र क्षान्ति छ' भनेर झुठो कुरा बोल्नु ;
15. श्रामणेरलाई दण्ड दिन लगाउनु ;
16. त्रिरत्न वा त्रिरत्नका सम्पत्ति कसैलाई (गलत ढङ्गले र गैर कानुनी तवरले) दिनु वा लिनु ;
17. शमथको अभ्यास गरिरहेको व्यक्तिलाई शमथको अभ्यास त्याग्न लगाउनु ;
18. सबैथोक त्यागेर एकान्तमा अभ्यास गरी बस्नेको लागि उपयुक्त वस्तु अध्ययनमा समर्पित व्यक्तिलाई दिनु वा प्रस्तुत गर्नु ।

यी सबै मूल आपत्तिहरू हुन् जो महानरकका कारण हुन् ।[६]

असाधारण संवर शीलको सम्बन्धमा आर्य सुवर्णद्वीपीय (धर्मकीर्ति) ले बोधिसत्त्वभूमि लाई अनुशरण गरेर यस्तो भन्नुभएको छ, "चार मूल











पाराजयिक दुष्कर्म र छयालिस अरू दुष्कर्महरूलाई त्याग्ने अभ्यास गर्नु नै असाधारण संवर शील हो । चार पाराजयिक दुष्कर्मको बारे *बोधिसत्त्वभूमि* को सारांशका रूपमा *संवरविंशतिका* मा यसरी भनिएको छ :

> धनसम्पत्ति र यशको लोभले वा आशक्तिले आफूलाई प्रशंसा गर्नु र अरूलाई निन्दा गर्नु ;
> असाध्यै कृपणी भएर नि:सहाय दु:खी अनाथहरूलाई उचित धर्म र धन दानस्वरूप नदिनु ;
> कसैले माफी मागेपनि उसको माफी नसुनी क्रोधको वशमा परी उसलाई गाली गर्नु, कष्ट पुऱ्याउनु ;
> महायानलाई त्यागेर मिथ्या उपदेशहरू दिनु ।[७]

त्यसै ग्रन्थमा *छयालिस दुष्कर्महरू* लाई यसरी दिइएको छ :




1. हरेक दिन तीन चोटि त्रिरत्नको पूजा नगर्नु ;
2. आफ्ना तृष्णाहरूको वशमा पर्नु ;
3. श्रद्धेयजनहरूलाई आदर नगर्नु ;
4. कसैले प्रश्न सोधेमा त्यसको उत्तर नदिनु ;
5. अरूको निमन्त्रणालाई अस्वीकार गर्नु ;
6. खराब नियतले सुन आदि ग्रहण नगर्नु ;
7. धर्म सुन्न इच्छुक व्यक्तिलाई धर्मको उपदेश नदिनु ;
8. कुनै शील तोडेको व्यक्तिलाई उपेक्षा गर्नु ;
9. अरूको मनमा आफूप्रति श्रद्धा नडग्मगियोस् भन्नाको खातिर तिनी-हरूलाई शिक्षा नै नदिने ;
10. सत्त्व (प्राणी) हरूको हित गर्ने कार्यमा शिथिलता ल्याउने ;
11. कुनै बेला अरू सत्त्वहरूको हित हुन्छ भने बोधिसत्त्वले अकुशल कर्म पनि गर्छन्, त्यस्तो उनले करुणापूर्वक नै गर्छन्, त्यस्तो नगर्नु पनि दुष्कर्म नै हो ;











12. मिथ्याजीवलाई अङ्गीकार गर्नु (गलत बाटोबाट जीविकोपार्जन गर्नु) ;
13. नृत्य आदि मा मस्त रहनु ;
14. संसारमै रहीरहुँ भनेर सोँच्नु ;
15. अरूको दु:ख हटाउने कोशिस नगर्नु ;
16. क्लेशले भरिएका सत्त्वहरूको क्लेश हटाउने कोशिस नगर्नु ;
17. चार शिक्षाहरूको अभ्यास नगर्नु :
    - क. द्वेषको जवाफ द्वेषले नदिनु ;
    - ख. आफूलाई उक्साए पनि नरिसाउनु ;
    - ग. अरूले तिम्रा दोषहरू देखाउँदै हिँडे भन्दैमा तिमीले पनि उनीहरूको दोष नदेखाउने ;
    - घ. अरूले तिमीलाई पिट्यो भन्दैमा तिमीले पनि उनीहरूलाई नपिट्ने ;
18. तिमीसँग रिसाएकाहरूसँग बोल्दै नबोली वास्तै नगरी उनीहरूलाई परेको बेला मद्दत पनि नगर्ने ;
19. धर्म अनुसार कसैले क्षमा मागे पनि उसको क्षमालाई अस्वीकार गर्नु ;
20. क्रोधी चित्तको पछि पछि लाग्नु ;
21. धनसम्पत्ति र सम्मानको लागि मान्छेहरूलाई भेला पार्नु ;
22. निन्द्रा र मनोरञ्जन आदि जस्ता अल्छीपनालाई नत्याग्नु ;
23. नचाँहिदा व्यङ्गात्मक गफहरूमा समय खेर फाल्नु ;
24. आफ्नो चित्तलाई स्थिर पार्ने कोशिस नगर्नु ;
25. समाधिका पाँच नीवरणलाई नत्याग्नु :
    - क. कामच्छन्द
    - ख. व्यापाद
    - ग. स्त्यानमिद्ध
    - घ. औद्धत्य कौकृत्य
    - ङ. विचिकित्सा
26. समाधिका प्रस्रब्धि सुख, प्रभास्वर तथा अन्य सुखद अनुभूतिहरूमा टाँस्सिनु ;











27. श्रावकयानीहरूलाई आदर गर्न छोड्नु ;
28. बोधिसत्त्व शिक्षालाई छोडेर श्रावकका शास्त्रहरूका लागि परिश्रम गर्नु ;
29. बुद्धधर्मको अध्ययनतिर ध्यान नदिई अन्य तीर्थिक शास्त्रहरूको अध्ययनमा समय खर्चनु (परिश्रम गर्नु) ;
30. बुद्धधममा भन्दा तीर्थिक शास्त्रहरूमा बढी मिहेनत गर्नु ;
31. महायानलाई उपहास गर्नु वा त्याग्नु ;
32. आफूलाई प्रशंसा गरेर अरुलाई निन्दा गर्नु ;
33. अहंकार, आलस्य जस्ता मानसिक विकारहरूको वशमा परी दुर्लभ धर्म उपदेश सिक्न, सुन्न नजानु ;
34. आफ्नो गुरुलाई हेय दृष्टिले हेरेर अर्थलाई महत्त्व नदिई केवल शब्दहरूमा मात्र आश्रित हुनु ;
35. मर्का परेकाहरूलाई मद्दत नगर्नु ;
36. रोगीको सेवा सुश्रुषा गर्न छोड्नु ;
37. अरूको दु:ख हटाउने कोशिस नगर्नु ;
38. अप्रमादिहरूलाई तह लगाउने कोशिस नगर्नु ;
39. तिमीलाई गुण गरेकाहरूलाई सो गुणको बदला नचुकाउनु वा प्रत्युपकार नगर्नु ;
40. दु:खी आर्त्तहरू, शोकसंतप्तहरूका दु:ख शोकलाई नहटाउनु ;
41. आफूसँग सामर्थ्य भइकन पनि (आवश्यकता) भएकाहरूलाई दान नगर्नु ;
42. द्वेष, आसपासका आफन्त, मित्र, बन्धुवान्धवहरूलाई उपदेश र भौतिक वस्तु हरू उपलब्ध नगर्नु ;
43. द्वेष, रोष, ईर्ष्या आदि कारणले अरुको विचारसित आफू सहमत नहुनु ;
44. अरूका गुणहरूको प्रशंसा नगर्नु ;
45. आफू समर्थ भइकन पनि दुर्जनहरूलाई दमन नगर्नु ;
46. आफू ऋद्धिवान् भइकन पनि परेको बेला ऋद्धिद्वारा दुष्ट प्राणीहरूलाई दमन नगर्नु ; र मैत्रीले भरिएको कुशल चित्तले अकुशल काम गरेपनि त्यसलाई दोष मानिँदैन ।[८]











**ख. कुशलधर्मसंग्राहक शील** : बोधिसत्त्व संवर शीललाई सम्यक्‌रूपले (सही ढङ्गले) ग्रहण गरिसकेपछि बोधि प्राप्त गर्नको लागि काय, वाक् र चित्तको कर्मले जुन पुण्य आर्जन गरिन्छ त्यसलाई कुशलधर्मसंग्राहक शील भनिन्छ। ती शीलहरू के के हुन् भनी कसैले सोधेमा त्यसको जवाफ *बोधिसत्त्वभूमि* मा यसरी दिइएको पाइन्छ :

> बोधिसत्त्व शीलमा प्रतिष्ठित भएर अथवा तिनलाई पालना गरेर श्रुतमयी, चिन्तामयी र भावनामयी वीर्य वा परिश्रमले धर्मलाई जीवनमा उतारेर त्यसैमा सन्तुष्टि लिएर बस्छन् । गुरुजनहरूलाई आदर सत्कार गर्छन् । रोगी विरामीहरूको सेवा सुश्रुषा गर्छन् । अत्यन्तै उदार मनले दान गर्छन् । अरूका गुणहरूको तारीफ गर्छन् । अरूका पुण्य आर्जन गरेमा अनुमोदन गर्छन् र उनीहरूका निन्दालाई सहन्छन् । कुशलकर्महरूलाई बोधिमा परिणामना गर्छन् र बोधि प्राप्त गर्ने संकल्प (प्रणिधान) गर्छन् । त्रिरत्नको पूजा गर्छन् । वीर्यवान् (उत्साही) र अप्रमादी भएर रहन्छन् । स्मृति र संप्रजन्य सहित शिक्षा लिन्छन् । इन्द्रियहरूलाई वशमा राख्न सक्ने र भोजनको मात्रा जान्न सक्ने हुन्छन् । रातको प्रथम र अन्तिम प्रहरहरूमा ननिदाईकन योगाभ्यास गरिरहने हुन्छन् । संधै सत्पुरुष र कल्याणमित्रहरूको संपर्कमा रहन्छन् । आफ्नो गल्ती वा दोषलाई चिनेर हटाउँछन् ।
>
> बोधिसत्त्व ती कुशलधर्महरूलाई आर्जन गर्न, रक्षा गर्न र वृद्धि गर्न संधै लागिपरेका हुन्छन् । बोधिसत्त्वका ती कर्महरू नै कुशलधर्म संग्राहक शील हुन् ।[६]

**ग. सत्त्वार्थक्रिया शील** : संक्षेपमा हामीले जान्नुपर्ने सत्त्वार्थक्रिया शीलका शीर्षकहरू का बुदांहरू ११ ओटा छन् : ती के के हुन् ? *बोधिसत्त्वभूमि* का अनुसार :











> १. अर्थपूर्ण (सार्थक) क्रियाकलापहरूको समर्थन गर्नु, २. दुःख पाइरहेका प्राणीहरूका दुःख हटाउनु, ३. उपाय नजान्ने व्यक्तिहरूलाई उपाय सिकाउनु, ४. अरूले गरेको गुण संझेर गुणको बदला चुकाउँनु, ५. डराएका वा भयभीत भएकाहरूलाई अभयदान गरेर रक्षा गर्नु, ६. दुःखीहरूको दुःख हटाउनु, ७. मर्कामा परेकाहरूलाई आवश्यक सरसमाग्री दिई मद्दत गर्नु, ८. धार्मिक परिषद वा समुदाय गठन गर्नु, ९. धर्मको मर्मलाई बुझेर त्यसलाई आत्मसात् गरी एक आपसमा मिलेर बस्नु, १०. सद्गुणहरूमा प्रसन्न हुनु, र ११. कसैले गलत वा अकुशल कार्य गर्दैछ भने त्यसको गल्ती सच्याएर त्यसलाई सही मार्गमा ल्याउनु, ऋद्धिहरू देखाएर अरुको मनमा डर त्राश सिर्जना नगर्नु र धर्मोपदेशले अरूको मन जित्नु ।[१०]



यी बाहेक, आफू शीलबाट पतित नहुन र अरूमा आफूप्रति जुन श्रद्धा र विश्वास छ त्यसलाई यथावत् बनाइ राख्न बोधिसत्त्वले काय वाक र चित्त (त्रिद्वार) बाट गरिने तीन दुष्कर्महरूलाई त्यागी तीन शुभ कर्महरू अंगाल्छन् ।



*शरीरसँग सम्बन्धित कुकर्म वा संस्कार* : तीन प्रकारका संस्कार मध्ये शरीरसँग सम्बन्धित संस्कार वा दुष्कर्म कुनै उद्देश्य प्रयोजन विना नै यताउता बरालिँदै हिँडनु, दौड्नु अथवा यस्तै उद्दण्ड र चञ्चल मन हुनु । यस्तो आचरणलाई त्यागेर संधै हँसिलो मुहार पारी शान्त शौम्य ढङ्गले व्यवहार गर्नु नै राम्रो संस्कार हो । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

> आफ्नो मनलाई वशमा पारेर
> हामीले संधै हँसिलो मुख पार्नुपर्छ ।
> कसैसित पनि आँखीभौँ खुम्चिने गरी नरिसाई
> सम्पूर्ण जगत्कै मित्र भएर रहनुपर्छ ।[११]











अरूलाई कसरी हेर्नुपर्छ भन्ने बारे *बोधिचर्यावतार* ले यस्तो भन्छ :

सत्त्वहरूलाई सधैं प्रेमले भरिएका आँखाले
सजिलो र सरल भावले हेर्नुपर्छ
र उनीहरूकै मद्दतले मलाई
बुद्धत्व प्राप्त हुनेछ भनेर सोंच्नुपर्छ ।[१२]

बस्दाखेरी कसरी बस्नुपर्छ ? यस बारे *बोधिचर्यावतार* मा यस प्रकार भनिएको छ :

खुट्टा फैलाई बस्नुहुँदैन ।
दुवै हातलाई एकैसाथ मालिश गर्नुहुँदैन ।[१३]

खाना कसरी खानुपर्छ ? यस बारे *बोधिचर्यावतार* मै यसरी बताइएको छ :

मुखभरी ठूलो गास हालेर
आवाज निकाल्दै मुख फैलाएर खानुहुँदैन ।[१४]

हाम्रो चाल कस्तो हुनुपर्छ ? यस बारे पनि *बोधिचर्यावतार* मै यस्तो बताइएको छ :

मेचहरू वा अन्य सामानहरू राख्दा वा ओसार्दा
आवाज नआउने गरी विस्तारै गर्नुपर्छ ।
ढोका खोल्ने बन्द गर्ने पनि त्यसै गरी
शान्तपूर्वक गर्नुपर्छ ।
जेसुकै गर्दा पनि कम मात्र आवाज आओस्
भनी सदा सचेत् रहनुपर्छ ।[१५]











सुत्दा कसरी सुत्नुपर्छ ? यस बारे *बोधिचर्यावतार* मै यस्तो बताइएको छ :

जस्तो आसनमा भगवान् बुद्धले महापरिनिर्वाण हुँदाखेरी
लेट्नुभएको थियो, त्यही आसनमा
आफूले चाहेको दिशातिर शिरानी बनाई सुत्नुपर्छ ।[१६]

*वाक् (वचन) सँग सम्बन्धित कुसँस्कार* : नचाँहिदा गफ र पारुष्य बचन (अर्काको चित्त दुख्ने गरी बोल्नु) नै वाक् (वचन) सँग सम्बन्धित कुसँस्कार हुन् । ती दुवैलाई त्याग्नुपर्छ । तीमध्ये पैशुन्यप्रलापको बारेमा *रत्नमेघसूत्र* मा यसरी भनिएको छ :

नचाहिँदा गफ (संभिन्न प्रलाप) का दोषहरू निम्नानुसार छन् –
त्यस्तो ब्यक्ति सद्धर्मबाट तल गिर्छ,
उसको मन कठोर र रूखो बन्छ,
ऊ शमथ र विपश्यनाबाट
झन् झन् टाढिँदै जान्छ,
गुरुजनहरूप्रति उसको मनमा कुनै श्रद्धा हुँदैन ।
ऊ सधैं क्लेशले भरिएका बोलीहरू बोल्न रमाउँछ ।
व्यर्थमा समय खेर फालेर उसको प्रज्ञाले
ऱ्हासोन्मुख गति लिनथाल्छ ।
पैशुन्य प्रलापका दोषहरू यिनै हुन् ।

पारुष्य वचनका दोषहरूका बारेमा *चन्द्रप्रदीपसूत्र* मा यस्तो भनिएको छ :

आफूले अरूमा जस्तोसुकै दोष देखे पनि
त्यसलाई प्रचार गर्दै हिँड्नु हुँदैन,











किनकी हामीले जस्तो कर्म गऱ्यौं
त्यस्तै फल पाउँछौँ ।[१७]

यसै सम्बन्धमा *सर्वधर्माप्रवृत्तिनिर्देशसूत्र* मा यसरी बताइएको छ :

जसले बोधिसत्त्वका दोष आपत्तिका
बारेमा कुरा काट्छ,
ऊ बोधिबाट टाढै रहन्छ ।
इर्ष्याले चूर भएर अरुको दोष खोतल्दै फलाक्दै
हिँड्ने मान्छे बोधिबाट संधै टाढा हुन्छ ।

तसर्थ हामीले संभिन्न र पारुष्य प्रलाप दुवैलाई त्याग्नुपर्छ ।

*वाणीसँग सम्बन्धित कुशल संस्कार* : यसको बारेमा *बोधिचर्यावतार* मा यस्तो बताइएको छ :

व्यक्तिले बोल्दाखेरी सदा विश्वासयोग्य, सान्दर्भिक, अर्थ स्पष्ट हुने गरी, सुन्दा कर्णप्रिय लाग्ने किसिमले बोल्नुपर्छ । राग वा द्वेषको वशमा परी बोल्नुहुन्न, वरु एकदम नम्र स्वरले संयमित भएर बोल्नुपर्छ ।[१८]

*चित्तसँग सम्बन्धित कुसँस्कार* : लाभ र प्रशंसाप्रति आशक्ति र स्त्यानमिद्ध (निन्द्रा, शुष्कता वा शिथिलता) प्रति अनुराग इत्यादि दोषहरू नै चित्तसँग सम्बन्धित कुसँस्कार हुन् । तीमध्ये पहिलो 'लाभ र प्रशंसाप्रति आशक्ति' को विषयमा *अध्याशयसंचोदनसूत्र* मा यसरी भनिएको छ :

हे मैत्रेय ! लाभ र सत्कारप्रतिको आशक्तिले गर्दा राग उत्पन्न हुन्छ । लाभ र सत्कारप्रतिको आशक्तिले द्वेष उत्पन्न हुन्छ ।











> लाभ र सत्कारप्रतिको आशक्तिले गर्दा मोह उत्पन्न हुन्छ। लाभ र सत्कारप्रतिको आशक्तिले गर्दा छल उत्पन्न हुन्छ । लाभ र सत्कारप्रतिको आशक्तिले सबै कुशलमूलहरूलाई सखाप पारिदिन्छ र छलकपटी वेश्या जस्तै अरुलाई ठग्ने प्रवृतिको हुन्छ । यी सबै कुरा बोधिसत्त्वले जान्नुपर्छ, बुझ्नुपर्छ ।

धेरै धन वा लाभ भएर पनि व्यक्ति त्यतिले सन्तुष्ट हुँदैन । जस्तो *पितापुत्रसमागमसूत्र* मा यस्तो बताइएको छ :

> जसरी सपनामा देखिएको पानी पिएर कसैको प्यास मेटिदैन,
> त्यसरी नै कामगुणका विषयहरूलाई जतिसुकै उपभोग गरे पनि
> कसैलाई कदापि सन्तुष्टि मिल्दैन ।

हामी त्यस्तो सोँचाइ लिँदै आफ्ना इच्छाहरूलाई सीमित पारेर सदा सन्तुष्ट भएर रहन सक्छौँ ।

स्त्यानमिद्धप्रतिको अनुराग बारे यस्तो कथन छ :

> जो व्यक्ति तन्द्रालु र अल्छी भइ रहन्छ
> उसको बुद्धिको विनाश हुन्छ,
> उसको प्रज्ञामा पनि ऱ्हास आएर
> ऊ सदा परम ज्ञानबाट वञ्चित रहन्छ। शिक्षा समुच्चय, परि. ५

तथा :

> जो व्यक्तिले स्त्यानमिद्धप्रति अनुराग राख्छ,
> ऊ सधै अल्छी, निन्द्रालु र अज्ञानी हुने हुँदा
> ऊ सजिलै मारको चपेटामा पर्छ











> जंगलमा साधना गरिरहँदा मारहरूले
> उसलाई सताउने मौका पाउँछन् । शिक्षा समुच्चय, परि. ५

तसर्थ बोधिसत्त्वले यी सबै त्याग्नुपर्छ । हाम्रो हरेक सोँचाइमा प्रतिबिम्बित हुने विशुद्ध आशय वा सुसंस्कार भनेकै माथि (परिच्छेद २ मा) उल्लेखित श्रद्धा र अरू कुशल गुणहरू हुन् ।

**५. शीलको उपचय (अभिवृद्धि)** : माथि (परिच्छेद १२ मा) उल्लेखित ज्ञान, प्रज्ञा र परिणामनाद्वारा शीलको अभिवृद्धि हुनसक्छ ।

**६. शीलको विशुद्धि** : माथि (परिच्छेद १२ मा) उल्लेखित शून्यता र करुणाले युक्त भएपछि शीलको विशुद्धि हुन्छ ।

**७. शीलका फल** : शीलका अन्तिम र आवस्थिक गरी दुई फलहरू छन् । अन्तिम फलको रूपमा प्राणीले अनुत्तर सम्यक् सम्बोधि नै हासिल गर्छ । यस सम्बन्धमा *बोधिसत्त्वभूमि* मा यस्तो बताइएको छ :

> शील पारमिता पूरा गरेर बोधिसत्त्वले अनुत्तर सम्यक् सम्बोधि
> प्राप्त गर्छन् ।[१९]

आवस्थिक फलको रूपमा मानिसले इच्छा नै नगरे पनि सांसारिक सुख संवृद्धि प्राप्त गर्छ । यही कुरालाई *बोधिसत्त्वपिटक* मा यसरी प्रस्तुत गरिएको छ :

> हे शारिपुत्र ! त्यस्तो कुनै देवता र
> मानिसका ऐश्वर्य छैन जसलाई
> विशुद्ध शील पालना गरेका
> बोधिसत्त्वले उपभोग नगर्दा हुन् ।











तर सांसारिक सुख समृद्धिको लोभले वा तिनबाट अभिभूत भएर बोधिसत्त्वहरू बोधिपथमा लाग्ने होइनन् । जस्तो *नारायणपरिपृच्छासूत्र* मा भनिएको छ :

> शील पालना गर्ने बोधिसत्त्व चक्रवर्ती सम्राट वा इन्द्रको पदबाट तल खस्दैनन्, किनकी यस्तो अवस्थामा पनि उनी एकदम जागरुक भएर बोधिज्ञानको प्राप्ति तर्फ नै अग्रसर भइरहेका हुन्छन् ।

यति मात्र होइन, शीलसम्पन्न बोधिसत्त्व मनुष्य र अमनुष्य दुवै प्राणीका निमित्त पूजनीय पात्र बन्दछन् । *नारायणपरिपृच्छासूत्र* मा भनिएको छ :

> देवताहरूले सदा शीलसम्पन्न बोधिसत्त्वलाई वन्दना गर्छन् र उनको प्रशंसा नागहरूले पनि गर्छन् । यक्षहरूले सदा उनको गुण गाउँछन्, गन्धर्वहरू उनको पूजा गर्छन् । ब्राह्मण, क्षत्रीय, वैश्य र गृहपतिहरूले सधैं यस्ता बोधिसत्त्वलाई नै खोज्छन् । देवताहरू मात्र होइनन्, पूरै जगत्ले उनलाई अभिनन्दन् गर्दछन् ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
शीलपारमिता
नामक त्रयोदश परिच्छेद समाप्त ।









# परिच्छेद १४
# क्षान्ति पारमिता

क्षान्ति पारमितालाई निम्न शीर्षकहरूमा संक्षेपीकरण गर्न सकिन्छ :

गुण र दोषको निर्देश, स्वरूप, भेद,
हरेक भेदका लक्षण, उपचय (वृद्धि), विशुद्धि र फल
यी सात शीर्षकहरूमा क्षान्ति पारमिताका विषयवस्तु समाविष्ट छन् ।

१. **गुण र दोषहरूको निर्देश** : यदि कुनै व्यक्ति दानी र शीलवान् भएता-पनि ऊसंग क्षान्ति नै छैन भने उसलाई रीस (क्रोध) उठ्न सक्छ । क्रोध उत्पन्न हुनासाथ पहिले दान र शीलपारमिताद्वारा कमाएका सबै पुण्य एकै क्षणमा सखाप हुन्छन् । जस्तो *बोधिसत्त्वपिटक* मा भनिएको छ :

प्रतिघ (क्रोध) ले लाखौँ कल्पहरूदेखि सञ्चय गरिराखेका
कुशलमूललाई नाश गरिदिन्छ ।

*बोधिचर्यावतार* मा पनि यही कुरो बताइएको छ :

हजारौँ कल्प लगाएर जुन पुण्य सम्भार (सञ्चय)
बुद्धपूजा र दान आदि सत्कर्महरू गरेर गरिएको हुन्छ,
ती सबैलाई प्रतिघ अर्थात क्रोधले तुरुन्तै नष्ट पारिदिन्छ ।[1]

यो वाहेक, हामीमा क्षान्ति नै छैन भने हाम्रो चित्तमा द्वेष सजिलैसँग पस्न सक्दछ । मन द्वेषरूपी क्लेशले छोपिसकेपछि विषालु वाणले मुटु छेडे जस्तै हाम्रो मनमा तीव्र पीडाको अनुभव हुन्छ जसले गर्दा हामीले सुख,











खुशी र शान्ति पाउँदैनौँ । यहाँसम्म कि हामी राम्रोसँग निदाउन समेत सक्दैनौँ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

> द्वेषलाई बढावा दिने अत्यन्तै सानो विचार
> पनि हाम्रो मनभित्र पसिसकेपछि
> हाम्रो मनले शान्तिको अनुभूति गर्न छोड्छ,
> न त्यसले सुख र खुशी पाउँछ ;
> हाम्रो मन अत्यन्तै विचलित हुन्छ हामीलाई निन्द्रा पनि लाग्दैन ।[२]

तथा :

> संक्षेपमा भन्दाखेरी, सुखसँग रहनसक्ने त्यस्तो क्रोधी व्यक्ति
> कतै भेटिदै भेदिदैन ।[३]





यति मात्र होइन, धैर्य वा क्षान्ति नभएको मानिसको मनको भित्री गहिराइमा सधैं द्वेषले वास गरिरहने हुँदा, ऊ चण्ड, रूखो र केही भन्यो कि झनक्क रीस उठिहाल्ने प्रवृतिको हुन्छ । साथी, इष्टमित्र र नोकरचाकरहरू समेत ऊदेखि वाक्क हुन्छन्, विरक्तिन्छन् । फलस्वरूप उसले जतिसुकै धनसम्पत्ति खर्च गरेर फकाउन खोजे पनि साथीहरू ऊ नजीक आउन्नन् । त्यसकारण भनिन्छ :

> साथीहरू ऊदेखि डराउँछन्
> धेरै दान दिएर आकर्षित गर्न खोजे पनि
> उनीहरूले उसलाई सेवा गर्दैनन् बरु पर भाग्न खोज्छन् ।[४]

यसवाहेक, हामीसँग क्षान्ति भएन भने त्यसको फाइदा उठाएर मारहरू-ले हामीलाई आफ्नो जालमा फसाइ अनेक बाधा अड्चन्हरू खडा गरि-दिन्छन् । जस्तो *बोधिसत्त्वपिटक* मा भनिएको छ :











जसको चित्तमा द्वेषै द्वेष भरिएको छ, मारहरूले मौकाको फाइदा उठाइ बाधा अड्चनहरू तेर्स्याइदिन्छन् ।

यति मात्र होइन, क्षान्ति नै भएन भने हाम्रा छ ओटा मध्ये एउटा पार मिता त अधूरो नै रहन्छ । तसर्थ हामीले अनुत्तर सम्यक् सम्बोधि प्राप्त गर्न सक्दैनौँ । जस्तो *प्रज्ञापारमितासञ्चयगाथा* मा भनिएको छ :

जसको मनमा द्वेष भरिएको छ र क्षान्ति छैन, त्यो व्यक्तिले कसरी बोधि प्राप्त गर्न सक्ला ?[५]

यसको ठीक उल्टो, यदि हामी क्षान्तिले सुशोभित छौँ भने त्यो नै हाम्रो लागि सर्वश्रेष्ठ कुशलमूल हुनेछ । त्यसकारण भनिन्छ :

द्वेष जस्तो कुनै पाप छैन,
क्षान्ति जस्तो कुनै तपस्या छैन,
त्यसैले बडो परिश्रमपूर्वक
विभिन्न उपायद्वारा क्षान्तिको अभ्यास गर्नुपर्छ ।[६]

अरू कुरा, क्षान्तिले युक्त भएपछि व्यक्तिलाई आवस्थिक (सांवृतिक/लौकिक/वा सांसारिक) फलकै रूपमा पनि सबै सुख सुविधाहरू प्राप्त भइरहन्छन् । जस्तो बताइएको छ :

जसले परिश्रमपूर्वक क्रोधलाई नाश गर्छ
त्यसले यस लोक र परलोकमा
पनि सुख प्राप्त गर्दछ ।[७]

क्षान्तिले युक्त भएपछि हामीले अनुत्तर सम्यक् सम्बोधि प्राप्त गर्न सक्छौँ । जस्तो *पितापुत्रसमागमसूत्र* मा भनिएको छ :











'क्रोध बोधितर्फ लैजाने मार्ग होइन ।'
सधैं यस्तो विचार मनमा ल्याउनाले
मैत्रीचित्त उत्पन्न हुन्छ ।
मैत्रीको भावनाबाटै बोधिज्ञानको प्राप्ति हुन्छ ।

२. **क्षान्ति पारमिताको स्वरूप** : सहिष्णुता वा जस्तोसुकै परिस्थितिमा पनि मनलाई शान्त पारिराख्नु नै क्षान्तिको स्वरूप हो । यही कुरा *बोधिसत्त्वभूमि* मा पनि उल्लेखित छ :

लोक धर्महरू (सांसारिक प्रपञ्चहरू) लाई
वास्तै नगरी करुणाद्वारा अभिप्रेरित भएर
सत्त्वहरूप्रति सहनशील (सहिष्णु) हुने
चित्त नै क्षान्तिको स्वरूप हो ।[८]



३. **क्षान्ति पारमिताका भेदहरू** : क्षान्ति तीन थरीका हुन्छन् । ती हुन् : क. परापकार मर्षणा क्षान्ति, ख. दु:खाधिवासना क्षान्ति र ग. धर्मनिध्यानाधि-मोक्ष क्षान्ति ।



तीमध्ये पहिलो क्षान्ति अर्थात परापकार मर्षणा क्षान्ति भन्नाले हामीलाई हानि गर्ने वा हाम्रो कुभलो चिताउने प्राणीको वास्तविक स्वभाव कस्तो हुँदो रहेछ भन्ने कुरा राम्रोसँग जाँचिसकेपछि त्यसलाई पहिचान गरेर सहनशीलताको अभ्यास गर्नु हो । दोश्रो अर्थात दु:खाधिवासना क्षान्ति भन्नाले हामीलाई आइपर्ने दु:खकै वास्तविक स्वभाव पहिल्याएर क्षान्तिको अभ्यास गर्नु हो । तेश्रो अर्थात धर्मनिध्यानाधिमोक्ष क्षान्ति को अर्थ सबै धर्मको वास्तविक वा भ्रमित हुनै नसकिने स्वभाव (तथता) को बारेमा प्रतिवेक्षणा (मनमनै परीक्षा) गरेर क्षान्तिको अभ्यास गर्नु हो । अर्को शब्दमा भन्नुपर्दा, पहिला दुई क्षान्ति परापकार मर्षणा क्षान्ति र दु:खाधिवासना क्षान्तिको भावना सांवृतिक (व्यवहारिक) अर्थमा गरिन्छ भने पछिल्लो क्षान्ति अर्थात धर्मनिध्यानाधिमोक्ष क्षान्तिलाई परमार्थरूपमा लिइनुपर्छ ।











### ४. हरेक भेदका लक्षण

**क. परापकार मर्षणा क्षान्ति** : पहिलो भेद अर्थात परापकार मर्षणाको लक्षण के हो भन्दाखेरी हामी वा हाम्रा कुनै प्रिय आफन्तलाई कसैले बेस्सरी कुटे पनि, चित्त दुख्ने गरी गाली गरेपनि वा निन्दा गरे पनि, साऱ्है हेपे पनि, अपमान वा इत्यादि गरे पनि हामी त्यो व्यक्तिमाथि जाइ लाग्दैनौँ बरु सहेर बस्छौँ । अर्को शब्दमा अरूले हामीलाई जस्तोसुकै गरेपनि आफ्नो मनलाई विचलित हुन नदिइ बदला लिने भावना वा कुनै प्रकारको रोष मनमा नराख्नु नै क्षान्तिको अभ्यास हो ।

शान्तिदेवका अनुसार, हामीले निम्न बुँदाहरूलाई राम्ररी प्रतिवेक्षणा (मनमनै चिन्तन) गर्नुपर्छ :

1. मलाई हानि गर्ने व्यक्ति आफैले आफ्नो मनलाई वशमा पार्न सकेको छैन ;
2. मेरो आफ्नै कर्मले गर्दा त्यस्तो अपकार सहनुपऱ्यो ;
3. यसमा मेरो शरीर नै दोषी छ ;
4. यसमा मेरो आफ्नो मन नै दोषी छ ;
5. हामी दुवै त्यत्तिकै दोषी छौँ ;
6. त्यो हानिकारक व्यक्तिले अप्रत्यक्ष तवरले मलाई लाभ पो पुऱ्याइराखेको छ ;
7. म त्यो हानिकारक व्यक्तिप्रति ज्यादै कृतज्ञ छुँ ;
8. त्यो हानिकारक व्यक्तिले मलाई बुद्धत्त्वका मार्ग अभ्यास गर्ने मौका प्रदान गरिराखेको छ ;
9. ऊबाट मलाई धेरै लाभ पो हुने रहेछ ;

**1. मलाई हानि गर्ने व्यक्ति आफैले आफ्नो मनलाई वशमा पार्न सकेको छैन** : यो पहिलो वाक्यलाई यसरी स्पष्ट पारौँ : देवदत्त जस्ता प्राणीहरू जो अरूलाई हानि गर्न रुचाउँछन् आफै द्वेषको वशमा परेर











स्वतन्त्र हुन सकेका छैनन् । द्वेषले गर्दा विक्षिप्त छन् विचाराहरू ! मनमा द्वेषको उपस्थिति हुनासाथ द्वेषका विषय वा आलम्बनलाई घृणा नगर्ने वा मनलाई अप्रिय नलाग्ने भन्ने त हुँदै हुन्न । त्यस्तो शक्ति मानिसमा हुँदै हुँदैन । ऊ आफै विक्षिप्त छ वा स्वतन्त्र छैन भने के बदला लिएर उसलाई झन् दुःख दिने मैले ? अहँ, त्यसो गर्नु उचित हुँदैन । त्यसैले भनिएको छ :

> सबै अरू नै कुनैको वशमा हुन्छन्
> तसर्थ आफ्नै वशमा कोही पनि हुन्न
> जब हामी यो कुरा बुझ्छौं,
> मायावत् निर्माण सरह[९]
> यी निरीह धर्म (वस्तु, व्यक्ति,
> वरिपरिका सबै) प्रति क्रोधी हुनेछैनौं ।[१०]



**2.**. **मेरो आफ्नै कर्मले गर्दा त्यस्तो अपकार सहनुपर्‍यो** : जस्तो हानि दुःख हामीले आज सहदैछौं, पूर्व जन्ममा अरूलाई त्यसरी नै हानि दुःख गरेर आएका थियौं । तसर्थ, यो त मेरै कर्मको फलस्वरूप हुन गएको रहेछ, त्यसमा मैले बदला लिने त कुरै भएन । त्यसैले भनिन्छ :



> पूर्वजन्ममा मैले अरू प्राणीहरूलाई त्यसरी
> नै हानि गरेर आएको रहेछु । त्यसैले,
> अरूलाई दुःख दिने म जस्ता व्यक्तिलाई
> सजायँस्वरूप हानि वा दुःख दिइनुपर्ने त उचित नै छ ।[११]

**3. यसमा मेरो शरीर नै दोषी छ** : मसँग यो शरीर नै नभएको भए अरूले यसलाई आफ्ना हतियारहरू प्रहार गर्ने लक्ष्य नै बनाउने थिएनन् । मैले यो शरीर धारण गरिराखेको छु, यही दोषले गर्दा मैले चोटपटक, हानि इत्यादि सहनुपर्छ, यसमा बदला लिने कुरै आउँदैन । जस्तो भनिएको छ :











हतियार र मेरो शरीर दुवै मेरो दुःखका कारणहरू हुन् ।
उसंग हतियार छ र मसंग शरीर,
अब म कोसित रिसाउँने ?[१२]

**4. यसमा मेरो आफ्नो मन नै दोषी छ** : यो शरीर स्वभावैले हानि चोटपटक खप्न सक्ने वज्रसमान कठोर अत्युत्तम वस्तु हो भनेर म ठान्दिन । यसको ठीक विपरीत यो शरीर त क्षणभङ्गुर छ र तुच्छ छ । सानातिना हानि चोटबाट पनि यो सजिलै प्रभावित हुन्छ । सबै मेरो आफ्नै मनले गर्दा भएका हुन्, आफ्नै मन दोषी भएपछि अरूसित बदला लिने त कुरै आउँदैन । जस्तो भनिएको छ :

म आफै अन्धो तृष्णाको वशमा परी
मनुष्य शरीररूपी छुँदाखेरी असाध्यै दुःख्ने
सुनिएको फोकामा टाँसिएर बसेको छुँ भने
अरू सित रिसाउँने कुरा आउँछ र ?[१३]

**5. हामी दुवै त्यत्तिकै दोषी छौँ** : यस सम्बन्धमा *बोधिचर्यावतार* मा यस्तो लेखिएको छ :

मोहको कारणले कसैले अपराध (हानि) गर्छ,
मोहकै कारणले कोही ऊसित रिसाँउछ ।
अब कसलाई अपराधी भन्ने र कसलाई निर्दोषी भन्ने ?[१४]

तसर्थ माथिका वाक्यलाई राम्ररी ध्यानमा राखेर हामी सधैं द्वेष जस्ता दोषहरूबाट पर रहेर क्षान्तिको अभ्यास गर्नुपर्छ ।

**6. त्यो हानिकारक व्यक्तिले अप्रत्यक्ष तवरले मलाई लाभ पो पुऱ्याइ-राखेको रहेछ** : जसले मलाई हानि गर्छ, मलाई दुःख दिन्छ मैले त वास्तवमा











ऊसित पो क्षान्तिको अभ्यास गर्ने हो । त्यस्तो क्षान्ति अभ्यासद्वारा मेरा अकुशल कर्महरू परिशोधन (नाश) हुन्छन् र अकुशल कर्महरू शोधन भइसकेपछि पुण्य संभार गर्न सकिन्छ । पुण्य सम्भारलाई पूरा गरेर मैले बोधि नै प्राप्त गर्नेछु । तसर्थ, मलाई हानि गर्ने त्यो मानिस त साँच्चिकै ठूलो कल्याणमित्र पो रहेछ । त्यसैले म उसको अपकारलाई सहनुपर्छ । जस्तो भनिएको छ :

यिनीहरूले गरेका हानि दुःख इत्यादिलाई सहेर
यिनीहरूकै भरमा म थुप्रै पापहरूको शोधन गर्छु ।[१५]

**7. म त्यो हानिकारक व्यक्तिप्रति ज्यादै कृतज्ञ छु :** क्षान्ति पारमिता बिना बोधि प्राप्ति सम्भव छैन । हानिकारक व्यक्ति बिना हामी क्षान्तिको अभ्यास पनि गर्न नसक्ने हुन्छौं । तसर्थ त्यो हानिकारक व्यक्तिले गर्दा मैले क्षान्तिको अभ्यास गर्ने मौका पाइराखेको छु, त्यस अर्थले उनी त मेरो कल्याणमित्र पो रहेछन् । म उनीप्रति आभारी हुनैपर्छ । जस्तो भनिएको छ :

मेरा शत्रुहरू छन् त्यसैले म खुशी छुँ ।
किनकी मेरो बोधिचर्यामा सहायता गर्ने त उनीहरू नै हुन् ।
उनीहरूसित नै म क्षान्तिको अभ्यास गर्न सक्षम हुन्छु ।
मेरो क्षान्तिको फल त सर्वप्रथम उनीहरूलाई नै दिइनुपर्छ ।
त्यसकारण उनीहरू मेरो क्षान्तिका उत्प्रेरक हुन् ।[१६]

**8. त्यो हानिकारक व्यक्तिले मलाई बुद्धत्वका मार्ग अभ्यास गर्ने मौका प्रदान गरिराखेको छ :** उपरोक्त सम्बन्धमा निम्न एउटा श्लोकमा यस्तो बताइएको छ :

यी सबका अतिरिक्त, सबैलाई असंख्य उपकार गर्ने
स्वच्छ निष्कपट हृदयले सबै सत्त्वहरूसित मित्रता गाँस्ने











बुद्धहरूको जुन ऋण छ त्यो ऋण तिर्ने उपाय
प्राणीहरूलाई नै खुशी पार्नु बाहेक अरू हुनै सक्दैन ।[१७]

**9.. ऊबाट मलाई धेरै लाभ पो हुने रहेछ** : यस बारे यस्तो बताइएको छ :

सत्त्वहरूलाई रिझाउने वा आराधना गर्ने
धेरैले आफ्नो पारमिता पूरा गरेका छन् ।[१८]

*बोधिसत्त्वभूमि* मा यसरी बताइएको छ :

पाँच संज्ञाहरूलाई मनमा विकसित गरेर क्षान्तिको अभ्यास गर्नुपर्छ । ती हुन् : १. सुहृत संज्ञा अर्थात हामीलाई दुःख दिने वा हानि गर्ने व्यक्तिलाई मन पराउनु, २. धर्ममात्र अनुसारिणी संज्ञा अर्थात सबै धर्महरू प्रतीत्यसमुत्पन्न (परस्पर निर्भर) छन् भन्ने संज्ञा, ३. अनित्य संज्ञा, ४. दुःख संज्ञा र ५. परिग्रह संज्ञा अर्थात सबै प्राणीहरूलाई पूर्णरूपले आत्मसात् गर्नु ।[१९]

पहिलो सुहृत संज्ञाको अर्थ हामीलाई दुःख दिने व्यक्तिलाई अत्यन्तै प्यारो ठानी मन पराउनु हो । यही दुःखदायक प्राणी पूर्व जन्महरूमा हाम्रा आफ्नै आमा बाबु वा गुरु भएर आइसकेका छन् र हामीले उनीहरूबाट धेरै लाभहरू पनि पाइसक्यौँ । अहिले आएर उनीहरूले हामीलाई अलिकति दुःख दिए भन्दैमा उनीहरूसित बदला लिन मिल्छ ? पक्कै पनि मिल्दैन । त्यसैले उनीहरूलाई अत्यन्तै प्यारो ठानी हामीले क्षान्तिको अभ्यास गर्नुपर्छ ।

दोश्रो धर्ममात्र अनुसारिणी संज्ञा सबै धर्महरू (प्राणी र वस्तुहरू) प्रतीत्य समुत्पन्न छन् भनी जान्नु हो । हामीलाई हानि अथवा दुःख दिने जुन प्राणी छ त्यो प्रत्ययहरूको वशमा छ । त्यसैले 'हानिकारक व्यक्ति वा शत्रु' हाम्रो मनले प्रक्षेपण गरेका संज्ञा मात्रै हुन् जसको आफ्नै स्वभाव











छैन । त्यसैले दुःख दिने, प्रताडना गर्ने वा आक्षेप प्रहार गर्ने आत्म, सत्त्व, जीव वा व्यक्ति सबै शून्य छन् वा तिनीहरू निःस्वभाव छन् । हामीले त्यस्तो सोंचेर क्षान्तिको अभ्यास गर्नुपर्छ ।

तेश्रो, अनित्य संज्ञा : सबै प्राणीहरू स्वभावैले अनित्य छन् र मरणशील छन् । त्यसैले हामीबाट अरूलाई हुने सबैभन्दा ठूलो विभत्स हानि नै उनीहरूको ज्यान लिनु हो । ती प्राणीहरू प्राकृतिकरूपले आफै मिति पुगे पछि मर्नैपर्छ भने के हामीले उनीहरूलाई मार्न जरुरी छ ? यो उचित पक्कै पनि कुरा होइन । यसरी सोंचेर क्षान्तिको अभ्यास गर्नुपर्छ ।

चौथो, दुःख संज्ञा : सबै प्राणीहरू तीन प्रकारका दुःखले पीडित छन् । झन् मैले उनीहरूको दुःख हटाउनु पर्नेमा वा उनीहरूलाई कुनैपनि दुःख नहोस् भन्नुपर्नेमा उल्टै उनीहरूलाई हानि गर्दै हिड्ने ? यो उचित कुरा होइन । त्यसैले उनीहरूका दुःख राम्ररी संझेर बुझेर उनीहरूले हामीलाई जस्तोसुकै हानि गरे पनि सहेर क्षान्तिको अभ्यास गर्नुपर्छ ।

पाँचौ, परिग्रह संज्ञा : हामी सबै प्राणीहरूको हित होस्, उनीहरूले बुद्धत्व प्राप्त गरुन् भन्ने मनसाय लिएर बोधिचित्तोत्पाद गर्छौं । त्यस अर्थले सबै प्राणीहरूलाई आत्मीय ठानी अंगाल्नुपर्ने ठाउँमा उनीहरूले हामीलाई अलि दुःख दिए भन्दैमा उनीहरूसित बदला लिन खोज्नु उचित हुन्छ ? हुँदैन ।

**ख. दुःखाधिवासना क्षान्ति** : दोश्रो प्रकारको क्षान्ति दुःखाधिवासना क्षान्ति हो । बोधिपथमा लागिरहदा आइपर्ने दुःख कठिनाइहरूबाट हामी विक्षिप्त हुने होइन । ती दुःखहरूलाई बोधिपथमा सहयोगी मार्गदर्शकको रूपमा स्वेच्छाले खुशीसाथ ग्रहण गरेर अभ्यास गरिरहनुपर्छ । जस्तो *बोधिसत्त्वभूमि* मा भनिएको छ :

> सन्निश्रय-अधिष्ठान (ठाउँसंग सम्बन्धित दुःख आदि) दुःख जस्ता जीवनबाट अभिन्न आठ दुःखहरू लाई स्वेच्छाले सहनु..............[२०]











सामान्यतयाः यी आठ दु:खहरू जुन श्रम (making effort) सित सम्बन्धित छन् देहायबमोजिम हुन् :

1. गृहत्याग गरेर भिक्षु भइसकेपछि खाने (भिक्षाटन) लाउने (चीवर प्राप्त गर्ने) समस्या वा दु:ख आइपर्ने
2. त्रिरत्न र गुरुहरूको पूजा र आराधना गर्ने काममा आइपर्ने कठिनाई
3. धर्म सुन्नमा कठिनाई
4. धर्मको व्याख्या वा उपदेश दिनमा कठिनाई
5. स्वाध्ययनमा कठिनाई
6. धर्मलाई व्यवहारमा उतार्नमा कठिनाई
7. पहिलो र अन्तिम प्रहरमा नसुतिकन आफूलाई साधनामा तल्लीन राख्नमा कठिनाई,
8. सबै सत्त्वहरूको कल्याणार्थ एघार प्रकारका कार्यहरू (परिच्छेद १३ मा उल्लेखित) गर्नमा कठिनाई

अलिकति पनि निराश, थकित नभई, तातो चीसो केही नभनी, भोक प्यास केहीको पनि परवाह नगरी र मनलाई विचलित हुन नदिई जेजस्ता दु:ख कठिनाई आइपर्छन् सबै स्वेच्छाले सहनुपर्छ । जसरी कुनै विषाक्त रोगबाट निको हुन हामी आफ्नै शरीरको शल्यक्रिया, रक्तस्राव इत्यादि स्वेच्छाले गराउँछौ, यी सबैमा पनि दु:ख नै हुन्छ तर हामी तिनलाई सहर्ष स्वीकार्छौं किनकी त्यसले हाम्रो रोग निको हुन्छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

> मेरो बुद्धत्वको साधनामा जुन दु:ख कठिनाइहरू आइपर्छन्
> ती सबै वास्तवमा धेरै नै साना र सीमित छन् ;
> शरीरका अङ्गमा काँडो बिभ्दा जुन तीव्र पीडा हुन्छ
> त्यो पीडाबाट बच्न हामी त्यो काँडो निकाल्छौं ।











> त्यो बेला पनि हामीलाई अलिकति भएपनि पीडा त हुन्छ नै ;
> ती दुःख कठिनाइहरू पनि त्यही पीडा समान छन्
> जसलाई हामी ठूलो लक्ष्य प्राप्तिका लागि सहन्छौँ ।[२१]

जो व्यक्तिले क्षान्तिको अभ्यासले संसाररूपी रणभूमिमा क्लेशरूपी शत्रुहरूसँग लडेर तिनीहरूलाई परास्त्र गर्छ ऊ नै साँच्चिकैको योद्धा हो । यस संसारमा योद्धाहरू मरणशील साधारण शत्रुलाई मारेर नाम कमाउँछन् । उनीहरू साँच्चिकैका योद्धा हुँदै होइनन् । उनीहरूको कार्य मरेकालाई तलवारले मार्नु जस्तै हो । *बोधिचर्यावतार* मा बताइएको छ :

> साँच्चिकैका वीर योद्धा त तिनीहरू हुन् जसले जस्तोसुकै दुःख सहनुपरेपनि त्यसको पटक्कै परवाह नगरी द्वेषरूपी शत्रुमाथि विजय प्राप्त गर्दछन् । अरू त मरेकालाई मार्ने जस्ता मात्र छन् ।[२२]




**ग. धर्मनिध्यानाधिमोक्ष क्षान्ति** : यस सम्बन्धमा *बोधिसत्वभूमि* मा यसरी देखाइएको छ :

> त्रिरत्नका गुण लगायत आठ अधिष्ठानहरू (शीर्षकहरू) र दुई प्रकारका नैरात्म्य (अनात्मा) -पुद्गल नैरात्म्य र धर्म नैरात्म्य - को स्वभाव निहित भएको तत्त्वज्ञान (मन र अरू सबै दृष्टिगोचर चराचर जगत्को वास्तविक रूपसम्बन्धी ज्ञान) बारे जान्ने र अवबोध गर्ने चाहना वा इच्छा (अधिमुक्ति) राखी क्षान्तिको अभ्यास गर्नु नै धर्मनिध्यानाधिमोक्ष क्षान्ति हो ।[२३]

**५. उपचय (वृद्धि)** : परिच्छेद १२ मा दानपारमिताको उपचय शीर्षक अन्तर्गत व्याख्या गरिएभैँ क्षान्ति पारमिताको अभिवृद्धि ज्ञान, प्रज्ञा र परिणामनाबाट हुन्छ ।











**६. विशुद्धि वा पूर्णता** : परिच्छेद १२ मा दानपारमिताको विशुद्धि शीर्षक अन्तर्गत बताइएझैँ शून्यता र करुणाले थामिएपछि क्षान्तिको विशुद्धि हुन्छ ।

**७. फल** : क्षान्तिका फल पनि अन्त्य र आवस्थिक (सांसारिक) गरी दुई प्रकारकै हुन्छ । तीमध्ये अन्त्य वा परमार्थ फल भन्नाले अनुत्तर बोधि प्राप्त हुनु नै हो । जस्तो *बोधिसत्त्वभूमि* मा भनिएको छ :

> अत्यन्तै विशाल, प्रमाणातीत एवं महाबोधिरूपी फल दिने क्षान्तिको आश्रय लिएर बोधिसत्त्वले अनुत्तर सम्यक् सम्बोधि प्राप्त गर्दछन् ।[२४]

क्षान्तिका आवस्थिक (सांसारिक वा लौकिक) फलस्वरूप हाम्रा सुन्दर रूप हुनेछ, हाम्रो नाम जहाँ तही फैलिनेछ, हाम्रो आयु लामो हुनेछ, अनेक जन्महरूमा हामी चक्रवर्ती सम्राट बन्नेछौँ । हामीले इच्छा नगरे पनि यस्ता फलहरू हामीलाई त्यसै प्राप्त भइनै रहनेछन् । *बोधिचर्यावतार* मा पनि यही कुरा बताइएको छ :

> क्षान्तिको राम्रो अभ्यास गरेमा
> भवचक्र (संसार) मा घुम्दाघुम्दै पनि
> प्राणीले सुन्दर रूप, निरोगी शरीर पाउँने मात्र नभइ
> उसको ख्याति पनि चारैतर्फ फैलनेछ र
> चक्रवर्ती सम्राटको जस्तो उत्तरोत्तर वृद्धि हुँदै
> गइराख्ने सुख समृद्धि उसले पाउँनेछ ।[२५]

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
क्षान्तिपारमिता
नामक चर्तुदश परिच्छेद समाप्त ।









# परिच्छेद १५
# वीर्य पारमिता

वीर्य पारमिताको सारांश निम्न शीर्षकहरूमा पाउन सकिन्छ :

गुण र दोषको निर्देश, स्वरूप, भेद,
हरेक भेदका लक्षण, उपचय (वृद्धि), विशुद्धि र फल
यी सात शीर्षकहरूमा वीर्य पारमिताका विषयवस्तु समाविष्ट छन् ।

१. **गुण र दोषहरूको निर्देश** : दानी, शीलवान् र क्षान्तिवान् भएता पनि वीर्यको अभावमा हामी अल्छी हुन्छौं । अल्छी भयौं भने न हामीले कुशलमूल सञ्चय गर्न सक्छौं, न त अरूको हितको लागि कार्य नै गर्न सक्छौं । यसर्थ हामीले बोधि पनि प्राप्त गर्न सक्दैनौं । जस्तो *सागरमतिपरिपृच्छासूत्र* मा भनिएको छ :

> अल्छी व्यक्ति न दानी हुन्छ न ज्ञानी हुन्छ । उसले अरूको हितको लागि कार्य गर्दैन । त्यसैले ऊ बोधिबाट धेरै टाढा रहन्छ ।

अर्कोतर्फ, यदि हामी वीर्यले सुशोभित छौं भने सबै कुशल गुणहरू प्रकाशित हुन्छन् र झन् झन् बढ्दै जान्छन् । *प्रज्ञापारमिता सञ्चयगाथा* मा यस्तो भनिएको छ :

> वीर्यले गर्दा कुशल (शुक्ल) गुणहरूको
> नोक्सानी वा हानि हुँदैन ।
> उसले बुद्धहरूका अनन्त ज्ञानको भण्डार प्राप्त गर्छ ।[1]











यसको अतिरिक्त वीर्यवान भएमा सत्कायदृष्टिको पहाड नाँघ्न सकिन्छ। जस्तो *महायानसूत्रालंकार* मा भनिएको छ :

> वीर्यले गर्दा प्राणीले सत्काय् दृष्टिको पहाड नाँघेर मुक्ति प्राप्त गर्छ।[२]

त्यति मात्र होइन, वीर्यले युक्त भएमा अति शीघ्र अनुत्तर बोधि पनि लाभ हुन्छ : जस्तो *महायान सूत्रालंकार* मा भनिएको छ :

> वीर्यले बोधि प्राप्त गराउँदछ।[३]

त्यस्तै, *सागरमतिपरिपृच्छासूत्र* मा यस्तो भनिएको छ :

> जो सदैव प्रयत्नशील रहन्छ, उसको लागि अनुत्तर सम्यक् सम्बोधि कुनै कठीन कुरा होइन। किनभने हे सागरमति, जहाँ वीर्य हुन्छ त्यहाँ बोधि हुन्छ।

त्यसरी नै, *पूर्णपरिपृच्छासूत्र* मा यस्तो भनिएको छ :

> अथक परिश्रम (वीर्य) गर्नेहरूलाई
> बोधि प्राप्ति कुनै दुष्कर
> वा कठीन कुरो होइन।

२. **वीर्य पारमिताको स्वरूप** : कुशल कार्य वा कर्ममा उत्साह हुनु नै वीर्यको स्वरूप हो। *अभिधर्मसमुच्चय* का अनुसार :

> वीर्य कौसीद्य (अल्छीपना) को प्रतिपक्ष/विपक्ष (उपचार) हुनाका साथै आफ्नो मनलाई कुशल कर्ममा लगाउनु पनि हो।











*सूत्रालंकारटीका* मा पनि त्यही बताइएको छ :

> कुशल कर्ममा सम्यक् उत्साह जगाउनु नै वीर्यको स्वरूप हो ।[४]

वीर्य कौसीद्य वा अल्छिपनाको ठीक विपरित वा प्रतिपक्ष हो । कौसीद्य बोधिको लागि बाधक हो । कौसीद्य तीन थरीका हुन्छन् : २.१. आलस्य २.२. अवसाद वा विषाद, २.३. कुत्सितासक्ति ।[५]

२.१. **आलस्य** : यिनमध्ये पहिलो आलस्य भनेको काय र चित्तको अकर्मण्यता हो । यसमा सुत्ने र पल्टिरहने र सधैं निद्रालु अनुहार पारी बस्ने जस्ता कामलाई सुख सम्झिने हुन्छ वा त्यही सुखमा आशक्त हुनु नै आलस्य हो भनेर बुझ्नुपर्छ । यी सबैलाई त्यागिनुपर्छ । ती सबैलाई किन त्यागिनुपर्छ त ? किनकि यो छोटो जीवनमा यी सबैका लागि समय छैन । एउटा सूत्रमा भगवान् बुद्धले यस्तो भन्नुभएको छ :

> हे भिक्षुहरू हो ! विज्ञान (Consciousness) को क्षय हुँदै गएपछि जीवन अन्त्यतिर आइपुग्छ । अनि प्राण वायु शरीरबाट बाहिर निस्कने छ । बुद्धको उपदेश पनि निश्चयनै समाप्त हुनेछ । यस्तो अवस्थामा पनि तिमीहरू मिहेनती र जाँगरिलो भएर किन अभ्यास गर्दैनौ ?

*बोधिचर्यावतार* मा भनिएको छ :

> मृत्यु शीघ्र नै आउँदैछ, अहिले समय छँदै
> सक्दो चाँडो कुशलकर्महरूको सञ्चय गरिहाल्नू ।[६]

'अहिले त म मर्दिन नि, यी सब कुशलकर्महरू मर्नु अगाडि मात्र सञ्चय गरे भइहाल्छ नि' भनी सोँच्न थाल्यो भने सम्झनू कि मृत्यु











आइपुग्दा यी सब कर्महरू गर्नै भ्याँइदैन । *बोधिचर्यावतार* मा यही कुरा-लाई यसरी प्रस्तुत गरिएको छ :

त्यो बेला आलस्य छोडेर जोश जाँगर पैदा गरेपनि
ती सबको के नै प्रयोजन हुन्छ ।
त्यसको लागि तिमीसँग समय नै बाँकी रहनेछैन ।[७]

कुशलमूल संभार (सञ्चय) नगरुञ्जेलसम्म मेरो मृत्यु हुनेछैन भनी नसोँचे हुन्छ किनकि मृत्यु जुनैबेला पनि आउन सक्छ । त्यसैले त्यस्तो खोक्रो आत्म विश्वासको कुनै अर्थ छैन । तसर्थ भनिन्छ,

यो मृत्युलाई विश्वास गर्नु हुँदैन
कसैले कुनै काम सिध्याएको वा नसिध्याएको
त्यो सब हेरेर पर्खेर बस्दैन
को स्वस्थ को रोगी उसलाई
त्यसको केही मतलव हुँदैन
अकस्मात् वज्रिन आइपुग्ने ठूलो वज्रपात जस्तै
आएपछि टप्प टिपेर लान्छ ।[८]

त्यसो भए यो आलस्यलाई कसरी हटाउने त ? हाम्रो काखमा सर्प बस्न आयो भने वा टाउकाको एउटा मात्र रौँमा आगो लाग्यो भने पनि हामी आत्तिँएर त्यसलाई तुरुन्तै फाल्छौँ, हो त्यसै गरी यो आलस्यलाई पनि पन्छाउनुपर्छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

जसरी आफ्नो काखमा सर्प आयो भने
आँतिएर त्यसलाई तुरुन्तै फालिन्छ,
त्यसरी नै आलस्य र तन्द्राले छुन नपाउँदै
त्यसलाई तुरुन्तै फाल्नुपर्छ (पन्छाउनुपर्छ) ।[९]











र *सृहल्लेख* मा यस्तो भनिएको छ :

हाम्रो टाउकोको रौँ वा हामीले
लगाएको लुगामा अचानक आगो लाग्न गयो
भने हामी एकदम आत्तिँदै जुर्मुरिएर तुरुन्तै
सबैथोक फाल्न खोज्छौँ,
त्यसै गरी, संसारमा जन्म लिने प्रक्रियालाई अहिले नै रोक,
किनकि त्यो भन्दा महत्त्वपूर्ण अरू कुनै काम छैन ।

२.२. **अवसाद** (**हिम्मत हार्ने काम**) : 'प्रयासै गरे तापनि म जस्तो तुच्छ व्यक्तिले कसरी बोधिज्ञान प्राप्त गर्न सकूँला ? भन्ने सोँची मनमा ग्लानियुक्त हतोत्साह ल्याउनुलाई नै अवसाद भनिन्छ । यस हतोत्साहलाई त्यागेर मनमा जाँगर पैदा गर्नुपर्छ । यो अवसाद (हतोत्साह वा ग्लानियुक्त हीनता-बोध) लाई कसरी हटाउन सकिएला ? भनिएको छ :

आफूभित्र वीर्यको शक्ति वा जोश जाँगर मात्र पैदा गरेमा
डाँस, झीँगा, लामखुट्टे जस्ता कीरा भएर जन्म लिइसकेका प्राणीले
त पाउन गाऱ्हो हुने उत्तम बोधि पनि प्राप्त गरेरै छाड्छन् भने
मैले त मनुष्य जुनी पाएको छु
के ले हित हुन्छ, के ले अहित हुन्छ सबै कुरा जानेको छु,
बोधिसत्त्व चर्या मात्र नत्यागेको खण्डमा
मैले बोधि कसरी प्राप्त गर्न नसकूँला ?[१०]

२.३. **कुत्सितासक्ति** (**निन्दित विषयहरूमा आसक्ति**) : कुत्सितासक्ति भन्नाले शत्रुहरू वा प्रतिद्वन्दीहरूलाई हराउने, धनसम्पत्ति थुपार्ने इत्यादि कुत्सित एवं तुच्छ विषयहरूप्रति आसक्ति हुनु भन्ने बुझिन्छ । यी सबैलाई जसरी भएपनि त्याग्नुपर्छ किनकि यिनीहरू नै वीर्यका विपक्ष हुन् र दुःखका प्रत्यक्ष श्रोत हुन् ।











३. **वीर्य पारमिताका भेद** : वीर्य पारमितालाई तीन वर्गमा बाड्न सकिन्छ : ती हुन् :- क. सन्नाह वीर्य, ख. प्रयोगात्मक वीर्य र ग. असन्तुष्टि वीर्य ।

यीमध्ये पहिलो अर्थात सन्नाह वीर्य अधि(ठूलो)-आशयसँग सम्बन्धित छ । दोश्रो अर्थात प्रयोगात्मक वीर्य अभ्यासमा उतार्नु हो । तेश्रो अर्थात असन्तुष्टि वीर्य भन्नाले माथि उल्लेखित दुवै वीर्यको पूर्ण (पारंगत) रूप हो भन्ने बुझिन्छ ।

४. **हरेक भेदका लक्षण** : अब वीर्य पारमिताका माथि उल्लेखित ती तीन भेदहरूका बारेमा सविस्तार चर्चा गरौं ।

**क. सन्नाह वीर्य** : आजदेखि सबै प्राणीहरू अनुत्तर सम्यक् सम्बोधिमा प्रतिष्ठापित नहुञ्जेलसम्म म यस कुशल वीर्यलाई छोड्दै छोड्दिन । यस्तो दृढ संकल्प गरेर आफूलाई वीर्यरूपी कवचले सुसज्जित गर्नु नै सन्नाह वीर्यको तात्पर्य हो । जस्तो *बोधिसत्त्वपिटक* मा भनिएको छ :

> हे शारिपुत्र ! अपरम्पार मैत्रीको
> कवच धारण गर्नू, जबसम्म संसारको
> अन्त्य हुँदैन तबसम्म एकक्षण पनि
> आफ्नो वीर्यलाई शिथिल नपार ।

*वर्मव्यूहनिर्देशसूत्र* मा यस्तो भनिएको छ :

> सत्त्व (प्राणीहरू) लाई आफूतिर आकर्षित गर्न (सत्त्वसंग्रह गर्न) बोधिसत्त्वहरू सन्नाह वीर्यले युक्त हुनैपर्छ । सत्त्वहरू असंख्य असीम भएका हुँदा वीर्यरूपी कवच (सन्नाह वीर्य) धारण गर्नुको पनि कुनै सीमा हुँदैन ।

त्यस्तै *आर्यअक्षयमतिपरिपृच्छासूत्र* मा पनि यही कुरा भनिएको छ :











"म यति कल्पसम्म वीर्यरूपी कवच धारण गर्छु, यति कल्पसम्म गर्दिन" त्यसरी कल्पहरूलाई गनेर वीर्यको अभ्यास गरिँदैन। वीर्यको अभ्यास त अनन्त कालसम्म गरिनै रहनुपर्छ।

*बोधिसत्त्वभूमि* मा पनि उही कुरा बताइएको छ :

एक जना मात्र प्राणीलाई उद्धार गर्नको लागि यदि हजारौँ कल्पसम्म नरकमा बस्नुपरे पनि म खुशीसाथ बस्न तयार छु भने थोरै समयको लागि थोरै दु:ख भोग्ने त कुरै छोडौँ। यसैलाई नै बोधिसत्त्वको सन्नाह वीर्य भनिन्छ।[११]

**ख. प्रयोगात्मक वीर्य** : प्रयोगात्मक वीर्यलाई पनि तीन उपवर्गमा बाड्न वा विभाजन गर्न सकिन्छ : अ. क्लेश त्याग, आ. कुशलमूल सञ्चय, र इ. सत्त्वार्थक्रिया।




**अ. क्लेश त्याग** : राग आदि क्लेश र यिनबाट प्रभावित सबै कार्य सबै दु:खका जड हुन्। त्यसैले, ती क्लेशहरू धेरै समयसम्म प्राणीहरूको मनमा बसिरहने हुँदा हामीले भरमग्दुर प्रयास गरेर तिनलाई कदापि हाम्रो मनमा उत्पन्न हुन दिने छैनौँ। *बोधिचर्यावतार* का अनुसार :

व्यक्ति क्लेशहरूले घेरिएर रहे तापनि
उसले हजारौं गुना तेजस्वी र दृढ भएर देखाउनुपर्छ।
'मृगका बथानमा एक सिँह' भने जस्तै
क्लेशहरू उसको मनमा अलिकति
पनि हावी हुन दिनु हुँदैन।[१२]

त्यस्तो जोश जाँगर मनमा कसरी पैदा गर्ने भन्ने विषयमा *बोधि-चर्यावतार* मा यस्तो बताइएको छ :











> जसरी तेलले भरिएको भाँडो लिएर
> तलवारधारीहरूसँगै हिँडिरहेको व्यक्तिले
> एक थोपा तेल पनि पोखियो भने
> यी तलवारधारीहरूले आफ्नो ज्यान लिनेछन् भन्ने
> डरले अत्यन्तै सावधानीपूर्वक आफ्नो पाइला चाल्छ
> त्यसरी नै साधक पनि सदा सतर्क रहनुपर्छ ।[१३]

**आ. कुशलमूल सञ्चय** : आफ्नो ज्यान र स्वास्थ्यको समेत परवाह नगरी हामीले छ पारमिताहरूलाई पूरा गर्ने प्रयास गर्नुपर्छ । हामीले कसरी यस्तो प्रयास गर्न सक्छौं ? यसको जवाफ हो : निम्नलिखित यी पाँच प्रकार का वीर्यले युक्त भएर प्रयास गरिरहनु पर्छ :

1. सातत्य वीर्य (सदा सक्रीय), 2. सत्कृत्य वीर्य (समर्पण) 3. अचल (अटल) वीर्य, 4. अनिवर्त (पछाडि नफर्कने) वीर्य, 5. विगतमान (अहंकार रहित) वीर्य ।

1. पहिलो वीर्य अर्थात सातत्य वीर्य अनवरतरूपले प्रयास गरिरहनु हो । जस्तो *रत्नमेघ सूत्र* मा भनिएको छ :

> अलिकति पनि शारिरिक वा मानसिक थकान महशुस नगरी-कन जीवनका हरेक मोड, उतार चढाव सबै अवस्थाहरूमा उत्तिकै जोश र जाँगरले अनवरत प्रयास गरिरहने व्यक्ति नै बोधिसत्त्व हुन् । यसैलाई बोधिसत्त्वको सातत्य वीर्य भनिन्छ ।

2. सत्कृत्य वीर्य प्रसन्नता, जोश र जाँगरका साथ तीव्र गतिले अभ्यास गरिरहनु हो । यसको बारेमा यस्तो भनिएको छ :

> जसरी दिंउसो कडा घामले तातेको हात्ती
> तलाउको पानीमा डुबुल्की लगाएर त्यसमा
> खुब रस लिएर मग्न भइरहन्छ,











त्यसरी नै कर्म सकिएपछि पनि त्यसमा खुब
रस लिएर मग्न हुनसक्नुपर्छ ।[१४]

3. अचल (अटल) वीर्य : तेश्रो वीर्य अर्थात अचल वीर्य भन्नाले विकल्प, क्लेश र दुःखबाट हुने कुनै बाधाले गर्दा आफू अलिकति पनि विचलित नहुनु भन्ने बुझिन्छ ।

4. अनिवर्त वीर्य : अरूले जेसुकै भनेपनि, आफूबारे जस्तो सुकै सोचे-पनि जतिसुकै आफू विरुद्ध नचाहिँदा कुरा फलाकेर कुरा काटे पनि, उपद्रव मच्चाए पनि, आफूसंग कठोर तथा रुखो व्यवहार गरेपनि, जस्तोसुकै चोट पुऱ्याए पनि वा तिनीहरूका दृष्टि कषाय्को कारणले म अभ्यासबाट कदापि विमुख हुन्न, यस्तो सोंचाइ लिएर सदा अभ्यासमा लागिरहनु नै अनिवर्त वीर्य हो । यसको सम्बन्धमा *आर्यवज्रध्वजसूत्र* मा प्रस्तुत गरिएको विवरण घत लाग्दो छ ।

5. विगतमान (अहंकार रहित) वीर्य : वीर्यले सुशोभित व्यक्तिले कहिलेपनि आफूलाई ठूलो ठानेर अहंकारको भाव व्यक्त गर्दैन । यही नै विगतमान वीर्यले युक्त व्यक्तिको पहिचान हो ।

**इ. सत्त्वार्थक्रिया** : यसको अर्थ सहारा नपाएकाहरूलाई सहारा दिनु इत्यादि पहिलोको १३ औं परिच्छेदमा व्याख्या भइसकेका परकल्याणसित सम्बन्धित ११ वटा कार्यहरू गर्नु हो ।

प्रयोगात्मक वीर्यको व्याख्या यहीँ समाप्त हुन्छ ।

**ग. असन्तुष्टि वीर्य** : बोधि प्राप्त नभएसम्म हामी असन्तुष्ट चित्तले कुशल कार्यहरू गरिनै रहनुपर्छ, अभ्यास गरिनै रहनुपर्छ । जस्तो भनिएको छ :

छुराको धारमा लागेको मह जस्तै
हामी सांसारिक कामवासनाबाट त
कहिले पनि तृप्त हुँदैनौ भने











मधुर र अति कल्याणकारी फल दिने
अमृतरूपी पुण्य वा सत्कर्मबाट
त झन् तृप्त हुने कुरै आँउदैन ।[१५]

**५. उपचय (वृद्धि)** : परिच्छेद १२ मा व्याख्या गरिएझैं क्षान्ति पारमिताको अभिवृद्धि ज्ञान, प्रज्ञा र परिणामनाबाट हुन्छ ।

**६. विशुद्धि** : परिच्छेद १२ मा बताइएझैं शून्यता र करुणाले थामिएपछि क्षान्तिको विशुद्धि हुन्छ ।

**७. फल** : वीर्यका फल पनि अन्त्य र आवस्थिक (सांसारिक) गरी दुई प्रकारकै हुन्छन् भनेर बुझ्नुपर्छ । तीमध्ये अन्त्य वा परमार्थ फल भन्नाले अनुत्तर बोधि प्राप्त हुनु नै हो । जस्तो *बोधिसत्त्व भूमि* मा भनिएको छ :



> वीर्य पारमितालाई पूरा गरेर बोधिसत्त्वले अनुत्तर सम्यक् सम्बोधि प्राप्त गरे, गरिरहेका छन् र गरिरहनेछन् ।[१६]



वीर्यका आवस्थिक (सांसारिक वा लौकिक) फलस्वरूप संसारमा घुम्दा घुम्दै पनि बोधिसत्त्वले सबै उत्तम सांसारिक सुखहरू पाइरहन्छन् । जस्तो *महायानसूत्रालंकार* मा भनिएको छ :

> वीर्यले आफूले चाहेका सबै सांसारिक सुखहरू पाउन सकिन्छ ।[१७]

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
वीर्यपारमिता
नामक पञ्चदश परिच्छेद समाप्त ।









# परिच्छेद १६
# ध्यान पारमिता

ध्यान पारमिताको सारांश निम्न शीर्षकहरूमा पाउन सकिन्छ :

गुण र दोषको निर्देश, स्वरूप, भेद,
हरेक भेदका लक्षण, उपचय (वृद्धि), विशुद्धि र फल
यी सात शीर्षकहरूमा वीर्य पारमिताका विषयवस्तु समाविष्ट छन् ।

१. **गुण तथा दोषहरूको निर्देश वा समीक्षा** : यदि कुनै व्यक्ति दानी वा दानशील, शीलवान्, क्षान्तिवान् र वीर्यवान भएता पनि उसले ध्यानको अभ्यास गर्दैन भने उसको मन अत्यन्तै विक्षिप्त (विचलित) हुन्छ र क्लेश-रूपी दाऱ्हाहरूको बीचमा रहेको समान हुन्छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

जो व्यक्तिको मन विक्षिप्त छ
ऊ क्लेशरूपी दाऱ्हाहरूको बीचमा फँस्छ ।[1]

यसको अतिरिक्त, ध्यानको अभ्यासबिना अभिज्ञाको उदय हुँदैन । अभिज्ञा नभएपछि सत्त्वहरूको हितको लागि काम गर्न पनि सकिन्न । जस्तो *बोधिपथप्रदिप* मा पनि लेखिएको छ :

शमथलाई पूरा गर्न सकिएन भने
अभिज्ञा प्राप्त हुँदैन ।[2]
अभिज्ञाको बल नै भएन भने
प्राणीहरूको हित पनि गर्न सकिन्न ।[3]











यति मात्र होइन, ध्यानको अभ्यास गरेनौं भने हाम्रो चित्त सन्ततिमा प्रज्ञाको उदय हुँदैन र प्रज्ञा नै नभएपछि बोधि प्राप्त हुने त कुरै आउँदैन । *सुहृल्लेख* मा पनि यही कुरा बताइएको छ :

ध्यानबिना प्रज्ञा हुँदैन ।

अर्को तर्फ, ध्यानको अभ्यास गरेमा हामी हीन वस्तुहरूप्रतिको आसक्तिलाई त्याग्छौं, अभिज्ञा प्राप्त गर्नेछौं र अनेक समाधिका द्वारहरू हाम्रो मनमा स्वतः खुल्छन् । *प्रज्ञापारमितासञ्चय गाथा* मा यस्तो उल्लेख छ :

ध्यानद्वारा कामगुणका निकृष्ट विषयहरूलाई त्यागिन्छ ।
अनि विद्या, अभिज्ञा र समाधिहरू प्राप्त हुन्छन् ।[४]




जब कुनै व्यक्ति समाधिले युक्त हुन्छ, उसको मनमा प्रज्ञाको उदय हुन्छ, जसले सबै क्लेशहरूलाई नाश गर्छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

शमथले युक्त विपश्यनाको अभ्यास
गर्नेले क्लेशलाई नाश गर्न सक्छ ।[५]

यति मात्र होइन, समाधिले युक्त भएपछि व्यक्तिले तत्त्व ज्ञानलाई साक्षात्कार गर्छ जसले गर्दा उसको मनमा सबै प्राणीहरूप्रति करुणा जागृत हुन्छ । यही कुरा *धर्मसङ्गीतिसूत्र* मा पनि बताइएको छ :

समाधिस्थ मनले सबै धर्महरूका यर्थाथ रूप देख्न (यथाभूत दर्शन वा जस्ताको तस्तै देख्न) सकिन्छ । यथाभूत दर्शन गरे काले बोधिसत्त्व प्राणीप्रतिको करुणामा लीन हुन्छन् ।











यो बाहेक, समाधिले युक्त भएपछि बोधिसत्त्व सबै विनेयजन (उद्धार गरिनुपर्ने प्राणी) हरूलाई बोधिको धरातलमा प्रतिष्ठापित गर्न सक्षम हुन्छन् । जस्तो *महायानसूत्रालंकार* मा भनिएको छ :

> त्यही ध्यानमार्फत सबै प्राणीहरूलाई तीन प्रकारका बोधिमा स्थापित गरिन्छ ।[६]

२. **ध्यान पारमिताको स्वरूप** : ध्यानको स्वरूप के हो भन्दाखेरी ध्यानमा शमथको स्वभाव हुन्छ जसले गर्दा मन कुशल धर्ममा एकाग्र भएर रहन्छ । *बोधिसत्त्वभूमि* को 'ध्याननिर्देश पटल' का अनुसार,

> कुशल चित्तको एकाग्रतापूर्वक रहने क्षमता नै ध्यानको स्वभाव हो ।[७]




सबै विक्षेपहरू (ध्यानविरोधी तत्त्वहरू) लाई त्यागेर मात्र त्यस्तो ध्यान प्राप्त गर्न सकिने हुँदा सबैभन्दा पहिले ती सबैलाई नै हटाउनु पर्छ । विक्षेपको प्रहाण विरक्ति (विवेक)[८] ले मात्र हुन सक्छ । भनाइको अर्थ २.१. हाम्रा इन्द्रियहरूलाई ती विक्षेपबाट अलग्याउनाले र २.२. विकल्पबाट अलग्याउनाले मात्र विक्षेपलाई हटाउन सकिन्छ । यही कुरालाई *बोधि-चर्यावतार* मा यसरी दर्शाइएको छ :

> शरीर र मनलाई विरक्त तुल्याएपछि
> अर्थात काय र चित्त विवेकले
> विक्षेप (विकल्प) को उत्पत्ति हुँदैन ।[९]

२.१ **काय विवेक** : 'काय विवेक' भन्नाले शरीरलाई कुनै पनि संसर्ग (सम्पर्क) वा विक्षेपबाट टाढा राख्ने भन्ने बुझिन्छ । यस बारेमा देहाय-बमोजिमका छ वटा शीर्षकहरूमार्फत छलफल गर्न सकिन्छ :











1. संसर्गको लक्षण
2. संसर्गको हेतु
3. संसर्गको दोष
4. विवेक (विरक्ति वा वितृष्णा) को लक्षण
5. विवेकको हेतु
6. विवेकको गुण

**1. संसर्गका लक्षण** : आफ्ना छोरा छोरी, नोकर चाकर, स्वास्नी आफन्त परिवारसँग आफू जोडिएर रहनु नै संसर्गको लक्षण हो । अर्को शब्दमा भन्नुपर्दा त्यसैले समाधि लाभ गर्नको लागि आफ्ना बन्धु, परिवार आदिको सम्पर्कबाट टाढा रहनुपर्छ ।

**2. संसर्गको हेतु** : छोरा छोरी, पति पत्नी, बन्धुबान्धव, परिवार आदिप्रतिको आसक्ति, खानेकुरा, भौतिक वस्तु धनधान्य इत्यादि प्रतिको आसक्ति र यश, प्रशंसा इत्यादि प्रतिको आसक्ति नै संसर्गको हेतु हो । यस्ता आसक्तिले गर्दा व्यक्ति संसर्गलाई त्याग्न असक्षम हुन्छ । जस्तो बताइएको छ :

> स्नेह र लाभ इत्यादि कुराको तृष्णाले गर्दा
> व्यक्ति लोकलाई त्याग्न असक्षम हुन्छ ।[१०]

**3. संसर्गका दोष** : यसलाई दुई किसिमले बुझ्नुपर्छ : सामान्यरूपले र विशिष्टरूपले । संसर्गका सामान्य दोषका बारेमा *अध्याशयसंचोदनसूत्र* मा यस्तो उल्लेख छ :

> हे मैत्रेय, संसर्ग (सम्पर्क) का बीसवटा दोषहरू छन् । ती कुन कुन हुन् ? संसर्गले गर्दा काय (शरीर) असंयमित हुन्छ, वाक् (वचन) असंयमित हुन्छ र चित्त (मन) असंयमित हुन्छ । स्थूल











> क्लेशहरू मनमा व्याप्त हुन्छन् । नचाँहिदा साँसारिक कुराहरू गर्ने लत लाग्छ र मारहरूलाई आक्रमण गर्ने मौका दिन्छौँ, सधै प्रमादी (जागरुक नहुनु) भइ रहन्छौँ । हामी शमथ र विपश्यना प्राप्त गर्न नसक्ने हुन्छौँ, इत्यादि दोषहरू.....।

संसर्गका दोषलाई विशेष रूपले हेर्ने हो भने छोराछोरी आमाबाबु, पतीपत्नी इत्यादि सत्त्वहरूप्रतिको आसक्तिले बोधि प्राप्त हुँदैन । जस्तो *चन्द्रप्रदीपसूत्र* मा भनिएको छ :

> जो व्यक्ति कामगुण (तृष्णाका विषयहरू) मा लिप्त रहेर
> छोराछोरी, पत्नी आदिमा आसक्त भइरहन्छ
> र त्यागिनुपर्ने घरमा पनि टास्सिएर बसिरहन्छ
> त्यो व्यक्तिले अनुत्तर बोधि कदापि प्राप्त गर्दैन ।[११]



यसै सम्बन्धमा *बोधिचर्यावतार* मा यस्तो भनिएको छ :



> प्रियहरूको संगत गरिराख्ने चाहनाले गर्दा
> व्यक्तिले यथार्थता देख्न सक्दैन ।[१२]

त्यसैले प्रियहरूप्रतिको आसक्तिलाई त्याग्नुपर्छ । *बोधिचर्यावतार* मा पनि त्यही कुरा बताइएको छ :

> न तिनले मेरो कुनै हित गर्न सक्छ
> न मैले तिनीहरूलाई हित गर्न सक्छु
> त्यसैले ती बालजनहरूदेखि टाढै बस्नु नै कल्याण हुन्छ ।[१३]

ती आसक्तिहरूलाई त्याग गर्नाका फाइदा बारे *चन्द्रप्रदीपसूत्र* मा यस्तो उल्लेख छ :











> गृहस्थ जीवनदेखि डराएर जसले छोराछोरी र स्वास्नी (लोग्ने) प्रतिको मोह आसक्तिलाई त्यागिदिन्छ, उसले वास्तवमा अभि-निष्क्रमण गरेको हुन्छ, उसको लागि बोधि प्राप्त गर्नु कुनै कठिन कुरा होइन ।[१४]

लाभ र यश (इज्जत, नाम) प्रति आसक्त हुनाका दुईटा दोषहरू छन् : लाभ र यश सधै पाइरहन सकिँदैन एवं त्यसले गर्दा हामीलाई दु:ख नै हुन्छ । जस्तो *बोधिचर्यावतार* मा भनिएको छ :

> धेरै लाभ र इज्जत पाउनेहरू पनि
> कहाँ गए कहाँ केही अत्तोपत्तो छैन ।[१५]

दोश्रो दोषका बारेमा *बोधिचर्यावतार* मा लेखिएको छ :




> जुन जुन विषयमा म मोह राख्छु
> त्यो मोह वा आसक्ति हजारौं गुणा ठूलो
> दु:खको रूप लिएर मेरो सामु आइपुग्छ ।[१६]

4. **विवेक (विरक्ति, वितृष्णा) का लक्षण** : माथि उल्लेखित सर्म्पक संसर्गबाट मुक्त हुनु नै विवेकको लक्षण हो ।

5. **विवेकको हेतु** : अरण्य (जंगल) मा गएर एकान्तपूर्वक बस्नु नै विवेकको हेतु हो । यहाँ अरण्य भन्नाले मात्र जंगल नभएर मसान, वन, गुफा, मैदान वा जस्तोसुकै एकान्त ठाउँ जुन ठाउँ गाउँदेखि एक कोश-को दुरीमा अवस्थित होस्, त्यस्तो ठाउँ भनेर बुझ्छौं । पाँचशय वाणको दूरीलाई नै कोश भनिन्छ । यही कुरा *अभिधर्मकोश* मा पनि बताइएको छ :

> पाँचशय वाणको दुरी नै एक कोश जसलाई अरण्य पनि भनिन्छ ।[१७]










6. **विवेकका गुण** : बोधि र सारा प्राणीहरूको लागि कुनै पनि सम्पर्क-बाट टाढा रही अरण्यमा बास गर्नुका गुण धेरै छन्, जस्तो 6.1. त्यो (विवेक) नै सबै बुद्धहरूप्रति गरिने सर्वश्रेष्ठ पूजा उपासना हो, 6.2. उसमा संसारप्रति वितृष्णा जागृत हुन्छ, ऊ अष्ट लोक धर्मदेखि सधैं टाढा र हन्छ, र उसका क्लेशहरू बढ्न पाउँदैनन्, 6.3. उसको चित्त सन्ततिमा समाधिको उदय हुन्छ ।

6.1. पहिलो अर्थात 'विवेक नै सबै बुद्धहरूप्रति गरिने सर्वश्रेष्ठ पूजा हो' भन्नाले के बुझिन्छ भने खानेकुरा, पेय, फूल इत्यादिले विभिन्न किसिमले पूजा गर्नु भन्दा बोधिचित्त उत्पन्न गरेर 'सबै प्राणीहरूको लागि म अरण्यमा बस्छु' भन्ने आशय लिएर अरण्यतर्फ सात पाइला बढाउँदाखेरी बुद्धहरू अधिक खुशी हुन्छन् । जस्तो *चन्द्रप्रदीपसूत्र* मा भनिएको छ :

> खालि खानेकुरा, पेय, वस्त्र, फूल, धूप, माला इत्यादि
> चढाउँदैमा बुद्धहरू खुशी हुने होइन
> वा बुद्धको पूजा गरिएको ठहरिँदैन
> जसले बोधि प्राप्त गर्ने आंकाक्षा मनमा लिएर
> कलुषित संस्कृत धर्महरूबाट विरक्तिएर सबै
> प्राणीहरूको हितको लागि अरण्यमा प्रवेश गर्छु भन्ने
> बिचारले अरण्यतर्फ सात पाइला चाल्छ भने
> त्यसले वास्तवमा ज्यादा पुण्य प्राप्त गर्छ ।[१८]

6.2. दोश्रो, अर्थात् 'संसारप्रति वितृष्णा जागृत हुने, अष्ट लोकधर्महरूबाट टाढा रहने र क्लेशहरू वृद्धि हुन नपाउने' यी तीनै शीर्षकको बारेमा त्यही सूत्रले फेरि भन्छ :

> त्यसरी नै, सबै संस्कृत धर्महरूप्रति वितृष्णा जाग्छ सांसारिक
> वस्तुहरू वा धर्महरूप्रति तृष्णा हुँदैन, क्लेशहरू पनि बढ्दैनन्











6.3. तेश्रो (पाँचौ) अर्थात 'चित्त सन्तत्तिमा समाधिको उदय हुने' यस बारे पनि त्यही सूत्रले फेरि बताउँछ :

गाउँ र सहरको मोहलाई त्यागिदेऊ
सधै निर्जन एकान्त वनमा बसिराख्नू,
सधै गैडाजस्तै एक्लो रहन सिक,
यति गऱ्यौ भने तुरुन्तै
उत्तम समाधि पाउँछौ तिमीले ।

शरीरलाई संसर्ग (सम्पर्क) बाट अलग राख्ने शीर्षकको व्याख्या यहीँ समाप्त हुन्छ ।

२.२. **चित्तविवेक** : अरण्यमा बस्दाखेरी 'म किन वा केको लागि यहाँ आएँ' भनेर मनमनै विचार गर्नुपर्छ । 'म त गाउँ र शहरका उद्विग्नकारी जीवनबाट भयभीत भएर यहाँ आएको हुँ' त्यस्तो सोचाई मनमा ल्याउनु-पर्छ । 'किन तिमी ती कुराहरूदेखि डरायौ' भनी कसैले सोध्यो भने यसको जवाफ हामी *गृहपति-उग्रपरिपृच्छासूत्र* मा पाउछौं जसमा यस्तो उल्लेखित छ :

सम्पर्क होला भन्ने डरले, लाभ र सत्कारको डरले,
दुष्ट साथीहरूको डरले, अकुशल गुरुहरूको डरले,
राग, द्वेष र मोहको डरले,
स्कन्ध, क्लेश, मृत्यु र देवपुत्र यी चार मारहरूको डरले,
नरक, तीर्यक र प्रेत यी तीन दुर्गतिमा जन्मिने डरले
म यस अरण्यमा शरण लिन आइपुगेको छु ।

त्यसरी भयभीत भएर अरण्य (वन)मा पसिसकेपछि काय वाक् र चित्तका कार्यहरू बारे यसरी चिन्तन गर्नुपर्छ : 'अब यस अरण्यमा आइ











सकेपछि यदि मैले प्राणातिपात, अदत्तादान आदि अकुशल कर्म गरेँ भने म र कुनै घातक जनावर, व्याधा वा कुनै डाँकूबीच के नै फरक रह्यो त आखिर ? त्यस्ता कार्यकलापले मेरो कुनै पनि इच्छालाई पूर्ति गर्न सक्दैनन् त्यसैले म ती सबलाई त्याग्छु । यसरी मनमनै सोँचेर ती अकुशल कर्महरूदेखि विरक्त हुनुपर्छ ।

वाक् (वचन) संग सम्बन्धित कार्यहरूका बारेमा यसरी चिन्तन गर्नुपर्छ : यस वनमा पाइला टेकिसकेपछि यदि मैले नचाहिँदा गफ (संभिन्न प्रलाप) गर्दै, अर्काको चुक्ली (पैशुन्य प्रलाप) गर्दै र दुवर्चनहरू बोल्दै हिँडे भने मयूर, सुगा, कोइली, भारद्वाज चरा इत्यादि र ममा के अन्तर रहने भयो ? त्यस्ता कार्यकलापले मेरो कुनै पनि इच्छालाई पूर्ति गर्न सक्दैनन् त्यसैले म ती सबलाई त्याग्छु । यसरी मनमनै सोँचेर ती अकुशल कर्महरूदेखि विरक्त हुनुपर्छ ।

चित्त (मन) संग सम्बन्धित कार्यहरूका बारेमा यसरी चिन्तन गर्नुपर्छ : यस वनमा पसिसकेपछि यदि मेरो मनमा अझै पनि राग, द्वेष, इत्यादि क्लेशहरू आउँछन् भने हरिण, लंगूर, बाँदर, भालु र अरू जनावरहरू र म मा के नै अन्तर रह्यो ? तिनले मेरो कुनै पनि इच्छालाई पूर्ति गर्न सक्दैनन् त्यसैले म ती सबलाई त्याग्छु । यसरी मनमनै सोँचेर ती अकुशल कर्महरूदेखि विरक्त हुनुपर्छ ।

चित्तलाई विकल्पबाट अलग्याउने शीर्षकको व्याख्या यहीं समाप्त हुन्छ ।

२.३. **जब शरीर र मन सम्पर्क र विकल्पबाट पृथक हुन्छ, तब मनमा विक्षेप उत्पन्न हुन पाउँदैन** : मनमा विक्षेप नभएपछि हामी समाधिस्थ हुन सक्ने हुन्छौं । त्यसपछि हामीले मति (चित्त) शोधन गर्नुपर्छ । त्यसको लागि सबैभन्दा पहिले हामीले आफ्ना क्लेशहरूको जाँच गर्नुपर्छ । ती क्लेशहरूमा सबैभन्दा तीव्र तथा प्रबल कुन चाँहि हो त्यसलाई नै छान्नुपर्छ । त्यसपछि तुरुन्तै त्यसको उपचार वा प्रतिपक्ष खोज्नतिर लाग्नुपर्छ । हरेक क्लेशको प्रतिपक्ष हुन्छ, हामीले सही प्रतिपक्ष पहिल्याइ ध्यान गर्नुपर्छ । जस्तै :











1. रागको प्रतिपक्ष अशुचि भावना हो ।
2. द्वेषको प्रतिपक्ष मैत्री भावना हो ।
3. मोहको प्रतिपक्ष प्रतीत्यसमुत्पादको भावना हो ।
4. मात्सर्य (ईर्ष्या) को प्रतिपक्ष स्व-परसमताको भावना हो ।
5. मद (अहंकार) को प्रतिपक्ष आत्मपरावर्तन को भावना हो ।
6. यदि ती विभिन्न क्लेशहरू सबै उत्तिकै तीव्र र प्रबल छन् भने अथवा मनभित्र विकल्प ज्यादै नै गहिरो जरो गाडेर बसेको छ भने आनापानको ध्यान गर्नुपर्छ ।

**1. राग** : यदि हामीमा प्रवल रागको मात्रा धेरै छ भने हामीले अशुचि-को भावना गर्नुपर्छ । अशुचिको भावना यसरी गरिन्छ : हाम्रो यो शरीर मासु, रगत, छाला, हाड, मज्जा, पीप, पित्त, श्लेष्म, विष्ठा इत्यादि गरेर छत्तीस प्रकारका अशुचि द्रव्यहरूले बनेको छ । यस्तो सोंचिसकेपछि हामी मसानमा पुग्नुपर्छ, त्यहाँ एक, दुई, तीन, चार होइन पाँच दिनदेखि त्यसै वेवारिसे अवस्थामा परिरहेको असाध्यै दुर्गन्धित, सुनिएको, रङ्ग पूरै उडेर नीलो र कालो भइसकेको, किराहरू सल्बलाइरहेको एउटा लासलाई ध्यान दिएर हेरौं । जब हामीले यस्तो विभत्स कहालीलाग्दो लास देख्छौं, हाम्रो शरीरको पनि त्यही दशा हुनेछ, हामी पनि त्यही अवस्थाको हुनेछौं, त्यही स्वभावका, प्रकृतिका हौं । हाम्रो प्रकृति वा स्वभाव त्यो लासको स्वभाव वा प्रकृति भन्दा रत्तिभर पनि भिन्न छैन ।

त्यसपछि, मासु जम्मै सडेर हाडै हाड मात्र बाँकी भएको अस्थिपञ्जर मा त्यो लास परिणत हुन्छ, मासु लेसिएका हाडका जोर्नीहरू टुक्रिन्छन् र हाडहरू यताउता छरिन्छन् । वर्षौंदेखि मृत अवस्थामा परिरहेको त्यो शरीर जब अस्थिपञ्जरमा परिणत हुन्छ शंख झैँ सेतो देखिन थाल्छ । धेरै वर्ष बितिसकेपछि, ती हाडहरू खरानी रङ्गका देखिन थाल्छन् । यी सबै आफ्नै आँखाले देखिसकेपछि, हामीले यस्तो सोँच्नुपर्छ, 'मेरो शरीर पनि त्यही प्रकृतिको छ, त्यसको स्वभाव ठीक त्यही लासको जस्तो छ, स्वभावैले मेरो यो शरीर त्यो लास भन्दा अलिकति पनि भिन्न छैन ।'











**2. द्वेष** : यदि कुनै व्यक्तिमा द्वेष प्रबल छ भने त्यसको प्रतिपक्षस्वरूप उसले मैत्रीको भावना गर्नुपर्छ । मैत्री तीन प्रकारका हुन्छन् भनेर अगाडि नै वर्णन गरिसकिएको छ । यहाँ सत्त्व-आलम्बिनी मैत्रीको मात्र भावना गरिन्छ । सर्वप्रथम, आफूलाई सबैभन्दा प्रिय लाग्ने प्राणीहरूको नै सुख र हितको कामना गर्नुपर्छ । त्यसपछि, आफ्ना आफन्त इष्टमित्रहरूका बारे-मा पनि त्यसरी नै मैत्रीको भावना गर्नुपर्छ । त्यसपछि, आफ्ना आफन्त र आफूले चिनेका र नचिनेका सर्वसाधारण मानिसहरू, छिमेकका मानिसहरू, शहर वा गाउँका सबै वासिन्दाहरूदेखि लिएर क्रमशः दशै दिशामा व्याप्त भएर रहेका सबै सत्त्वहरूका हित र सुखको कामना गरेर मैत्रीको भावना गर्नुपर्छ ।

**3. मोह** : यदि कुनै व्यक्तिमा मोह प्रबल छ भने त्यसको प्रतिपक्षस्वरूप उसले प्रतीत्यसमुत्पादको भावना गर्नुपर्छ । जस्तो *शालिस्तम्भ सूत्र* मा भनिएको छ :

> भिक्षुहरू हो ! जसले धानको डाँठ (शालिस्तम्भ) लाई अवलो-कन गर्छ, उसले प्रतीत्यसमुत्पादलाई बुझ्छ, जान्दछ । जसले प्रतीत्यसमुत्पादलाई बुझ्छ, उसले धर्मलाई पनि बुझ्छ र जसले धर्मलाई बुझ्छ उसले बुद्धलाई पनि बुझ्छ ।[१९]

प्रतीत्यसमुत्पादलाई दुई किसिमले हेर्न सकिन्छ, 3.1. आनुलोमिक संसारगत प्रतीत्यसमुत्पाद र 3.2. प्रातिलोमिक निर्वाणगत प्रतीत्यसमुत्पाद ।

3.1. आनुलोमिक संसारगत प्रतीत्यसमुत्पाद : पहिलो अर्थात आनुलो-मिक संसारगत प्रतीत्यसमुत्पादलाई पनि दुईटै किसिमले जान्न सकिन्छ: 3.1.1. वाह्य प्रतीत्यसमुत्पाद र 3.1.2. आध्यात्मिक प्रतीत्यसमुत्पाद । आध्यात्मिक प्रतीत्य समुत्पादका पनि दुईटा भेद छन् : (अ) सहेतुक आध्यात्मिक प्रतीत्यसमुत्पाद र (आ) प्रत्यय-उपनिबद्ध आध्यात्मिक प्रतीत्यसमुत्पाद ।











(अ) सहेतुक आध्यात्मिक प्रतीत्यसमुत्पाद : सहेतुक आध्यात्मिक प्रतीत्यसमुत्पादका विषयमा यस्तो भनिएको छ :

> भिक्षुहरू हो ! यसको कारणले त्यो उत्पन्न हुन्छ। त्यो उत्पन्न भएकोले यो हुन्छ । यसरी अविद्याको कारणले संस्कार... इत्यादि हुँदै जाति प्रत्ययको कारणले जराव्याधि, मरण, शोक, परिदेव, दुःख दौर्मनस्य र उपायास उत्पन्न हुन्छन् । यसरी विशाल दुःख-स्कन्धको उदय हुन्छ ।[२०]

कामधातु र आमाको गर्भबाट जन्मने प्राणीहरूका लागि यो लागू हुन्छ ।

(१) प्रतीत्यसमुत्पादको सबैभन्दा पहिलो अङ्ग अविद्या हो जसको तात्पर्य ज्ञेय धर्म (Knowables) प्रति भ्रमित हुनु हो वा तिनलाई जस्ताको तस्तै रूपमा देख्न नसक्नु वा बुझ्न नसक्नु हो ।

(२) त्यही अविद्याको कारणले व्यक्तिको मन (चित्त सन्तत्ति) मा कुशल वा अकुशल सास्रव कर्म उत्पन्न हुन्छ । त्यसैलाई अर्को शब्दमा भन्नुपर्दा 'अविद्या' प्रत्ययले गर्दा संस्कारको उदय हुन्छ ।

(३) चित्त सन्तत्तिमा कर्मको बीज पलाएपछि विज्ञानको प्रादुर्भाव हुन्छ । त्यसैले संस्कार प्रत्ययले गर्दा विज्ञानको उदय हुन्छ ।

(४) त्यो कर्मको प्रभावले मन पूरै भ्रमित (विपर्यस्त चित्त) भएर आमाको गर्भभित्र पसिसकेपछि (प्रतिसन्धि चित्त), भ्रूणका कलल आदि अवस्थाहरूको सिर्जना हुन्छ । त्यसबेला विज्ञान प्रत्ययले गर्दा नामरूप उत्पन्न भएको भनिन्छ ।

(५) नामरूपले विकसित रूप लिइसकेपछि आँखा, कान आदि इन्द्रिय-हरूको पनि पूरा विकास हुन्छ जसलाई हामी नामरूप प्रत्ययले गर्दा षडायतन उत्पन्न भएको भन्छौँ ।

(६) चक्षु (आँखा), आदि इन्द्रिय (Sense Organ) विषय (Object) र विज्ञान (Consciousness), यी तीनका आपसी अन्तरक्रिया स्पर्शको











पूर्वाधार हो । अतः 'षडायतन प्रत्ययाः स्पर्श' अर्थात षडायतन प्रत्ययको कारणले स्पर्श हुन्छ ।

(७) जब स्पर्श हुन्छ, तब सुख, दुःख र उपेक्षा यी ३ प्रकारका वेदनाहरू पनि मनमा स्वतः आउनथाल्छन् त्यसलाई नै 'स्पर्श प्रत्ययाः वेदना' अर्थात स्पर्श प्रत्ययको कारणले वेदना (अनुभव) उत्पन्न हुन्छ भनिन्छ ।

(८) स्पर्शजनित वेदना हुँदा जुन आनन्दको अनुभूति हुन्छ, त्यसमा हामी तीव्ररूपले आसक्त हुन्छौं । अतः 'वेदना प्रत्ययाः तृष्णा' वेदनाको कारणले तृष्णाको उदय हुन्छ भनिन्छ ।

(९) तृष्णा उत्पन्न भइसकेपछि त्यही सुखद अनुभूतिमा हामीहरू टाँसिन्छौं, यस्तो अनुभूति मलाई सधै भइरहोस् वारम्वार भइरहोस्, म त्यस्तो अनुभूतिबाट कहिल्यैं बञ्चित हुन नपरूँ भनी तीव्र चाहना (ग्राह) गर्छौं जसले गर्दा उपादान उत्पन्न हुन्छ । यसरी तृष्णा प्रत्ययाः उपादान भनेर ठीकै भनिएको छ ।

(१०) त्यसरी कुनैपनि धर्मलाई ग्राह गरिसकेपछि काय्, वाक र चित्तद्वारा कर्म निर्माण भएर 'भव' बन्छ । यसलाई नै उपादान प्रत्ययाः भव अर्थात उपादानको कारणले भव उत्पन्न हुन्छ भनिन्छ ।

(११) त्यो कर्मले पञ्चस्कन्धहरू बन्छन् जसले गर्दा प्राणीको जन्म हुन्छ जसलाई हामी भव प्रत्ययाः जाति भन्छौं ।

(१२) जन्म हुँदा नै बनिसकेका पञ्चस्कन्धहरू पछि वृद्धि हुँदै क्रमश नाश भएर जान्छन् । पञ्चस्कन्ध परिपक्व अवस्थामा पुग्नुलाई हामी जरा भन्छौं र तिनको नाशलाई मरण अथवा मृत्यु भन्ने गर्छौं, त्यसैले 'जाति प्रत्ययाः जरामरण' अर्थात जन्मले गर्दा नै मानिस वृद्ध भई मर्छ । मोहको कारणले मृत्युको समयमा तीव्र आसक्ति र तृष्णाको आगोमा पोलेर जुन भित्र भित्रै असह्य दाहको अनुभूति हुन्छ त्यसलाई शोक भनिन्छ। शोकको कारणले जुन करुण रोदन चित्कार र क्रन्दन हुन्छ त्यसलाई परि-देव भनिन्छ । पाँचवटा विज्ञानको समूहबाट उत्पन्न हुने असजिलोपना, असुखको अनुभूतिलाई दुःख भनिन्छ । त्यो मनले अनुभव गरेपछि जुन मानसिक दुःख सृजना हुन्छ त्यसलाई नै दौर्मनस्य भनिन्छ । त्यस्तै प्रकार











का अरू सबै क्लेश उपक्लेशहरू (the entire afflicted subconsciousness) लाई उपायास (disturbed mind) भनिन्छ ।

माथि वर्णित प्रतीत्यसमुत्पादको नियमलाई हामी तीन भागमा बाँड्न सक्छौँ । अविद्या, तृष्णा र उपादानलाई हामी 'क्लेश' अन्तर्गत राख्न सक्छौँ, संस्कार र भवलाई 'कर्म' अन्तर्गत र विज्ञान, नामरूप, षडायतन, स्पर्श, वेदना, जाति एवं जरामरणलाई हामी दुःख अन्तर्गत राख्न सक्छौँ । जस्तो *प्रतीत्यसमुत्पादहृदयकारिका* मा भनिएको छ –

> यी जुन बाह्रवटा अङ्गहरू (द्वादसाङ्ग) छन् यिनलाई तीन काण्ड (भाग) मा बाँडेर जान्न सकिन्छ । भगवान् बुद्धद्वारा उपदिष्ट प्रतीत्यसमुत्पादलाई क्लेश, कर्म र दुःखभित्र समेट्न सकिन्छ । पहिलो, आठौँ र नवौँ अङ्ग क्लेश हुन्, दोश्रो र दशौँ  अङ्ग कर्म हुन् भने बाँकी सात वटा अङ्गहरू दुःख हुन् ।




यिनलाई उदाहरणद्वारा यसरी बुझ्न सकिन्छ : अविद्या खेतमा बीऊ रोप्ने (व्यक्ति) सरह हो, कर्म क्षेत्र (खेत) सरह हो भने, विज्ञान बीऊ सरह नै हो, तृष्णा खेतमा हुने आर्द्रता सरह हो, नाम र रूप टुसा (अंकुर) सरह हुन् भने बाँकी अरू शाखा, प्रशाखा, पात र दलहरू समान हुन् ।

यदि अविद्या नै उत्पन्न हुँदैन भने संस्कार पनि उत्पन्न हुन पाउँदैन । यसै तवरले यदि जन्म नै हुँदैन भने जरा र मरण पनि हुँदैनन् । तर अविद्या रह्यो भने संस्कार पूर्णरूपले मौलाउँछ । त्यसरी नै जाति (जन्म) भएपछि जरामरण पनि हुन्छ नै । तर यहाँ अविद्याले 'म संस्कारलाई उत्पन्न गर्छु' भनेर सोंच्ने होइन न त संस्कारले नै 'मलाई अविद्याले उत्पन्न गरेको हो' भनेर सोंच्छ । यस्तै प्रकारले जन्मले पनि 'म जरामरणलाई उत्पन्न गर्छु' भनेर सोंच्ने होइन । तर अविद्याको उपस्थितिले गर्दा संस्कारको उदय हुन्छ, एवं रीतले जाति वा जन्म भएकोले जरामरण पनि हुन्छ । अतः आध्यात्मिक प्रतीत्य समुत्पादलाई हामी सहेतुक प्रतीत्यसमुत्पाद (यसको कारणले यो हुने इत्यादि) भनेर जान्न सक्छौँ ।











(आ) प्रत्यय-उपनिबद्ध आध्यात्मिक प्रतीत्यसमुत्पाद : आध्यात्मिक वा आन्तरिक प्रतीत्यसमुत्पाद प्रत्ययद्वारा पनि प्रभावित हुन्छ । किनभने हाम्रो शरीर ६ धातुहरू जस्तै पृथ्वी (स्थूलता), आपो (पानी), तेज (ताप), वायु (हावा), आकाश र विज्ञान एकआपसमा मिलेर बनेको छ । पृथ्वी धातुले शरीरमा स्थूलता वा ठोसपना प्रदान गरिरहेको हुन्छ, शरीरको यौगिक (Cohesion) स्वभाव आपो धातुले गर्दा नै भएको हो । हामीले खाएका वा पिएका कुरालाई तेजोधातुले पचाउने काम गर्छ । वायुधातुले श्वास प्रश्वास गराइराखेको हुन्छ । शरीरभित्र खाली ठाउँ (छिद्र) बनाउने काम आकाशधातुले गर्छ । पाँच विज्ञानका समूह र सास्रव (आस्रवले युक्त) मनोविज्ञानलाई हामी विज्ञान धातु भन्छौँ । यी प्रत्ययहरू नभएमा शरीर बन्दैन, यी ६ धातुहरू आपसमा मिलेमा मात्र शरीरले पूर्णरूपले काम गर्न सक्छ । ती ६ धातुमध्ये कुनैले पनि 'म ठोसता दिन्छु, इत्यादि इत्यादि' भनेर सोंच्दैन । शरीरले पनि 'मलाई यी ६ वटा प्रत्ययहरूले बनाएका हुन्' भनेर सोंच्दैन । हामी यत्ति मात्र भन्छौँ कि यी प्रत्ययहरू रहेकाले शरीर बन्न गयो ।

कसैले सोध्न सक्छ, "प्रतीत्यसमुत्पादका यी बाह्रवटा अङ्गहरू पूरा हुन कतिवटा जन्महरू चाहिएला? यसको उत्तर *दशभूमिक सूत्र* मा यसरी दिइएको पाइन्छ :

> 'अविद्या प्रत्ययको कारणले संस्कार हुन्छ'
> जुन हामीले पहिले भन्यौं ।
> त्यो 'अतीत'सित सम्बन्धित हुन्छ वा भनौं अविद्या र संस्कार
> अतीत (पूर्वजन्म)का अङ्गहरू हुन् ।
> विज्ञानदेखि लिएर वेदनासम्मका अङ्गले वर्तमान (वर्तमान
> जन्म) लाई जनाउँछन् ।
> तृष्णादेखि तलका भव इत्यादि अङ्गहरूले भविष्य (भविष्य-
> का जन्म) सित सम्बन्ध राख्छन् । त्यसपछि एवं रीतले यो
> चक्र वा क्रम चलि नै रहन्छ ।











3.2. प्रातिलोमिक निर्वाणगत प्रतीत्यसमुत्पाद : प्रातिलोमिक निर्वाणगत प्रतीत्यसमुत्पादलाई यसरी बुझ्न सकिन्छ : सबै धर्महरू शून्य छन् भन्ने धर्म शून्यता बोध भइसकेपछि अविद्याको निरोध (अन्त्य/खतम) हुन्छ । त्यसरी अविद्याकै निरोध भएपछि क्रमशः एक पछि अर्को हुँदै जरामरणसम्मको पनि निरोध हुन्छ । जस्तो भनिएको छ :

> जब अविद्याको निरोध हुन्छ, तब संस्कारको निरोध हुन्छ, इत्यादि एवं रीतले जब जातिको निरोध हुन्छ, तब क्रमशः जरा, मरण, शोक, परिदेव, दुःख, दौर्मनस्य र उपायासको पनि निरोध हुन्छ । यसरी विशाल दुःखस्कन्धको निरोध वा अन्त्य हुन्छ ।[२१]

**4. मात्सर्य (ईर्ष्या)** : यदि कुनै व्यक्तिमा ईर्ष्या प्रबल छ भने त्यसको प्रतिपक्षस्वरूप उसले परात्मसमताको विषयमा भावना गर्नुपर्छ जुन यसप्रकार गरिन्छ । जसरी हामी सुख चाहन्छौं, त्यसरी नै अरू प्राणीहरू पनि सुखै चाहन्छन् । जसरी हामीलाई दुःख मन पर्दैन, त्यसरी नै अरू प्राणीहरूलाई पनि दुःख मन पर्दैन। त्यसो भएकोले आफू र अरू सत्त्वहरूलाई समानरूपले मायाले हेर्ने भावना गर्नुपर्छ । यस विषयमा *बोधिचर्यावतार* मा यस्तो बताइएको छ :

> सर्वप्रथम आफू र अरूबीचको समानतामा ध्यान गर्नुपर्छ
> सुख चाहनु र दुःख नचाहनुमा
> सबै प्राणी समान भएका हुँदा
> मैले आफूलाई जस्तै अरू सबै प्राणीहरूको
> पनि रक्षा वा हित गर्नुपर्छ ।[२२]

**5. मद** : यदि कुनै व्यक्तिमा मद वा अहंकार प्रबल छ भने त्यसको प्रतिपक्षस्वरूप उसले आत्म परावर्तन को विषयमा भावना गर्नुपर्छ जुन











यसप्रकार गरिन्छ : हामीजस्ता बालपृथग्जनहरू सधैं आफैलाई मात्र प्यारो ठान्ने हुँदा आफ्नै हितको लागि मात्र कार्य गर्छौं, त्यसैकारणले गर्दा हामीले संसारमा दु:ख पाइराखेका छौं । तर बुद्धहरूले आफूलाई भन्दा अरूलाई प्यारो ठानेर अरूकै हितको लागि काम गरेर बोधिज्ञान प्राप्त गर्छन् । जस्तो भनिएको छ :

> पृथग्जन (हामीजस्ता अज्ञानी प्राणीहरू)
> आफ्नै स्वार्थको लागि मात्र काम गर्छन्
> जबकी बुद्धहरू परार्थ अर्थात अरूहरूका लागि काम गर्दछन् ।
> यिनी दुईबीचको भिन्नतालाई त हेर ![२३]

तसर्थ, आत्मस्नेह भनेको दोष हो भन्ने बुझी हामीले यस 'आत्मग्राह' लाई त्यागिदिनुपर्छ । अरूलाई स्नेह गर्नु नै ठूलो गुण हो भन्ने कुरा बुझी अरूलाई आफूलाई जस्तै प्रेम गर्नुपर्छ । *बोधिचर्यावतार* मा भनिएको छ :

> आफूलाई दोषयुक्त र अरूलाई गुणको खानी ठानेर
> हामीले आत्मग्राहलाई त्यागेर परस्नेहको भावना गर्नुपर्छ ।[२४]

**6. समान प्रबलताका क्लेशहरू** : यदि ती विभिन्न क्लेशहरू सबै उत्तिकै तीव्र र प्रबल छन् भने अथवा मनभित्र विकल्प ज्यादै नै गहिरो जरो गाडेर बसेको छ भने जम्मा छ प्रकारका श्वास प्रश्वास अर्थात आनापानको ध्यान गर्नुपर्छ । जस्तो *अभिधर्मकोश* मा भनिएको छ :

> आनापानस्मृति ६ प्रकारका छन्, ती हुन् :
> गणना, अनुगमण, स्थापन, उपलक्षण, विवर्त र परिशुद्धि[२५]

तन्त्रनयमा माथि उल्लेखित क्लेशहरूलाई प्रहाण, प्रतिपत्ति र परिणामना नगरीकनै सीधै तत्त्वभावना गरिन्छ । मारपा एवं मिलारेपाको गुरुशिष्य











परम्पराको सहजयोग, नारोपाका ६ धर्म यसैसंग सम्बन्धित छन् भनेर हामीले बुझ्नुपर्छ ।

यी सबै मतिशोधनका क्रमबद्ध चरण हुन् जसलाई पार गरेर साधक समाधिमा प्रवेश गर्छ ।

**३. ध्यान पारमिताका भेद** : वास्तविक ध्यानका तीन भेदहरू छन्, ती हुन् : क. दृष्टधर्मसुखविहाराय ध्यान अर्थात सबै दृष्टिगोचर धर्महरूमा सुख एवं शान्तपूर्वक विहार गर्न गरिने ध्यान, ख. समाधिगुणनिर्हाराय ध्यान अर्थात समाधिका गुणहरूलाई प्राप्त गर्न गरिने ध्यान, र ग. सत्त्वार्थक्रिया ध्यान अर्थात प्राणीहरूको हितको लागि काम गर्न गरिने ध्यान ।[२६]

तीमध्ये पहिलो दृष्टधर्मसुखविहाराय ध्यान हाम्रो आफ्नो मनलाई उत्तम वा सुयोग्य पात्र बनाउने उपाय हो, दोश्रो समाधिगुणनिर्हाराय ध्यान आफ्नो मनलाई सुयोग्य पात्र बनाइसकेपछि बुद्धधर्मलाई अनुष्ठान गर्ने उपाय हो र तेश्रो सत्त्वार्थक्रियाय ध्यान सत्त्वहरूको हितको लागि काम गर्ने उपाय हो ।

**४. प्रत्येक भेदका लक्षण**

**क. दृष्टधर्मसुखविहाराय ध्यान** : पहिलो, दृष्टधर्मसुखविहाराय ध्यानको विषयमा बोधिसत्त्वभूमिमा यस्तो भनिएको छ :

> सबै विकल्पहरूबाट मुक्त, कायिक (शारिरीक) र चेतसिक (मानसिक) प्रश्रब्धि (महासुख) दिने, परम शान्त, अहंकार (मान) रहित, स्वाद नलिने (सं. अनास्वादित), निमित्तरहित (संज्ञाबाट मुक्त भएको) ध्यान नै बोधिसत्त्वको दृष्टधर्मसुखविहार ध्यान हो ।[२७]

यहाँ, सर्वप्रथम 'सबै विकल्पहरूबाट मुक्त ध्यान' को अर्थ सत्, असत् आदि विकल्पबाट मुक्त चित्तको एकाग्रता हो । त्यस्तै 'कायिक र चेतसिक











प्रश्रब्धिजनक' भन्नाको तात्पर्य कायिक र चेतसिक विक्षेप (सं. दौष्ठुल्य) बाट मुक्त हुनु हो । 'मानरहित' भन्नाको तात्पर्य दृष्टि क्लेश (मिथ्या दृष्टि आदि) रहित हुनु हो । 'स्वाद नलिने (अनास्वादित)' विशेषणको अर्थ हो भव क्लेश (The afflicting emotion of existence) बाट मुक्त । 'निमित्तरहित' अर्थात रूप आदि जन्य (सुख) भोग नगर्ने ।

यी सबै मार्गहरूमा प्रवेश गर्ने द्वार चार ध्यानहरू हुन् । ती हुन्, प्रथम ध्यान, द्वितीय ध्यान, तृतीय ध्यान र चतुर्थ ध्यान । प्रथम ध्यान विश्लेष-णात्मक वितर्कयुक्त ध्यान हो, द्वितीय ध्यानमा प्रीति उत्पन्न हुन्छ, तृतीय ध्यानमा (सातवटा) सुख प्राप्त हुन्छ भने चतुर्थ ध्यानमा उपेक्षा उत्पन्न हुन्छ ।[२८]

**ख. समाधिगुणनिर्हाराय ध्यान** : समाधिगुणनिर्हाराय ध्यानअर्थात समाधिका गुणहरूलाई प्राप्त गर्न गरिने ध्यान दुई प्रकारका छन् : असाधारण र साधारण । पहिलो अर्थात असाधारण ध्यान तथागतका दशबल अन्तर्गत पर्ने विभिन्न, कल्पनातीत (अचिन्त्य), अपरम्पार र अपरिमित प्रकारका समाधिहरू हुन् । यी समाधिका बारे श्रावक र प्रत्येकबुद्धहरूले नामै सुनेका हुँदैनन् भने लाभ गर्नु त परै छ ।[२९]

दोश्रो अर्थात साधारण ध्यान भन्नाले विमोक्ष, अभिभ्वायतन, कृत्स्नायतन, प्रतिसंविद इत्यादि ध्यानका तह हुन् जुन श्रावक र प्रत्येक बुद्धहरूले समानरूपले लिन्छन् । तर नामले ती समान भएतापनि तिनका स्वरूप भने फरक नै छन् ।

**ग. सत्त्वार्थक्रियाको लागि ध्यान** : कुनै एक समाधिको आश्रय लिएर आफ्ना अनगिन्ती शरीरहरू प्रकट गरेर क-कसलाई कस्ता कस्ता सहायता चाहिन्छन् त्यस्ता सहायता दिने जस्ता ११ वटा परिच्छेद १३ मा वर्णित पर कल्याणपरस्त कार्यहरू गर्छन् ।

शमथ र विपश्यना भन्ने ध्यानका दुईटा अवस्था छन् । उपर्युक्त ध्यानका सम्बन्धमा शमथ भनेको के हो र विपश्यना भनेको के हो ?











सम्यक् समाधिको आश्रय लिएर चित्तलाई चित्तसंगै एकबद्ध वा युगनद्ध तुल्याउनुलाई नै शमथ भनिन्छ भने चित्तलाई शमथ स्थितिमा ल्याइसकेपछि यथार्थ (धर्मता) लाई साक्षात्कार गरेर कुन धर्म करणीय छन् कुन अकरणीय छन् भनेर जान्ने काम नै विपश्यनाको हो । जस्तो *महायानसूत्रालङ्कार* मा भनिएको छ :

> सम्यक् समाधिमा आश्रित भएर
> चित्तलाई चित्तमै लय गर्नु र धर्मलाई प्रतिवेक्षणा
> (सं. प्रविचय) गर्नुलाई नै क्रमशः शमथ र विपश्यना भनिन्छ ।[३०]

शमथ समाधिकारक हो भने विपश्यना प्रज्ञाकै अंश हो ।

५. **उपचय (अभिवृद्धि)** : परिच्छेद १२ मा व्याख्या गरिएझैँ ध्यान पार मिताको अभिवृद्धि ज्ञान, प्रज्ञा र परिणामनाबाट हुन्छ ।

६. **विशुद्धि** : परिच्छेद १२ मा बताइएझैँ शून्यता र करुणाले थामेपछि ध्यानको विशुद्धि हुन्छ ।

७. **फल** : ध्यानका फल पनि अन्त्य र आवस्थिक (सांसारिक) गरी दुई प्रकारकै हुन्छन् भनेर बुझ्नुपर्छ । तीमध्ये अन्त्य वा परमार्थ फल भन्नाले अनुत्तर बोधि प्राप्त हुनु नै हो । जस्तो *बोधिसत्त्वभूमि* मा भनिएको छ :

> यस प्रकार ध्यान पारमितालाई पूरा गरेर बोधिसत्त्वले अनुत्तर
> सम्यक् सम्बोधि प्राप्त गरे, गरिरहेका छन् र गरिरहनेछन् ।[३१]

ध्यान पारमिताका आवस्थिक (सांसारिक वा लौकिक) फलस्वरूप रागबाट मुक्त देव भएर जन्मिन सक्छौँ । यसै सम्बन्धमा आचार्य नागार्जुनले यस्तो भन्नुभएको छ :











कामधातुका आनन्द, सुख, दुःख सबैलाई प्रहाण गरेर
चतुर्ध्यानबाट प्राप्त हुने ब्रह्मकायिक, प्रभास्वर,
शुभकृत्स्न र बृहत्फलका देवताहरूका
जस्तै अवस्था प्राप्त गर्न सकिन्छ। *सुहृल्लेख* - ४१

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
ध्यानपारमिता
नामक षोडश परिच्छेद समाप्त।












# परिच्छेद १७
# प्रज्ञा पारमिता

प्रज्ञा पारमिताको सारांश निम्न शीर्षकहरूमा पाउन सकिन्छ :

गुण र दोषको निर्देश, स्वरूप, भेद,
हरेक भेदका लक्षण, ज्ञान, अभ्यास र फल
यी सात शीर्षकहरूमा प्रज्ञा पारमिताका विषयवस्तु समाविष्ट छन् ।

१. **गुण र दोषहरूको निर्देश** : दानदेखि लिएर ध्यानसम्मका पारमिताले युक्त भएता पनि यदि बोधिसत्त्वमा प्रज्ञाको अभाव भयो भने उनीबाट बुद्धत्व प्राप्त हुन सक्दैन । त्यसो किन ? किनभने जसरी मार्गदर्शक बिना अन्धाहरूको समूह आफूले चाहेको नगर (गन्तव्य)मा पुग्न सक्दैनन् त्यसरी नै प्रज्ञापारमिता बिना कुनै पनि सत्त्व सर्वज्ञताको नगरसम्म पुग्न सक्दैन । जस्तो *प्रज्ञापारमितासञ्चयगाथा* मा भनिएको छ :

लाखौं करोडौं अन्धाहरूले कसरी कुनै नगरमा प्रवेश गर्न सक्लान्
जबकि उनीहरूलाई कुन बाटो भएर जाँदा सो नगरमा पुगिन्छ
भन्ने कुरै थाहा छैन र आफ्नो साथमा कुनै आँखाले
देख्न सक्ने मार्गदर्शक पनि छैन भने ?
त्यसैगरी खाली पाँच नेत्रहीन पारमिताहरू मात्र भएर के गर्ने
प्रज्ञा नै भएन भने बोधिज्ञानसम्म कसरी पुगिएला ?[1]

अर्कोतर्फ, प्रज्ञाले युक्त भएमा हामीले सर्वज्ञता (बुद्धत्व)को अवस्था प्राप्त गर्न सक्छौं । किनभने जसरी कुनै एक मार्गदर्शकको कुशल नेतृत्वमा अन्धाको समूह आफूले जान चाहेको नगरसम्म सकुशल पुग्न सक्छन्











त्यसरी नै प्रज्ञाले गर्दा दान इत्यादि पारमिताद्वारा गरिएका पुण्यसंभारलाई बुद्धत्वको मार्गमा उतार्न सकिन्छ । यस सम्बन्धमा *मध्यमकावतार* मा यस्तो भनिएको छ :

> जसरी सद्दे आँखा भएका कुनै व्यक्तिको मद्दतले जन्म देखिका अन्धाका सम्पूर्ण जमात आफूले चिताएकै ठाउँमा सकुशल पुग्न सक्दछन्, त्यस्तै गरी प्रज्ञाले अरू नेत्रहीन पारमिताहरूलाई बुद्धत्वसम्म डोऱ्याउँदै लान्छ । ६/२

*प्रज्ञापारमितासञ्चयगाथा* मा भनिएको छ :

> प्रज्ञाको माध्यमले धर्मको स्वभावलाई राम्ररी र अपाय (दुर्गतिहरू) बुझेर प्राणी सम्पूर्ण त्रिधातुलाई पार गरेर जान्छन् ।[२]




यदि त्यसो हो भने प्रज्ञा मात्रै भए पुग्दैन र, अरू दान आदि पारमिताहरूको अभ्यासै किन गर्नुपऱ्यो ? त्यसो होइन, प्रज्ञा मात्र भएर पनि पुग्दैन । यस सम्बन्धमा *बोधिपथप्रदिप* मा यस्तो लेखिएको छ :

> भनिन्छ,
> “प्रज्ञा बिनाको उपाय र उपाय बिनाको प्रज्ञा
> दुवै बन्धन हुन् ।”
> त्यसैले दुईमा एउटालाई पनि नत्याग्नू ।[३]

कुनै बोधिसत्त्वले प्रज्ञा वा उपाय मध्ये कुनै एकको मात्र भावना गर्छ भने ऊ कहाँ बन्धित हुन्छ त ? यदि उसले प्रज्ञाको मात्र आश्रय लिएर उपायको अभ्यास गर्दैन भने ऊ श्रावकहरूका एकपक्षीय निर्वाणमा पुगेर बन्धनमा फस्छ र त्यो स्थितिमा अल्झेपछि अप्रतिष्ठित निर्वाण प्राप्त गर्न नसक्ने हुन्छ । यस सम्बन्धमा दुईटा विचारधारा वा मतहरू पाइन्छन्











जस्तो कि : तीन यानलाई मान्नेहरू (योगाचार) का मत अनुसार त्यो व्यक्ति सदाको लागि त्यहीँ बन्धित भइरहन्छ । जबकी एकयानलाई मान्ने-हरू (माध्यमिक) का मत अनुसार त्यहाँ सो व्यक्ति ८४,००० कल्पसम्म बन्धित भएर रहन्छ । त्यस्तै गरी यदि कुनै व्यक्तिले प्रज्ञालाई छोडेर केवल उपायको मात्र आश्रय लिन्छ भने ऊ सधै खाली बालपृथग्जन भएर मात्र रहनुपर्ने हुन्छ, उसले कहिल्यै त्यो भूमिलाई पार गर्न सक्दैन । तसर्थ सधै संसारमै अल्झेर रहनुपर्ने हुन्छ । यसै सम्बन्धमा *अक्षयमतिपरिपृच्छासूत्र* मा बताइएको छ :

> उपायको अभावमा खालि प्रज्ञा मात्र भएको खण्डमा प्राणी निर्वाणमै अल्झिन (बन्धित हुन) पुग्छ । त्यस्तै खालि उपाय मात्र छ तर प्रज्ञा छैन भने ऊ संसारमा फँस्छ वा बन्धित हुन्छ । त्यसैले ती दुवैलाई एकीकृत गर्न आवश्यक छ ।



*विमलकीर्तिनिर्देश सूत्र* मा पनि यही कुरो उल्लेख गरिएको छ :



> बोधिसत्त्वको बन्धन के हो र मुक्ति के हो ? उपायले नसमाएको प्रज्ञा बन्धन हो भने उपायले समाएको प्रज्ञा मुक्ति हो । त्यस्तै प्रज्ञाले नसमाएको उपाय बन्धन हो भने प्रज्ञाले समाएको उपाय मुक्ति हो ।[४]

तसर्थ, प्रज्ञा र उपायमध्ये एउटाको मात्र भावना गर्नु मारको कार्य हो । *सागरनागराजपरिपृच्छासूत्र* ले भन्छ :

> मारका दुईटा कार्यहरू छन् : एउटा कार्य प्रज्ञाबाट अलग्गिएको उपायको भावना गर्नु र अर्को कार्य उपायबाट अलग्गिएको प्रज्ञाको भावना गर्नु हो । ती मारका कार्य हुन् भनी जानेर तिनलाई त्याग्नुपर्छ ।











उदाहरणको लागि मानौं आफूलाई मन परेको कुनै नगरमा हामी जान चाहान्छौं । त्यतातर्फ जाने सही बाटो पहिल्याउन र सो बाटोमा हिड्नको लागि हामीसँग क्रमशः आँखा र खुट्टा दुवै नभइ हुन्नन् । त्यसरी नै अप्रतिष्ठित निर्वाणको नगरीसम्म पुग्न पनि हामीमा प्रज्ञारूपी आँखा र उपायरूपी खुट्टा यी दुईबीच तादात्म्य हुनु जरूरी छ । जस्तो *गयाशीर्षसूत्र* मा पनि यही कुरो भनिएको छ :

> संक्षेपमा, महायानका दुई मार्गहरू छन् : उपाय र प्रज्ञा ।

यसको अतिरिक्त, प्रज्ञा स्वतः उत्पन्न हुँदैन । उदाहरणको लागि अलिकति मात्र काठ बटुलेर आगो बाल्यो भने सानै आगो बल्छ र तुरुन्तै निभ्छ । तर धेरै परिमाणमा काठहरू बटुलेर ल्याई आगो बालेमा धेरै ठूलो आगो बल्छ र धेरैबेर बलिरहन्छ । हामीले सो आगो निभाउन खोजे पनि ननिभिकन एकनासले बलिरहन्छ । ठीक त्यसैगरी किञ्चित मात्र पुण्य संभार गरिएको छ भने ठूलो प्रज्ञा उत्पन्न हुँदैन तर यसको ठीक विपरीत दान आदि पारमिताहरूलाई पूर्ण गरेर धेरै पुण्य सम्भार गरिएको छ भने ठूलै प्रज्ञा उत्पन्न भएर त्यसको आगोले सबै आवरणहरूलाई जलाइदिन्छ । त्यसकारण, प्रज्ञाको निमित्त हामीले दान आदि पारमिताहरूको आश्रय लिनैपर्छ । त्यसैले *बोधिचर्यावतार* मा यस्तो लेखिएको छ :

> प्रज्ञाकै लागि भगवान् बुद्धले यी सबै अंगहरू (अन्य पारमिताहरू)
> को व्याख्या गर्नुभएको हो ।[५]

२. **प्रज्ञापारमिताको स्वरूप** : धर्महरूको सही र पूर्ण प्रतिवेक्षणा वा विवेचना (स.प्रविचय, ने.विश्लेषण) नै प्रज्ञाको स्वरूप हो । यस सम्बन्धमा *अभिधर्मसमुच्चय* मा यस्तो लेखिएको छ :

> प्रज्ञा के हो ? प्रज्ञा धर्मको प्रविचय (विवेचना) हो ।











**३. प्रज्ञापारमिताका भेद** : *महायानसूत्रालङ्कारटीका* का अनुसार प्रज्ञाका तीन भेद अथवा तीन प्रकारका प्रज्ञा छन् :[६]

क. लौकिक प्रज्ञा
ख. हीनलोकोत्तर प्रज्ञा र
ग. महालोकोत्तर प्रज्ञा

**४. हरेक भेदका लक्षण**

**क. लौकिक प्रज्ञा** : चिकित्साविद्या, हेतुविद्या (तर्कशास्त्र), शब्दविद्या, शिल्पविद्या इत्यादि को अध्ययन गरेर जुन प्रज्ञा लाभ हुन्छ त्यसलाई लौकिक प्रज्ञा भनिन्छ । जबकि दुई प्रकारका लोकोत्तर प्रज्ञाको उत्पत्ति अध्यात्मविद्या नामक सद्धर्मबाट प्राप्त हुन्छ ।




**ख. हीनलोकोत्तर प्रज्ञा** : दुईवटा लोकोत्तर प्रज्ञामा पहिलो हीनलोकोत्तर प्रज्ञा श्रावक र प्रत्येकबुद्धहरूका श्रुतमयी, चिन्तामयी र भावनामयी प्रज्ञा हुन् जस अनुसार पाँच उपादानस्कन्ध (रूप, वेदना, संज्ञा, संस्कार र विज्ञान) लाई अशुचि, अनित्य, दुःख र अनात्मको रूपमा बोध गरिन्छ ।

**ग. महालोकोत्तर प्रज्ञा** : दोश्रो प्रज्ञा अर्थात महालोकोत्तर प्रज्ञा महायानीहरूका श्रुतमयी, चिन्तामयी र भावनामयी प्रज्ञा हुन् जसअनुसार सबै धर्महरू (रूप तथा चित्त) स्वभावैले शून्य, अनुत्पन्न, निराधार र निर्मूलको रूपमा बोध गरिन्छ । यसबारे *सप्तशतिकाप्रज्ञापारमिता* मा भनिएको छ :

समस्त धर्म अनुत्पन्न छन्
भनेर जान्नु नै प्रज्ञापारमिता हो ।

*प्रज्ञापारमितासञ्चय गाथा* का अनुसार,











समस्त धर्महरूको निःस्वभावतालाई जान्नु नै उत्तम प्रज्ञापार-
मिताको अभ्यास हो ।[७]

*बोधिपथप्रदीप* मा पनि यही कुरा लेखिएको छ :

स्कन्ध, धातु एवं आयतनलाई अनुत्पन्न
ठानी ती सबै स्वभावैले शून्य छन् भनेर
जुन किसिमको बोध गरिन्छ
त्यसैलाई प्रज्ञा भन्ने गरिन्छ ।[८]

५. **प्रज्ञापारमिताको ज्ञान** : तीन प्रकारका प्रज्ञामध्ये पनि महालोकोत्तर प्रज्ञाकै अध्ययन हुनुपर्छ । यसलाई ६ शीर्षकहरूमा बाँडेर अध्ययन गरिनेछ ।




५.१. भावग्रहको निषेध
५.२. अभावग्रहको निषेध
५.३. असद्ग्रहको दोष
५.४. उभयग्रहको दोष
५.५. विमुक्ति मार्ग
५.६. विमुक्तिमय निर्वाण

५. १. **भावग्रहको निषेध** : *बोधिपथप्रदीप* मा अतीश लेख्दछन् :

सत्को उत्पत्ति युक्तिसंगत हुँदैन
त्यसैगरी असत्को उत्पत्ति पनि आकाशको फूल समान नै हो ।[९]

यो कुरालाई राम्ररी बुझ्न देहाय बमोजिमका तर्कले यसको व्याख्या गरिनुपर्छ ।











मार्गक्रम (Lamrim) का व्यवस्था अनुसार सबै भव र भवग्राहलाई दुई प्रकारका 'आत्मा' अन्तर्गत समेटेर व्याख्या गरिनुपर्छ । दुईटै प्रकारका 'आत्मा' स्वभावैले शून्य छन् । यी दुई 'आत्मा' वा 'चित्त' कुन हुन् त ? ती हुन्, पुद्गल-आत्म र धर्म-आत्म ।

पुद्गल-आत्मा वा चित्त भनेको के हो ? जवाफमा भन्नुपर्दा, हुनत यस सम्बन्धमा धेरै मतहरू प्रचलनमा आएका छन्, तर वास्तवमा पुद्-गल (व्यक्ति) भनेकै चेतना (Awareness) ले युक्त उपादान-स्कन्धको सन्तति (निरन्तरता) हो जो सधैं उफ्रिरहन्छ, चलिरहन्छ र प्रमादी भइ-रहन्छ । प्रकीर्णसूत्र मा भनिएजस्तै : "यही सन्ततिलाई "पुद्गल" भनिन्छ जो अत्यन्तै चञ्चल, कुटिल र प्रमत्त भइरहन्छ ।"

यस पुद्गललाई नित्य र एक ठानेर ग्राह गरिसकेपछि व्यक्ति सो पुद्गललाई "म" अथवा "आत्मा" भन्ठानेर यसैमा बेस्सरी टाँसिन्छ । पुद्गल आत्मा वा चित्त भनेकै त्यही हो । यही पुद्गल आत्माले गर्दा नै क्लेशहरू उत्पन्न हुन्छन् । क्लेशले गर्दा कर्म गरिन्छ । दुःख यही कर्मले नै पैदा गर्दछ । तसर्थ, सबै दुःखको जड नै यही पुद्गल आत्मा वा चित्त रहेछ । त्यसैले *प्रमाणवार्तिक* मा लेखिएको छ :

स्व (म वा आफू) भएपछि पर (अरू) को संज्ञा पनि हुन्छ नै ।
यही स्व र पर मा विभाजित गरिने हुँदा
ग्राह र द्वेष उत्पन्न हुन्छन् ।
यिनका आपसी अन्तरक्रियाले
सबै दोषहरूको उत्पत्ति हुन्छ ।[१०]

धर्म-आत्मा भनेको के हो ? धर्म भनेकै बाहिरी (वाह्य) ग्राह्य विषय र भित्री (आन्तरिक) ग्राहक चित्त हुन् । यहाँ फेरि अर्को प्रश्न उठ्न सक्छ, त्यसलाई किन धर्म भनिएको त ? किनभने त्यसले आफ्नै लक्षण धारण गरिराखेको हुन्छ त्यसैले त्यसलाई धर्म भनिएको हो । जस्तो प्रकीर्ण सूत्रमा भनिएको छ : "लक्षण धारण गरेकाले त्यसलाई धर्म भनिन्छ ।"











यस अर्थमा ग्राहक र ग्राह्य यी दुईलाई भवको रूपमा ग्रहण गरेर यिनीहरूप्रति आसक्त हुनुलाई नै "धर्म-आत्मा" भनिन्छ। उक्त दुवै प्रकारका 'आत्मा' स्वभावैले शून्य हुन्छन् - यसको व्याख्या गर्न सर्वप्रथम पुद्गल आत्मालाई नै निषेध गर्नेतिर लागौं। यस सम्बन्धमा आचार्य नागार्जुन प्रणीत *रत्नावली* मा निम्न श्लोक विशेषरूपले उल्लेख्य छ : "'मै' हुँ र 'मेरो' हो - यसरी भन्नु परमार्थको ठीक विपरीत हो।"[११]

उपर्युक्त श्लोकले के भन्न खोजेको हो भने हामी जुन आत्मा भन्छौं परमार्थतः त्यसको कुनै अस्तित्व छैन र त्यसलाई सिद्ध गर्न पनि सकिन्न। साँच्चै परमार्थतः यसलाई सिद्ध गर्न सकिँदो हो त चित्तले सत्यलाई साक्षात्कार गरिसकेपछि पनि त त्यसको अस्तित्व हुनुपर्नेथ्यो। तर त्यसो नभएर मनले सत्य (यथाभूत दर्शन) लाई साक्षात्कार गरिसकेपछि आत्मा भन्ने चीजै रहन्न। त्यसैले आत्माको अस्तित्वलाई सिद्ध गर्न सकिन्न। जस्तो *रत्नावली* मा पनि भनिएको छ :




> किनभने यथाभूत ज्ञान दर्शन हुँदा
> यी दुई उपलब्ध हुन्नन्।[१२]

यथाभूत ज्ञानको अर्थ सत्यलाई साक्षात्कार गर्नु हो वा जस्ताको तस्तै देख्नु हो। यहाँ दुईको अनुपलब्धताले आत्मा र आत्मीय ग्राह ('म' र 'मेरो' लाई ग्राह गर्नु) उपलब्ध नहुनुलाई जनाउँदछ।

यसको अलावा, आत्मा वा चित्तको अस्तित्त्व छ भनेर मान्ने हो भने यसलाई एकचोटि जाँच गरेर हेरौँ। के सो आत्मा वा चित्त स्वतः उत्पन्न हुन्छ, कि परतः उत्पन्न हुन्छ, कि उभयतः (स्वतः पनि परतः पनि) उत्पन्न हुन्छ अथवा तीन कालबाट हुन्छ ?

यीमध्ये आत्मा वा चित्त स्वतः उत्पन्न हुने कुरा त स्पष्टरूपले असम्भव नै छ किनभने कि त यसको अस्तित्त्व पहिलेदेखि हुनुपर्छ वा कि त यसको अस्तित्व छँदै छैन। यदि यसको अस्तित्व पहिलेदेखि छैन भने आफैलाई उत्पत्ति गर्ने कारण बन्न सक्दैन, अर्कोतर्फ यदि यसको अस्तित्व











पहिलेदेखि नै छ भने त्यसले आफूलाई उत्पन्न गर्छ भन्नमिल्दैन । त्यसैले यसमा आत्माले आत्मालाई नै उत्पाद गर्ने विरोधाभास रहन्छ ।

आत्मा अरू नै कुनै चीजबाट (परतः) उत्पन्न हुनै सक्दैन किनभने अरू (पर) कारण बन्नै सक्दैन किनभने कारण वा हेतुको सम्बन्ध फल वा परिणामसंग गाँसिएको हुन्छ । जबसम्म कारण हुँदैन फलको अस्तित्व असम्भव छ । जब कारणै हुँदैन भने फल कसरी आउँला ? यो कुराको तर्क त माथि नै दिइसकियो ।

आत्मा स्वतः र परतः पनि उत्पन्न हुने होइन । यी दुवै तर्कहरू दोषले भरिपूर्ण छन् जसको व्याख्या माथि नै गरिसकियो ।

आत्मा तीनवटा काल (समय) बाट पनि उत्पन्न हुने होइन । यो अतीतबाट उत्पन्न हुन सक्दैन, किनभने अतीत वा भूत त कुहिएको वीऊ जस्तै नष्ट भइसक्यो तसर्थ त्यसको अंकुराउने शक्ति नै नष्ट भइसक्यो । भविष्य कालबाट उत्पन्न हुने पनि होइन किनभने त्यसो हो भने बाँझो आइमाइको सन्तान भने जस्तै हुनेछ । त्यसोभए आत्मा वर्तमान समयबाट उत्पन्न हुने हो त ? त्यो पनि होइन । किनभने कारण (उत्पादक) र फल (उत्पन्न आत्मा) एकैसाथ एकै समयमा उत्पन्न हुन सक्दैनन् । त्यसैले *रत्नावली* मा भनिएको छ :

> आत्मा स्वतः, परतः, उभयतः र तीनकालबाट
> पनि उपलब्ध (प्राप्ति) नहुने हुँदा
> आत्मग्राह (अहंकार) नष्ट भएर जान्छ ।[१३]

यहाँ "उपलब्ध नहुने" भन्नाले "उत्पन्न नहुने" भन्ने बुझिन्छ ।

अथवा, देहायबमोजिम यस तथाकथित 'आत्मा'को परीक्षा गरिनुपर्छ । यो आत्मा शरीरमा छ कि, मनमा छ कि या त नाममा छ ? चार महाभूतको जे स्वभाव छ त्यही यो शरीरको स्वभाव हो । शरीरको जुन स्थूलता वा कठोरपना छ त्यही पृथ्वी धातु हो, आर्द्रता जल हो, उष्णता (तातोपना) तेज हो भने श्वास एवं चाल वायु हो । बाहिरी पृथ्वी, जल,











अग्नि र वायुमा चित्त नभएजस्तै यी चार महाभूतमा आत्मा वा चित्त भेटिँदै भेटिन्न ।

त्यसोभए, के चित्तभित्र छ त आत्मा ? त्यहाँ पनि छैन किनभने चित्त कहीँ पनि रहँदैन, न आफूले देख्न सक्छौँ न त अरूले नै यो चित्तलाई देख्न सक्छ । मन आफैको अस्तित्व छैन भने त्यहाँ आत्मा रहने त कुरै आउँदै न ।

त्यसोभए के नाममा रहन्छ त आत्मा ? त्यहाँ पनि रहन्न, किनभने नाम भनेको त एउटा आरोपित गरिएको संज्ञा मात्रै न हो । यो कुनै द्रव्य वा वस्तुमा रहने पनि होइन । त्यसैले यसको आत्मासित कुनै सम्बन्धै छैन । यसरी तीन तर्क (हेतु) द्वारा आत्मा वा चित्तको अस्तित्वहिनतालाई प्रतिष्ठापित गरियो ।

अब निम्नलिखित दुई शीर्षक अन्तर्गत धर्मको आत्मालाई निषेध गरिन्छ । ती दुई शीर्षक हुन् : बाह्य ग्राह्य विषयको अस्तित्वलाई सिद्ध गर्न नसकिने, र आन्तरिक ग्राहक चित्तको अस्तित्वलाई सिद्ध गर्न नसकिने । यी दुईको व्याख्या तल गरिन्छ ।

***बाह्य ग्राह्य विषयको अस्तित्वलाई सिद्ध गर्न नसकिने*** : पहिलो शीर्षकको व्याख्या यसरी गरौं । कोही कोही वाह्य ग्राह्य विषयको अस्तित्व वा सत्तालाई मान्दछन् । उदाहरणको लागि वैभाषिकहरू भन्छन् कि एउटा निरंश (अंशमा विभाजन गर्न नसकिने) पिण्डको रूप परमाणुको अस्तित्व भने हुन्छ । पिण्डको रूपमा रहँदापनि ती अणुहरू टाँस्सिएर रहँदैनन्, तिनीहरूबीच केही फासला भने रहेकै हुन्छ । गौचरमा चर्दै गरेका चौरी-गाईका बथानसरह ती अणुहरू एकै पिण्ड भएर रहेको जस्तो देखापर्छ । तिनीहरूलाई अलग अलग देख्न नसकिने कारण प्राणीहरूका कर्म नै हुन् । तर सौत्रान्तिकहरूका अनुसार यसरी पिण्डका रूपमा रहेतापनि यी अणुहरूबीच फासला हुँदैन । फासला नरहेपनि एकले अर्कालाई छुन्न ।

दुवैका मान्यतालाई युक्तिसंगत भन्न मिल्दैन । किनकी यहाँ एउटा प्रश्न के उठ्छ भने के ती अणु एउटा मात्र छ वा अनेक छन् ? यदि अणु एउटा मात्रै छ भने त्यसलाई अरू अंशमा विभाजित गर्न सकिन्छ











या सकिँदैन ? यदि सकिन्छ भने त्यसका पूर्वी, पश्चिमी, दक्षिणी, उत्तरी, माथिल्लो र तल्लो भाग त हुनैपर्छ । यसरी अणुका ६ वटा भागहरू बन्ने भए अणुलाई एक वा अविभाज्य भन्ने मान्यता पूरै निषिद्ध हुनपुग्छ ।

यदि परमाणुलाई भागहरूमा विभाजित गर्न नसकिने भए सबै वस्तु एउटै अणुको रूपमा परिवर्तित हुने थिए जुन स्पष्टरूपले सम्भव हुँदैन । किनकि प्रत्यक्ष प्रमाणद्वारा त्यसको निराकरण गर्न सकिन्छ । जस्तो *विंशतिकाप्रकरण* मा भनिएको छ :

> यदि एउटा परमाणुलाई छ भागमा बाँडियो भने
> सूक्ष्मतम परमाणुका ६ अंश हुन्छन् भन्न मिल्छ ।
> अब ६ ओटै अंश एकै ठाउँमा रहँदाखेरी
> सो युगपद्य (जोडिएका) अंशहरू
> एउटै परमाणु समान नै हुन्छ (देखिन्छ) ।[१४]



अब अनेक परमाणुहरूबारे परीक्षण गरौं । जब एक को अस्तित्व सिद्ध हुन्छ त्यस्ता एक एक परमाणुको सँचय भएबाट अनेक परमाणुहरूका अस्तित्वलाई पनि सिद्ध गर्न सकिन्छ । यहाँ एक को अस्तित्व नै सिद्ध हुँदैन भने त्यसको (एक) सञ्चयले अनेकको अस्तित्व कसरी सिद्ध हुनसक्छ ? तसर्थ परमाणुको अस्तित्वलाई प्रमाणित गरेर देखाउँन सकिँदैन भने सो बाट बनेका जुन बाह्य विषय छन् तिनको अस्तित्व पनि प्रमाणित हुन्नन् ।

त्यसोभए, हाम्रो सामु साक्षात्रूपमा देखापरिरहेका जुन वस्तुहरू छन् ती सबै के हुन् त ? यसको उत्तर हो : वाह्य वस्तुको प्रतिभास (देखिएको जस्तो भान हुने) हाम्रै भ्रान्तिले युक्त चित्तले गर्दा हुने हो । आफ्नै भ्रान्तिले युक्त चित्तले गर्दा हामी वाह्य वस्तुलाई अलग सत्ताको रूपमा देख्छौं । यस्तै नै हो भनेर कसरी थाहा पाउने त ? जवाफमा यी कुराहरू आगम, युक्ति र दृष्टान्तद्वारा जान्न सक्छौं भन्न सकिन्छ ।

*आगम*: यिनमध्ये प्रथम अर्थात् आगमको विषयमा चर्चा गर्नु पर्दा, यसै सम्बन्धमा *अवतंसकसूत्र* मा यस्तो भनिएको छ :











हे जिनपुत्र (बोधिसत्त्वगण) ! यो त्रिधातुक जगत् केवल चित्त मात्र हो ।[१५]

यस्तै *लंकावतारसूत्र* मा पनि त्यही कुरा बताइएको छ :

वासनाद्वारा व्याकूल भएको यो चित्त नै
वस्तुको रूपमा प्रतिभास हुन्छ ।[१६]
वस्तुको अस्तित्व वास्तवमा छँदै छैन,
सबैथोक चित्त नै हुन् ।
वस्तुलाई वाह्य भन्ठान्नु गलत हो ।[१७]

*युक्ति* : युक्ति वा तर्कद्वारा वाह्य वस्तुको प्रतिभास केवल भ्रान्तिले युक्त चित्तको लीला हो भन्ने सत्यमा हामी विश्वस्त हुन सक्छौं । किनकि हामीसामु देखापरेका वा विद्यमान जस्ता देखिने वस्तुहरूको सांच्चिकै अस्तित्व नै हुँदैन । त्यो त मानिसको सिङ्ग भन्नु जस्तै हो वा ध्यानमा कल्पना गरिएको रुख भन्नु जस्तै हो किनकी तिनीहरूको वास्तविक सत्ता हुँदैन । त्यसै प्रकारले जुन विद्यमान देखिन्छ (जसलाई हामी प्रतिभास भन्छौं) त्यो अनुत्पन्न छ, छिन छिनमै परिर्वतन र भङ्ग भैरहने उक्त भेद (विकल्प) युक्त परिकल्पित प्रतिभास खाली चित्तकै भ्रान्ति बाहेक अरू केही होइन ।

*दृष्टान्त* : दृष्टान्त वा उदाहरणको रूपमा भन्नुपर्दा, यी प्रतिभासहरू सपना जस्तै, माया जस्तै छन् आदि आदि भन्न सक्छौं ।

माथि वर्णित आगम, युक्ति र दृष्टान्तको माध्यमले बाह्य ग्राह्य विषयको अस्तित्वविहिनतालाई प्रमाणित गरियो ।

***आन्तरिक ग्राहक चित्तको अस्तित्वहीनता*** ः धर्म-आत्माको अस्तित्व-हीनताको सम्बन्धमा बाह्य ग्राह्य विषयको असिद्धता विषयमा माथि नै चर्चा भइसक्यो । अब आन्तरिक ग्राहक चित्तको असिद्धता बारे चर्चा गरौं । प्रत्येकबुद्ध र विज्ञानवादीहरू आन्तरिक ग्राहक चित्तलाई स्वसंवेदक र











स्व प्रभास्वरको रूपमा मान्दछन् । तिनीहरूले त्यसरी माने तापनि सो अन्त: ग्राहक चित्तको अस्तित्त्वलाई निषेद्धित गर्ने वा खण्डन गर्ने तीनवटा तर्कहरू छन् । ती हुन् :

1. विश्लेषण गरी हेर्दा सो चित्तको क्षणिक सत्ता पनि भेटिँदैन ।
2. कसैले नदेखेका कारण चित्तको अस्तित्व हुँदैन ।
3. विषयहरूकै अस्तित्व नहुँदा चित्तको अस्तित्व पनि हुँदैन ।

1. पहिलो, विश्लेषण गरी हेर्दा चित्तको क्षणिक सत्ता पनि भेटिँदैन, यस तथ्यलाई यसरी पुष्टि गरौं : तिमी जसलाई स्वसंवेदक एवं स्व प्रभास्वर चित्त भन्छौ के त्यो क्षणिक (एक क्षणको) हो वा अनेक क्षणहरूमा रहन्छ ? यदि सो चित्त क्षणिक भए फेरि एउटा प्रश्न उठ्छ के यसका त्रैकालिक अंश छ कि छैन वा भनौं यसलाई तीन कालमा विभाजन गर्न सकिन्छ कि सकिंदैन ? यदि सकिन्छ भने धेरै क्षणहरू भएका कारण यहाँ एक क्षणको त प्रश्नै उठ्दैन । जस्तो *रत्नावली* मा पनि भनिएको छ :

> एक क्षणको अन्त भएजस्तै
> त्यसको आदि र मध्य
> पनि हुनुपर्छ भनेर पहिल्याउनुपर्छ ।
> त्यस अर्थले एउटै क्षण तीनवटामा
> विभाजित भएका कारण
> जगत्को क्षणिक अस्तित्व पनि रहँदैन ।[१८]

अर्कोतर्फ, यदि क्षणलाई तीन कालमा विभाजन गर्न नसकिने भए त्यो क्षण नै रहँदैन । जब क्षणै रहँदैन भने चित्तको अस्तित्व हुने पनि कुरै भएन ।

विश्लेषणको आधारमा चित्तको क्षणिक सत्ता सिद्ध नभएपछि कोही चित्त अनेक क्षणको संग्रह हो भन्छन् भने के जवाफ दिन सकिन्छ भने, एउटा क्षणको अस्तित्व रहेको भए त्यही एउटा एउटा क्षण संगृहित भएर











अनेक क्षणहरूको अस्तित्व रहन गयो भन्न सकिन्थ्यो । यहाँ एउटा क्षणकै अस्तित्व हुँदैन भने अनेक क्षणको अस्तित्व हुने त कुरै आउँदैन । अनेक क्षण नरहेका कारण चित्तको अस्तित्व हुँदैन ।

2. दोश्रो, कसैले देख्न नसकेका कारण चित्तको सत्ता निषेध शीर्षकलाई यसरी पुष्टि गरौं : यस तथाकथित चित्तलाई एकचोटि खोजेर हेरौं र हेरौं यो शरीर बाहिर छ कि, शरीरभित्र छ वा बीचमा छ कि, माथि तल कहाँ छ ? यसका रङ्ग, रूप कस्तो छ त्यो पनि जाँचेर हेरौं । तिमीलाई पक्का विश्वास नभएसम्म यो खोज्ने क्रमलाई जारी नै राख्नू । तिम्रा गुरुको निर्देशन अनुसार विभिन्न आलम्बनहरूको प्रयोग गरेर एवं रीतले खोजिनै राख्नू ।

सबै प्रकारका आलम्बनहरूको प्रयोग गरेर पनि तिमीले चित्तलाई देख्न वा भेटाउन सकेनौ भने यही निष्कर्षमा पुग्नुपर्छ कि चित्तलाई देख्न सकिंदैन न यसको कुनै रूप वा रङ्ग नै छ । किनकि यदि यसको अस्तित्व रहेको भए यो अदृश्य वा अप्राप्य हुनै सक्दैनथ्यो । वस्तुतः खोजिएको वस्तु, खोज्ने कर्ता र खोज्ने काम यी तीनै धर्म बुद्धिका विषयभन्दा बाहिरका कुरा हुन् । चित्त ज्ञानातीत र वचनातीत भएकै हुँदा खोज्ने कर्ताले यसलाई जहाँसुकै खोजेपनि कहीँ पनि भेटाउन सक्दैन । यही कुरालाई *काश्यपपरिपृच्छासूत्र* मा यसरी प्रस्तुत गरिएको छ :

> हे काश्यप ! चित्त भित्र पनि, बाहिर पनि र दुवै स्थानमा पनि उपलब्ध हुँदैन । चित्तै हो जसको रूप पनि छैन, देख्दा पनि देखिँदैन, रोक्दा पनि रोकिन्न, जान्दा पनि जानिन्न, कतै प्रतिष्ठित पनि छैन, कतै आश्रित पनि छैन । हे काश्यप ! चित्तलाई कुनै बुद्धहरूले देखेका पनि छैनन्, देख्ने पनि छैनन् र देखिरहेका पनि छैनन् ।

*सद्धर्मपरिग्रहसूत्र* मा पनि त्यस्तै बताइएको छ :











तसर्थ, यस चित्तको सारहीनता, खोक्रोपना र
असत्तालाई पूर्णरूपले बुझेर
यसलाई सारयुक्त ठानेर ग्राह नगर्नू ।
किनकि यो स्वभावैले शून्य छ ।
स्वभावशून्य धर्मको अस्तित्व हुनैसक्दैन ।
सबै धर्महरू आरोपित मात्र छन् -
यसरी चित्तको स्वभावलाई सम्यक्‌रूपमा विश्लेषण गरेर
विद्वानहरू दुवै अन्तलाई प्रहाण गर्दै
मध्यम प्रतिपद्‌लाई अनुशरण गर्छन् ।
धर्मको स्वभावशून्यता जुन छ
त्यो नै बोधिपथ हो, जसको देशना मैले गरें ।

*धर्मतास्वभावशून्यताचलप्रतिसर्वालोकसूत्र* मा पनि भनिएको छ :



समस्त धर्म स्वभावैले अनुत्पन्न, स्वभावैले अनवस्थित छन्, सबै कर्म र कर्मान्तले वर्जित छन्, विकल्प र अविकल्पका विषयभन्दा पर छन् ।



तसर्थ चित्तलाई कसैले देख्न नसकेको कारण यसलाई स्वसंवेदक र स्व प्रभास्वरले युक्त भन्नु निरर्थक हो । जस्तो *बोधिचर्यावतार* मा पनि भनिएको छ :

त्यो बुद्धिलाई कसैले पनि देखेकै छैन भने
त्यसलाई प्रकाशमान वा अप्रकाशमान भन्नु
ठीक त्यसरी नै निरर्थक हुनेछ जसरी
बाँझो आइमाईको छोरी भन्नु ।[१९]

तिलोपाले पनि भन्नुभएको छ :











अरे (क्य हो) ! यो त स्वसंवेद्य ज्ञान हो
जुन् वचनको मार्गभन्दा पर छ
यो मनको विषय होइन ।

3. तेश्रो, विषयहरूकै अस्तित्व नहुँदा चित्तको अस्तित्व पनि हुँदैन भन्ने तथ्यलाई यसरी बुझौं : माथिका विवरणबाट रूप आदि बाह्य विषयको अस्तित्व छैन भन्ने कुरा स्पष्टै भइसकेको छ । फलस्वरूप तिनलाई ग्राह गर्ने चित्तको पनि अस्तित्व छैन भनेर माथि नै वर्णन गरिसकियो । *धर्मधातुप्रकृत्यसंभेदनिर्देशनाममहायानसूत्र* ले भन्दछ :

यो चित्त नीलो, पहेंलो, रातो, सेतो, रातोकैलो वा स्फटिकको जस्तो कस्तो रङ्गको छ ? यो शुद्ध छ कि अशुद्ध ? के यसलाई नित्य वा अनित्य भन्न सकिन्छ ? यसको रूप छ कि छैन ? यसरी क्रमिकरूपले मनमनै केलाएर हेर र महशुस गर । यो चित्त रूपविहिन, कसैलाई देखाउन नसकिने खालको, अदृश्य, निर्वाध (नछेकिएको), अविज्ञप्तिक छ। यो भित्र, बाहिर वा बीच कुनै ठाउँमा पनि रहँदैन । त्यसैले यो परिशुद्ध छ, अविमुक्त (non-liberation), र धर्मधातुमय छ ।

*बोधिचर्यावतार* मा पनि भनिएको छ :

जब ज्ञेयधर्म (जानिने कुरा) नै छैन भने के जान्ने
जसको कारण 'ज्ञान' भन्न सकियोस् ।[२०]

तथा :

अतः ज्ञेय धर्म नरहेको कारण
निश्चितरूपमा ज्ञान पनि हुँदैन ।[२१]











माथिका विवरणमार्फत अन्तः ग्राहक चित्तको असत्ता प्रमाणित भयो । यसरी भावग्राहकको निषेध विषयक व्याख्या समाप्त हुन्छ ।

**५.२. अभावग्रहको निषेध** : महालोकोत्तर प्रज्ञासित सम्बन्धित विषयहरू-लाई ६ शीर्षकहरूमा बाँडेर तिनमा पहिलो भावग्राहको निषेध विषयमा व्यापक व्याख्या गर्‍यौं । अब दोश्रो अर्थात अभावग्राहको निषेध विषयमा पनि केही चर्चा गरौं । दुई प्रकारका आत्माहरू नरहेका कारण के तिनको कुनै अस्तित्व नै छैन भन्न मिल्दैन वा तिनको अभावको रूपमा अस्तित्व छ भन्न मिल्दैन ? यसको जवाफ हो, 'मिल्दैन,' । कसरी मिल्दैन भन्दाखेरी यदि उपर्युक्त दुवै आत्मा पहिले अस्तित्वमा रहेर पछि अस्तित्वमा रहँदै-नन् वा लुप्त हुन्छन् भने हामी अभाव (अस्तित्वविहिन) भन्न सक्छौं । दुवै प्रकारका आत्माहरू वा चित्तका शुरुदेखि नै आफ्नै स्वभाव नरहेका हुँदा यी कुरा भाव र अभाव दुवै अन्तभन्दा पर छन् । यस सम्बन्धमा महासिद्ध सरहपा भन्दछन् :

> भावलाई ग्राह गर्ने पशुसमान हुन् ।
> अभावलाई ग्राह गर्ने झनै मूर्ख हुन् ।

*लङ्कावतारसूत्र* मा पनि यही कुरा बताइएको छ :

> वाह्य वस्तुको सत्ता छ भन्न पनि सकिन्न र छैन भन्न पनि सकिन्न । चित्त पनि हरतरहले अग्राह्य छ । सबै दृष्टिहरूको प्रहाण नै अनुत्पादको लक्षण हो ।[२२]

*रत्नावली* मा पनि भनिएको छ :

> जब भाव (अस्तित्व) नै प्राप्त हुँदैन भने
> अभाव (अस्तित्वहीनता) कसरी प्राप्त हुन्छ ? *रत्नावली* १/९८











**५.३. असद्ग्राहको दोष** : यहाँ एउटा प्रश्न के उठ्छ भने कुनै पनि वस्तुलाई भावको रूपमा ग्राह गर्नु नै संसारको जड हो भने त्यसैलाई कसैले अभावको रूपमा हेर्‍यो भने के ऊ संसारबाट मुक्त हुँदैन र ? यस्तो दृष्टि त पहिलेको भन्दा झनै भ्रान्तिमय ठहरिन्छ । त्यसैले महासिद्ध सरहपा भन्दछन् :

भावलाई ग्राह गर्ने पशुसमान हुन् ।
अभावलाई ग्राह गर्ने झनै मूर्ख हुन् ।

*रत्नकूटसूत्र* मा पनि भनिएको छ :

हे काश्यप, शून्यतालाई अभावको रूपमा ग्रहण गरेर अभिमान जगाउनु भन्दा बरु सुमेरु पर्वत समान विशाल पुद्‌गल आत्माको दृष्टि धारण गर्नु नै वेश[२३]

*मध्यमककारिका* मा पनि भनिएको छ :

शून्यता दृष्टिलाई ग्राह गर्नाले जुन दोष हुन्छ
त्यसले मन्द बुद्धि भएका सत्त्वहरूको विनाश हुन्छ ।[२४]

तथा :

शून्यता दृष्टिलाई ग्राह गर्नेहरूलाई
उपचार गर्न सकिन्न ।[२५]

किन तिनीहरूलाई उपचार गर्न सकिन्न ? किनभने, मानौं कुनै बिरामी-लाई औषधी दिइँदा रोग र औषधी दुवै नष्ट भएपछि मात्र उक्त बिरामीको रोग निको हुन्छ । तर औषधी शरीरभित्र पचेर नष्ट नै हुँदैन भने रोग











निको नभएर त्यो बिरामीको मृत्यु समेत हुन सक्छ । यसरी नै भाव दृष्टि शून्यताको ध्यान गर्दा नष्ट हुन्छ । तर शून्यतादृष्टिमै आसक्त हुनथाल्यो भने त्यसबाट केही लाभ हुनुको सट्टा ऊ दुर्गतिमा समेत पतन हुनपुग्छ । त्यसैले *रत्नावली* मा भनिएको छ :

आस्तिक सुगतितर्फ जान्छ
नास्तिक दुर्गतितर्फ जान्छ[२६]

माथिको वाक्यांश अर्थात भावदृष्टिको तुलनामा शून्यतादृष्टिमा फँस्नु वा नास्तिक हुनुमा अधिक दोष छन् ।

**५.४. उभयग्रहको दोष** : महालोकोत्तर प्रज्ञासित सम्बन्धित विषयहरूलाई ६ शीर्षकहरूमा बाँडेर तिनमा पहिलो, दोश्रो र तेश्रो विषयको व्यापक व्याख्या गऱ्यौं । अब चौथो अर्थात 'उभयग्रहमा दोष' विषयक पनि केही चर्चा गरौं । भावग्राह र अभावग्राह जसलाई हामी सत्ग्राह र असत्ग्राह पनि भन्छौं दुवै पक्ष दोषले युक्त छन् । किनभने दुवै क्रमशः शाश्वत र उच्छेदको अन्तमा फँस्छन् । जस्तो *मध्यमककारिका* मा भनिएको छ :

सत् मान्नु शाश्वतदृष्टि हो भने
असत् मान्नु उच्छेददृष्टि हो ।[२७]

शाश्वत र उच्छेद दुवै अन्तमा फँस्नु मोह हो । मोहले युक्त व्यक्ति संसारबाट मुक्त हुँदैन । जस्तो *रत्नावली* मा पनि बताइएको छ :

यस मायावत् लोकलाई
सत् वा असत् भन्दै ग्राह गर्नेहरू
मोहमा डुबेका हुन्छन् ।
मोहमा डुबेका कारण उनीहरू मुक्त हुन्नन् ।[२८]











**५.५. विमुक्ति मार्ग** : महालोकोत्तर प्रज्ञासित सम्बन्धित विषयहरूलाई ६ शीर्षकहरूमा बाँडेर तिनमा पहिलो, दोश्रो, तेश्रो र चौथो विषयसम्मको व्यापक व्याख्या गर्‍यौं । अब पाँचौ अर्थात 'विमुक्ति मार्ग' बारे पनि केही चर्चा गरौं । कोही सोध्छन्, 'त्यसोभए, प्राणी कसरी मुक्त हुन्छ त ? जुन मार्ग यी दुई अन्तभन्दा माथि हुन्छ त्यसलाई अनुगमन गरेर प्राणीले मुक्ति प्राप्त गर्न सक्छ । यस सम्बन्धमा *रत्नावली* मा यस्तो लेखिएको छ :

> दुवै अन्तमा नअल्झिने यथाभूत ज्ञान
> प्राप्त गर्नाले प्राणी मुक्त हुन्छ ।[२९]

तथा :

> त्यसकारण, दुवै अन्तमा स्थित नरहने हुँदा मुक्ति मिल्छ ।[३०]



*मध्यमककारिका* मा पनि भनिएको छ :



> त्यसैले विद्वान व्यक्ति अस्तित्व वा नास्तित्व
> कुनैमा पनि रहँदैनन् ।[३१]

त्यसोभए यी दुवै अन्तहरूलाई त्याग्ने मध्यम प्रतिपद् कस्तो हो त ? कसैलाई अचम्म लाग्ला । यस सम्बन्धमा *आर्यरत्नकूटसूत्र* मा यस्तो बताइएको छ :

> हे काश्यप ! तिमी सोध्छौ, बोधिसत्त्वले धर्मलाई कुन सम्यक् मार्गबाट हेर्नुपर्छ ? यसको उत्तर हो : मध्यम प्रतिपद् । हो, मध्यम प्रतिपद्द्वारा सबै धर्मको प्रतिवेक्षण गर्नु नै सम्यक् मार्ग हो । हे काश्यप, मध्यम प्रतिपद्द्वारा धर्मको प्रतिवेक्षणा कसरी हुन्छ भनी सोध्छौ भने यसको जवाफ यस प्रकार दिन











सकिन्छ : हे काश्यप ! हामी जसलाई नित्य भन्छौं, त्यो एउटा अन्त हो, र जसलाई अनित्य भन्छौं त्यो अर्को अन्त हो । दुवै अन्त को बीच वा मध्य जुन छ त्यो बिचारभन्दा पर छ, अनुत्पन्न छ, त्यसलाई देखाउन सकिन्न, र जान्न (perceive) सकिन्न । हे काश्यप, हामी जसलाई मध्यम प्रतिपद भन्छौं, त्यो सबै धर्मको प्रतिवेक्षणा (examination) हो । हे काश्यप, जुन 'आत्मा' को नामले चिनिन्छ, त्यो एउटा अन्त हो, र जुन 'अनात्मा' कहलिन्छ, त्यो अर्को अन्त हो । त्यसरी नै, हे काश्यप, जसलाई 'संसार' भन्ने गरिन्छ त्यो एउटा अन्त हो, र जसलाई 'निर्वाण' भनिन्छ, त्यो अर्को अन्त हो । यी दुई अन्तको 'मध्य' जुन छ त्यो बिचारभन्दा पर छ, अनुत्पन्न छ, त्यसलाई देखाउन सकिन्न, र जान्न पनि सकिन्न । हे काश्यप, हामी जसलाई मध्यम प्रतिपद भन्छौं, त्यो सबै धर्मको प्रतिवेक्षणा हो ।




शान्तिदेव भन्दछन् :

चित्त भित्र पनि छैन र बाहिर पनि छैन,
अन्यत्र पनि कहीँ भेटिन्न ।[३२]
दुवै स्थानमा (भित्र र बाहिर) मिसिएर रहेको पनि छैन र
अलग अलगरूपमा रहेको पनि छैन ।
अतः यो केही पनि होइन
प्राणीहरू स्वभावैले निर्वाण अवस्थामा हुन्छन् ।[३३]

तसर्थ, दुवै अन्तहरूको परिकल्पना नगर्नु नै मध्यम प्रतिपद् हो । तापनि, मध्यम प्रतिपद् आफै विवेच्य भने होइन । वस्तुतः यसलाई वस्तुको रूपमा ग्राह गर्न सकिन्न । त्यसैले यो ग्राहबाट मुक्त र बुद्धिभन्दा पर हुन्छ । अतीश भन्दछन् :











अतीतको चित्त निवृत एवं नष्ट भइसकेकोले त्यसको प्रादुर्भाव संभव छैन । अनागत चित्त (भविष्यको चित्त) उत्पन्नै भइन-सकेको कारण त्यसको प्रादुर्भाव पनि असंभवै छ । र यो प्रत्युत्पन्न (वर्तमान) चित्तको विश्लेषण अत्यधिक कठिन छ किनभने आकाश समान वर्ण र संस्थान नभएको कारण सो चित्तको सत्ता पनि सिद्ध हुँदैन ।

*अभिसमयालंकार* मा पनि भनिएको छ :

न यो वारी अवस्थित छ, न पारी
न त बीचैमा अवस्थित छ । सबै कालमा समान हुने
समताज्ञान प्रज्ञापारमिताको नामले प्रशिद्ध छ ।[३४]

**५.६. विमुक्तिमय निर्वाण** : महालोकोत्तर प्रज्ञासित सम्बन्धित विषय-हरूलाई ६ शीर्षकहरूमा बाँडेर पहिलो देखि पाँचौ विषयसम्मको व्यापक व्याख्या गऱ्यौं । अब छैटौं अर्थात 'विमुक्तिमय निर्वाण' बारे पनि केही चर्चा गरौं । यहाँनेर के प्रश्न सोध्न सकिन्छ भने समस्त सांसारिक धर्महरूको सत्ता भाव वा अभाव कुनैपनि रूपमा सिद्ध हुँदैन भने त्यस अवस्थामा के निर्वाण भाव हो कि अभाव हो? जवाफ : कोही कोही निर्वाणलाई भावकै रूपमा वा वस्तुसत् मान्दछन् । तर त्यो सर्वथा गलत हो । जस्तो *रत्ना-वली* मा लेखिएको छ :

निर्वाण अभाव पनि होइन भने
त्यो भाव कसरी हुन सक्छ ?[३५]

निर्वाणलाई 'छ' भनेर मान्ने हो भने त्यो संस्कृत हुनपुग्छ । संस्कृत मानेकाले अन्ततः त्यसको नाश अवश्यंभावी छ । यस सम्बन्धमा *मध्यमक-कारिका* मा लेखिएको छ :











> यदि निर्वाणलाई भावको रूपमा मान्ने हो भने
> निर्वाण संस्कृत बन्न पुग्छ ।[३६]

भावको रूपमा मान्न नसकिएजस्तै निर्वाणलाई अभाव पनि भन्न मिल्दैन । जस्तो त्यही ग्रन्थले फेरि भन्दछ :

> निर्वाण अभाव पनि होइन ।[३७]

त्यसोभए, निर्वाण के हो त ? निर्वाण भनेको त भाव र अभाव लाई ग्राह गर्ने सबै बुद्धिहरूको क्षय हो । निर्वाण बुद्धिभन्दा माथि छ र शब्दले व्यक्त गर्न सकिन्न । *रत्नावली* मा भनिएको छ :

> भाव (सत्) ग्राह र अभाव (असत्) ग्राह दुवैको क्षयलाई नै
> निर्वाण भनिन्छ ।[३८]




*बोधिचर्यावतार* मा पनि यही कुरा भनिएको छ :

> जब बुद्धिको सामु भाव वा अभावका रूपमा
> कुनै पनि अवधारणाहरू रहन्नन्
> तब कुनै अन्य विकल्प नरहने हुनाले
> बुद्धि निरालम्ब (आश्रयविहिन) भै शान्त हुनपुग्छ ।[३९]

*आर्यब्रह्मपरिपृच्छासूत्र* का अनुसार :

> जसलाई परिनिर्वाण भनिन्छ वा भन्ने गरिन्छ
> त्यो वास्तवमा सबै निमित्तहरू शमन हुनु हो
> र सबै गतिविधिहरू (क्रियाकलापहरू)
> को अन्त्य हुनु हो ।











*सद्धर्मपुण्डरीकसूत्र* का अनुसार :

> 'हे काश्यप ! सबै धर्महरूलाई समताभावले बोध गर्नु नै निर्वाण हो ।[४०]

तसर्थ, विकल्पयुक्त बुद्धिका गतिविधिहरू शान्त हुनु निर्वाण हो । यसमा उत्पाद-निरोध, प्राप्ति-प्रहाण आदि जस्ता कुनै पनि प्रकारका धर्महरू रहँदैनन् । त्यसैले *मूलमध्यमककारिका* ले भन्छ :

> अप्रहाण, असंप्राप्त, अनुच्छेद, अशाश्वत, अनिरोध, अनुत्पाद - यसैलाई (यी गुण भएको अवस्थालाई) निर्वाण भनिन्छ ।[४१]

अतः उत्पाद-निरोध, प्रहाण-प्राप्ति इत्यादि कुनै पनि नभएका हुँदा निर्वाण न स्वयंसृजित हो, न त कसैद्वारा नियोजित हो, न त कुनै परिवर्तन नै हो । *आकाशरत्नसूत्र* मा भनिए झैँ

> यसमा हटाउनुपर्ने केही पनि छैन ।
> थप्नु पर्ने पनि केही छैन ।
> तत्त्वलाई तत्त्वतः साक्षात्कार गर्ने
> तत्त्वदर्शी नै विमुक्त हुन्छ ।[४२]

यहाँ विकल्पलाई हटाउनका निमित्त प्रज्ञा वा चित्त भन्ने शब्दहरूको प्रयोग गरियो । तर वास्तवमा भन्ने हो भन्ने यो प्रज्ञा वा चित्त भन्ने जुन शब्द छ त्यसको अर्थ ज्ञानातीत र वचनातीत छ । *सुविक्रान्तविक्रामी-परिपृच्छासूत्र* का अनुसार :

> जस्तोसुकै धर्मले पनि प्रज्ञापारमिता व्यक्त गर्न सकिने विषय होइन । यसलाई शब्दहरूले व्यक्त गर्न सकिन्न ।











**राहुलमातृकास्तुति:*[४३] मा पनि भनिएको छ :

प्रज्ञापारमिता अवाच्य, अचिन्त्य एवं अनभिलाप्य (अव्यक्त) छ,
आकाश समान अनुत्पन्न र अनिरुद्ध छ र
त्यो प्रत्यात्मवेद्य स्वयम्भू ज्ञान
(Self-aware primordial wisdom) हो -
यस प्रकारकी त्रैकालिक बुद्धहरूकी
जननीलाई म प्रणाम गर्छु ।

प्रज्ञापारमिता ज्ञान बारे व्याख्या यहीं समाप्त हुन्छ ।

६. **प्रज्ञापारमिताको अभ्यास** : यस सम्बन्धमा एउटा प्रश्न के उठ्न सक्छ भने सबै धर्म शून्य छन् भन्ने ज्ञान भइसकेपछि के अभ्यास पनि गर्नु पर्छ र ? पर्छ, किनभने हुनत: चाँदिको धाउमा चाँदिकै स्वभाव हुन्छ तर धाउलाई नपगालेसम्म चाँदि देखापर्दैन । त्यसैले कसैलाई चाँदि चाहिन्छ भने उसले त्यस धाउलाई पगाल्नैपर्छ । ठीक त्यसरी नै समस्त धर्म सुरु-देखि नै कुनै पनि प्रकारका प्रपञ्चहरूले रहित शून्यताकै स्वभावले युक्त भए तापनि प्राणीहरूलाई नानाथरीका वस्तुहरूको प्रतिभास हुने र नाना थरीका दु:खहरूको अनुभूति हुने हुँदा, प्रज्ञापारमितालाई बुझ्नु र अभ्यासमा उर्तानु अत्यन्तै जरुरी छ ।

तसर्थ, माथि वर्णन गरिएझै राम्ररी बुझिसकेपछि अभ्यास गर्नुपर्छ । अभ्यासका लागि चारवटा चरणहरू छन् अर्थात प्रज्ञापारमिताको अभ्यास चारवटा चरणहरूमा गर्न सकिन्छ । ती चरण हुन् : पुरोगामी (preliminary), समापत्ति (equipoise), पृष्ठलब्ध (post-meditative stage) र अभ्यासका संकेतहरू (signs of the practice) ।

पुरोगामी वा प्रारम्भिक चरणमा चित्तलाई स्वभाविक शान्त अवस्थामा स्थिर राखिन्छ । चित्तलाई कसरी शान्त अवस्थामा स्थिर राख्ने ? यसको जवाफ *सप्तशतिकाप्रज्ञापारमिता* मा दिइएको पाइन्छ :











> हे कुलपुत्र वा कुलपुत्री, तिमीहरू निर्जन स्थानमा बसी कुनै पनि प्रकारका विक्षेप र संसर्गबाट मुक्त जीवनमा रमाउनुपर्छ । अनि कुनै प्रकारका निमित्तहरूलाई मनमा उत्पन्न हुन नदिई पूर्ण पद्मासनमा बसेर ध्यान गर्नुपर्छ ।

त्यसपछि महामुद्राका विधि अनुसार समापत्तिको अभ्यास गर्नुपर्छ । सत्-असत्, त्याग-उपादान इत्यादि कुनै पनि विकल्पहरू नल्याइकन कुनै पनि प्रकारका प्रयत्न बिना (अनाभोग) नै मनलाई त्यत्तिकै छाडिदिनुपर्छ । जस्तो तिलोपा भन्दछन् :

> नसोच्नू, चिन्तन नगर्नू, नजान्नू,
> भावना नगर्नू, विचार नगर्नू
> मनलाई प्राकृतिक अवस्थामा छाडिदिनू ।



*चित्तविश्रान्ति* मा पनि यस्तै भनिएको छ :



> पुत्र, सुन । तिमी जुन विकल्पमा फँसेका छौ
> न त म तिनबाट बाँधिएको छु न त म मुक्त नै छु ।
> अतः म अविक्षिप्त छु, अकृत्रिम छु र स्वतन्त्र छु ।
> तिमी थकित छौ, आऊ विश्राम गर ।

नागार्जुन पनि भन्दछन् :

> जसरी तालिम दिएपछि हात्तीको मन पनि शान्त हुन्छ,
> त्यसैगरी सबै गमनागमनलाई रोक्नाले
> मानिसको मन स्वतः शान्त हुन्छ ।
> यसलाई मैले राम्ररी बुझिसकेको हुँदा
> मलाई धर्मको आवश्यकतै किन ?











नागार्जुनकै भनाइ अनुसार :

कुनैमा पनि विकल्प नराख्नू र केहीपनि नसोँच्नू ।
केही पनि नबनाऊ, वश् मनलाई
त्यसकै स्वभाविक अवस्थामा रहनदेऊ ।
अकृत्रिम अनुत्पन्न स्वभावले युक्त तत्त्व
त्यो ठाउँ हो जहाँ सबै
त्रिकालका बुद्धहरू पुगेका छन् ।

शवरीपा सिद्ध भन्दछन् :

कुनैमा पनि दोष नदेख्नू,
कुनै पनि चीजलाइ गहिरो रुपले नलिनु,
उष्मादि निमित्त जस्ता प्रगतिका
लक्षणहरूको चाहना नगर,
कुनै पनि चीजको भावना नगर भन्दैमा
फेरि आलस्य र उपेक्षाका शिकार चाहिँ बन्ने होइन ।
सदा स्मृतिले युक्त भई अभ्यास गरिराख्नू ।

अतीशले पनि भनेका छन् :

गम्भीर, प्रपञ्चरहित, प्रभास्वर, असंस्कृत
अनुत्पन्न, अनिरोध, आदि-शुद्ध, निर्वाणको
स्वभावले युक्त यो धर्मधातुमा
अन्त र मध्य भन्ने हुँदैन ।
यसमा अति सूक्ष्म बौद्धिक विकल्प पनि रहन्न ।
त्यसैले स्त्यान (अल्छीपना) र
चञ्चलता (उद्धव) ले नधमिलिएको आँखाले हेर ।











तथा :

प्रपञ्चरहित धर्मधातुमा निष्प्रपञ्च ज्ञानलाई स्थापित गर्नू ।

चित्तलाई यसरी स्थापित गर्नु नै प्रज्ञापारमिता भावनाका सम्यक् उपाय हो ।

यो बाहेक, *सप्तशतिकाप्रज्ञापारमिता सूत्र* मा पनि यही कुरालाई दर्शाएको पाइन्छ :

जहाँ ग्राह, उपादान र त्याग केही पनि गरिन्न त्यही प्रज्ञापार मिताको भावना हो । जहाँ कतै पनि अवस्थित भएर रहन्न, त्यही प्रज्ञापारमिताको भावना हो । जहाँ केही पनि सोंचिदैन, केही पनि विकल्प हुन्न, त्यही प्रज्ञापारमिताको भावना हो ।



*अष्टसाहस्रिकाप्रज्ञापारमिता* मा पनि यस्तै भनिएको छ :



कुनै पनि धर्मको भावना नगर्नु नै प्रज्ञापारमिताको भावना हो ।

त्यही सूत्रमा यो पनि भनिएको छ :

प्रज्ञापारमिताको भावना गर्नु भनेको आकाशको भावना गर्नु सरह हो ।

उपर्युक्त वाक्यले हामीलाई अचम्म लाग्न सक्छ, कसरी आकाशको भावना गर्ने ? यसको उत्तर त्यही सूत्रमा पाउँन सकिन्छ :

आकाश विकल्पले रहित हुन्छ, त्यसै गरी प्रज्ञापारमिताको भावना पनि विकल्पले रहित नै हुन्छ ।











*प्रज्ञापारमिता सञ्चयगाथा* मा पनि यस्तै उल्लेख छ :

उत्पाद र अनुत्पाद दुवै विकल्पले रहित हुनु नै प्रज्ञापारमिताको सही अभ्यास हो ।[४४]

आचार्य वागीश्वरले पनि भनेका छन् :

जुन कुराको बारे सोंच्न सकिन्छ (चिन्त्य)
त्यसबारे सोंच्दै नसोच्नू
जुन कुराको बारे सोंच्न सकिन्न (अचिन्त्य)
त्यसबारे पनि सोंच्दै नसोच्नू
जब चिन्त्य वा अचिन्त्य बारे कुनै चिन्तन गरिन्न
तब शून्यताको साक्षात्कार हुन्छ ।



शून्यतालाई कसरी साक्षात्कार गर्ने भनेर सोध्छौ भने यसको जवाफ *धर्मसङ्गीतिसूत्र* मा भेटिनेछ जुन यस प्रकार छ :



जब शून्यताको साक्षात्कार हुन्छ, केहीको पनि साक्षात्कार हुन्न ।

तथा :

हे भगवन्, समस्त धर्मलाई नदेख्नु नै सम्यक् दर्शन हो ।

तथा :

केहीपनि नदेख्नु नै तत्त्व (तथता) लाई साक्षात्कार गर्नु हो ।

* *मध्यमक लघुसत्य* मा पनि भनिएको छ :











अति गम्भीर सूत्रहरूका अनुसार केही नदेख्नु (अदर्शन) नै देख्नु (दर्शन) हो ।

*रत्नगुणसञ्चयगाथा* मा यस्तो भनिएको छ :

मानिसहरू आकाश देखिराखेको छु भन्छन्
तथापि आकाशलाई कसरी देख्न सकिन्छ ?
यसको अर्थलाई केलाएर हेर ।
तथागतले पनि ठीक त्यसैप्रकारले
सबै धर्मलाई हेर्ने मार्ग देखाउनुभएको छ ।[४५]

पृष्ठलब्ध : पृष्ठलब्ध वा ध्यानपछिका अवस्थामा समस्त धर्महरूलाई माया जस्तै ठानेर आफ्नो क्षमताले भ्याएसम्म दान आदि पुण्यसंभारको अभ्यास गरिन्छ । यसै सम्बन्धमा *रत्नगुणसञ्चयगाथा* मा लेखिएको छ :

जसले पञ्च स्कन्धहरू माया समान छन् भनेर जान्दछ
स्कन्ध र मायाबीच कुनै फरक छुट्याउदैन,
जसको आचरण शान्त, संज्ञाहीन छ
वास्तवमा उसले पो उत्तम प्रज्ञापारमिताको
अभ्यास गरिरहेको हुन्छ ।[४६]

*समाधिराजसूत्र* मा भनिएको छ :

जादुगरहरू घोडा, हात्ती, रथ आदि जस्ता
विभिन्न रूपहरूको निर्माण गर्छन् ।
हामीले देखे तापनि ती वस्तुहरूको
वास्तविक अस्तित्व भने हुँदैन ।
सबै धर्महरू पनि यस्तै छन्, यसरी नै सबै धर्महरूलाई हेरिनुपर्छ ।[४७]











*तत्वचर्या* मा पनि यस्तै बताइएको छ :

> विकल्पले रहित ज्ञान भए तापनि
> पुण्यसंभारलाई भने त्याग्नुहुन्न ।

अतः यसरी भावना गर्नमा मानिस अत्यन्तै अभ्यस्त भइसकेपछि समापत्ति र पृष्ठलब्धबीच कुनै किसिमको भेद वा अन्तर भएको जस्तो लाग्न छोड्छ । त्यसपछि ऊ मन्यना चित्त (अहंकारले युक्त चित्त) ले रहित हुनपुग्छ । जस्तो बताइएको छ :

> 'म समाधिमा छु', 'म ध्यानबाट उठें' - म त्यस्तो सोँच्दिन ।
> किन ? किनभने धर्मको स्वभावलाई मैले राम्ररी जानेको छु ।[४८]

तसर्थ, परमार्थ, शून्यता, प्रज्ञापारमितामा एकछिन मात्र रहनाले पनि कल्पौँसम्म धर्म सुनेर, पढेर, कुशलमूलहरू जस्तै दान इत्यादि को अभ्यास गरेर हासिल गरेको पुण्य भन्दा असीमरूपले ज्यादा पुण्य प्राप्त भइन्छ । त्यसैले *तत्वप्रकाश सूत्र* ले भन्दछ :

> हे शारिपुत्र ! यदि कोही व्यक्ति चुट्की बजाउदा लाग्ने समय (अति किञ्चित समय) सम्म भएपनि यस तात्विक ज्ञानको समाधिमा बस्छ भने उसले एककल्पसम्म धर्म सुन्नेको भन्दा ज्यादा पुण्य कमाउँछ । हे शारिपुत्र ! त्यसो भएको हुनाले, बडो उत्साहपूर्वक सबैलाई तात्विक ज्ञानको समाधि बारे उपदेश दिनू । हे शारिपुत्र ! भविष्यमा बुद्ध हुने व्याकरण पाइसकेका बोधिसत्त्वहरू पनि यही समाधिमा स्थित रहन्छन् । यो कुरा निश्चित नै हो ।

* *महाधिगमपरिपुष्टिसूत्र*मा पनि यस्तै कुरा बताइएको छ :











एक छिनको लागि भएपनि कोही व्यक्ति यस्तो समाधिमा बस्छ भने त्रिधातुका प्राणीहरूको ज्यान बचाउने कार्य भन्दा ज्यादा लाभदायकसिद्ध हुनेछ ।

*महोष्णीषसूत्र* मा पनि यस्तै प्रकारले भनिएको छ :

अनेक कल्पसम्म धर्मको श्रवण र चिन्तन गर्नेको भन्दा ज्यादा पुण्य एक दिन धर्मको भावना गर्नाले प्राप्त हुन्छ । किन त्यसो ? किनभने यही भावनाले गर्दा मानिस जाति र मरणको मार्गबाट अलग्गिन्छ ।

*श्रद्धाबलाधानावतारमुद्रासूत्र* मा पनि यस्तै कुरा बताइएको छ :

सबै जुनीहरूमा त्रिधातुका सबै सत्त्वहरूलाई जीवनोपयोगी सामग्रीहरू दान गरेर जति पुण्य पाइन्छ त्यो भन्दा ज्यादा पुण्य त एकै प्रहर मात्र शून्यताको ध्यान गर्ने कुनै योगीले प्राप्त गर्छ ।

यदि हाम्रो चित्तमा शून्यताको भावनाले वास गर्दैन भने अरू जस्तोसुकै पुण्यले पनि हामीलाई मुक्ति मिल्दैन । यही कुरा भन्न खोजिएको हो । जस्तो *सर्वधर्माप्रवृतिनिर्देशसूत्र* मा भनिएको छ :

लामो समयसम्म शीललाई पालन गरेपनि,
करोडौं कल्पसम्म समाधिका अभ्यासहरू गरेपनि,
यदि उसले यथाभूत अर्थ नै जानेको छैन भने
यस बुद्ध शासनमा उसको मुक्ति असंभव छ ।
यस शून्यताका उपदेश जसले जानेबुझेका छन्
उनीहरू कहिलेपनि कुनै धर्ममा आसक्त हुँदैनन् ।











*दशचक्रक्षितिगर्भसूत्र* मा पनि यही कुरा बताउन खोजिएको छ :

समाधिद्वारा संशय (शंका-उपशंका)
लाई काटेर फाल्न सकिन्छ
समाधिबाहेक अरू उपायले त्यसो गर्न सकिन्न ।
त्यसैले समाधिको अभ्यास गर्नु नै सबैभन्दा
श्रेयष्कर भएको हुँदा विज्ञजनहरू त्यसैमा डटेर लाग्नुपर्छ ।

त्यही सूत्रमा यस्तो पनि लेखिएको छ :

धार्मिक ग्रन्थलाई कल्पौंसम्म पढेर, लेखेर, सुनेर, व्याख्या एवं स्व-अध्ययन गरेर पनि त्यत्ति पुण्य प्राप्त गर्न सकिन्न जति पुण्य एक दिन भावना गर्दा प्राप्त हुन्छ ।





शून्यताको अर्थले सुशोभित भइसकेपछि त्यसले नसमेट्ने कुनै पनि धर्म हुँदैन । शरणगमन पनि त्यसैमा समाहित हुन्छ । जस्तो *अनवतप्तपरिपृच्छासूत्र* मा भनिएको छ :

बोधिसत्त्वले सबै धर्महरूलाई स्वभावरहित, निःसत्त्व, निर्जीव र निष्पुद्गल का रूपमा जान्दछन् । तथागतले जस्तै रूपहिन, निमित्तरहित, धर्मरहित रूपमा यथाभूत दर्शन गर्नु नै निरामिष (शान्त) चित्तले बुद्धको शरणमा जानु हो । तथागतको यो जुन धर्मता छ, त्यही धर्मधातु हो । यो जुन धर्मधातु छ, त्यो सबै धर्ममा व्याप्त छ। यसरी सर्वव्यापी धर्मधातुलाई हेरिन्छ। यसरी हेर्नु नै निरामिष चित्तले धर्मको शरणमा जानु हो । असंस्कृत सर्वव्यापी धर्मधातुको भावना गर्ने, असंस्कृत श्रावकयानमा आश्रय लिने, संस्कृत र असंस्कृतको द्वैधतामा नपर्ने व्यक्ति नै निरामिष चित्तले संघको शरणमा गएको हुन्छ ।











उपर्युक्त प्रज्ञाको भावनामा बोधिचित्तोत्पाद पनि सम्मिलित छ। जस्तो *महाबोधिचित्तोत्पाद सूत्र* मा भनिएको छ :

> हे काश्यप, समस्त धर्म आकाश जस्तै निमित्तले रहित छन्, आदिकालदेखि नै (सुरुदेखि नै) प्रभास्वर र विशुद्ध छ । यहीं (परमार्थ) बोधिचित्तोत्पाद हो ।

उत्पत्ति क्रममा कुनै देवताको भावना गर्नु र मन्त्र जप गर्नु पनि प्रज्ञाकै भावना हो । प्रज्ञाको भावना संगै सो भावना पूर्ण हुन्छ भनेर भनिएको छ । कसैले यस्तो कहाँ भनिएको छ ? भनेर सोध्लान् । यसको जवाफ हो : *हेवज्रतन्त्र* मा त्यस्तो उल्लेख छ :

> न भावना गर्ने व्यक्ति छ, न त भावना नै छ,
> न त मन्त्र नै छ, न त देवता नै ।
> मन्त्र र देवता, यी दुवै प्रपञ्चरहित स्वभावमा रहन्छन्
> त्यस्तै वैरोचन, अक्षोभ्य, अमोघसिद्धि
> रत्नसंभव, अभिताभ र वज्रसत्त्व पनि ।[४९]

*सर्वबुद्धसमायोगडाकिनीजालसंवर* मा भनिएको छ :

> प्रतिबिम्ब, प्रतिमा (मूर्ति) इत्यादिबाट योग (सिद्धि) प्राप्त गर्न सकिन्न । तर बोधिचित्तोत्पादको लागि प्रयत्नरत योगी मात्र देवताको रूपमा परिवर्तिन हुन सक्छन् ।

*वज्रशेखरमहागुह्ययोगतन्त्र* मा पनि भनिएको छ :

> सबै मन्त्रहरूको लक्षण बुद्धकै चित्त हो ।
> किनभने मन्त्र भनेकै धर्मका











सारलाई सिद्ध गर्ने उपाय भएको हुँदा
मन्त्र सर्वव्यापी धर्मधातुले समन्वित हुन्छ ।

प्रज्ञाको भावनाले होम (यज्ञ) लाई पनि समेट्दछ। जस्तो *अमृतगुह्यतन्त्र-राज* मा भनिएको छ :

> होम किन गरिन्छ ? किनभने यसले सबै विकल्पहरूलाई जलाएर नष्ट पारिदिन्छ र उत्तम सिद्धिहरू प्रदान गर्छ। वास्तविक होम त्यो पो हो । खालि दाउरा बालेर विभिन्न सामग्रीहरू त्यसमा हाल्दैमा होम गरिएको भन्न मिल्दैन ।

६ पारमिताहरू जो बुद्धत्व-प्राप्तिका मार्ग हुन् ती पनि प्रज्ञाको भावनामै सम्मिलित छन् । जस्तो **वज्रसमाधिसूत्र* मा भनिएको छ :



> जब शून्यताबाट अलिकति पनि विचलित भइन्न, तव सबै ६ पारमिताहरू एकीकृत हुनजान्छन् ।



*ब्रह्मविशेषचिन्तिपरिपृच्छासूत्र* मा पनि बताइएको छ :

विचार नगर्नु दान हो,
भेद (differentiation) मा अवस्थित नहुनु शील हो,
भेद नगर्नु (अविशेषीकरण) क्षान्ति हो,
त्याग र उपादानले रहित हुनु
(हेयोपादेयले रहित हुनु) वीर्य हो
आसक्तिले रहित हुनु समाधि हो भने
विकल्पले रहित हुनु प्रज्ञा हो ।

*क्षितिगर्भसूत्र* मा भनिएको छ :











> सर्वधर्म शून्यताको भावना गर्ने विज्ञ व्यक्ति संसारमा स्थित हुन्नन् र संसारको आश्रयबाट मुक्त हुन्छन् । कुनै पनि भवमा स्थित नरहने हुँदा उनले खालि विशुद्ध शीलको पालना मात्र गरिराख्दछन् ।

त्यही सूत्रमा यस्तो पनि उल्लेख छ :

> शून्यता निमित्तताले रहित भएका हुँदा सबै धर्महरू एकरस (समरस) का छन् । यसै कारण, मन कुनैमा पनि स्थित हुँदैन, न कुनैमा आसक्त हुन्छ । यस्तो क्षान्तिगुणधर्मले अपार लाभहरू प्राप्त हुन्छन् । वीर्यले युक्त भई त्यस्तो अभ्यासमा डटेर लाग्ने विज्ञपुरुष सबै आसक्तिहरूलाई त्याग्न सक्षम हुन्छन् । उनको मन कुनैमा पनि स्थित हुँदैन न त आसक्त नै हुन्छ । यसैलाई नै सम्यक् पुण्य क्षेत्र भनिन्छ । सबै प्राणीहरूको हितको कामना गरेर समाधि-भावनाद्वारा गऱ्हौं भारीलाई बिसाएर सबै क्लेशहरूलाई समूल नष्ट गर्ने व्यक्तिमा नै वास्तवमा विज्ञ-पुरुषका गुण लक्षणहरू भरिएका हुन्छन् ।

वन्दना गर्नु पनि यही प्रज्ञाकै भावनामा समाविष्ट हुन्छ । जस्तो ***आकाशरत्नसूत्र* मा भनिएको छ :

> पानीमा पानी खन्याइएझैं,
> नौनीमा नौनी मिसाइएझैं,
> आफू स्वयंले स्वसंवेद्य स्वयम्भू ज्ञान
> दर्शन गर्नु वन्दना नै हो ।

पूजा पनि यसैमा समाविष्ट छ । जस्तो *पितापुत्रसमागमसूत्र* मा भनिएको छ :











शून्यताधर्मलाई अवलम्बन गरेर
बुद्धक्षेत्रको कामना (अधिमुक्ति) गर्ने व्यक्तिले
बुद्धकै पूजा गरिरहेको हुन्छ ।
त्यो पूजा अनुत्तर पूजा हो ।

*अमृतगुह्यतन्त्रराज* मा पनि उल्लेख छ :

प्रसन्नता नै वास्तविक पूजा हो
धूप आदि बालेर बुद्ध प्रसन्न हुन्नन् ।
आफ्नो चित्तको सही कर्मण्यता नै
त्यस्तो महापूजा हो जसले
बुद्ध प्रसन्न हुन्छन् ।

पापदेशना पनि त्यही प्रज्ञाको भावनामै समाहित छन् । जस्तो *कर्मावरणविशुद्धिसूत्र* मा भनिएको छ :

जो व्यक्ति आफूले गरेका पापको
देशना (प्रायश्चित) गर्न चाहन्छ
उसले सही ढङ्गले बसेर वस्तुस्थिति (परमार्थ) लाई भित्रभित्रै
हेर्नुपर्छ वा अवलोकन गर्नुपर्छ ।
वस्तुस्थितिको यथार्थ अवलोकन (परमार्थ दर्शन)
नै सबैभन्दा उत्तम प्रायश्चित हो ।

शील-समय रक्षण पनि यसैमा समाहित छ । जस्तो *सुस्थितमतिदेवपुत्र परिपृच्छासूत्र* मा भनिएको छ :

जोसंग संवर पालन गरेको वा नगरेको अभिमान हुँदैन ऊ नै
निर्वाणोन्मुख शीलले सम्पन्न हुन्छ । त्यही विशुद्ध शील हो ।











*दशचक्रक्षितिगर्भसूत्र* मा पनि त्यस्तै उल्लेख भेटिन्छ :

> घरमै रहेर दाह्री नकाटी चीवर पनि नलगाइ बस्ने, यहाँसम्म कि शील संवर पनि ग्रहण नगरेका व्यक्ति पनि आर्यधर्मले युक्त भएका खण्डमा वास्तविक परमार्थिक भिक्षु कहलिन्छन् ।

सुन्नु (श्रुत), चिन्तन् र भावना गर्नु पनि प्रज्ञाको भावना अन्तर्गत नै पर्दछन् । जस्तो **अप्रतिष्ठततन्त्र* मा भनिएको छ :

> धर्मको अकृत्रिम (अबनावटी) स्वभावरूपी एक गास भोजन खाएर पनि ऊ बिना अपवाद सबै सिद्धान्तहरूका ज्ञानले तृप्त हुन्छ । अज्ञानी बालपृथग्जनहरू यसैबाट अनभिज्ञ भएका हुँदा केवल शब्दहरू खान्छन् (शब्दहरूमा मात्र आश्रित हुन्छन्) । वास्तवमा सबैथोक आफ्नै चित्तकै रूप मात्र हुन् ।

महासिद्ध सरहले पनि भनेका छन् :

> उपदिष्ट धर्मलाई पढनु, बुझ्नु, भावना गर्नु र हृदयमा धारण गर्नु पनि प्रज्ञाकै भावना हो । त्यस्तो कुनै दर्शन वा अवधारणा छैन जसद्वारा यसलाई जनाउन सकियोस् ।

तोर्मा र धर्मचर्या पनि प्रज्ञाकै भावना हो । जस्तो *अमृतगुह्यतन्त्रराज* मा भनिएको छ :

> जब चित्त-तत्त्वलाई बोध गरिन्छ
> पूजा, तोर्मा इत्यादि विभिन्न प्रकारका
> धार्मिक कर्म अनुष्ठानहरू
> सबै यसैमा समाहित हुन्छन् ।











सबैथोक खालि चित्त र चित्तको स्वरूपको भावना (प्रज्ञाको भावना) मै समेटिन्छन् भने विभिन्न प्रकारका उपाय-क्रमका उपदेशहरूको आवश्यकता नै किन पऱ्यो ? आवश्यकता छ किनभने वस्तुस्थिति वा यथाभूत स्वभावबाट अनभिज्ञ साऱ्है हीन भाग्य भएका प्राणीहरूलाई उद्धार गर्नको लागि उनीहरूलाई बुद्धत्वसम्म डोऱ्याएर लान विभिन्न प्रकारका उपाय-क्रमका उपदेशहरू दिइएका छन् । *ज्ञानालोकालङ्कारसूत्र* मा भनिएको छ :

> हेतुप्रत्ययका सम्बन्ध, विभिन्न उत्तरोत्तर चरणमा उँभो लाग्ने क्रमागत अभ्यास का यावत कुराहरू अज्ञानीहरूलाई उपायको रूपमा भनिएका हुन् । जबकी यस अनाभोग (स्वतः प्रतिष्ठापित) धर्मको सम्बन्धमा क्रमिक अभ्यासको के को आवश्यकता ?

*महासंवरोदयतन्त्रराज* मा पनि यस्तै उल्लेख पाइन्छ :




> मुक्त व्यक्ति स्वयंलाई त्यसरी नै देख्दछन्
> जसरी आकाशलाई ।[५०]

* *आकाशरत्नसूत्र* मा पनि त्यस्तै भनिएको छ :

> जबसम्म प्राणी सर्वव्यापी धर्मधातुको महासागरमा डुबुल्की लगाउँदैनन् तबसम्म बेग्लाबेग्लै मार्ग र क्रमहरू रहिनै रहन्छन् । जबकि धर्मधातुको महासागरमा प्रविष्ट भइसकेपछि यात्रा गर्न कुनै पनि मार्ग हुँदैन कुनै पनि क्रम रहँदैन ।

अतीशले पनि भनेका छन् :

> चित्त समता एवं शान्त अवस्थामा रहेर एकाग्र भएपछि, काय र वाक्‌सित संबद्ध कुशलहरूलाई त्यत्ति महत्त्व नदिएहुन्छ ।











प्रज्ञापारमिता-अभ्यासका निमित्तहरू : प्रज्ञापारमिताको अभ्यास गर्नाले व्यक्ति कुशल कर्मप्रति सदा अप्रमादी (जागरुक) भई रहन्छ । उसका क्लेशहरू घट्दै जान्छन् । सबै प्राणीहरूका प्रति उसको मनमा करुणा उत्पन्न हुन थाल्छ । साधनामा सधैं तल्लीन रहन्छ । सबै विक्षेपहरूलाई त्यागिन्छ । यस जीवनप्रति ग्राह वा आसक्ति केही पनि हुन्न । जस्तो *रत्नावली* मा भनिएको छ :

> शून्यताको भावना गर्नाले कुशलधर्मप्रति मानिस सदैव जागरुक
> (अप्रमादि) भै रहन्छ । ३/८८

७. **प्रज्ञापारमिताको फल** : प्रज्ञापारमिताका फल पनि अन्त्य र आवस्थिक (सांसारिक) गरी दुई प्रकारकै हुन्छन् भनेर बुझ्नुपर्छ । तीमध्ये अन्त्य वा परमार्थ फल भन्नाले अनुत्तर बोधि प्राप्त हुनु नै हो । जस्तो *सप्तशतिका प्रज्ञापारमिता* मा भनिएको छ :

> हे मञ्जुश्री ! प्रज्ञापारमिताको अभ्यास गर्नाले
> महा बोधिसत्त्वहरू तुरुन्तै अनुत्तर सम्यक् सम्बोधि लाभी हुन्छन् ।

प्रज्ञा पारमिताका आवस्थिक (सांसारिक वा लौकिक) फलस्वरूप सुखसुविधाहरू प्राप्त हुन्छन् । जस्तो *प्रज्ञापारमिता सञ्चयगाथा (रत्न-गुणसञ्चय गाथा)* मा बताइएको छ :

> बोधिसत्त्व, श्रावक, प्रत्येकबुद्ध, देवता र समस्त गतिमा
> जति पनि सुख छन् ती सबै प्रज्ञापारमिताबाटै पाइन्छन् ।[५१]

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
प्रज्ञापारमिता
नामक सप्तदश परिच्छेद समाप्त ।









# परिच्छेद १८
# पाँच मार्ग

सर्वप्रथम बोधिचित्तोत्पाद गरेर विभिन्न शिक्षाहरूलाई निरन्तररूपमा अनुशीलन गर्दै बोधिसत्त्व क्रमशः भूमि एवं मार्ग उक्लँदै जान्छन् । ती मार्गहरूको वर्णन तल गरिन्छ जसको सारांश निम्न शीर्षकहरूमा पाउन सकिन्छ ।

सम्भार मार्ग, प्रयोग मार्ग, दर्शन मार्ग,
भावनामार्ग र निष्ठामार्ग (अशैक्षमार्ग) -
यी पाँचवटा मार्गहरूमा बोधिसत्त्वका मार्गहरूलाई समेट्न सकिन्छ ।




*बोधिपथप्रदीप* भन्ने ग्रन्थमा यी पाँचवटा मार्गहरूको विवरण भेटिन्छ । तीमध्ये पहिलो, संभारमार्गलाई हामी यसरी बुझौं : सर्वप्रथम, अधम् र मध्यम पुरुषका धर्मको अध्ययन तथा अभ्यास गरेर जग नै बसाल्नुपर्छ । त्यसपछि मात्र प्रणिधि र प्रस्थान बोधिचित्त उत्पन्न गरेर दुईटा सम्भार-हरूलाई पूरा गर्नुपर्छ ।[1] यही नै सम्भार मार्गको स्पष्ट व्याख्या हो । त्यसपछि क्रमशः उँभो लाग्दै बोधिसत्त्वले उष्मा आदि सिद्धिहरू प्राप्त गर्छन् ।[2] यहीं प्रयोग मार्गको व्याख्या हो । प्रमुदिता इत्यादि प्राप्त हुने अवस्थाले दर्शन, भावना र निष्ठा मार्गलाई ईंगित गर्दछ ।

१. **सम्भार मार्ग** : महायान गोत्रका साधकले बोधिचित्तोत्पाद गरेर आचार्यबाट उपदेश लिई अत्यन्तै परिश्रमपूर्वक कुशल कर्म गर्दा गर्दै उष्मत्व ज्ञान प्राप्त गर्छन् । यस अवस्थामा साधक सम्भार मार्गमा रहन्छन् । यस मार्गका साधकले गर्ने प्रगतिलाई चार चरणमा बाँड्न सकिन्छ : ती हुन्, आधिकारिक, आधिमोक्षिक, आधिकामिक एवं आभिगामिक[3] । यसलाई










किन सम्भार मार्ग भनिएको हो त ? किनभने यस मार्गमा रहेर पुण्य सम्भार गरेका कारण साधक उष्मत्व ज्ञानका लागि योग्य उम्मेदवार बन्ने हुनाले नै यसलाई सम्भार मार्ग भनिएको हो । यसलाई मोक्षभागीय कुशलमूल पनि भन्ने गरिन्छ ।

यस अवस्थामा देहायबमोजिम बाह्र बोधिपाक्षिक धर्महरूको अभ्यास वा भावना गरिन्छ ।

१.१. चार स्मृत्युपस्थान,
१.२. चार सम्यक् प्रहाण
१.३. चार ऋद्धिपाद

### १.१. **चार स्मृत्युपस्थान**

1. काय स्मृत्युपस्थान (कायानुपश्यना)
2. वेदना स्मृत्युपस्थान
3. चित्त स्मृत्युपस्थान
4. धर्म स्मृत्युपस्थान

यी सबै तल्लो (मृदु) सम्भारमार्गका अवस्थाहरू हुन् ।

### १.२. **चार सम्यक् प्रहाण**

1. उत्पन्न भएका अकुशल धर्मको प्रहाण
2. उत्पन्न भइनसकेका अकुशल धर्मलाई उत्पन्न हुन नदिनु,
3. उत्पन्न भइनसकेका कुशल धर्मलाई उत्पाद गर्नु र
4. उत्पन्न भएका कुशल धर्मलाई अभिवृद्धि गर्दै लैजानु

यी सबै मध्यम सम्भारमार्गका अवस्थाहरू हुन् ।











१.३. **चार ऋद्धिपादहरू** यस प्रकार छन् :

1. छन्द समाधि,
2. वीर्य समाधि,
3. चित्त समाधि र
4. मीमांसा समाधि

यी सबै अधिमात्र (माथिल्लो) सम्भारमार्गका अवस्थाहरू हुन् ।

२. **प्रयोग मार्ग** : सम्भार मार्गको निष्पत्ति वा पूर्णतापश्चात् प्रयोग मार्गको सुरुवात हुन्छ । यसमा चतुरार्य सत्यलाई वोध गर्ने क्रममा चार वटा अवस्था (सं. निर्वेधाङ्ग) लाई पार गरिन्छ । ती चारवटा अवस्थाहरू हुन् : ऊष्मा (heat), मूर्धा (maximum heat), क्षान्ति (patience) र लौकिकाग्र धर्म (the highest worldly dharma) । यसलाई किन प्रयोग मार्ग भनिएको हो ? किनभने सत्यलाई प्रत्यक्षरूपमा साक्षात्कार गर्ने प्रयत्न गरिने हुनाले नै यसलाई प्रयोग मार्ग भनिएको हो ।

२.१. **पाँच इन्द्रिय** : प्रयोगमार्गका ती चार अवस्थाहरूमध्ये ऊष्मा एवं मूर्धाका अवस्थाहरूमा साधक निम्न पाँच इन्द्रियहरूले युक्त हुनपुग्छ :

1. श्रद्धा इन्द्रिय,
2. वीर्य इन्द्रिय,
3. स्मृति इन्द्रिय,
4. समाधि इन्द्रिय,
5. प्रज्ञा इन्द्रिय

२.२. **पाँच बल** : प्रयोगमार्गका ती चार अवस्थाहरूमध्ये क्षान्ति र लौकिकाग्र धर्मका अवस्थाहरूमा चाँहि साधक निम्न पाँच बलहरूले युक्त हुनपुग्छ :











1. श्रद्धा बल
2. वीर्य बल
3. स्मृति बल
4. समाधि बल
5. प्रज्ञा बल

३. **दर्शन मार्ग** : लौकिकाग्र धर्मको अवस्थालाई पार गरिसकेपछि दर्शन मार्गको शुरूवात हुन्छ जसमा चतुरार्यसत्यलाई आलम्बन बनाई शमथ र विपश्यनाको ध्यान गरिन्छ । चतुरार्य सत्यमध्ये हरेक सत्यका चारवटा पक्ष वा क्षण हुन्छन् । सबै गरेर सोऱ्हवटा क्षणहरू हुन्छन् जुन यस प्रकार छन् : दु:खको ज्ञान दिलाउने धर्मको क्षान्तिपूर्ण ग्रहण (दु:खे धर्मज्ञान क्षान्ति), दु:खको वास्तविक ज्ञान (दु:खे धर्मज्ञान), दु:ख सत्यको अव-बोधलाई मूर्तरूप दिने प्रज्ञाको क्षान्तिपूर्ण ग्रहण (दु:खे अन्वयज्ञानक्षान्ति), दु:ख सत्यको वास्तविक ज्ञान (दु:खे अन्वयज्ञान) । त्यसरी नै समुदय, निरोध र मार्ग सत्यका पनि चार चार वटा दु:ख सत्यका जस्तै क्षणहरू हुन्छन् । यसरी ८ वटा क्षान्ति र ८ वटा ज्ञान गरी चार आर्य सत्यका जम्मा १६ वटा क्षणहरू हुन्छन् । कसैले यसलाई दर्शनमार्ग किन भनिएको हो भनेर सोध्लान् । यसको उत्तर यसरी दिन सकिन्छ : पहिले नदेखिएका चार आर्य सत्यहरूको दर्शन हुने हुनाले नै यसलाई दर्शन मार्ग भनिएको हो । यसमा साधक सात बोध्यङ्गले युक्त हुनपुग्छ । ती सात बोध्यङ्ग हुन् :

1. स्मृति बोध्यङ्ग,
2. धर्मप्रविचय बोध्यङ्ग,
3. वीर्य बोध्यङ्ग,
4. प्रीति बोध्यङ्ग,
5. प्रश्रब्धि बोध्यङ्ग,
6. समाधि बोध्यङ्ग र
7. उपेक्षा बोध्यङ्ग











४. **भावना मार्ग** : दर्शन मार्ग अवबोध भइसकेपछि शुरू हुने मार्गलाई भावना मार्ग भनिन्छ । भावना मार्गलाई लौकिक मार्ग र लोकोत्तर मार्ग गरी दुई भागमा विभाजन गर्न सकिन्छ ।

४.१. **लौकिक भावना मार्ग** : लौकिक मार्गमा प्रथम ध्यान, द्वितीय ध्यान, तृतीय ध्यान र चतुर्थ ध्यान लगायत आकाशानन्त्यायन, विज्ञानान्त्यायन, अकिञ्चन्यायतन र नैवसंज्ञानासंज्ञायतन आदि समाविष्ट हुन्छन् । यिनको भावना गर्नुका पछाडि तीन प्रयोजन वा उद्देश्यहरू हुन्छन् । ती हुन् :

1. भावनाहेय क्लेशहरू लाई दमन गर्न
2. चतुर्ब्रह्मविहार  आदिका विशेष गुणहरूलाई प्राप्त गर्न
3. लोकोत्तर मार्गका लागि जग वा आधार खडा गर्न

४.२. **लोकोत्तर भावना मार्ग** : दोश्रो मार्ग अर्थात लोकोत्तर मार्गमा दुई प्रकारका ज्ञानलाई आलम्बन बनाई शमथ र विपश्यनाको भावनालाई अझ विकाश गर्दै लगिन्छ । दर्शनमार्गमा साधकले चतुरार्य सत्यका हरेक सत्यलाई दुई क्षान्तिका क्षण र दुइ ज्ञानका क्षण गरी जम्मा सोऱ्ह क्षणका रूपमा दर्शन गर्दछ । जसमध्ये आठवटा क्षान्ति क्षणहरू जुन छन् तिनलाई भावना मार्गमा अवबोध गरिन्छ जसको फलस्वरूप क्लेशहरू स्वतः हटेर जान्छन् । भावना मार्गकै अवस्थामा चार ध्यान र प्रारम्भका तीन आरूप्य समाधिहरूसंग सम्बन्धित शमथ र विपश्यना भावना क्रमशः गर्दै जाँदा साधक बाँकी आठ ज्ञान क्षणहरूमा पनि एकदमै अभ्यस्त हुन्छ । यीमध्ये धर्मताको अवबोधमा आफूलाई अभ्यस्त तुल्याउनु आंशिक धर्मज्ञान हो भने ज्ञानको अवबोधमा आफूलाई अभ्यस्त तुल्याउनु आंशिक अन्वयज्ञान हो । जबकि नैवसंज्ञानासंज्ञा आयतन लौकिक ध्यान मात्र हो किनभने यस अवस्थामा संज्ञाको संचार स्पष्ट हुँदैन ।

यसलाई किन भावना मार्ग भनिएको ? कसैले सोध्न सक्छन् । यसमा दर्शनमार्गमा हासिल भएको तत्त्व ज्ञानको भावना गरिन्छ, अभ्यास गरिन्छ त्यसैले यसलाई भावना मार्ग भनिएको हो । यस अवस्थामा साधक आर्य











अष्टाङ्गिक मार्गको अभ्यासमा पोख्त हुन्छन् । अष्टाङ्गिक मार्ग निम्नानुसार छन् :

1. सम्यक् दृष्टि,
2. सम्यक् सङ्कल्प,
3. सम्यक् वाक्,
4. सम्यक् कर्मान्त,
5. सम्यक् आजीव,
6. सम्यक् व्यायाम,
7. सम्यक् स्मृति र
8. सम्यक् समाधि

**५. निष्ठामार्ग** : वज्रोपम अर्थात वज्र जस्तै अक्षय समाधि प्राप्त भए-पश्चात् साधक निष्ठामार्गमा प्रवेश गर्दछन् । यसमा क्षय ज्ञान र अनुत्पादज्ञान का स्वभाव निहित हुन्छन् । वज्रोपम समाधि भावना मार्गको अन्तिम प्रहाणमार्गको अवस्था हो, जसलाई प्रयोग मार्ग र आनन्तर्य मार्ग (unobstructed path) ले पनि समेट्दछ । निर्वाध, एकदम कठोर, अटल, एकरस र सर्वव्यापी भएका कारण यसलाई वज्रोपम भनिन्छ ।

निर्वाध जसलाई आनन्तर्य पनि भनिन्छ, भन्नाले सांसारिक कुराहरूबाट अवरुद्ध नहुने भन्ने बुझिन्छ । कुनैपनि आवरणले यसलाई नष्ट गर्न नसक्ने हुनाले यो एकदम कठोर छ । यो अटल वा दृढ यस कारणले छ कि यसलाई विकल्पले विचलित पार्न सक्दैन । यसलाई एकरस किन भनिएको भने यसमा सबै धर्मलाई एकै भाव वा रसले हेरिन्छ । यो किन सर्वव्यापी छ भने यसले सबै ज्ञेय धर्मको तथतालाई आलम्बन बनाउँदछ ।

वज्रोपम समाधिपछि उत्पन्न हुने क्षयज्ञान त्यस्तो ज्ञान हो जुन त्यसै समाधिको उपज हो र चार आर्य सत्यलाई आलम्बनका रूपमा प्रयोग गर्ने यो ज्ञान सबै हेतुहरूलाई नष्ट वा क्षय गर्नाले उत्पन्न हुन्छ । अनुत्पादज्ञान चार आर्य सत्यलाई आलम्बनका रूपमा प्रयोग गर्ने त्यस्तो ज्ञान हो जुन











सबै फल वा दुःखहरूलाई प्रहाण गर्नाले उत्पन्न हुन्छ । अर्को शब्दमा भन्नुपर्दा हेतुको क्षय हुने हुँदा क्षय ज्ञान र फल पनि उत्पन्न नहुने (अनुत्पाद) हुँदा अनुत्पाद ज्ञान भनिएका हुन् । अब प्रश्न रह्यो, यसलाई निष्ठामार्ग नै किन भनिएको हो भन्ने । शिक्षालाई परिपूर्ण गरेर निर्वाणको नगरमा गइने हुँदा यसलाई निष्ठा मार्ग भनिएको हो ।

यस अवस्थामा दशवटा अशैक्ष धर्महरू हुन्छन् । अशैक्ष सम्यक् दृष्टि देखि लिएर अशैक्ष सम्यक् समाधि सम्म आठ अशैक्ष धर्म र बाँकी अशैक्ष विमुक्ति र अशैक्ष सम्यग्ज्ञान समेत गरेर दश अशैक्ष धर्म हुन जान्छन् । यी दश अशैक्ष धर्म नै पाँच अनाश्रव स्कन्ध हुन् । पाँच अनाश्रव स्कन्धहरू यस प्रकार छन् :

1. अशैक्ष सम्यक् वाक्, कर्मान्त र आजीव, यी तीन शील स्कन्धभित्र पर्दछन् ।
2. अशैक्ष सम्यक् स्मृति र सम्यक् समाधि चाँहि समाधि स्कन्धभित्र पर्दछन् ।
3. अशैक्ष सम्यक् दृष्टि, सम्यक् संकल्प र व्यायाम चाँहि प्रज्ञा स्कन्धभित्र पर्दछन् ।
4. सम्यक् विमुक्ति विमुक्तिस्कन्ध हो भने
5. सम्यक्ज्ञान विमुक्तिज्ञानदर्शनस्कन्ध हो ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
पञ्च मार्ग
नामक अष्टादश परिच्छेद समाप्त ।









# परिच्छेद १९
# दश बोधिसत्त्व भूमि

कसैले सोंध्न सक्छ, यी पाँचमार्ग भित्र कतिवटा भूमिहरू समेटिन्छन् ? निम्न शीर्षकहरूमार्फत यसको संक्षिप्त उत्तर पाउन सकिन्छ ।

आदिकर्मिकभूमि, अधिमुक्तिचर्याभूमि,
बोधिसत्त्वका दश भूमिहरू र बुद्धभूमि -
दश बोधिसत्त्वभूमि र अन्य तीनवटा भूमि
समेत मिलाएर जम्मा तेऱ्हवटा भूमि
माथिका शीर्षकमा समेटिन्छन् ।



भूमिहरूका बारेमा *बोधिपथप्रदीप* मा यस्तो उल्लेख गरिएको छ :



बोधिसत्त्वले प्रमुदिता आदि भूमिहरू प्राप्त गर्दछन् ।[१]

"प्रमुदिता" प्रथम बोधिसत्त्वभूमि हो र अन्य भूमिहरूमा दुईवटा अधम् (तल्लोस्तरका) र दशवटा माथिल्लो बोधिसत्त्वभूमि पर्दछन् ।

आदिकर्मिकभूमि : आदिकर्मिकभूमि भनेको सम्भारमार्गको अवस्था हो किनभने उक्त अवस्थामा साधकले आफ्नो अपरिपक्व चित्त सन्ततिलाई परिपक्व बनाउँदछन् ।

अधिमुक्तिचर्याभूमि : अधिमुक्तिचर्याभूमि प्रयोगमार्गको अवस्था हो किनभने यस अवस्थामा साधक शून्यताको अर्थप्रति विशेष अभिरुची मात्र राख्दछन् । यस समय मात्सर्य आदि जस्ता पारमिताविरोधी तत्त्वहरू, दर्शनहेय क्लेश र परिकल्पित ज्ञेयावरण दबिएर रहने हुनाले उत्पन्न हुन पाउँदैनन् ।











प्रमुदितादेखि धर्ममेघासम्मका बोधिसत्त्वभूमिलाई दशभूमि भनिन्छ । यस सम्बन्धमा *दशभूमिक सूत्र* मा यस्तो उल्लेख पाइन्छ :

हे जिनपुत्र ! प्रमुदिता..... इत्यादि यी दश नै बोधिसत्त्वभूमि हुन् ।[२]

यीमध्ये पहिलो प्रमुदिता भूमि दर्शन मार्गको अवस्थामा प्राप्त हुन्छ । त्यस समय साधकलाई सर्वव्यापी शून्यताको साक्षात् बोध हुन्छ । दोश्रो देखि लिएर दशौंसम्मका भूमिहरू भावनामार्गका अवस्थामा प्राप्त हुन्छन् । ती अवस्थाहरूमा साधक प्रथम भूमिमै अवगत भइसकेको तत्त्वज्ञानलाई अभ्यास गर्दछन् । बोधिसत्त्वका ती दश भूमिहरूलाई सामान्य र विशेष धर्म गरी दुई शीर्षकमा बाँडेर व्याख्या गर्न सकिन्छ ।

सामान्य धर्म : सामान्य धर्मका पनि तीन शीर्षकहरू छन् :

१. भूमिको स्वरूप,
२. भूमिको निरुक्ति (खास अर्थ) र
३. दश संख्यामा भूमिको वर्गीकरण

**१. भूमिको स्वरूप** : भूमिको स्वरूप भन्नाले त्यस्तो प्रज्ञालाई जनाउँदछ जुन समाधिद्वारा प्राप्त हुन्छ र जसमा आश्रित भएर साधकका चित्तसन्ततिले धर्मनैरात्म्यको प्रत्यक्ष साक्षात्कार गर्दछ ।

**२. भूमिको निरुक्ति** : हरेक भूमि त्यसका आफ्ना गुणधर्महरूको जग वा आधार हो र एकपछि अर्को गर्दै क्रमशः माथिल्लो भूमिहरूतर्फ उभो लाग्ने आधारका रूपमा पनि लिन सकिन्छ । त्यही भएर 'भूमि' भनिएको हो । भूमिहरूको दृष्टान्त यसरी दिन सकिन्छ :

भूमिहरूमा ज्ञान अन्तर्निहित भै बसेको हुन्छ र त्यहाँ त्यसका गुणको उपभोग गरिन्छ, त्यसैकारण भूमि भनिन्छ उदा. गोशाला ।











तो भूमिहरूमा ज्ञान द्रुत गतिले बढ्दै जान्छ, त्यसैकारण तिनलाई भूमि भनिन्छ, उदाहरणको लागि अश्वधावनभूमि (घोडा दौडाउने मैदान)

समस्त गुणधर्महरूका आधार नै ज्ञान भएकाले यिनलाई भूमि भनिन्छ, उदाहरणको लागि क्षेत्रभूमि (खेत) ।

३. **दश संख्यामा भूमिको वर्गीकरण** : हरेक भूमिमा वेग्लावेग्लै शिक्षाको खाँचो पर्ने भएकाले यिनलाई दश भूमिमा विभाजन गरिएको छ ।

विशेष धर्म : दश बोधिसत्त्व भूमिलाई विशेषतवरले हामी निम्न नौ शीर्षकमा बाँडेर व्याख्या गरौं ।

1. विशेष नाम,
2. विशेष निरुक्ति,
3. विशेष परिकर्म,
4. विशेष अभ्यास,
5. विशेष विशुद्धि,
6. विशेष प्रतिपत्ति,
7. विशेष प्रहाण,
8. विशेष उत्पत्ति र
9. विशेष प्रभाव वा बल

**क. प्रथम भूमि** : प्रथम भूमिसित सम्बन्धित माथिका नौ शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : प्रथम भूमिको नाम प्रमुदिता हो ।

**2. विशेष निरुक्ति (अर्थ)** : प्रथम भूमि लाभी बोधिसत्त्वहरू बोधिको सानिध्यमा पुगेर सत्त्वहरूलाई हित गर्दछन् जसबाट उनीहरूले ठूलो











प्रीतिको अनुभव गर्दछन् । त्यसैले नै यस भूमिलाई 'प्रमुदिता' भनिएको हो । यसै सम्बन्धमा *महायानसूत्रालंकार* मा यस्तो बताइएको छ :

> बोधिको नजीक पुगेर सारा सत्त्वहरूको हित गर्दाखेरी
> साधकले ठूलो प्रीतिको अनुभव गर्दछन्
> त्यसैले यसलाई प्रमुदिता भनिएको हो ।[३]

3. **विशेष शिक्षा** : समस्त सत्त्व र वस्तुहरूप्रति अकुटिल आशय राख्नु आदि जस्ता दश शिक्षामा पारंगत भइसकेपछि प्रथम भूमि लाभ हुन्छ । जस्तो *अभिसमयालंकार* मा भनिएको छ :

> दश प्रकारका परिकर्म वा शिक्षाले
> प्रथम भूमिको प्राप्ति हुन्छ ।[४]




**4. विशेष अभ्यास** : सामान्यतयाः यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू दानपारमिताकै बढी अभ्यास गर्दछन् । यसरी सबै सत्त्वहरूलाई दान-पारमिताको अभ्यासद्वारा सन्तुष्ट पार्दछन् । यसको अर्थ यो होइन कि अरू पारमिताहरूलाई यिनीहरूले ध्यानै दिँदैनन् । खालि दानपारमितालाई बढी महत्त्व दिन्छन् मात्र भन्न खोजिएको हो । त्यसैले *दशभूमिक सूत्र* मा उल्लेख गरिएको छ :

> प्रथम भूमिमा दश पारमितामध्ये सामान्यतयाः दानपारमिताकै
> बढी अभ्यास गरिन्छ । भनाइको अर्थ यो होइन कि यिनीहरू
> अरू पारमिताहरूको अभ्यासै गर्दैनन् ।[५]

**5. विशेष विशुद्धि** : प्रथम भूमिको विशुद्धिका बारे *दशभूमिकसूत्र* मा यस्तो उल्लेख गरिएको छ :











> प्रमुदिता भूमिमा रहने बोधिसत्त्वहरूमा निकै उदार दृष्टि र प्रणिधान हुन्छ जसका बलले उनीहरू सयौं, हजारौं, करोडौ करोड बुद्धहरूको दर्शन गर्न सक्दछन् । उहाँहरूलाई देख्दा अत्यन्तै उदार अध्याशयले पूजा गर्दछन्, सत्कार गर्छन् । उहाहरूका संघलाई पनि उनीहरू आदर-सम्मान गर्छन्, तिनको सेवा गर्छन् । त्यस्ता पुण्यबाट प्राप्त कुशलमूललाई यिनीहरू बोधिमा परिणामना गर्दछन् । अनि उनै बुद्धहरूबाट धर्मोपदेश सुन्छन्, सुनेर चिन्तन गर्दछन्, धारण गर्दछन् र अनवरतरूपमा अभ्यास पनि गर्दछन् । त्यसपछि चारवटा संग्रह वस्तु मार्फत सत्त्वहरूलाई विनीत (परिपक्व वा परिपाचन) गर्दछन् ।[६]

संक्षेपमा निम्न तीन कारणले उनीहरूका कुशलमूलमा उत्तरोत्तर विशुद्धि भइरहन्छ : अनेक कल्पसम्म बुद्ध, धर्म र संघको पूजा गरि-रहनु, अनुगमन गरिरहनु, सत्त्वहरूलाई परिपक्व वा विनीत गरिरहनु र कुशलमूललाई अनुत्तर सम्यक् सम्बोधिमा परिणामना गरिरहनु ।

उपरोक्त सम्बन्धमा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> उदाहरणको लागि मानौ कुनै सुनारले जति सुनलाई तताउँदै लान्छ, त्यति त्यति सुन शुद्ध, सफा र काम लाग्ने बन्दै जान्छ । ठीक त्यसैगरी, प्रथम भूमिमा पुगेका बोधिसत्त्वका कुशलमूल पनि झन् झन् शुद्ध, स्पष्ट र काम लाग्ने (प्रयोगमा ल्याउन मिल्ने) बन्दै जान्छन् ।[७]

6. **विशेष प्रतिपत्ति** : साधारणतया दशै भूमिका बोधिसत्त्वहरूले समापत्ति अवस्थामा एउटै ज्ञान हासिल गर्दछन् जसलाई समाहित ज्ञान भनिन्छ, तापनि ती सबै भूमिलाई छुट्टाछुट्टै लिइंदा भने पृष्ठ लब्ध अवस्थामा भिन्नता देखिन थाल्छ । प्रथम भूमिमा साधक वा बोधिसत्त्वले सर्वव्यापी धर्मधातुका अर्थ पहिल्याउँछन् जसको कारण उनलाई परात्मसमता ज्ञान











प्राप्त हुन्छ । तसर्थ, मध्यान्तविभागमा यसलाई 'सर्वव्यापी अर्थमा (All-pervading)' बताइएको छ ।

**7. प्रहाणमा विशेषता** : जहासम्म क्लेशावरणको प्रश्न छ, यस भूमिमा बोधिसत्त्वले सबै बयास्सी दर्शनहेय क्लेशावरणहरूलाई प्रहाण गर्दछन् । तर ज्ञेयावरणको सम्बन्धमा भन्नुपर्दा रुखका बाहिरी बोक्रा उप्किएसरी तीन प्रकारका ज्ञेयावरणका बाहिरी पत्र (दौष्ठूल्य) मात्र हटेर जान्छ । त्यसबेला, बोधिसत्त्व पाँच भयबाट मुक्त हुन्छन् । यसै सम्बन्धमा *दशभूमिकसूत्र* मा बताइएको छ :

> यस प्रमुदिता भूमि प्राप्त गर्नासाथै साधक बाच्न नपाउँला भन्ने डर, इज्जत नपाउँला भन्ने डर, मरूँला भन्ने डर, दुर्गतिमा आफ्नो जन्म होला भन्ने डर, र यस संसारमा छउन्जेल चिन्ता, सन्ताप इत्यादिको डर यी पाँचवटा डरबाट मुक्त हुन्छन् ।[८]

 

**8. विशेष उत्पत्ति** : यस भूमिमा रहने बोधिसत्त्व पूरै जम्बुद्वीपमाथि आधिपत्य जमाउने राजाका रूपमा जन्म लिएर सारा प्राणीहरूका मात्सर्य दोषलाई नष्ट गरिदिन्छन् । यसै सम्बन्धमा *रत्नावली* मा यस्तो उल्लेख पाइएको छ :

> यसको विपाक फलस्वरूप जम्बुद्वीपकै महेश्वर बन्दछ ।[९]

यहाँ विशेष उत्पत्तिका बारे अत्यन्तै सामान्यरूपले मात्र व्याख्या गरियो । अरूलाई हित गर्न बोधिसत्त्व जुनसुकै रूपमा जस्तोसुकै उपाय अपनाएर पनि प्रकट हुन सक्दछन् जुन जातक कथा पढ्दा हामीलाई छर्लङ्ग हुन्छ ।

**9. विशेष प्रभाव** : विशेष प्रभावका बारे दश भूमिक सूत्रमा भनिएको छ :











प्रमुदिता भूमिमा अवस्थित बोधिसत्त्व आफ्ना सदिच्छालाई पूरा गर्न जस्तोसुकै मेहनत वा तपस्या (वीर्य) गर्न पनि अग्रसर हुन्छन्। यसले गर्दा नै घरबार, छोराछोरी, भोगविलास इत्यादि सबैथोक त्यागी बोधिसत्त्व बुद्धशासनमा प्रब्रज्या लिन पुग्दछन् । प्रब्रजित भए पश्चात् उनले एकै क्षण, एकै पल र एकै मुर्हूतमा सयौं समाधिहरू लाभ गर्न सक्दछन् र सो समाधिहरूबाट अधिष्ठित हुन सक्दछन् । उनले सयौं लोकधातुलाई हल्लाउन सक्दछन् । सयौं बुद्धक्षेत्रहरूमा पुग्न सक्दछन् । सयौं लोकधातुहरूलाई प्रकट गरेर देखाउन सक्दछन् र सयौं थरी थरीका सत्त्वहरूलाई विनित (परिपाक) गर्न सक्दछन् । एक सय कल्पसम्म उनी जीवितै रहन सक्दछन् । सयौं पूर्वान्त (विगतका) कल्पहरू देख्न सक्दछन् र सयौं अपरान्त (भविष्यका) कल्पहरू पनि देख्न सक्दछन्। सयौं धर्ममुखहरू (the doors of dharma) लाई निरूपण (प्रविचय) गर्न सक्दछन् र सय-सयजना बोधिसत्त्वहरूका साथ आफूलाई सयौं रूपहरूमा प्रकट गर्न सक्दछन् ।[१०]

**ख. द्वितीय भूमि** : द्वितीय भूमिसित सम्बन्धित माथिका नौ शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : द्वितीय भूमिको नाम विमला हो ।

**2. विशेष निरुक्ति** : शील तोडिएको दोष (दौशील्य दोष) बाट मुक्त भएकाले यस भूमिलाई विमला भनिएको हो । त्यसैले भनिन्छ :

दौशील्य दोषबाट मुक्त भएकाले यस भूमि 'विमल' कहलिएको हो ।[११]

**3. विशेष शिक्षा** : शील, कृतज्ञता आदि जस्ता आठ शिक्षाहरूलाई ग्रहण गर्नाले यो भूमि प्राप्त हुन्छ । जस्तो बताइएको छ :











शील, कृतज्ञता, क्षान्ति, अनुमोदन, करुणा इत्यादि....[१२]

**4. विशेष अभ्यास** : सामान्यतयाः यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू शीलपारमिताकै बढी अभ्यास गर्दछन् ।

**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं[१३] बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर विशुद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारेमा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> तेजाबमा डुबाइएपछि सुन झनै शुद्ध भएर आएजस्तै द्वितीय भूमिमा अवस्थित बोधिसत्त्वका कुशलमूल पनि झनै शुद्ध हुन्छन्, सफा हुन्छन् र प्रयोगमा ल्याउन मिल्ने बन्छन् ।[१४]





**6. विशेष प्रत्तिपत्ति** : यस भूमिमा पुगेपछि बोधिसत्त्वले धर्मधातुको अग्र अर्थलाई बोध गर्दछन् र जसरी भएपनि सबै धर्मको विशुद्धि र प्राप्तिका लागि प्रयत्न गर्नुपर्छ भनेर सोंच्दछन् । त्यसैले 'अग्र अर्थमा[१५]' भनिएको हो ।

**7. विशेष प्रहाण** : जहाँसम्म द्वितीयदेखि लिएर दशौं भूमिसम्मका क्लेशावरणहरूको प्रश्न छ, भावनाहेय क्लेशहरू जो सोऱ्हवटा छन्, मध्ये पनि बाहिर देखिने सतही क्लेशहरू मात्र यस भूमिमा नष्ट हुन्छन्, तापनि तिनका मूल (बीऊ) भने यथावतै रहन्छन् । ज्ञेयावरणको सम्बन्धमा भन्नुपर्दा, यस भूमिमा रुखको भित्री बोक्रा खुर्केर फाले झैं वा कुनै मिष्ठान्नबाट तर जम्मै झिकिदिए झैं ज्ञेयावरणका खालि भित्री तह जसलाई फल्गुगत दौष्ठूल्य भनिन्छ लाई मात्रै फालिन्छ ।

**8. विशेष उत्पत्ति** : द्वितीय भूमिसम्म पुगेका बोधिसत्त्व प्रायसः चार द्वीपमा आफ्नो आधिपत्य जमाउने चक्रवर्ती राजाको रूपमा जन्म लिएर











समस्त प्राणीहरूलाई दश अकुशल कर्मपथबाट छुटाएर दश कुशल कर्म पथमा प्रतिष्ठापित गराइदिन्छन् । यसै सम्बन्धमा *रत्नावली* मा यस्तो उल्लेख गरिएको छ :

यसको विपाक फलस्वरूप
सातरत्नले युक्त सत्त्ववत्सल
सत्त्वहितैषी चक्रवती राजा बन्दछन् । ५/४४

**9. विशेष प्रभाव** : विमला भूमिसम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा एक हजार समाधिहरू लाभ गर्न सक्दछन् ।

**ग. तृतीय भूमि** : तृतीय भूमिसित सम्बन्धित माथिका नौ शीर्षकहरू यस प्रकार छन् :



**1. विशेष नाम** : तृतीय भूमिको नाम प्रभाकरी हो ।



**2. विशेष निरुक्ति** : यस भूमिमा धर्म र समाधिको प्रभा (प्रकाश) एकदम स्पष्ट हुन्छ र अरूहरूलाई पनि त्यसले उज्यालो पारिदिन्छन्, त्यही भएर यसको नाम प्रभाकारी रहन गएको हो । जस्तो भनिन्छ :

धर्मको एकदम उज्यालो
प्रकाश फिजाँउने हुँदा
यस भूमिलाई प्रभाकरी भनिन्छ ।[१६]

**3. विशेष शिक्षा** : जति सुने पनि नअघाउने इत्यादि जस्ता पाँच धर्महरूको शिक्षा ग्रहण गरेपछि यो भूमि प्राप्त हुन्छ । अतृप्त हुने गरी सुन्नु, फलको आश नगरी दान दिनु (निरामिष दान) आदि पाँच धर्मका शिक्षा उल्लेख गरिएको छ ।[१७]











**4. विशेष अभ्यास** : सामान्यतयाः यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू क्षान्ति पारमिताकै बढी अभ्यास गर्दछन् ।

**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर विशुद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारेमा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> उदाहरणको लागि, कुनै पारखी सुनारको हातमा सुन पर्न गयो भने उसले त्यसमा लागेका धूलो मैलोहरू सबै राम्रोसंग पुछेर टल्किने गरी सफा गर्छ तापनि सुनको वास्तविक तौलमा कुनै पनि गिरावट आउन दिंदैन । ठीक त्यसैगरी तृतीय भूमिमा अवस्थित बोधिसत्त्वका कुशलमूल पनि ऱ्हासोन्मुख हुनुको सट्टा झन् झन् बढ्दै जान्छन्, सफा हुँदै जान्छन् र झन् झन् काम लाग्ने बन्दै जान्छन् ।[१८]

**6. विशेष प्रतिपत्ति** : यस भूमिसम्म पुगेका बोधिसत्त्वले *धर्मधातुनिष्यन्द* का अग्र अर्थ जानेबुझेका हुन्छन्, बोध गरेका हुन्छन् । जसको फलस्वरूप धर्मको केवल एउटा श्लोक मात्र सुन्नको लागि पनि उनीहरू तीन हजार बल्दो अग्निकुण्डमा जिउँदै हाम्फाल्न तयार हुन्छन् । त्यसैले 'निष्यन्द-अग्र अर्थमा[१९]' भनिएको हो ।

**7. विशेष प्रहाण** : यसमा (तृतीय भूमिको) विशेष प्रकारको प्रहाण उल्लेख छैन ।

**8. विशेष उत्पत्ति** : यस भूमिमा अवस्थित बोधिसत्त्व प्रायः देवताहरूका राजा इन्द्रको रूपमा जन्म लिन्छन् र सत्त्वहरूका कामरागलाई नष्ट गर्दछन् । *रत्नावली* मा पनि यहीं कुरा बताइएको छ :











कौशल्यसम्पन्न देवताहरूका राजा
कामराग हटाउनमा पोख्त हुन्छन् । ५/५५

**9. विशेष प्रभाव** : प्रभाकरी भूमिसम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा एक लाख समाधिहरू लाभ गर्न सक्दछन् ।

**घ. चतुर्थ भूमि** : चतुर्थ भूमिसित सम्बन्धित माथिका नौ शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : चतुर्थ भूमिको नाम अर्चिष्मती हो ।

**2. विशेष निरुक्ति** : यस भूमिमा बोधिपाक्षिक धर्मको ज्ञानरूपी रश्मी (अर्चि) प्रस्फुटित भएर दुवै आवरणहरू (क्लेशावरण र ज्ञेयावरण) लाई जलाएर भष्म गरिदिन्छ । त्यसैले यसलाई अर्चिष्मती भनिएको हो । जस्तो भनिएको छ :

यस भूमिमा बोधिपाक्षिक धर्मको ज्ञान
एकदमै प्रज्वलित रश्मी सरह नै हो
जसले दुई आवरणहरूलाई जलाएर नष्ट पारिदिन्छ ।
त्यसैले नै यसलाई अर्चिष्मती भनिएको हो ।[२०]

**3. विशेष परिकर्म** : अरण्यवास आदि दश शिक्षाहरूका ग्रहणले यो भूमिको प्राप्ति हुन्छ । अरण्यवास, अल्पेच्छा, संतुष्टि, पूर्णरूपमा विनय पालन गर्नु आदि[२१] दश धर्मका शिक्षा उल्लेख गरिएको छ ।

**4. विशेष अभ्यास** : सामान्यतयाः यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू वीर्य पारमिताकै बढी अभ्यास गर्दछन् ।











**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर विशुद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारेमा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> उदाहरणको लागि, जब कुनै पारखी सुनारले खारिएको सुनबाट गहना बनाउछ, तब त्यसको तुलना गहनामा परिवर्तन भइनसकेको कच्चा सुनले गर्न सक्दैन । त्यसरी नै चतुर्थ भूमिमा अवस्थित बोधिसत्त्वका कुशलमूलको तुलना तल्लो भूमिका बोधिसत्त्वहरूका कुशलमूलसित हुनै सक्दैन ।[२२]

**6. विशेष प्रतिपत्ति** : चतुर्थ भूमिसम्म पुगेका बोधिसत्त्वले *निष्परिग्रह* को अर्थ जान्दछन्, बुझ्दछन् जसको फलस्वरूप धर्मप्रतिको आसक्तिबाट उनी मुक्त हुन्छन् । त्यसैले 'निष्परिग्रह को अर्थमा[२३]' भनिएको हो ।




**7. विशेष प्रहाण** : यसमा (चतुर्थ भूमिको) विशेष प्रकारको प्रहाण उल्लेख छैन ।

**8. विशेष उत्पत्ति** : यस भूमिसम्म पुगिसकेका बोधिसत्त्व प्रायः सुयाम देवभुवनका राजाको रूपमा जन्म लिन्छन् र सत्त्वहरूका सत्कायदृष्टि लाई तहस नहस पार्नमा पोख्त हुन्छन् । *रत्नावली* मा पनि यहीं कुरा बताइएको छ :

> सुयाम देवभुवनका देवराजा भएर
> सत्त्वहरूका सत्कायदृष्टिलाई
> जरैदेखि उखेलेर फालिदिन निपुण बन्दछन् । ५/४६

**9. विशेष प्रभाव** : अर्चिष्मती भूमिसम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा एक करोड समाधिहरू लाभ गर्न सक्दछन् ।











**ङ. पञ्चम भूमि** : पञ्चम भूमिसित सम्बन्धित माथिका नौ शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : पञ्चम भूमिको नाम सुदुर्जया हो ।

२. **विशेष निरुक्ति** : यस भूमिमा अवस्थित बोधिसत्त्वहरू सदैव सत्त्वहरूलाई परिपक्व बनाउने काममा मरिमेटेर लागिपर्छन । सत्त्वहरूबाट नकारात्मक प्रतिक्रिया पाएपनि उनीहरूले हतोत्साहित भएर चित्त दुखाउने गर्दैनन् । यी दुईटै काम ज्यादै दुष्कर छन् । त्यसैले यसलाई सुदुर्जया भनिएको हो । यस भूमिको अर्थलाई अझ प्रष्ट पार्न ग्रन्थमा यस्तो उल्लेख गरिएको छ :

सत्त्वहरूको हितको लागि कार्य गर्नु र
आफ्नै मनलाई सन्तुलित अवस्थामा राख्नु
यी दुई ज्यादै नै कठीन कार्य हो
जसलाई केवल विद्वान मानिसले
मात्र मूर्तरूप दिन सक्दछन्
त्यसैले नै यस भूमिलाई सुदुजर्या
(तालीम दिन धेरै गाऱ्हो) भनिएको हो ।[२४]

**3. विशेष शिक्षा** : धनसम्पत्ति, नाम इज्जत पाउन गृहस्थ जीवनमै आसक्त भइ बस्नु आदि जस्ता १० दोषहरूको प्रहाणले यो भूमि लाभ भइन्छ । त्यसैले संसर्ग, गृहस्थ जीवनमा आसक्त हुनु, विक्षेपकारी ठाउँमा रहनु इत्यादि उल्लेख गरिएको छ ।[२५]

**4. विशेष अभ्यास** : सामान्यतयाः यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू ध्यान पारमिताकै बढी अभ्यास गर्दछन् ।











**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर वृद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारे-मा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> उदाहरणको लागि, जब कुनै पारखी सुनारले बहुमूल्य रत्नहरू जडेर सुनमा थप अलंकार दिन्छ, तब त्यसको तुलना अरू कुनैपनि कच्चा सुनले गर्न सक्दैन । त्यसरी नै पञ्चम भूमिमा अवस्थित बोधिसत्त्वका उपाय र प्रज्ञाका परीक्षणले पूर्णरूपमा विशुद्ध भइसकेका कुशलमूलको तुलना तल्लो भूमिका बोधि-सत्त्वहरूका कुशलमूलसित हुनै सक्दैन ।[२६]

**6. विशेष प्रतिपत्ति** : पञ्चम (पांचौ) भूमिसम्म पुगेका बोधिसत्त्वले सन्तानाभेदको अर्थ जान्दछन्, बुझ्दछन् जसको फलस्वरूप दश समता-ज्ञानबाट उनी समन्वित बन्न पुग्दछन् । त्यसैले 'सन्तानाभेद को अर्थमा[२७]' भनिएको हो ।

**7. विशेष प्रहाण** : यसमा विशेष प्रकारको प्रहाण उल्लेख छैन ।

**8. विशेष उत्पत्ति** : यस भूमिसम्म पुगिसकेका बोधिसत्त्व प्रायः तुषित भुवनका राजाको रूपमा जन्म लिन्छन् र तीर्थिकहरूका मिथ्यादृष्टिलाई समूल नष्ट गर्नमा पोख्त हुन्छन् । *रत्नावली* मा कुरा बताइएको छ :

> तुषित देवभुवनका देवराजा भएर
> सबै तीर्थिक (बौद्धेत्तेर) हरूका क्लिष्ट मिथ्यादृष्टिहरूलाई
> काटेर फालिदिनमा निपुण बन्दछन् । ५/५१

**9. विशेष प्रभाव** : सुदुर्जयासम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा एक खरब समाधिहरू लाभ गर्न सक्दछन् ।











**च. षष्ठ (छैटौं) भूमि** : नौ शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : छैटौं भूमिको नाम अभिमुखी हो ।

**2. विशेष निरुक्ति** : प्रज्ञापारमिताको सहाराले बोधिसत्त्व संसारमा पनि रहन्नन् र निर्वाणमा पनि रहदैनन् । तसर्थ उनी ती दुवै संसार र निर्वाण भन्दा माथि उठेर शुद्ध अवस्थामा अभिमुख भै रहन्छन् । त्यसैले यसलाई अभिमुखी भूमि भनिएको हो । यस भूमिको अर्थलाई अझ प्रष्ट पार्न ग्रन्थमा यस्तो उल्लेख गरिएको छ :

> प्रज्ञापारमिताको आश्रय लिएर बोधिसत्त्व संसार वा निर्वाण कुनैमा पनि अवस्थित हुन्नन् । त्यसैले यसलाई अभिमुखी भूमि भनिएको हो ।[२८]





**3. विशेष शिक्षा** : बाऱ्हवटा निम्न शिक्षाहरूमा पारंगत्व हासिल गरे-पछि सो भूमि लाभ भइन्छ । सर्वप्रथम दानादि छ ओटा पारमिताहरूलाई पूरा गर्नु र श्रावक, प्रत्येकबुद्ध आदिका अभिलाषाहरूमा आसक्त हुनु आदि जस्ता छ वटा धर्महरूलाई प्रहाण गर्नु जम्मै मिलाएर १२ वटा शिक्षाहरू । त्यसैले 'दान, शील, क्षान्ति, वीर्य, ध्यान, प्रज्ञा इत्यादिको पूर्णताबाट...' आदि उल्लेख गरिएको छ ।[२९]

**4. विशेष अभ्यास** : सामान्यतयाः यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू प्रज्ञा-पारमिताकै बढी अभ्यास गर्दछन् ।

**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर वृद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारे मा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :











उदाहरणको लागि, जब कुनै पारखी सुनारले वैदूर्यमणि जडेर सुनमा थप अलंकार दिन्छ, तब त्यसको तुलना अरू कुनै पनि सुनले गर्न सक्दैन । त्यसरी नै छैटौं भूमिमा अवस्थित बोधिसत्त्वका उपाय र प्रज्ञाका परीक्षणले पूर्णरूपमा विशुद्ध भइसकेका कुशलमूलको तुलना तल्लो भूमिका बोधिसत्त्वहरूका कुशलमूलसित हुनै सक्दैन ।[३०]

**6. विशेष प्रत्तिपत्ति** : छैटौं भूमिसम्म पुगेका बोधिसत्त्वले निस्सं-क्लेशविशुद्धि (क्लेश र विशुद्धिरहितता) को अर्थ जान्दछन्, बुझ्दछन् जसको फलस्वरूप प्रतीत्यसमुत्पादमा त्यस्तो कुनै धर्म छैन जो शुद्ध होस् या क्लिष्ट होस् भन्ने ज्ञानले उनी समन्वित बन्न पुग्दछन् । त्यसैले 'नि-स्संक्लेशविशुद्धिको अर्थ[३१]' भनिएको हो ।

**7. विशेष प्रहाण** : यसमा विशेष प्रकारको प्रहाण उल्लेख छैन ।

**8. विशेष उत्पत्ति** : यस अभिमुखी भूमिसम्म पुगिसकेका बोधिसत्त्व प्रायः निर्माणरति देवभुवनका राजाको रूपमा जन्म लिन्छन् र सत्त्वहरूको अभिमानलाई हटाउनमा पोख्त हुन्छन् । *रत्नावली* मा पनि यहीं कुरा बताइएको छ :

उनका कर्मको विपाकफलस्वरूप
निर्माणरति देवभुवनका देवराजा
भएर सबैका अभिमानलाई शमन गरेर
श्रावकहरूद्वारा तुलना गर्न नसकिने बन्दछन् । ५/५३

**9. विशेष प्रभाव** : अभिमुखीसम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा एक नील (१०,०००,०००,०००,०००) समाधिहरू लाभ गर्न सक्दछन् ।











**छ. सप्तम भूमि** : सप्तम (सातौं) भूमिसित सम्बन्धित माथिका नौ शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : सप्तम भूमिको नाम दूरंगमा हो ।

**2. विशेष निरुक्ति** : यो भूमि एकयान मार्गसित सम्बन्धित हुन्छ र यहाँ पुगेपछि गर्नु पर्ने काम कर्तव्यहरू सबै सकिसकेका हुन्छन् अर्थात गर्नुपर्ने कार्यहरू केहीपनि बाँकी रहन्नन् । धेरै टाढा पुगिसकेको अर्थ जनाउने हुनाले यस भूमिलाई दूरंगमा भनिएको हो । यस भूमिको अर्थलाई अझ प्रष्ट पार्न ग्रन्थमा यस्तो उल्लेख गरिएको छ :

> एकयान मार्गसित सम्बन्धित भएको हुँदा यसलाई दूरंगमा भनिएको हो ।[३२]




**3. विशेष शिक्षा** : आत्मग्राह इत्यादि दश धर्महरूको प्रहाण र तिनको विपरित त्रिमोक्षज्ञान आदि शिक्षाहरूको ग्रहणबाट यो भूमि लाभ भइन्छ । त्यसैले 'आत्मग्राह, सत्त्वग्राह....त्रिमोक्षज्ञान इत्यादि'[३३] उल्लेख गरिएको छ ।

**4. विशेष अभ्यास** : सामान्यतया: यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू उपाय पारमिताकै बढी अभ्यास गर्दछन् ।

**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर वृद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारे-मा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> उदाहरणको लागि, जब कुनै पारखी सुनारले सबै थरीका रत्नहरू जडेर सुनमा थप अलंकार दिन्छ, तब त्यो सुनौलो











गहना अत्यन्तै सुन्दर र आकर्षक बन्नपुग्छ जसको तुलना जम्बुद्वीप भरिका कुनैपनि सुनले गर्न सकिंदैन । त्यसरी नै सातौं भूमिमा अवस्थित बोधिसत्त्वका कुशलमूल पनि झन् झन् शुद्ध हुँदै जान्छन् र श्रावक, प्रत्येकबुद्ध र तल्लो भूमिका बोधिसत्त्वहरूका कुशलमूलका दाँजोमा धेरै नै माथि हुन्छन् ।[३४]

**6. विशेष प्रतिपत्ति** : सातौं भूमिमा अवस्थित बोधिसत्त्वले अनानात्व (भेदरहितता) को अर्थ जान्दछन्, बुझ्दछन् जसको फलस्वरूप सूत्र आदि धर्महरूमा विभिन्न भेदहरू देखापर्दैनन् । त्यसैले 'अनानात्वको अर्थ[३५]' भनिएको हो ।

**7. विशेष प्रहाण** : :यसमा विशेष प्रकारको प्रहाण उल्लेख छैन ।

**8. विशेष उत्पत्ति** : यस भूमिसम्म पुगिसकेका बोधिसत्त्व प्रायः पर-निर्मित वशवर्ती देवभुवनका राजाको रूपमा जन्म लिन्छन् र श्रावक र प्रत्येकबुद्धका ज्ञान हासिल गर्नमा ज्यादै निपुण बन्न पुग्छन् । *रत्नावली* मा पनि यहीं कुरा बताइएको छ :

उनका कर्मको विपाकफलस्वरूप परिनिर्मित
वशवर्ती देवभुवनका देवराजा भएर
चतुरार्य सत्यको प्रत्यक्ष साक्षात्कार गर्नमा पोख्त बन्दछन् । ५/५५

**9. विशेष प्रभाव** : अभिमुखीसम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा कोटी नियुत शतसहस्र (one hundred thousand ten million) समाधिहरू लाभ गर्न सक्दछन् ।

**ज. अष्टम भूमि** : अष्टम (आठौं) भूमिसित सम्बन्धित माथिका नौ शीर्षकहरू यस प्रकार छन् :











**1. विशेष नाम** : अष्टम भूमिको नाम अचला हो ।

**2. विशेष निरुक्ति** : यो भूमि निमित्ताभोगसंज्ञा र अनिमित्ताभोगसंज्ञाबाट अलिकति पनि विचलित हुँदैन । त्यसैले यसलाई अचला भूमि भनिन्छ । यस भूमिको अर्थलाई अझ प्रष्ट पार्न ग्रन्थमा यस्तो उल्लेख गरिएको छ :

> दुई संज्ञाबाट किमार्थ विचलित नहुने भएकोले
> यस भूमिलाई अचला भनिएको हो ।[३६]

**3. विशेष शिक्षा** : सत्त्वहरूका चरित्र वा कार्यको यथाभूत ज्ञान आदि लगायत ८ वटा शिक्षाहरूबाट यो भूमि लाभ भइन्छ । त्यसैले 'सबै सत्त्वहरूका चित्तको ज्ञान, अभिज्ञाद्वारा करुणोत्पाद....[३७]' आदि उल्लेख गरिएको छ ।

**4. विशेष अभ्यास** : सामान्यतया: यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू प्रणिधि पारमिताकै बढी अभ्यास गर्दछन् ।

**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर वृद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारे-मा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> उदाहरणको लागि, जब कुनै पारखी सुनारद्वारा सुनबाट निर्मित अलंकारले युक्त गहना जम्बुद्वीपका सम्राटले आफ्नो शिरमा वा घाँटिमा लगाउँछ, तब त्यसको तुलना जम्बुद्वीपकै साधारण जनताले लगाउने गहनाले गर्न सकिंदैन । त्यसरी नै आठौं भूमिमा अवस्थित बोधिसत्त्वका कुशलमूल पनि झन् झन् शुद्ध हुँदै जान्छन् र श्रावक, प्रत्येकबुद्ध र सातौं भूमिसम्मका बोधिसत्त्वहरूका कुशलमूलका दाँजोमा धेरै नै माथि हुन्छन् ।[३८]











**6. विशेष प्रतिपत्ति** : अष्टम भूमिमा पुगेका बोधिसत्त्वले सबै धर्महरूलाई विकल्परहित दृष्टिले हेर्दछन् र आकाशसमान खोक्रो, साररहिन अनुत्पन्न इत्यादि अर्थमा प्रयुक्त हुने शून्यताको अवधारणदेखि उनीहरू अलिकति पनि डराउन्नन् किनकि उनीहरूले अनुत्पत्तिकधर्मक्षान्ति लाभ गरिसकेका हुन्छन् । अनुत्पत्तिकधर्मक्षान्ति लाभ भइसकेकोले अन्यून-अनधिक (ऱ्हास-वृद्धि वा अधिक-न्यून) का अर्थ पनि बुझेकै हुन्छन् जसले गर्दा क्लेश वा विशुद्धिमा कुनै पनि थपघट अर्थात ऱ्हास वा वृद्धि भएको देख्दैनन् । त्यसैले 'अन्यून-अनधिकको अर्थमा[३९]' भनिएको हो ।

फेरि बताइएको छ कि वशिता चारप्रकारका छन् जसको आश्रय बोधिसत्त्वले लिन्छन् । ती हुन् :

अ. निर्विकल्पवशिता
आ. क्षेत्रपरिशुद्धिवशिता
इ. ज्ञानवशिता र
 
ई. कर्मवशिता

अष्टम अर्थात अचला भूमिमा अवस्थित बोधिसत्त्वले निर्विकल्पवशिता र क्षेत्रपरिशुद्धिवशिता प्राप्त गर्दछन् । यी बाहेक उनले दश अरू बशिता जसलाई दश बल पनि भन्ने गरिन्छ पनि प्राप्त गर्छन् । ती हुन् : १. आयुवशिता, २. चित्तवशिता, ३. परिष्कारवशिता, ४. कर्मवशिता, ५. उपपत्तिवशिता, ६. प्रणिधानवशिता, ७. अधिमुक्तिवशिता, ८. ऋद्धिवशिता, ९. ज्ञानवशिता र १०. धर्मवशिता

**7. विशेष प्रहाण** : यसमा विशेष प्रकारको प्रहाण उल्लेख छैन ।

**8. विशेष उत्पत्ति** : यस भूमिसम्म पुगिसकेका बोधिसत्त्व प्रायः सहस्रचूडिक देवभुवनमा आधिपत्य जमाउने व्रम्हाको रूपमा जन्म लिन्छन् र अर्हत र प्रत्येकबुद्धका आशयलाई यकिनसाथ बुझेर (आशयविनिश्चय)











सोही अनुसारको उपदेश दिनमा ज्यादै निपुण बन्न पुग्छन् । *रत्नावली* मा पनि यहीं कुरा बताइएको छ :

> उनका कर्मको विपाकफलस्वरूप सहस्रचूडिक देवभुवनका
> व्रह्माका रूपमा जन्म लिन्छन् र
> अर्हत, प्रत्येकबुद्ध आदि का आशय राम्ररी बुझी सोही अनुसार
> उपदेश दिनमा पोख्त बन्दछन् । ५/५७

**9. विशेष प्रभाव** : अचलासम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा दश लाख त्रिसाहस्रलोकधातुमा जति परमाणु वा धूलोका कणहरू छन् त्यत्ति नै संख्यामा समाधिहरू लाभ गर्न सक्दछन् ।

**झ. नवम भूमि** : नवम (नवौं) भूमिसित सम्बन्धित माथिका नौ ओटा शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : नवौं भूमिको नाम साधुमती हो ।

**2. विशेष निरुक्ति** : यस भूमिका बोधिसत्त्वहरूमा ज्यादै तीक्ष्ण प्रतिसंवित् बुद्धि (the well-defined analytical knowledge) हुन्छ । त्यसैले यसलाई साधुमती भूमि भनिएको हो । यस भूमिको अर्थलाई प्रष्ट पार्न ग्रन्थमा यस्तो उल्लेख गरिएको छ :

> ज्यादै तीक्ष्ण प्रतिसंवित् ज्ञान भएकोले
> यस भूमिलाई साधुमति भनिएको हो ।[४०]

**3. विशेष शिक्षा** : अनन्त प्रणिधान आदि बाह्रवटा शिक्षाद्वारा यस भूमिलाई प्राप्त गर्न सकिन्छ। त्यसैले 'अनन्त प्रणिधान, देवभाषाको ज्ञान....[४१]' आदि उल्लेख गरिएको छ ।











**4. विशेष अभ्यास** : सामान्यतयाः यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू बल पारमिताकै बढी अभ्यास गर्दछन् ।

**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर वृद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारेमा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :

> उदाहरणको लागि, जब कुनै पारखी सुनारद्वारा सुनबाट निर्मित अलंकारले युक्त गहना कुनै चक्रवर्ती सम्राटले आफ्नो शिरमा वा घाँटिमा लगाउँछ, तब त्यसको तुलना चार महाद्वीपका अन्य देशका राजा वा प्रजाले लगाउने गहनाले गर्न सकिँदैन । त्यसरी नै आठौं भूमिमा अवस्थित बोधिसत्त्वका महाज्ञानालोकले विभूषित कुशलमूल श्रावक, प्रत्येकबुद्ध र तल्लो भूमिसम्मका बोधिसत्त्वहरूका कुशलमूलका दाँजोमा धेरै नै माथि हुन्छन् ।[४२]

**6. विशेष प्रतिपत्ति** : चार प्रतिसंवित् ज्ञानबाट समन्वित भइसकेका कारण यस भूमिका बोधिसत्त्वले माथि उल्लेखित चार प्रकारका वशितामध्ये ज्ञानवशिता प्राप्त गर्दछन् । यहाँ ती चार प्रतिसंवित के के हुन् भन्ने प्रश्न उठ्ला जसको जवाफ हामी दशभूमिक सूत्रमा पाउँन सक्छौं ।

निरन्तर र अविच्छिन्नरूपमा चार प्रतिसंवित उत्पाद भइरहनुपर्छ । ती चार के के हुन् त ? ती हुन् : धर्मप्रतिसंवित्, अर्थप्रतिसंवित, निरुक्ति प्रतिसंवित् र प्रतिभानप्रतिसंवित् ।[४३]

**7. विशेष प्रहाण** : यसमा विशेष प्रकारको प्रहाण उल्लेख छैन ।

**8. विशेष उत्पत्ति** : यस भूमिसम्म पुगिसकेका बोधिसत्त्व प्रायः द्विसहस्र मध्यमा लोकधातुमा आधिपत्य जमाउने ब्रह्माको रूपमा जन्म लिन्छन् जो











समस्त प्रश्नहरूको उत्तर दिनमा पोख्त हुन्छन् । *रत्नावली* मा पनि यहीं कुरा बताइएको छ :

उनका कर्मको विपाकफलस्वरूप
द्विसहस्र लोकधातुका स्वामी व्रह्माका
रूपमा जन्म लिन्छन् र सत्त्वहरूका
सबै प्रश्नहरूको उत्तर दिनमा अर्हत
आदि हरूले पनि उनीहरूलाई जित्न सक्दैनन् । ५/५७

**9. विशेष प्रभाव** : साधुमतिसम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा दश लाख असंख्य बुद्धक्षेत्रहरूमा जति परमाणु वा धूलो का कणहरू छन् त्यत्ति नै संख्यामा समाधिहरू लाभ गर्न सक्दछन् ।

**ञ. दशम भूमि** : दशम (दशौं) भूमिसित सम्बन्धित माथिका नौ ओटा शीर्षकहरू यस प्रकार छन् :

**1. विशेष नाम** : दशौं भूमिको नाम धर्ममेघा हो ।

**2. विशेष निरुक्ति** : बादलले जस्तै धर्मको वर्षा गराएर सत्त्वका क्लेशरूपी धूलो सबै पखालेर नाश गरिदिने हुनाले यस भूमिलाई धर्ममेघा भनिएको हो । अर्को शब्दमा भन्नुपर्दा, जसरी वेला वेलामा बाँदल पूरै आकाशमा व्याप्त हुनेगरी छाउँछ त्यसरी नै समाधि र धारणीमुख (the doors of meditation and dharani) ले सारा धर्म व्याप्त हुन्छ । यस भूमिको अर्थलाई प्रष्ट पार्न ग्रन्थमा यस्तो उल्लेख गरिएको छ :

आकाशमा बादल छाएजस्तै धर्मरूपी
आकाशमा दुई धर्महरू व्याप्त भएकोले
यस भूमिलाई धर्ममेघ भनिएको हो ।[४४]











**3. विशेष शिक्षा** : यस सम्बन्धमा अभिसमयालंकारमा दश शिक्षाहरूद्वारा बोधिसत्त्वले नवौं भूमिदेखि दशौ भूमिसम्म पुग्दा सर्वाकारसर्वज्ञज्ञानाभिषेक प्राप्त गर्ने कुरा बताइएको छ । उक्त ग्रन्थमा यस्तो उल्लेख छ :

> हे जिनपुत्र ! नवौं भूमिसम्म अपरिमित ज्ञेय धर्मका विषयमा अति सूक्ष्म दृष्टिले विचार गर्दै आएका बोधिसत्त्वले दशौं भूमिमा सर्वाकारसर्वज्ञज्ञानाभिषेक प्राप्त गर्दछन् । यहीं सर्वाकारसर्वज्ञज्ञानाभिषेक भूमि नै दशौं भूमि अर्थात् धर्ममेघ भूमि हो ।[४५]

अब यहाँ यस भूमिलाई सर्वाकारसर्वज्ञज्ञानाभिषेकभूमि किन भनि-एको हो भन्ने प्रश्न उठ्ला । यसको उत्तर यसरी दिन सकिन्छ : दशै दिशाका सबै बुद्धहरू आएर आफ्ना आफ्ना देदीप्यमान रश्मीले दशौं भूमिमा रहेका बोधिसत्त्वलाई अभिषेक दिनुहुन्छ । त्यसैले नै यसभूमिलाई सर्वाकारसर्वज्ञज्ञानाभिषेक भूमि भनिएको हो । यसको बारेमा आर्यदशभूमिक सूत्रमा विस्तृतरूपमा व्याख्या गरिएको छ । यसै सम्बन्धमा *रत्नावली* मा पनि यस्तो उल्लेख गरिएको छ :

> बोधिसत्त्व बुद्धहरूका रश्मीले
> अभिषिक्त हुने भएकाले[४६]

**4. विशेष अभ्यास** : सामान्यतया: यस भूमिमा रहेका बोधिसत्त्वहरू जम्मै दश पारमिताहरूको अभ्यास गर्दछन् । ती मध्ये पनि उनीहरू ज्ञान पारमिताकै बढी अभ्यास गर्दछन् ।

**5. विशेष विशुद्धि** : माथि उल्लेख गरिएझैं बोधिसत्त्वका कुशलमूल तीन कारणहरूले गर्दा उत्तरोत्तर वृद्धि हुँदै जान्छन् । विशेष विशुद्धिका बारेमा निम्न दृष्टान्त प्रस्तुत गरिएको छ :











उदाहरणको लागि, जब देवलोकका कुनै महान् सुनारले विभिन्न दिव्य मणिरत्नहरूलाई बडो आकर्षक ढङ्गले जडेर बनाएको दिव्य सुनको गहना वशवर्तीका देवराजले आफ्नो शिरमा वा घाँटिमा लगाउँछ, तब अन्य देव वा मनुष्यका गहना सो दिव्य गहनासित दाँज्न योग्य हुँदैन । त्यसरी नै दशौं भूमिमा अवस्थित बोधिसत्त्वका महाज्ञानलाई श्रावक, प्रत्येकबुद्ध र यहाँसम्म कि नवौं भूमिसम्मका बोधिसत्त्वहरूका ज्ञानले पनि अतिक्रमण गर्न सक्दैन ।[४७]

**6. विशेष प्रतिपत्ति** : चार वशिताहरूमध्ये यस भूमिका बोधिसत्त्वले कर्म वशिता प्राप्त गर्दछन् जसद्वारा उनीहरू स्वेच्छाले जस्तोसुकै ऋद्धिप्रातिहार्य गरेर पनि प्राणीहरूको हित गर्नमा सफल हुन्छन् ।

**8. विशेष उत्पत्ति** : यस भूमिसम्म पुगिसकेका बोधिसत्त्व प्रायः देवताहरूका विशेष राजा बन्दछन् सबै सत्त्व, श्रावक, प्रत्येकबुद्ध र सबै सत्त्वहरूलाई पारमिताका उपदेशहरू दिनमा ज्यादै निपुण हुन्छन् । *रत्नावली* मा पनि यही कुरा बताइएको छ :

उनको कर्मको विपाकफलस्वरूप
शुद्धावास देवलोकका अधिपति,
अचिन्त्य ज्ञानका स्वामी र सर्वोत्तम महेश्वर हुन्छन् । ५/६१

**9. विशेष प्रभाव** : धर्ममेघासम्म पुगेका बोधिसत्त्वले एकै क्षण, एकै पल र एकै मुर्हूतमा कोटी नियुत शतसहस्र असंख्य बुद्धक्षेत्रहरूमा जति परमाणु वा धूलोका कणहरू छन् त्यत्ति नै संख्यामा समाधिहरू लाभ गर्न सक्दछन् । त्यति मात्र नभएर छालाका छिद्र छिद्रबाट एकै क्षणमा असंख्य बुद्ध र बोधिसत्त्वहरूका मण्डल (पर्षनमण्डल) नै प्रकट गरेर देखाउन सक्दछन् । त्यस्तै मनुष्य, देव आदिहरूका गति पनि प्रकट गरेर











देखाउन सक्दछन् । विनयजन (तालीम दिइनुपर्ने, विनीत गरिनुपर्ने) हरूका आवश्यकता अनुसार इन्द्र, ब्रम्हा, लोकपाल, राजा, श्रावक, प्रत्येकबुद्ध र तथागतका रूपमा प्रकट भएर पनि धर्मोपदेश दिन पनि उनीहरू सक्षम छन् । त्यसैले *मध्यमकावतार* मा बताइएको छ :

> उनले आफ्नो चर्मको हरेक प्वाल (रोमकूप) बाट छिनभरमै
> देव, मनुष्य र असुरहरूका साथै असंख्य बोधिसत्त्वहरूद्वारा
> घेरिएर रहेका बुद्धहरू समेत प्रकट गरेर देखाउन सक्दछन् । ११/९

दश बोधिसत्त्वभूमिबारे व्याख्या यहीं समाप्त हुन्छ ।

**ट. बुद्धभुमि** : निष्ठागमनभूमि नै बुद्धभूमि हो । यहाँ वज्रोपमसमाधि उत्पाद हुने हुँदा सबै भावनाहेय क्लेशावरण र रुख रसशून्य पारिएझैं ज्ञेयावरणका सारगत दौष्ठूल्य (सूक्ष्मत्तम पत्र) सबैलाई एकैसाथ प्रहाण गरिन्छ ।[४८]

यसरी माथिका सबै भूमिहरूलाई पार गर्न तीन असंख्य कल्प चाहिन्छ । *बोधिसत्त्वभूमि* मा यस्तो उल्लेख छ :

> ती सबै (भूमिहरू) लाई तीन असंख्य कल्प लगाएर पूरा गरिन्छ । पहिलो असंख्य कल्पमा अधिमुक्तिचर्यालाई क्रमशः पार गर्दै बोधिसत्त्व प्रथम भूमिसम्म आइपुग्छन् । सो भूमि प्राप्त गर्नका लागि बोधिसत्त्वले अनवरत र कठोर परिश्रम गरेका हुन्छन् । अन्यथा परिश्रम नै गरिँदैन भने उक्त भूमि हुने कुरै आउँदैन । दोश्रो प्रथम भूमि प्रमुदितादेखि क्रमशः सातौं भूमि दूरंगमालाई पार गर्दै दोश्रो असंख्य कल्पसम्म आइपुग्दा बोधिसत्त्वले आठौं अचला भूमि नै प्राप्त गरि-सकेको हुन्छ। यो सुनिश्चतै छ किनभने शुद्ध आशयले ओतप्रोत भएका बोधिसत्त्वले त्यस उपरान्त निश्चयनै महावीर्यका साथ अनवरत प्रयत्न गर्दै जान्छन् । हुँदाहुँदै तेश्रो असंख्य कल्पसम्म











आइपुग्दा उनले धर्ममेघा अर्थात अन्तिम भूमि प्राप्त गर्दछन् । असाध्यै असाधारण वीर्य भएकाहरू त एकै अन्तकल्पमा पूरा गर्न सफल हुन्छन् भने कुनै कुनैले त उक्त लामो समयलाई केवल एक महाकल्पमा पनि झार्नसक्दछन् । तर हामीले यो बुझ्नु पर्छ कि एक असंख्य कल्पभन्दा पनि तल झार्नमा कुनै पनि बोधिसत्त्व सफल हुँदैनन् ।[४९]

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
**भूमिव्यवस्थानिर्देश**
नामक एकोनविंश (उन्नाइस) परिच्छेद समाप्त ।











# भाग ५

# फल



फल सम्बुद्धकाय हो।



# परिच्छेद २०
## सम्यक् सम्बोधि

अतः सबै मार्ग र भूमिहरूलाई क्रमशः पार गर्दै बोधिसत्त्व अन्ततः त्रिकायले युक्त सम्यक् सम्बुद्ध बन्न पुग्दछन् । *बोधिपथप्रदीप* मा भनिएको छ :

बुद्धबोधि त्यत्ति टाढाको कुरो होइन ।[1]

बुद्धत्वसित संबद्ध विषयका सारसंक्षेप हामी निम्नलिखित शीर्षकहरूमा पाउन सक्छौँ :

स्वरूप, शब्दार्थ, भेद, व्यवस्था, संख्या-नियम,
लक्षण र विशेषता - यी सात शीर्षक अन्तर्गत संबुद्धकायसित सम्बद्ध विषयहरू समेटिन्छन् ।

१. **बुद्धको स्वरूप** : प्रहाण संपत् एवं ज्ञान संपत्ले युक्त हुनुलाई नै सम्यक् सम्बुद्धका स्वरूपका अर्थमा लिए हुन्छ ।

१.१. **प्रहाण संपत्** : भूमि र मार्गहरूमा क्रमशः हट्दै गएका यी दुई क्लेशावरण र ज्ञेयावरण वज्रोपम समाधिका भूमिसम्म आइपुग्दा पूर्णरूपले शेषै नरहने गरी प्रहाण हुन्छन् । समापत्ति (Equipoise) आवरण आदि आवरणहरू पनि यिनै दुई आवरणभित्रै पर्दछन् । त्यसैले यी दुईको प्रहाणले सबै आवरणहरू स्वतः हटिएर जान्छन् ।

२.२. **ज्ञान संपत्** : ज्ञान संपत्का बारेमा थरीथरीका मतहरू पाइन्छन् । कोही कोही बुद्धमा ज्ञानका साथसाथै विकल्पहरूपनि हुन्छन् भनी मान्दछन्











भने कसैको मत अनुसार बुद्धमा विकल्प हुँदै हुँदैन खालि सबैथोक स्पष्टत: देख्न सक्ने ज्ञान मात्र हुन्छ । कसै कसैले बुद्धको ज्ञान सन्तति नै विच्छिन्न भइसकेको हुन्छ भन्दछन् । तर एकथरी मानिसहरू बुद्धमा ज्ञान कहिल्यैं थिएन पनि भन्दछन् ।

### *बुद्धको ज्ञान*

यहाँ त्यही ज्ञानसंपत्का बारे सूत्र र शास्त्रहरूले के भन्छन् त हेरौं । यस विषयमा *रत्नगुणसञ्चयगाथा* मा यस्तो बताइएको छ :

> जो व्यक्ति बुद्धको अत्युत्तम ज्ञान प्राप्त गर्न चाहन्छन्
> त्यसमा जिनजननी वा बुद्धमाताप्रति अगाध श्रद्धा हुनैपर्छ ।[२]

त्यस्तै *शतसाहस्रिकाप्रज्ञापारमिता* मा पनि बताइएको छ :



> सम्यक् सम्बुद्ध कुनैपनि धर्ममा आवरण नभएको (निरावरण)
> ज्ञान प्राप्त छन् ।



सोही ग्रन्थको एक्काइसौं परिच्छेदमा यस्तो बताइएको छ :

> अनुत्तर सम्यक् सम्बुद्ध ज्ञान हुन्छ, धर्मचक्रप्रर्वतन हुन्छ,
> सत्त्व-परिपाक पनि हुन्छ नै ।

बुद्धज्ञानका विषयमा अन्य सूत्रहरूमा पनि विभिन्न विवरणहरू पाइन्छन् । शास्त्रहरूमा पनि यस बारे केही विवरण पाउन सकिन्छ । शास्त्रकै कुरा गर्दा *महायानसूत्रालंकार* मा यस्तो बताइएको छ :

> जसरी सूर्यको एक किरण उदाउँदा
> सारा अन्य किरणहरू पनि साथ साथै उदाउँछन् ।











बुद्ध-ज्ञानको उदयलाई पनि
ठीक त्यसै प्रकारले जान्नुपर्छ ।[३]

तथा :

आदर्शज्ञान अचल हुन्छ ।
तल दिइएका तीन ज्ञानहरू
त्यसैमा निर्भर हुन्छन् :
समताज्ञान, प्रत्यवेक्षणाज्ञान र कृत्यानुष्ठानज्ञान[४]

अरू शास्त्रहरूमा पनि बुद्धका ज्ञान सम्बन्धी व्याख्याहरू भेटिन्छन् । बुद्धमा ज्ञान हुनेरहेछ भन्नेहरू ती नै ग्रन्थहरूको आधार लिन्छन् ।

### *ज्ञानको विवेचना*

अब ज्ञानको अस्तित्व पक्षमा केही विचार गरौं । संक्षेपमा बुद्धका दुईटा ज्ञान हुन्छन् ।

क. यथाभूतपरिज्ञान
ख. यथावत् व्यवस्थानपरिज्ञान

क. पहिलो अर्थात 'यथाभूतपरिज्ञान' भनेकै परमार्थ ज्ञान हो । जस्तो माथि पनि उल्लेख गरिसकियो कि वज्रोपमसमाधिको प्रकर्ष तथा अन्तिम अवस्थामा जब बोधिसत्त्वले तत्त्वलाई साक्षात्कार गर्दछन्, त्यसबेला उनका समस्त विषय प्रपञ्चहरू उखेलिन्छन् । बुद्धिका सबै प्रवृति विषयहरू शान्त वा शमन भइसकेपछि निष्प्रपञ्च धर्मधातु र निष्प्रपञ्च ज्ञान दुवै समरसीभूत (एउटै रसका) बन्नपुग्छन् र पानीमा पानी खन्याउनु र नौनीमा नौनी थप्नु भनेजस्तै एक हुनजान्छन्, अभिन्न हुनजान्छन् । मानिस मैले आकाश देखें भन्छ तर वास्तवमा उसले कुनैपनि रूप देखेकै हुन्न । ठीक











त्यसैगरी यो रूपहीन निराभास महाप्रज्ञा नै सबै गुणरत्नहरूको आधार बन्ने गर्छ । जस्तो भनिएको छ :

पानी पानीमै मिल्नु
नौनी नौनीमै मिसिनु भने जस्तै
प्रपञ्चले रहित ज्ञेय र ज्ञानको
अभिन्न मिश्रणलाई नै धर्मकाय भनिन्छ
जो सबै बुद्धहरूको स्वरूप हो ।

*रत्नगुणसञ्चयगाथा* मा पनि बताइएको छ :

मानिसहरू मैले आकाश देखिरहेको छु भन्छन्
हुँदै नभएको चीज कसरी देख्न सक्छन् ? यसमा विचार गरौं ।
भगवान् बुद्धको धर्मदर्शनलाई पनि यसरी नै हेरिनुपर्छ ।
सो दर्शनलाई अभिव्यक्त गर्ने अरू कुनै उदाहरण छैन ।[५]

ख. यथावत् व्यवस्थानपरिज्ञान भनेकै संवृति अर्थात व्यावहारिक अर्थ दिने सर्वाङ्गीण ज्ञान हो । वज्रोपम समाधिको आश्रय लिएर सबै आवरणहरूका बीजलाई नष्ट गरिन्छ । जसको फलस्वरूप महाप्रज्ञाको उदय हुन्छ । त्यसको बलले हत्केलामा राखिएको अँडीरको बीऊलाई स्पष्टैसंग देख्न सकिएझैं बुद्धहरूले तीनै कालका समस्त ज्ञेयधर्महरूलाई छर्लङ्गै देख्दछन्, बुझ्दछन्, जान्दछन् । बुद्धका संवृति ज्ञानका सम्बन्धमा सूत्रहरूमा पनि व्याख्या पाइन्छन् । जस्तै *धर्मसंगीतिसूत्र* मा भनिएको छ :

मयूरको एउटा प्वाँखकै विविध हेतुहरू हुन सक्छन्
सम्पूर्ण ज्ञान नभएसम्म ती सब जान्न सकिँदैन ।
त्यस्तै सर्वज्ञज्ञानको बलले मात्र
सबैथोक जान्न सकिन्छ ।[६]











*उत्तरतन्त्र* मा पनि बताइएको छ :

महाकरुणाले द्रवीभूत भएर
समस्त जगत्लाई
हेर्ने भएकाले लोकविद् कहलिएका हुन् ।[७]

यहाँ बुद्धले लोकलाई कसरी हेर्छन्, जान्दछन् होला भन्ने प्रश्न उठ्ला । यसको उत्तर यसरी दिन सकिन्छ : उनले यस लोकलाई वास्तविक ठानेर ग्रहण गर्ने होइन, उनी त केवल यसलाई मायावत् देख्दछन्, जान्दछन् । जस्तै *धर्मसंगीति सूत्र* मा यस्तो बताइएको छ :

जसरी कुनै जादूगर आफैले सिर्जना गरेको मायामा
अलिकति पनि आसक्त हुन्न किनकि उसलाई
त्यो त केवल माया हो भन्ने कुरा राम्रै थाहा छ ।
त्यसरी नै यी सबै त्रिधातु खाली माया मात्र हुन् भन्ने
कुरा सम्यक् सम्बुद्धले राम्ररी जानेका हुन्छन् ।

*पितापुत्रसमागमसूत्र* मा पनि यस्तै उल्लेख छ :

जादूगरले जादू देखाउँछ र जादूद्वारा सिर्जित वस्तुप्रति कुनै
किसिमको भ्रम हुँदैन किनकि उसलाई
त्यो त केवल माया मात्र हो भन्ने कुरा राम्ररी थाहा छ ।
जगत्लाई पनि त्यस्तै रूपमा देखेर तिमी सर्वज्ञको वन्दना गर
र स्तूतिगान गर ।

***बुद्धहरूमा यथावत् व्यवस्थानपरिज्ञान हुँदैन भन्ने विषयमा तर्क :***

केही विद्वानहरूको भनाई अनुसार सम्यक् सम्बुद्धमा यथाभूतपरिज्ञान नामक परमार्थ ज्ञान त हुन्छ तर यथावत् व्यवस्थानपरिज्ञान नामक व्यवहारिक











अर्थ दिने ज्ञान भने हुँदैन । यसको अर्थ यो होइन कि जानिने विषय भएर पनि बुद्धले तिनलाई जान्दैनन् । भन्न खोजिएको के भने जानिने विषय (ज्ञेय धर्म - knowables) अर्थात संवृति विषय नै नभएकोले त्यसलाई जान्ने ज्ञान पनि हुँदैन ।

यी बाहेक यिनीहरूको तर्क के पनि रहेको छ भने संवृतिको वस्तुगत् प्रतिभास (साच्चिकै भएको जस्तो लाग्नु) खालि बाल पृथग्जनहरूलाई मात्र हुन्छ । ती बाल पृथग्जनहरू क्लिष्ट अविद्याले ग्रसित भएकाले त्यसो भएको हो । अक्लिष्ट अविद्याले प्रभावित तीन प्रकारका आर्यजनहरूलाई पनि त्यस्तै आभास वा प्रतिभास हुने गर्छन् । उदाहरणको लागि तिमिरे रोगले पीडित व्यक्तिका आँखाले लामा लामा केश झरिरहेको जस्तो र सबै थोक धमिलो अस्पष्ट देख्छन् । यसको ठीक उल्टो बुद्धले वज्रोपम समाधिको अन्तिम अवस्थामै कुनैपनि प्रकारका अविद्यालाई पूर्णरूपले प्रहाण गरेका छन् र तथताका अर्थ बुझेको फलस्वरूप उनको लागि कुनै पनि त्यस्तो धर्म छैन जो देखापरोस् जसको प्रतिभास होस् । तसर्थ बुद्धमा भ्रान्तिमय संवृति ज्ञान हुँदैन । उदाहरणको लागि तिमिरे रोग नलागेको व्यक्तिले आफ्ना आखा अगाडि केशका रौं झरिरहेको जस्तो आदि केहि पनि देख्दैन सबै सफा नै देख्दछ ।

तसर्थ, व्यावहारिक वा संवृति सत्ता देखापर्ने मुख्य कारण अविद्या नै हो । खाली सांसारिक वा लौकिक परिप्रेक्ष्यमा मात्र संवृति सत्ता भएजस्तो भान पर्नजान्छ । जबकि बुद्धत्वको परिप्रेक्ष्य वा सन्दर्भमा भने त्यस्तो संवृत्ति सत्ता नै हुँदैन । अत: यथावत् व्यवस्थानपरिज्ञान हुनै सक्दैन ।

बुद्धमा प्रतिभासयुक्त बुद्धि भएका भए भ्रान्तिमय विषयको प्रतिभास (आभास) भएका कारण उनी आफै भ्रान्तिमा अल्झिनपुग्थे । यदि यस्तै हो भने सदा समाहित अवस्था (absorption state) मा रहने मुनिहरूका विषयमा यो त सर्वथा विरोधाभासपूर्ण प्रसङ्ग बन्न गयो । त्यसैले *ललितविस्तरसूत्र* ले भन्दछ :

सम्यक् सम्बुद्ध सधै पूर्ण समाहित अवस्थामा रहन्छन् ।











***बुद्धहरूमा यथावत् व्यवस्थानपरिज्ञान हुँदैन भन्ने विषयविरुद्ध खण्डन :***

बुद्धमा संवृति ज्ञान हुन्छ भन्ने माथिका तर्क मान्नेहरू बुद्धको संवृत्ति ज्ञान पृष्ठलब्ध (post meditative stage) मात्र हो जसको कारण उनको चित्तमा कुनै विक्षेप हुँदैन । त्यसैले बुद्ध सधै समाहित अवस्थामा रहन्छन् भन्ने उक्तिमा कुनै विरोधाभास छैन । केवल भ्रान्तिमय विषयलाई जानेर आफू पनि भ्रान्तिमा फसिन्छ भन्ठान्नु युक्तिसंगत हुँदैन । सबै भ्रान्तिमय विषयलाई राम्ररी जानेर त्यसलाई सत्का रूपमा ग्राह नगरी अरूलाई पनि अवगत गराउन सक्ने, अर्थात सबै भ्रान्तिमय विषयका प्रतिभास लाई भ्रान्तिमय नै जानेर सारा लौकिक सत्त्वहरूलाई यिनैलाई स्वर्ग, ज्ञान र निर्वाणका कारकका रूपमा देखाउन सक्ने यो चित्त कसरी भ्रान्तिमा फँसिन्छ त ? त्यसैले भनिएको छ :

> भ्रान्ति मात्र को बोध हुनाले पनि
> चित्त भ्रान्तिले रहित हुनपुग्दछ ।





सत्का रूपमा ग्राह नगरेसम्म संवृतिका विषयहरूलाई चित्तमा समाहित गर्न खोज्नु कुनै युक्तिगत वाधा वा गल्ती हुँदैन । भगवान् बुद्धले संवृतिलाई विषय बनाए तापनि उनको ज्ञान भ्रान्तिमय भने हुँदैन । एकथरी मानिसहरू यस्ताखाले मत पनि राख्दछन् ।

***पृष्ठलब्ध ज्ञान***

तसर्थ, बुद्धसंग संवृति ज्ञान छ भन्ने माथिका तर्क मान्नेहरू बुद्धसंग यथावत् व्यवस्थानपरिज्ञान कहलिने पृष्ठलब्ध ज्ञान छ भन्दछन् । जस्तो बताइएको छ :

> पहिलो यथाभूतपरिज्ञान अभ्रान्त, समाहित र बुद्धिको गोचर विषय होइन भने पछिल्लो यथावत् व्यवस्थानपरिज्ञान भ्रान्तिमय प्रतिभासमा संलग्न, पृष्ठलब्ध र बुद्धिको गोचर विषय हो ।











बुद्धसंग पृष्ठलब्ध ज्ञान छैन भन्ने पछिल्ला मतलाई *अनन्तमुखसाधकनाम-धारणी* मा यसरी प्रस्तुत गरिएको छ :

> सम्यक् सम्बुद्ध भइसकेपछि तथागतले कुनै पनि धर्मलाई जाने का हुँदैनन् । किनभने त्यसबेला जानिनुपर्ने कुनै ज्ञेय विषय नै रहँदैन भने के कुरा जान्ने ?

यसै सम्बन्धमा अरू ग्रन्थहरूमा पनि व्याख्या गरिएको पाइन्छ जस्तो कि :

> कोही कोही तीर्थिकहरू भन्दछन् कि मुक्ति भनेको त्यो गन्तव्य हो जहाँ हामीलाई पुग्नु छ ।
> परम शान्त अवस्था (उपशम) प्राप्त गरिसकेपछि त बुझ्नुपर्ने कुनै पनि चीज बाँकी रहेन, निभिएको आगो जस्तै । *विशेषस्तव* ४९

यसरी विभिन्न मतहरूको व्यापक व्याख्या गरियो ।

***कादम्पा मत :***

मेरै एकजना गुरु जो गेशे हुनुहुन्छ उहाँको भनाईमा "वस्तुतः सम्यक् सम्बुद्ध धर्मकाय नै हो ।" धर्मकाय सबै भ्रान्तिहरूको क्षय वा स्वभाविक स्वरूपमा प्रत्यागमन हो । तर यी सबै खालि परिकल्पित संज्ञा मात्र हुन् । वास्तवमा धर्मकाय अनुत्पन्न र निष्प्रपञ्च हुन्छ । जस्तो *महायानसूत्रालङ्कार* मा बताइएको छ :

> मुक्ति सारा भ्रम वा भ्रान्तिको क्षय मात्र हो ।[८]

तसर्थ बुद्ध नै धर्मकाय हो । अनुत्पन्न र निष्प्रपञ्च भएकाले धर्मकाय ज्ञानले सम्पन्न हुँदैन । यहाँनेर सूत्रमा त दुईटा ज्ञान (यथाभूतपरिज्ञान र











यथावत् व्यवस्थानपरिज्ञान) को उल्लेख गरिएको छ, तर यहाँ भने ती ज्ञान छैनन् भन्छ, के यी दुई परस्पर बाझिएका कुरा भएनन् र भन्ने प्रश्न उठ्ला । त्यसको जवाफ यसरी दिन सकिन्छ : सूत्रका कुराहरूसित अलिकति पनि बाँझिदैन किनभने जब चक्षुविज्ञानमा कुनै नीलो वस्तुको प्रतिभास पर्छ, तब तुरुन्तै प्रतिक्रिया गर्दै भन्नथाल्छ, 'मैले नीलो वस्तु देखिराखेको छु' । तर वास्तवमा उसले त्यस्तो कुनै रूप देखेकै हुन्न । ठीक त्यसै प्रकार ज्ञान जब धर्मधातुमा परिवर्तन हुन्छ, तव मात्र त्यसलाई यथाभूतपरिज्ञान भनिन्छ जसले न कुनै देख्दछ न त कुनै जान्दछ । जबकी यथावत् व्यवस्थानपरिज्ञान व्यावहारिक वा सांवृतिक (relative) अर्थले प्रयुक्त हुन्छ र विनेयजनहरूका संज्ञा वा हेराईमा र्निभर हुन्छ । त्यस अर्थले यसले सबै देख्दछ, जान्दछ । उहाँका अनुसार अतः यस मतमा असजिलो मान्नुपर्ने कुनै कारण छैन ।

### *भट्टारक मिलारेपाको मत :*

भट्टारक मिलारेपाको मत अनुसार सो ज्ञान अकृत्रिम (अबनावटी-Unfabricated or Uncontrived) हुन्छ । यो भव-अभव, शाश्वत-उच्छेद इत्यादि जस्ता शब्दले व्यक्त गर्न सकिन्न र बुद्धिभन्दा परको कुरा हो । यसलाई व्यक्त गर्न जस्तोसुकै नाम वा संज्ञाको प्रयोग गरेपनि विरोधाभासको कुरा आउँदैन किनकि नाम इत्यादिले यसको स्वरूप वा स्वभावलाई परिवर्तन गर्न सक्दैन र जतिपनि भिन्न भिन्न मतहरू र विचारहरू प्रयोग गरिएका छन् ती सब आ-आफ्ना विद्वता दर्शाउनका खातिर नै प्रयोग भएका हुन् । त्यति मात्र होइन उनीहरूले स्वयं बुद्धलाई नै सोधेपनि, मेरो विचारमा एकपक्षीय उत्तर त आउँदैन होला । धर्मकाय बुद्धिभन्दा पर, अनुत्पन्न र निष्प्रपञ्च हुन्छ । "मलाई यस्तो प्रश्न नसोध, खालि आफ्नो चित्तलाई मात्र हेरिराख्नू ।" यस कथनले यस बारे मिलारेपाको पनि आफ्नै धारणा रहेनछ भन्ने कुरा छर्लङ्गिन्छ ।













तसर्थ, प्रहाण संपत् एवं ज्ञान संपत्ले युक्त हुनुलाई नै सम्यक् सम्बुद्धको स्वरूप हो । यस सम्बन्धमा *उत्तरतन्त्र* मा यस्तो बताइएको छ :

हुनत बुद्धत्व अभिन्न (भेदरहित) छ ।
तर यसका शुक्ल (शुद्ध) धर्मबाट प्रभावित भई
यसलाई सूर्य र आकाश समान
ज्ञान र प्रहाण दुई लक्षणमा वर्गीकरण गरिन्छ ।[९]

*महायानसूत्रालंकार* मा पनि यस्तै उक्ति पाइन्छ :

समस्त शुक्लधर्म र सर्वोच्च गुणले युक्त बुद्धत्व
त्यो ठाउँ हो जहाँ निकै लामो समयदेखि
रहँदै आएका वा संचित हुँदै आएका
क्लेशावरण र ज्ञेयावरणका बीज
प्रहाणद्वारा पूर्णरूपमा जरैदेखि उखेलिन्छ र नष्ट हुन्छ ।[१०]

२. **बुद्ध शब्दको अर्थ** : कसैलाई बुद्ध किन भनिन्छ भन्ने प्रश्न मनमा उठ्न सक्छ । निन्द्राबाट ब्यूँझिँएझै अविद्याबाट जागृत (ति. साङ्) हुनु र द्विविध ज्ञेयप्रति प्रबुद्ध हुनु (ति. ग्ये) लाई नै बुद्ध (ति. साङ्ग्ये) भनिन्छ । त्यसैले बताइएको छ कि :

अविद्यारूपी निन्द्राबाट ब्यूँझेकाले र द्विविध ज्ञेयप्रति प्रबुद्ध भएकाले उनी बुद्ध कहलिएका हुन् ।

'अविद्यारूपी निन्द्राबाट ब्यूँझिनु' यस वाक्यांशको सम्बन्ध माथि उल्लेखित बुद्धको प्रहाणसंपत् स्वरूपसित छ भने 'ज्ञेयप्रति प्रबुद्ध हुनु' भन्ने वाक्यांशले माथि उल्लेखित बुद्धको ज्ञानसंपत् स्वरूपसित सरोकार राख्दछ ।











३. **बुद्धकायका भेद** : बुद्धका रूपलाई तीन काय (त्रिकाय) मा विभाजन गर्न सकिन्छ । ती हुन् : क. धर्मकाय, ख. सम्भोगकाय र ग. निर्माणकाय । *सूवर्णप्रभाससूत्र* मा यस सम्बन्धमा यस्तो बताइएको छ :

> सबै बुद्धका तीनवटा काय हुन्छन् - धर्मकाय, सम्भोगकाय र निर्माणकाय ।

कुनै कुनै सूत्रहरूमा दुई, चार वा पाँच कायसम्मको उल्लेख पाइन्छ । ती सूत्रहरूमा त्यसो भनिए तापनि बुद्धका सबै रूपलाई यही त्रिकाय अन्तर्गत नै समेट्न सकिन्छ । जस्तो *महायानसूत्रालंकार* मा भनिएको छ :

> बुद्धका समस्त कायहरू त्रिकायमै समेटिन्छन् । यो कुरा जान्नुपर्छ ।[११]

४. **त्रिकायको व्यवस्था** : वास्तविक बुद्धको परिचय भनेकै धर्मकाय हो । यस सम्बन्धमा *अष्टसाहस्रिकाप्रज्ञापारमिता* मा यस्तो बताइएको छ :

> बुद्धलाई रूपकायका रूपमा देख्ने होइन । बुद्ध त धर्मकाय हुन् ।

*समाधिराजसूत्र* मा पनि यस्तै भनिएको छ :

> जिनेन्द्र (बुद्ध) लाई रूपकायका रूपमा हेर्ने होइन ।

दुई प्रकारका रूपकाय (निर्माणकाय र धर्मकाय) निम्नलिखित तीन हेतुहरूका संयोगले प्रकट हुने गर्दछन् :

अ. धर्मकायको अधिष्ठान,
आ. विनयजनहरूको प्रतिभास
इ. पहिले गरिएका प्रणिधानहरू











अ. यी बाहेक यहाँ एउटा के प्रश्न उठ्न सक्छ भने धर्मकायकै अधिष्ठानले रूपकाय प्रकट हुँदो हो त सबै प्राणीहरूमा पहिलेदेखि धर्मधातु व्याप्त भएकाले के कुनैपनि किसिमको प्रयासै नगरी सबै प्राणीहरू मुक्त हुन्नन् र वा उनीहरूले बुद्धको साक्षात् दर्शन पाउँदैनन् र ? त्यसो होइन । धर्मधातुको अधिष्ठान मात्रले रूपकायको प्रार्दुभाव हुन सक्दैन ।

आ. रूपकायलाई केवल विनयजनहरूको प्रतिभासका रूपमा मात्र मान्नु पनि युक्तिसंगत देखिदैन किनभने असत् (हुँदै नभएको वस्तु वा धर्म) को प्रार्दुभाव वा प्रतिभास भन्नु मिथ्याज्ञान बाहेक केही होइन । सबै प्राणीहरू अनादि कालदेखि यही मिथ्याज्ञानमा निर्भर भएर कार्य गरिरहेका छन् । यदि त्यस्तै हुने भए त्यही मिथ्याज्ञानमा आश्रित भएर सबैले बुद्धत्व पाउनुपर्थ्यो, सबैले बोधिज्ञान पाउनुपर्थ्यो । त्यसो विल्कुल होइन । तसर्थ विनयजनहरूको प्रतिभासका रूपमा (विनयजनहरूलाई खालि प्रतिभास दिन) रूपकायको प्रार्दुभाव हुने कुरा तर्कसम्मत छैन ।

इ. रूपकाय केवल प्रणिधानको भरमा प्रार्दुभाव हुन्छ भनी मान्नु पनि उत्तिकै तर्कअसम्मत कुरो हुन आउँछ । यहाँ एउटा प्रश्न उठ्छ, के सम्यक् सम्बुद्ध आफ्ना प्रणिधान पूरा गर्न सक्षम भएका छन् कि छैनन् ? यदि सक्षम भएका छैनन् भने बुद्धलाई सर्वज्ञ भन्नै नमिल्ने हुन्छ । यदि सक्षम भएका छन् भने फेरि अर्को प्रश्न उठ्छ, बुद्धले कसैलाई पनि भेदभाव नराखी सबै प्राणीहरूको हित, सुख र मुक्तिको कामना गर्दछन् । यदि त्यसो हो भने के सबै प्राणीहरू प्रयासै नगरी त्यत्तिकै मुक्त हुँदैनथे र ? तर वास्तवमा त्यसो पनि होइन । त्यसकारण खालि प्रणिधान मात्रले रूपकायको सिद्धि हुने कुरा पनि युक्तिसंगत छैन ।

यसर्थ, रूपकायको प्रार्दुभाव हुनलाई ती तीनै हेतुका बलहरू मिल्नुपर्छ ।

**५. काय तीनवटै हुनुपर्ने कारण** : काय प्रयोजनको दृष्टिले ३ वटा छन् । धर्म-काय आफ्नै हितका लागि हो भने अरू दुईटा काय पर-हितका लागि हुन् ।











धर्मकायले कसरी आफ्नै हित गर्छ त ? धर्मकाय सबै गुणहरूको आश्रय हो । त्यसको प्राप्तिले बल, वैशारद्य इत्यादि गुणहरू यसरी एकत्रित हुनथाल्छन् कि मानौं यिनीहरूलाई निम्तो दिएर बोलाइएको होस् ।

त्यति मात्र हुने नभएर धर्मकाय प्राप्त भएपछि धर्मकाय प्राप्तिको इच्छा (अधिमुक्ति) गर्नेहरू, किंचित बोध गर्नेहरू, एकपक्ष रूपमा मात्र बोध गर्नेहरू र प्रायः पूर्णरूपमै बोध गर्नेहरूले पनि क्रमशः किंचित, धेरै, अत्यधिक र असीम गुणहरू प्राप्त गर्छन् ।

धर्मकायका अधिमुक्ति (इच्छा) राख्नेहरू (प्रयोगमार्गको अन्तिम अवस्था-मा प्राप्त हुने) समस्त लौकिकाग्र धर्महरूभन्दा मूनिका सबै समाधि, अभिज्ञा र बलहरू प्राप्त गर्छन् । श्रावक अर्हतका समस्त प्रहाण, समाधि, अभिज्ञा आदि धर्मकायको किंचित बोध हुनेहरूलाई प्राप्त हुन्छन् । प्रत्येकबुद्ध अर्हतका सबै प्रहाण, अभिज्ञा, ऋद्धि आदि धर्मकायलाई एकपक्षीयरूपले बोध गरेकाहरूलाई प्राप्त हुन्छन् भने भूमिस्थ बोधिसत्त्वका सबै प्रहाण, समाधि, अभिज्ञा आदि धर्मकायलाई प्रायः पूर्णरूपमा बोध गर्नेहरूलाई प्राप्त हुन्छन् ।

दुई प्रकारका अरू कायहरू अरूका हितको लागि प्रस्तुत गरिएका छन् । विशुद्ध विनयजनहरूलाई सम्भोगकाय प्रकट गरेर देखाइन्छ भने अविशुद्ध विनयजनहरूलाई निर्माणकाय प्रकट गरेर देखाइन्छ । यसरी बुद्धका तीनवटा काय छन् भन्ने कुरा निश्चितै छ ।

## ६. त्रिकायका लक्षण :

**क. धर्मकाय** : धर्मधातु शून्यताको बोध भएका कारण सबै भ्रान्तिहरूको क्षय वा खालि भ्रान्तिमय प्रतिभासका स्वरूपमा मात्र परिवर्तन हुनु नै धर्मकाय हो भनेर चिनिन्छ । तैपनि त्यो एउटा नाम मात्र हो । किनकि वास्तवमा धर्मकाय, धर्मकायको लक्षण तथा लक्ष्य इत्यादि केहीपनि हुँदैनन् । यहीं मेरो गुरु मिलारेपाको भनाई हो । तर व्यवहारिक (सांवृतिक) दृष्टिकोणले हेर्दा भने धर्मकाय निम्न आठ लक्षणहरूले युक्त हुन्छ :











1. समता
2. गाम्भीर्य
3. नित्य
4. एक
5. सम्यक्
6. शुचि
7. प्रभास्वरता र
8. सम्भोगकायसितको सम्बन्ध

अब हरेक लक्षणलाई छुटाछुटै लिएर व्याख्या गरौं

**1. समता** : सबै बुद्धहरूका धर्मकायमा कुनै पनि किसिमको भेद हुँदैन अर्थात धर्मकाय समान नै हुन्छ ।



**2. गाम्भीर्य** : निष्प्रपञ्च भएकाले यो अति गम्भीर छ बुझ्न गाऱ्हो छ ।



**3. नित्य** : असंस्कृत भएका कारण यसका आदि, मध्य र अन्त केही पनि हुँदैन र यो उत्पाद र निरोधले रहित हुन्छ ।

**4. एकता** : यो अविभाज्य छ किनभने धर्मज्ञातु र ज्ञान अभिन्न हुन्छ, एक हुन्छ ।

**5. सम्यक् (परिपूर्ण)**: कम वा अतिशय मूल्याङ्कन (धनात्मक ध्रुव र ऋणात्मक ध्रूव) दुवै अन्तभन्दा पर भएकाले वा नबाभिने भएकाले यो भ्रान्तिले रहित छ, सम्यक् छ ।

**6.. शुची** : तीन आवरण (क्लेश, ज्ञेय र समापत्ति आवरण) का मलले रहित भएका हुँदा यो शुद्ध छ ।











**7. प्रभास्वरता** : यो विकल्पबाट मुक्त छ अर्थात विकल्प नरहेकाले केवल निर्विकल्प तत्त्वको रूपमा मात्र यो उपलब्ध हुन्छ ।

**8. संभोगकायसित सम्बन्धित** : धर्मकाय सारा गुणका निधिरूपी संभोग-कायको आश्रय हो । जस्तो *उत्तरतन्त्र* मा भनिएको छ :

आदि, मध्य र अन्तले रहित
अद्वय, ती तीन तवरले मुक्त,
निर्मल र विकल्पले रहित
यो जुन धर्मधातुको स्वभाव हो
त्यसलाई केवल समाहित (समाधिस्थ)
योगीले मात्र देख्दछन् ।[१२]

*महायानसूत्रालंकार* मा पनि यस्तै उल्लेख पाइन्छ :

समान, सूक्ष्म र संभोगकायसित सम्बन्ध राख्ने
यो काय नै स्वाभाविक काय हो ।[१३]

**ख. संभोगकाय** : संभोगकायका पनि आठैवटा लक्षणहरू छन् :

1. गण (पर्यावरण)
2. क्षेत्र
3. काय
4. लक्षण
5. धर्म
6. कृत्य वा कर्म
7. अनाभोग (स्वत:स्फूर्तता, अयत्नकृतता)
8. नि:स्वभावता











अब हरेक लक्षणलाई छुटाछुटै लिएर व्याख्या गरौं

**1. गण** : सबै भूमिहरूमा स्थित बोधिसत्त्वहरू यस कायका गण हुन् ।

**2. क्षेत्र** : परिशुद्ध बुद्धक्षेत्र नै संभोगकायको क्षेत्र हो ।

**3. काय** : सम्भोगकाय बुद्धमा वैरोचन आदि बुद्धहरूलाई लिन सकिन्छ ।

**4. लक्षण** : यहाँ लक्षणको तात्पर्य बुद्धका बत्तीस लक्षण र चौरासी अनुव्यञ्जन हुन् ।

**5. धर्म** : यहाँ धर्म भन्नाले महायान नै हो ।

**6. कृत्य** : बोधिसत्त्वहरूका बोधि-व्याकरण इत्यादि गर्नु नै संम्भोग-कायका कृत्य हुन् ।

**7. स्वतःस्फूर्तता** : सम्भोग काय बुद्धका सबै कार्यहरू प्रयासै नगरीकन स्वत्तः भइरहन्छन् ; चिन्तामणि रत्न जस्तै प्रयासविना नै सबै कार्यहरू सम्पन्न हुन्छन् ।

**8. निःस्वभावता** : यो काय विभिन्न रूपहरू, काय आदिमा प्रतिभासित (प्रकट भएजस्तो भान हुने) भए तापनि वास्तवमा ती सबै स्फटिकमा देखिने रङ्गहरू सरह मात्र हुन्, जुन अनेक देखिएको भान भए तापनि वास्तवमा त्यसो हुँदैन । भनाईको अर्थ अनेकताले रहित हुन्छ । यस सम्बन्धमा *महायानसूत्रालंकार* मा यस्तो उक्ति पाइन्छ :

> गणपरिग्रह, क्षेत्र, काय, धर्मसंभोगका कार्यका दृष्टिले
> समस्त बुद्धक्षेत्रहरूमा संभोगकाय थरी थरी प्रकारका हुन्छन् ।[१४]











*अभिसमयालंकार* मा पनि त्यस्तै भनिएको छ :

> महायान धर्म उपभोग गरेकोले, बत्तीस लक्षण चौरासी अनु-व्यञ्जनले युक्त भएकोले बुद्धकायलाई संभोगकाय भनिन्छ।[१५]

ग. **निर्माणकाय** : निर्माणकायका पनि आठैवटा लक्षणहरू छन् :

1. आश्रय
2. हेतु
3. क्षेत्र
4. काल
5. स्वरूप
6. अवतारण (मनमा प्रवेश गराउनु)
7. परिपाचन (परिपक्व गर्ने काम)
8. मोचन (मुक्ति दिलाउने काम)

अब हरेक लक्षणलाई छुटाछुटै लिएर व्याख्या गरौं :

**1. आश्रय** : निर्माणकायको आश्रय धर्मकाय हो जो अकम्प्य (नहल्लिने) छ।

**2. हेतु** : निर्माणकायको हेतु (कारण) सबै प्राणीहरूको हितको कामना गर्ने महाकरुणा हो।

**3. क्षेत्र** : यसका क्षेत्र परिशुद्ध (अकनिष्ठ भुवन आदि जस्तो) र अपरिशुद्ध (जम्बुद्वीप आदि जस्तो) दुवै हुनसक्दछ।

**4. काल** : जब सम्म संसार रहन्छ तबसम्म यो अनवरत चलिरहन्छ।











**5. स्वरूप** : निर्माणकाय तीन रूपमा प्रार्दुभाव हुन्छ । वीणावादन इत्यादि कला कौशलमा अतुलनीयरूपले निपुण भई देखाउने निर्माणकायलाई शिल्पनिर्माणकाय भनिन्छ । खरायो आदि विभिन्न किसिमका तुच्छ (हीन) कायहरू ग्रहण गर्नुलाई जन्मनिर्माणकाय भनिन्छ भने तुषिताभुवनबाट आगमन, गर्भप्रवेश देखि लिएर महापरिनिर्वाण सम्मका (द्वादश चर्या) गरेर देखाउने निर्माणकायलाई अग्रनिर्माणकाय भनिन्छ। जस्तो *महायान-सूत्रालंकार* मा भनिएको छ :

> एकनासले शिल्प, जन्म, महाबोधि र महापरिनिर्वाण प्रकट गरेर देखाउने यो जुन बुद्धको निर्माणकाय हो त्यो नै सत्त्वहरूलाई मुक्ति दिलाउने एक महान उपाय हो ।[१६]

*उत्तरतन्त्र* मा पनि यस्तै बताइएको छ :

> जबसम्म संसार रहन्छ तबसम्म
> विभिन्न प्रतिभासमय निर्माणद्वारा
> उच्च जातिमा जन्मिने बोधिसत्त्वले
> तुषितबाट अवतरण, गर्भप्रवेश,
> जन्म, शिल्पविद्यामा निपुणता,
> अन्तःपुरमा भोगविलास, अभिनिष्क्रमण,
> दुष्करचर्या, बोधिमण्ड गमन, मारधर्षण,
> संबोधिप्राप्ति, धर्मचक्रप्रर्वत्तन र महापरिनिर्वाण
> जस्ता द्वादशचर्याको प्रर्दशन सबै अपरिशुद्ध
> क्षेत्रहरूमा गरिनै रहन्छन् ।[१७]

**6. अवतारण (मनमा प्रवेश गराउनु)** : यसले जनमानस वा सर्वसाधारण प्राणीमा तीन प्रकारका निर्वाणमा अभिरूची जगाएर यथासंभव मार्गमा प्रवेश गराउँदछ ।











**7. परिपाचन** : मार्गमा प्रवेश गरिसकेका सत्त्वहरूका संभारलाई पूर्णरूपमा परिपक्व बनाउने कार्य यसले गर्दछ ।

**8. मोचन** : कुशलकर्मले परिपक्व भइसकेका सत्त्वहरूलाई संसारको बन्धनबाट मुक्त गर्ने काम पनि यसले गर्दछ । जस्तो *उत्तरतन्त्र* मा व्याख्या गरिएको छ :

> निर्वाणपथमा लगाएर प्राणीहरूलाई पूर्णरूपले परिपक्व बनाउने एवं भविष्य व्याकरणका कार्य यस निर्माणकायले गर्दछ ।[१८]

यसरी निर्माणकायका आठओटा लक्षणहरू हुन्छन् । *अभिसमयालंकार* मा यस्तो उल्लेख गरिएको छ :

> मुनिका अविच्छिन्न निर्माणकायले
> संसार रहेसम्म विभिन्न तवरले
> र निष्पक्षरूपले सारा सत्त्वहरूको
> हित गर्ने कार्यमा अनवरत संघर्ष गरिनै रहनेछ ।[१९]

७. **बुद्धका विशेषताहरू** : बुद्धका तीन विशेषताहरू छन् । ती हुन् :

अ. साम्यगत विशेषता (equality)
आ. नित्यगत विशेषता (permanence)
इ. दर्शनगत विशेषता (appearance)

**अ. साम्यगत विशेषता** : सबै बुद्धका धर्मकायहरू तिनको श्रोत अर्थात धर्मधातुबाट अभिन्न हुन्छन् । त्यसैले ती सबै समान हुन्छन् । संभोग-काय यसले जनाउने आशयमा कुनै भेद नभएकाले सबै समान नै छन् । सबै निर्माणकायहरूले सर्वसाधारण कार्यहरू नै सम्पादन गरि-











राखेका हुन्छन् । तसर्थ बुद्धका निर्माणकाय पनि समान नै छन् । यसै सम्बन्धमा *महायानसूत्रालंकार* मा बताइएको छ :

> श्रोत, आशय र कर्मका दृष्टिकोणले सबैलाई एकसमान नै
> मानिन्छ ।[२०]

**आ. नित्यगत विशेषता** : धर्मकाय स्वभावैले नित्य हुन्छ । किनभने यो उत्पाद र निरोधले रहित परमार्थ अवस्था हो । निरन्तर धर्मको उपभोग (प्रबन्ध) गरिने हुँदा संभोगकाय पनि नित्य नै छ । बारम्बार निर्माणकाय कृत्यक्रियाको दृष्टिकोणले नित्य छ किनभने यसका कार्यहरू बारम्बार गतिशीलरूपमा प्रवाहित भइनै रहन्छन् । चित्तसन्तत्ति उच्छेद भई विलाएर गए पनि उचित अवसर प्राप्त भएमा भने यसको फेरि प्रादुर्भाव हुन्छ । जस्तो *महायानसूत्रालंकार* मा भनिएको छ :




> स्वभाव, अनुच्छेदता र प्रबन्धको
> दृष्टिकोणले बुद्धको काय नित्य छ ।[२१]

**इ. दर्शनगत बिशेषता** : धर्मधातुमा ज्ञेयावरणको विशुद्धि भइसकेपछि धर्मकायको प्रादुर्भाव हुन्छ, क्लेशावरणको विशुद्धिले संभोगकायको प्रादुर्भाव हुन्छ भने कर्मावरणको विशुद्धिले निर्माणकायको प्रादुर्भाव हुन्छ ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत

**फलनिर्देश**

नामक विंशतितम (बीसौं) परिच्छेद समाप्त ।







## भाग ६

# समुदाचार



समुदाचार निर्विकल्परूपले लोकहितार्थ कार्य सम्पादन गर्नु हो ।



# परिच्छेद २१

# बुद्ध कर्म निर्देश

सबैभन्दा पहिले बोधिचित्त उत्पाद नै गरिन्छ। त्यसपछि मात्र बीचमा मार्ग अर्थात उपदेशहरूको अभ्यास गर्दै अन्ततः बुद्धत्वरूपी फल प्राप्त गरिन्छ। यी सबै महान कार्यहरू सबै प्राणीहरूका दु:ख हटाउन र उनीहरूलाई सुख प्राप्ति गराउने एक मात्र लक्ष्यले अभिप्रेरित हुन्छन् । बुद्धत्व प्राप्त गरिसके-पछि कुनै पनि विकल्प हुँदैन र कुनै पनि प्रयास गर्नुपर्दैन । यहाँ त्यस्तो अवस्थामा सत्त्वहरूको हित कसरी संभव हुन्छ त भन्ने प्रश्न उठ्ला । हो, यद्यपि बुद्धहरू कुनैपनि विकल्पले रहित र प्रयास गर्न नपर्ने अवस्थामा हुन्छन्, तापनि ती सब सत्त्वहितका कार्यहरू बुद्धहरूबाट स्वत:स्फूर्त, अनायास र अनवरतरूपमा भइ नै रहन्छन् । यो कसरी सम्भव हुन्छ त ? यसको जवाफ संक्षेपमा यसरी दिन सकिन्छ :

कुनै विकल्प विना कायले सत्त्वहरूलाई हित गरिराखेको हुन्छ,
त्यसैगरी वाक् र चित्तले पनि विकल्पले रहित भएर सत्त्वहरूलाई हित गरिराखेका हुन्छन् ।
यी तीन द्वारबाट गरिने कार्यहरू नै बुद्धका कर्म वा चर्याभित्र संगृहित हुन्छन् ।

निर्विकल्परूपमा बुद्धले काय, वाक् र चित्तद्वारा सत्त्वहरूलाई हित गर्ने कार्यलाई *उत्तरतन्त्र* मा विभिन्न उपमा दिएर बताइएको छ :

तथागत इन्द्र, दुन्दुभि, बाँदल,
ब्रह्मा, सूर्य, चिन्तामणिरत्न, प्रतिध्वनि,
आकाश र भूमि समान हुन् ।[1]











१. **कायद्वारा निर्विकल्प गरिने कार्य** : "इन्द्र जस्तै देखापर्नु (प्रतिभासित हुनु)" । कायद्वारा निर्विकल्प सत्त्वहरूको हित गरिन्छ भन्ने विषयमा यो एउटा उपमा हो । देवताका राजा इन्द्र अप्सराहरूले घेरिएर वैजयन्त प्रासादमा बसिराखेका हुन्छन् । सो प्रसाद वैदूर्यमणिझैं स्वच्छ र पारदर्शी भएका हुँदा ईन्द्रका आकृति प्रसादबाहिर पनि प्रतिबिम्वित भएको हुन्छ। तल पृथ्वीलोकका नरनारीहरूले सबै किसिमका भोगविलासमा लिप्त देवराज इन्द्रको प्रतिबिम्व देख्दा हामी पनि त्यही देवलोकमा जन्मिन पाऔँ भनी प्रणिधान वा प्रार्थना गर्दछन् र सोही उद्देश्य परिपूर्तिका लागि कुशल कर्महरू गर्नतिर लागि पर्छन् । जसको फलस्वरूप मरणोपरान्त उनीहरू त्यही लोकमा जन्म लिन्छन् ।

इन्द्रको उक्त प्रतिबिम्बमा कुनै पनि प्रकारका विकल्प र चेष्टा रहँदैन । ठीक त्यस्तै प्रकारले जब महान लक्ष्यतिर (समाधि आदि) उन्मुख कुनै साधकले बत्तीस लक्षण र चौरासी अनुव्यञ्जनले युक्त बुद्धको कायले हिड्ने, उठ्ने, बस्ने, सुत्ने, धर्मोपदेश दिने, समाधिस्थ हुने जस्ता विभिन्न कार्यहरू गरेको देख्दा अत्यन्तै ठूलो श्रद्धा र भक्तिका साथ त्यस्तै रूप आफूलाई पनि प्राप्त होस् भनी कामना गर्दछन् । त्यसको लागि उनी तिनका मूल अर्थात बोधिचित्तोत्पाद इत्यादि कुशलकर्महरू सञ्चय गर्ने काममा डटेर लाग्दछन् र अन्ततः बुद्धत्व नै प्राप्त गरेर छाड्छन् । त्यो कायको प्रतिभासका पछाडि पनि कुनै विकल्प र चेष्टा हुँदैन । जस्तो भनिएको छ :

> देवताहरूका राजा इन्द्रका रूपको प्रतिबिम्ब वैडूर्य मणिले बनेको स्वच्छ धरातलमा देखापरेजस्तै सबै प्राणीहरूको विशुद्ध मानसपटलमा मुनीन्द्र (बुद्ध) को काय प्रतिबिम्वित हुन्छ ।[२]

कायद्वारा सत्त्वहरूलाई निर्विकल्प हित गरिरहने कार्य यहीं हो ।

२. **वाक्द्वारा निर्विकल्प गरिने कार्य** : 'दिव्य दुन्दुभि' वाक्द्वारा कसरी निर्विकल्प सत्त्वहरूको हित गरिन्छ भन्ने विषयमा एउटा उपमा हो । वेज-











यन्त प्रसादको मास्तिर देवताहरूले पहिले गरेका कुशलकर्मको फलस्वरूप उत्पन्न भएको 'धर्मबलधर' नामक दिव्य दुन्दुभि रहेको छ । कुनै विकल्प नभए तापनि त्यो दुन्दुभिले '*सबै संस्कृत धर्म अनित्य छन्, सबै सास्रव धर्म दुःखमय छन्, सबै धर्म शून्य र अनात्म छन्* र *निर्वाण सुख हो* भन्ने शब्द निकाली प्रमादमा रुमल्लिई बसेका देवताहरूलाई कुशल कर्म गर्नतिर प्रेरित गर्दछ । जस्तो भनिएको छ :

> जसरी देवलोकमा देवताहरूले पहिले गरेका
> कुशलकर्मका फलस्वरूप उत्पन्न भएका
> धर्मदुन्दुभिमा प्रयत्न, स्थान, मन, र रूप र विकल्प
> केही पनि नभए पनि त्यसले अनित्य, दुःख, अनात्मा र शान्ति
> जस्ता शब्दहरू निकालेर सबै प्रमादी देवताहरूलाई
> बारंबार प्रेरित गरिरहन्छ ।[३]




ठीक त्यसै गरी, प्रयत्न र विकल्पले रहित भएर पनि बुद्धका वाणी वा वाक्‌ले सौभाग्यशाली सत्त्वहरूको आशय अनुसार धर्मोपदेश गरिरहन्छ । भनिन्छ,

> यस्तै प्रकारले प्रयत्न वा विकल्पले रहित भए तापनि
> बुद्धको वाक् यथायोग्य सद्धर्मको उपदेश दिदैं
> साराका सारा सत्त्वहरूमा व्याप्त हुन्छ ।[४]

वाक्‌द्वारा सत्त्व (प्राणी) हरूलाई निर्विकल्प हित गरिरहने कार्य यहीं हो ।

३. **चित्तद्वारा निर्विकल्प गरिने कार्य** : 'बादल' चित्तद्वारा कसरी निर्विकल्प सत्त्वहरूको हित गरिन्छ भन्ने विषयमा एउटा उपमा हो । यो उपमालाई यसरी व्याख्या गरौं । वर्षायाममा आकाशमा बाँदल अनायास छाउँछ र











त्यसले विना कुनै विकल्प धर्तीमा वर्षा गराएर अन्नबालीहरू फस्टाउनमा मद्दत गर्दछ । जस्तो भनिएको छ :

> वर्षायाममा आकाशमा छाएका बादलले
> अनायासै विना विकल्प धर्तीमा
> मुसलधारे वृष्टि गराएर
> उन्नत फस्टाउदा बाली ल्याइदिन्छ ।[५]

ठीक त्यसैगरी निर्विकल्प धर्मको वृष्टि गराएर विनयजनहरूका कुशलमूलरूपी बालीलाई सपार्ने काम गर्दछ, परिपक्व गर्ने काम गर्दछ । जस्तो बताइएको छ :

> त्यस्तै किसिमले करूणारूपी बादलले
> निर्विकल्प सद्धर्मरूपी जलधारा बर्षाएर बुद्धले
> सत्वहरूका कुशलमुलरूपी बालीलाई
> उन्नत अवस्थामा पुऱ्याइदिन्छन् ।[६]

चित्तद्वारा सत्त्वहरूलाई निर्विकल्प हित गरिरहने कार्य यहीं   हो ।



उपरोक्त सम्बन्धमा 'ब्रह्माजस्तै' भनेर जुन उपमा दिन खोजिएको छ त्यसको अर्थलाई यसरी बुझौं । ब्रह्मा आफ्नो प्रसादबाट च्यूत नभइकनै सबै देवलोकमा वास गरिराखेका हुन्छन्, त्यसरी नै धर्मकायबाट विचलित नभई बुद्धले बाऱ्ह बुद्धका चर्याहरू (द्वादशचर्या) गर्दै समस्त विनयजनहरूलाई उद्धार गरिरहेका हुन्छन् । अतः यस सम्बन्धमा निम्न उद्धरण द्रष्टव्य छ :

> जसरी ब्रह्माले आफ्नो ब्रह्मप्रसादलाई नछोडिकनै
> अनायास सबै देवलोकहरूमा आफ्नो











उपस्थिति जनाइराखेका हुन्छन् ।
त्यसरी नै धर्मकायबाट च्यूत नभइकन जिनबुद्धले
सबै धातुहरूमा भव्यजनहरू (सौभाग्यशालीहरू) लाई
आफ्ना निर्माणहरूको प्रदर्शन अनायासै गरिराखेका हुन्छन् ।[७]

उपरोक्त सम्बन्धमा 'सूर्यजस्तै' भनेर जुन उपमा दिन खोजिएको छ त्यसको अर्थलाई यसरी बुझौं । सूर्यका सबै किरणहरू एकैसाथ उदाउँदा कमल इत्यादि अनन्त विविध फूलहरू प्रकाश पाएर फुल्न थाल्छन्, फक्रन थाल्छन् । ती किरणहरूमा कुनै विकल्प हुँदैन । त्यसरी नै धर्मका किरणहरू (धर्मरश्मि) निर्विकल्प र विना कुनै प्रयास अपरिमित गोत्र र अधिमुक्तिका विनयजनहरूका कुशल मनरूपी कमलको फूललाई फुलाइदिन्छ । अतः यस सम्बन्धमा निम्न उद्धरण द्रष्टव्य छ :

जसरी सूर्यले विना कुनै विकल्प आफ्नै प्रकाशका किरणले
कमल र अरू सबै फूलहरूलाई एकैसाथ
ढकमक्क फुलेर राम्रोसित फक्रनमा मद्दत गरिदिन्छ ।
त्यसरी नै विना कुनै विकल्प सूर्यसमान
तथागतले आफ्ना सद्धर्मका किरणहरू कमलसमान
विनयजनहरूतिर फिँजाउछन् ।[८]

अर्को शब्दमा भन्नुपर्दा, सूर्यको प्रतिबिम्व सबै भाँडामा रहेको पानीमा एकैसाथ एकैसमयमा देखापर्दछ । ठीक त्यसैगरी, बुद्धको प्रतिबिम्ब पनि सबै विशुद्ध विनयजनहरूमा एकैसाथ देखापर्दछ । अतः यस सम्बन्धमा निम्न उद्धरण द्रष्टव्य छ :

यसैको कारणले गर्दा, सूर्यसमान सुगतका
अनन्त प्रतिबिम्बहरू पानीले भरिएका भाँडा समान विशुद्ध
विनयजनहरूमा एकैसाथ देखापर्दछन् ।[९]











उपरोक्त सम्बन्धमा 'चिन्तामणिरत्न जस्तै' भनेर जुन उपमा दिन खोजिएको छ त्यसको अर्थलाई यसरी बुझौं । चिन्तामणिरत्नमा कुनैपनि विकल्प हुँदैन तैपनि यसले जस जसले जे जे प्रार्थना गरेर माग्यो त्यही त्यही नै वस्तु अनायासै दिइरहेको हुन्छ । त्यसरी नै बुद्धको आश्रय लिएका कारण श्रावक आदि विभिन्न आशय भएका विनयजनहरूका सबै स्वार्थ (अभीष्ट) सिद्ध हुन्छन् । अतः यस सम्बन्धमा निम्न उद्धरण द्रष्टव्य छ :

> कुनै विकल्प नभएर पनि चिन्तामणिरत्नले कर्मभूमिमा अवस्थित सबैका इच्छाहरूलाई एकैसाथ पूरा गरिदिन्छ, त्यसरी नै चिन्तामणिरत्नसमान बुद्धको आश्रय लिएर विभिन्न आशय भएका सत्त्वहरू नाना थरीका धर्म उपदेशहरू सुन्छन् । यो सब भएरपनि बुद्धमा कुनै पनि विकल्प भने हुँदैन ।[10]

बुद्धले सत्त्वहरूलाई निर्विकल्प उद्धार गर्ने विषयमा प्रतिध्वनि, आकाश र धर्तीका उपमा पनि दिन सकिन्छ ।

**सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार** अन्तर्गत
**बुद्धकर्म-निर्देश**
नामक एकविंशततम (एक्काइसौं) परिच्छेद समाप्त ।

*भवन्तु सर्व मङ्गलम्*









*सद्धर्मचिन्तामणिमुक्तिरत्नालंकार महायानको मार्गक्रमको व्याख्या हो । भिक्षु धर्मशरणको अनुरोधमा वैद्य पुण्य रत्न गम्पोपाले यस ग्रन्थ रत्नको रचना गर्नुभएको हो । धर्मशरणले यसलाई लिपिबद्ध गर्नुभएको हो ।*

*सबै सत्त्व प्राणीहरूको निर्विकल्परुपले हित गर्न यो सद्धर्मचिन्तामणि ग्रन्थरत्नको रचना गरिएको हो । तपाईको यो ज्यादै कल्याणकारी कार्यको पुण्यले सारा सत्त्वहरूले अनुत्तर सम्यक् सम्बोधि लाभ गरून् ।*









परिशिष्ट १

# धर्मराज गम्पोपाको जीवनी

*हुनत धर्मराज गम्पोपाका जीवनीको अंग्रेजी अनुवाद ग्रन्थहरूमा प्रशस्तै पाइन्छ। तैपनि यस दुःखमयी संसारबाट उम्किन चाहनेहरू र सर्वसाधारण पाठकवर्गका मनमा श्रद्धा एवं आस्थाको बीउ पलाओस् भन्ने हेतुले यहाँ उहाँको संक्षिप्त जीवन वृतान्त प्रस्तुत गरिन्छ।*

**खण्ड १ : धर्मगुरु गम्पोपाको संक्षिप्त जीवनी**

गम्पोपाको जीवनी महासागर जस्तै गहिरो र आकाश जस्तै विशाल छ। केवल भगवान् बुद्धले मात्र पूर्णरूपमा त्यसको व्याख्या गर्न सक्नुहुन्छ। भद्रकल्पका चौथो बुद्ध शाक्यमुनि बुद्धको धर्मशासनको अवधिभित्र कैयौं बौद्ध महापण्डित तथा सिद्धहरू आउनुभयो र जानुभयो। उहाँहरूमध्ये एक जना धुरन्धर बौद्ध विद्वान गुरु गम्पोपा पनि हुनुहुन्थ्यो। रत्नमण्डलरूपी दृढ सुमेरु पर्वतसमान हुनुभएका गम्पोपा अनादिकालदेखिनै ज्ञानमा स्थित हुनुहुन्थ्यो तापनि अविद्याको आवरणले छोपिएर जाति, जरा, व्याधि र मरण जस्ता चार महादुःखहरू भोग्दै राग द्वेष र मोहरूपी घातक चेतसिक जन्तुको चपेटामा परेका निरीह सत्त्वहरूका निमित्त अचल धर्मकायबाट उहाँले आफ्नो निर्माणकाय प्रकट गर्नुभयो। धर्मगुरु फाग्मो डुपा भन्नुहुन्छ :

सुपुष्पचन्द्र बोधिसत्त्व चन्द्रप्रभकुमारको
रूपमा प्रकट हुनुभयो।
पछि उनै बोधिसत्त्व एक भिक्षु चिकित्सकको
रूपमा प्रकट हुनुभयो।
भगवान् बुद्धद्वारा नै भविष्यवाणी गरिनुभएका
उहाँ धर्मराजलाई मेरो नमस्कार !











उपरोक्त सन्दर्भ अनुसार धर्मराज गम्पोपा अनगिन्ती कल्प अगाडि रत्नपद्मचन्द्रविशुद्धाभ्युद्गतराज तथागतको समयमा सुपुष्पचन्द्र बोधि-सत्त्वका रूपमा जन्मिनुभएको थियो । यस सम्बन्धमा विस्तृत कथा कंग्युरमा समावेश गरिएको समाधिराजसूत्रको सुपुष्पचन्द्रपरिवर्त नामक ३५ औं परिवर्तमा पढ्न पाइन्छ । निम्नलिखित संक्षिप्त कथा पनि त्यही श्रोतबाट साभार गरिएको हो ।

कुनै समय, रत्नपद्मचन्द्रविशुद्धाभ्युद्गतराज तथागतको धर्मशासनको अन्त्यतिर, ७०० बोधिसत्त्वहरूलाई देशनिकाला गरिएको थियो । उनीहरू सीधै समन्तभद्र जंगलमा पसेर त्यहीं बस्दै आएका सुपुष्पचन्द्र बोधि-सत्त्वसंगै रहनथाले । सुपुष्पचन्द्र बोधिसत्त्वद्वारा अनगिन्ती प्राणीहरूलाई अवैवर्तिक भूमि सम्म पुऱ्याइएको थियो । त्यो वनखण्ड रत्नावती नगरकै इलाकाभित्र पर्दथ्यो जसका राजा शुरदत्त थिए । शुरदत्तका ८४००० स्त्रीहरू थिए । उनीहरूबाट १००० राजकुमारहरू र ५०० राजकुमारी-हरू जन्मिएका थिए । ती सबै विपुल ऐश्वर्य र मोजमस्तीमा चुर्लुम्म डुबेका थिए । एकपल्ट समाधिमा लीन भइराखेको बेला सुपुष्पचन्द्र बोधि-सत्त्वले आफ्नो दिव्यदृष्टिबाट त्यहीँ नगरमा पुनर्जन्म लिँदै बसोवास गरि-रहेका अनेक बोधिसत्त्वहरूलाई देखे । यदि सद्धर्म श्रवण गरेको खण्डमा ती बोधिसत्त्वहरू पक्कैपनि अवैवर्तिक भूमिसम्म पुग्नेछन्, अन्यथा सबै-को पतन हुनेछ भन्ने कुरा उनले थाहा पाए । त्यसै कारण समाधिबाट जुरुक्क उठेर उनीसंगै बसिरहेका सबै बोधिसत्त्वहरूलाई सम्बोधन गर्दै भने, "म सत्त्वहरूलाई उद्धार गर्न गाउँ, नगर, देश, देश घुम्दै धर्मोपदेश गर्न जाँदैछु ।"

उनीहरूले जवाफ दिए, "हैन, तपाई जानु उचित हुँदैन किनकि त्यतातर्फ धेरै पापी र उन्मत्त मानिसहरू बस्दछन् । उनीहरूले तपाईलाई हानि पुऱ्याउन सक्नेछन् । जवाफमा सुपुष्पचन्द्रले भने, "आफ्नो अहित होला वा विघ्न बाधाहरू आउँला भनी डराएर बसेँ भने बुद्ध शासनको रक्षा होला र कसरी मबाट कसरी सत्त्वार्थ क्रिया होला ?" यति भन्दै उनी शुरदत्तको दर-बारभित्र प्रवेश गरेर सात दिनसम्म अन्न, जल केही ग्रहण नगरीकनै











रानी, राजकुमार, राजकुमारी र अरू धेरै मानिसहरूलाई धर्मोपदेश गर्दै बसे। उनको अदम्य साहस र अथक परिश्रमले गर्दा अनगिन्ती मानिसहरूको मनमा बोधिचित्तको बीऊ रोपियो। जसको फलस्वरूप मानिसहरू उनको अनन्य भक्त हुन थाले र जता गए पनि उनकै गुणगान मात्र सुनिन थाल्यो।

यो सब देखेर राजा शुरदत्तको मनमा अनायासै ईर्श्या जाग्यो। फलस्वरूप उनले यस्तो सोंचे, 'कतै यो भिक्षु मेरो यो राज्य छिन्न आएको त होइन ?' ईर्ष्याको दलदलमा चुर्लुम्म डुबेका राजाले नन्दीक भन्ने पुण्य र पाप केही नजान्ने कसाईलाई बोलाएर यस्तो आदेश दिए, "तिमी त्यो भिक्षुलाई मारेर आऊ, त्यसको बदलामा म तिमीलाई ठूलो पुरस्कार दिउँला।" आज्ञानुसार नन्दिक तलवार भिरेर सुपुष्पचन्द्रले धर्मदेशना गरि-राखेको ठाउँमा पुग्यो। धर्मोपदेश सुन्नेहरूको भीड थियो। तैपनि जसो तसो त्यत्रो ठूलो भीडलाई छिचोल्दै नन्दीक सुपुष्पचन्द विराजमान भइ-राखेको ठाउँसम्म पुग्न सफल भयो। त्यो निर्दयी कसाहीले सुपुष्पचन्द्र बोधिसत्त्वलाई आफ्नो तलवारले प्रहार गरेर अङ्गभङ्ग पारिदियो। अङ्गभङ्ग पारिँदापनि उनको शरीरबाट रगत भने एक थोपा निस्केन। रगतको सट्टा दुधको प्रवाह बग्न थाल्यो।

उनको पूरै शरीरबाट रश्मी निस्क्यो। मृत्युपश्चात् उनको पार्थिव शरीर सुनौलो र सबै शुभ लक्षणहरूले युक्त भएको देखिन थाल्यो। अनि पश्चातापको अग्निले पोलेर राजाले यसरी सोंच्यो, "हे भगवान्! मैले यो के गर्न पुगेछु। उहाँ अवैवर्तिक बोधिमार्गमा पुगिसक्नुभएका भिक्षुलाई मैले सोँच्दै नसोची यसरी अनाहक हत्या गर्न पुगेछु। कस्तो जघन्य अपराध हुनगएछ मबाट! धिक्कार छ मलाई! यसको परिणामस्वरूप अब म अवश्यपनि नरक गतिमा पतन हुनेछु।" त्यही बेला, आकाशबाट देवताहरूले पनि उसको त्यो दारुण परिणामलाई अझ पुष्टि दिदै भने, 'हो, तिमीले त्यस्तो घोर पाप गऱ्यौ जसको फलस्वरूप तिमी अवश्यपनि नरकमा पतन हुनेछौ।" यस्तो आकाशवाणी सुनेर राजा अत्यन्तै भयभीत भएर जमीनमा घोप्टो परेर बेस्सरी रोयो। देवताहरू पनि खिन्न मुद्रामा रूदै कराउँदै यस्तो भन्नथाले :











> शरीरप्रतिको आसक्तिलाई पूर्णरूपले त्यागेर, यस जीवनप्रतिको आसक्तिलाई पनि त्यागेर समन्तभद्र वनखण्डबाट आएका ती धर्मभाणक सुपुष्पचन्द्रलाई यो राजधानीमा हत्या गरियो ।

जंगलमा बेखबर भई बसिरहेका बोधिसत्त्वहरू र सबै भिक्षुहरूलाई सुपुष्पचन्द्रको मृत्युको समाचार ती देवताहरूले सुनाउँदै छिटो उनको पार्थिव शरीर दर्शन गर्न जानका लागि आह्वान गरे । यस्तो समाचार सुन्नासाथ उनीहरू अत्तालिएर कराउन थाले, “उहाँ असाध्यै शीलसम्पन्न हुनुहुन्थ्यो । यो हुनै सक्दैन । के नै गल्ती गर्नु भएको छ र उहाँले ?” इत्यादि भन्दै उनीहरू मूर्छा पर्दै जमीनमा लडे ।

त्यसपछि राजाले चन्दन, अगरु, इत्यादि बहुमूल्य सामग्रीले निर्मित चितामा पार्थिव शरीर राखी दाहसंस्कार गरे । त्यसबेला अचिन्त्यरूपले अद्‌भूत निमित्तहरू देखापरेका थिए । तत्पश्चात् भग्नावशेषहरू जम्मै सोहोरेर उनकै नाममा एउटा दुर्लभ स्तूप बनाई त्यसैभित्र राखिए । अनि राजाले असंख्य पूजाहरू चढाए र हजारौं वर्षसम्म पनि दिनको तीन तीन चोटि शोधन अभ्यासहरू गरिराखे । मरणोपरान्त नरकमा जन्म लिएर राजाले कैयौं कल्पसम्म दुःख भोगिरहनुपर्‍यो ।

समाधिराजसूत्रमा भगवान् बुद्ध भन्नुहुन्छ : म त्यहीं शुरदत्त राजा थिएँ । तिमी, चन्द्रप्रभ बोधिसत्त्व चाँहि सुपुष्पचन्द्र बोधिसत्त्व थियौ । भगवान् बुद्धबाट यस्तो उद्‌गार सुन्न पाउँदा चन्द्रप्रभकुमार अत्यन्तै खुशी हुनुभयो । कालान्तरमा उहाँले तिब्बतमा धर्मराज गम्पोपा वैद्यका रूपमा आफ्नो निर्माणकाय प्रकट गर्नुभयो । खाम प्रदेशका तीनजना योगीहरूलाई गम्पोपा आफैले यस्तो भन्नुभएको थियो :

> अनुत्तर सम्यक् सम्बुद्ध भगवान् शाक्यमुनिको समयमा म चन्द्रप्रभकुमार नामक धर्मभाणक थिएँ । त्यसबेला शाक्यमुनि बुद्धले मेरै अनुरोधमा समाधिराजसूत्र धर्मपर्याय देशना गर्नुभएको थियो ।











उहाँ उनै महाबोधिसत्त्व हुनुहुन्छ जसलाई आफ्ना अतीतका अपरिमित जुनीहरू स्पष्टै याद छ ।

करुणापूण्डरीक सूत्रमा धर्मराज गम्पोपाका बारेमा भगवान् बुद्धले यस्तो भविष्यवाणी गर्नुभएको छ :

> हे आनन्द ! मेरो परिनिर्वाणपश्चात् भविष्यमा उत्तरापथतिर जीवक (वैद्य) नाम गरेका एकजना भिक्षु उत्पन्न हुनेछन् जसले अनेक लाखौं बुद्धहरूको उपासना गरेका छन्, सेवा गरेका छन् । अनेक बुद्धहरूका पूजा गरेर कुशलमूल स्थापना गरेका छन्, बोधिचित्तोत्पाद गरेका छन्, महायान पथमा संप्रतिष्ठित भई कैयौं सत्त्वहरूको हित र सुखको लागि डटेर कार्य गरेका छन् । बोधिसत्त्वपिटकधर, महायानको प्रशंसक हुनुका साथै उनले अरूलाई महायानको धर्मदेशना गर्नेछन् इत्यादि......





उहाँ फेरि भन्नुहुन्छ : हे आनन्द, ती जीवक (वैद्य) भिक्षुले मेरो धर्मशासनलाई व्यापकरूपले प्रचारप्रसार गरिदिनेछन् । त्यसैले शोक नगर, विलाप नगर ।"

महा लोचावा (अनुवादक) मारपाले पनि मिलारेपालाई यस्तो भन्नुभएको थियो :

> गिद्धले बच्चा पाउनु अद्वितीय शिष्यको उदय हुने संकेत हो ।
> पूरै आकाश चरैचराले भरिनु काग्युपा परम्परा फस्टाउदो पारा-
> ले विस्तार हुने संकेत हो ।

यसरी धर्मराज गम्पोपाको आगमन, उहाँका सबै शिष्य र उहाँको परम्पराका बारे भविष्यवाणी गरिएको थियो ।

वज्रयोगिनीले पनि मिलारेपालाई भविष्यवाणी गरेर भन्नुभएको थियो कि उनका सूर्य, चन्द्र र तारा समान अनेक शिष्यहरू हुनेछन् । तीमध्ये











गम्पोपा सूर्यसमान शिष्य हुन् । अतः उनी देव लगायत सबै सत्त्वहरूका लागि पूजनीय छन्, शरणयोग्य छन् ।

धर्मराज गम्पोपाको जन्म दक्षिणी तिब्बतको ञल प्रान्तस्थित से वा लुङ मा पृथ्वी बंदेल वर्ष, (सन् १०७९) वैशाख महिनाको आठौं दिनमा भएको थियो । उनको बुवाको नाम ञिवा ग्यल्पो थियो भने आमाको नाम ञल जा थियो । उनको जन्म समयमा विभिन्न अद्‌भूत निमित्तहरू देखा-परेका थिए । गम्पोपाका एक जेठो दाजु र एक कान्छो भाई पनि थिए । उनी चाँहि माहिला छोरा थिए । आफ्नो बुवा पनि ठूलो पण्डित र साधक नै भएकाले गम्पोपाले उनीसंगै धेरै विद्याहरू सिकेका थिए । बाइस वर्ष पुग्दा जङ दरमा होद नामक एक सम्पन्न जमीन्दारकी बहिनीसित उनको विवाह सम्पन्न भयो र उनका एक छोरा र एक छोरी पनि भए ।

महान भारतीय गुरु किमे, तिब्बती वैद्य बिजि इत्यादि जम्मा तीस गुरुहरूबाट उनले थरी थरीका आरोग्यकर चिकित्साशास्त्र सिके । हुँदा हुँदा उनी एक महान चिकित्सक बनेर अनेक प्राणीहरूलाई यसरी उद्धार गर्नमा सफल भए मानौं साक्षात् भैषज्य तथागत नै फेरि यस लोकमा आउनुभएको जस्तै ।

अनित्यको कठोर चपेटामा परेर उनका छोरा र छोरी दुवैको मृत्यु भयो । त्यसको लगत्तै पछि उनकी पत्नीलाई पनि गम्भीर रोगले च्याप्यो र रोग निको पार्न जतिसुकै उपाय गरेपनि केही सीप लागेन । अन्तसम्म पनि उनकी पत्नीले आफ्नो पतिप्रतिको आसक्तिलाई त्याग्न सकेकी रहिनछे र त्यसैले भन्छिन् : यो गृहस्थी जीवनमा सुख पाइन्न । त्यसैले मेरो मृत्यु-पश्चात, हे चिकित्सक, पूरा मन लगाएर धर्मको अभ्यासमा लाग्नुहोस् ।"

चिकित्सकले जवाफ दिए, "तिमी बाँचेपनि वा तिम्रो मृत्यु भएपनि म धर्मको अभ्यास गर्ने वाचा गर्दछु ।"

आँखाभरी आँसु लिएर उनकी पत्नीको देहवसान भयो । यस घटनाले चिकित्सकको मनमा संसारप्रति निकै प्रबल वैराग्य जगाइदियो । केही समय वितिसकेपछि उनी घरवार सबथोक त्यागी दग्पो पुगे । त्यहाँ उनले उपाध्याय लो दन शे रब, आचार्य शेरब ञिङपो र मिलारेपाकै शिष्य यिद











देवा जङछुब सेमपा आदि भिक्षुसंघको उपस्थितिमा प्रव्रज्या र बोधिसत्त्व संवर ग्रहण गरे । उनको नाम सोनाम रिन्छेन (पुण्यरत्न) राखियो । गम्पोपाले आफ्ना ती पहिलो र दोश्रो आचार्यबाट विनयका शिक्षाहरू राम्ररी ग्रहण गरे । विनय पालन गर्नमा उनी उपालि जस्तै सबै शिष्यभन्दा अग्र पँक्तिमा थिए । मञ युल (कुती) का उपाध्याय (ख्यन्पो) लो दन शेरबबाट उनले लुहिपा परम्परा अनुसारको चक्रसम्भर तथा षट्रत्नालङ्कारवाराहीतन्त्र आदि पितृतन्त्र एवं मातृतन्त्रका अभिषेक, अधिष्ठान र विद्या अर्पण आदि प्राप्त गरे ।

यतिमात्र होइन, उनले विनय, पारमिताहरू इत्यादि पनि राम्रैसित अध्ययन र अनुशीलन गरे । गेशे ज्य दुल्जीनबाट पनि विनयपिटक, समाधि-राजसूत्र र श्रावकभूमि आदि पाँच ग्रन्थ तथा यानसंग्रह आदि थुप्रै ग्रन्थहरूको अध्ययन गरेर उनी गेशे ञुग-रुम-पाकहाँ गए । गुरु ञुग-रुम-पाबाट गम्पोपाले त्रिपुरुष विषयक मार्गक्रम (लाम-रीम) का उपदेश आदि जस्ता कदम्पा परम्परासित सम्बन्धित सबै उपदेश ग्रहण गरे । गेशे चग-री-वा, गोङ-कर-वा आदिबाट बोधिचर्यावतार, मध्यमकशास्त्र (मूलमध्यमकका-रिका इत्यादि पाँच वा छवटा ग्रन्थहरू) र अभिसमयालंकार आदि जस्ता मैत्रेयका पाँचै ग्रन्थहरूको विस्तृत अध्ययन गरे । ती विभिन्न शास्त्र ग्रन्थहरूको श्रवण, चिन्तन र भावना गरेको फलस्वरूप उनी कदम्पा पर म्पराका एक प्रकाण्ड विद्वान एवं जगमगाउदो तारा नै बन्नपुगे ।

आचार्य गम्पोपा महती प्रज्ञा र करुणाले युक्त थिए । मात्सर्य, आसक्ति, आलस्य इत्यादि दोषहरूबाट मुक्त र असाध्यै परिश्रमी थिए । दिनमा उनी श्रवण र चिन्तनमा व्यस्त रहन्थे भने राति सधैं ध्यान गरेरै बिताउथे । अन्ततः उनले सबै धर्मका प्रतिभासहरू इन्द्रेणी सरह छन् भन्ने ज्ञान हासिल गरे र विकल्पले रहित चित्त उनमा विकसित भयो जसमा दिन र रातमा कुनै भिन्नता (विकल्परहितता) राखिँदैन । यसरी सात सात दिनसम्म लगातार समाधिस्थ भई बस्दा पनि उनलाई अलिकति पनि भोक प्यास लाग्दैनथ्यो । सपनामा उनलाई सूवर्णप्रभाससूत्रमा उल्लेखित दशौं भूमिसित सम्बद्ध निमित्तहरूको दर्शन हुन्थ्यो ।











त्यत्तिखेर समाधिमा बस्दा र सपनामै पनि उनले सधै एक नीलो नीलो रङ्गको र अग्लो योगीलाई मात्र देख्दथे । आफ्नो एउटा काँधलाई बडो खुकुलो पाराले नरम सूतीको कपडाले ढाकेका र एउटा हातले लौरो समाइरहेका ती योगीले गम्पोपाको शिरमा हात राखेर फु गरी फुक्दारहेछन् र एकैछिन पछि अन्तर्धान हुँदा रहेछन् । यसले गर्दा गम्पोपाको ध्यानमा पहिलेभन्दा झन झनै सुधार हुँदै गयो । आफूले देख्ने गरेको उक्त व्यक्तिका बारेमा गम्पोपाले आफ्नो गुरुलाई बताइदिए । उनको गुरुले यस्तो सल्लाह दिए, "तिमी एक शीलसम्पन्न भिक्षु हौ । पेकर धर्मपालले तिम्रो अभ्यासमा विघ्न खडा गर्न खोजे जस्तो छ त्यसैले तिमीले यस्तो योगीको प्रतिभास पाइराख्यौ । तर धन्दा मान्नुपर्दैन, श्वेत अचलाको जप गर्नू, ठीक भैहाल्छ ।" गम्पोपाले पनि गुरुले भनेजस्तै ध्यान जप गरे, तर ती योगी भने आएको आयै गरिराखे ।

त्यसबेला, एकै जुनीमा वज्रधर भूमि लाभ गरेका योगीराज मिलारेपा डागमार पोथोस्थित किफुग त्रिमा-जोङ नामक गुफामा बसेर रेछुङ दोर्जे डागपा, शिवा होए, सेबन रेपा, डिगोम रेपा, ङनजोङ तोनपा आदि औरस पुत्र (शिष्य) र जेसे, खुयुग आदि शिष्याहरूलाई धर्मोपदेश गरिराखेका थिए । तीमध्ये प्रमुख र वरिष्ठ शिष्यहरूले सोधे, "तपाईं अब धेरै नै बृद्ध भैसक्नुभयो । कथं कदाचित् तपाई खेचरभूमितर्फ प्रस्थान गरिहाल्नुभयो भने हामीजस्ता शिष्यहरूलाई कसले मार्गदर्शन गर्नेछ ? दानपतिहरूलाई पुण्य सञ्चय गर्ने मौका कसले दिनेछ ? त्यसैले हे परमपूज्य गुरु ! आफ्ना सम्पूर्ण उपदेश प्रदान गरेर कुनै एकजना शिष्यलाई तपाईंको उत्तराधिकारी बनाउनुहोस् ।

मिलारेपाले जवाफ दिनुभयो, "म एक योगी हुँ । हुनत मलाई कुनै उत्तराधिकारी चाँहिदैन । तरपनि मेरो एकजना शिष्य भन्ने पक्कैपनि त्यस्तो हुनेछ जसले मेरा सबै कार्यहरू गर्न सक्नेछ । आजराति उनी को हुन् म पत्ता लगाउनेछु । तिमीहरू भोलि बिहान सबेरै आउनू ।"

अत्यन्तै ठूलो जिज्ञासा र खुल्दुली बोकेर भोलिपल्ट सबेरै ती शिष्यहरू सबै त्यही ठाउँमा भेला भए । अनि मिलारेपाले भन्नुभयो, "छिट्टै मेरो











शासन सम्हाल्ने एकजना वैद्य नामक भिक्षु यहाँ आउँदैछन् । उनी विनय परम्परामा प्रव्रजित भएका रहेछन् । एउटा भाँडोबाट अर्को भाँडोमा पानी खन्याएझैँ उनले मेरा उपदेशलाई पूरै ग्रहण गरेर दशै दिशामा फैलाउनेछन् । आज राति मैले उनी एउटा रित्तो स्फटिकको भाँडो बोकी म कहाँ आउँदा मैले मेरो चाँदिको कलशबाट उसको भाँडोमा सबै अमृत खन्याईदिएको सपना देखेँ ।"

उहाँ बोल्दै जानुभयो, "एक नयाँ पुत्रको जन्म भयो । अब म पिता बुढो भइसकेको छु । पूर्वबाट उदाएको सूर्यझैँ उनी सद्धर्मलाई संवर्द्धन गर्ने यस्तो महापुरुष भई निस्कनेछन् जसले अनगिन्ती सत्त्वहरूलाई उद्धार गर्नेछन् ।" त्यसपछि उहाँले निम्न गीत गाउँनुभयो ।

सबै करुणामयी लामा गुरुहरूलाई मेरो दण्डवत् !
दुर्लभ सुनको पात्रमा भएको पूर्वीय श्वेत हिमसिहँरूपी दुध
साधारण लरतरो भाँडोमा खन्याउनु हुन्न ।
खन्याएमा भाँडो नै फुटेर त्यसभित्र रहेको दुध पोखिएर खेर जानेछ ।

नारोपा र मैत्रीपाका उपदेशहरूलाई पनि गम्भीरै भनिए तापनि
यदि तिनको अभ्यासै गरिँदैन भने गाम्भीर्यताको कुनै अर्थ रहन्न ।
अभ्यास गरेपछि पो त तिनमा गम्भीरता आउँछ ।
यी उपदेशहरू परमपूज्य पिता मारपाले ल्याउनुभयो
र म मिलारेपाले अभ्यास गरेँ ।

मेरो भित्री अवबोधका यी तीन शब्दहरूलाई
जतिसुकै फलदायक र प्रभावकारी भनिए तापनि
अयोग्य पात्रलाई प्रदान गरिँदैन,
जब योग्य पात्र आउँछ त्यसलाई मात्र दिन्छु
त्यो योग्य पात्र गम्पोपा नै हुन्
उनलाई मात्र दिन्छु मेरा यी उपदेश !











त्यतिखेर, बाहिर त्यतिकै हिँडिरहेका बेला गम्पोपाले बाटो छेऊँ तीन-जना मगन्तेहरू एक आपसमा कुरा गरिरहेको देखे । तीमध्ये एकजनाले यस्तो भन्दैथियो, "हामी तीनजनालाई त कर्मले सान्है ठगेको रहेछ । एक कचौराभरी मात्र सागसब्जी पाएको भए पनि हामी कति भाग्यमानी हुन्थ्यौं है । अर्कोले भन्यो, "त्यसो त इच्छै गर्ने हो भने राजा चेंदे जस्तो बैभवशाली हुने इच्छा गरौं न !" तेश्रोले भन्यो, "चेंदेजस्तो भएर पनि के गर्ने, ऊ पनि आखिर मर्नै पर्छ ? हामीलाई जस्तै उसलाई पनि मर्ने बेला कसैले बचाउन सक्दैन । बरु कामना नै गर्ने हो भने योगेश्वर मिलारेपा जस्तो हुने कामना गरौं न । उनलाई न त लगाउनका लागि कुनै वस्त्र नै चाहिन्छ न त खानका लागि कुनै खाना । डाकिनीहरूको अमृतपान नै गरेपछि त्यस्ता भोजनको के खाँचो । हिमसिँहमा आसीन मिलारेपा जन्म वा मृत्युको भयभन्दा पर छन् ।"

यी कुराहरू सुनेको मात्र के थिए, गम्पोपाको मनमा मिलारेपाप्रति अनायासै यति ठूलो श्रद्धा जाग्यो कि उनका आँखै रसाएर आए । धेरै बेरसम्म उनी अर्धमुर्छित अवस्थामै रहेकाले न हिड्न सक्थे न त केही गर्नै सक्थे । अन्ततः होश फर्केपछि उनी आफ्नो कोठाभित्र पसी सप्तविधा-नोत्तर पूजाका प्रार्थना मनमनै जप्न थाले । सप्तविधानोत्तर पूजा त्यति-बेला उनको प्रमुख अभ्यास थियो । तर उनले आफ्नो मनलाई एक ठाउँमा एकाग्र राख्नै सकेनन्, जति जति एकाग्र राख्न खोज्यो त्यत्ति नै भट्किदो रहेछ । केही सीप नलागी उनले सोंचे, "हैन, यो के भइरहेको होला ?" त्यसैले उनले अरू कुनैलाई आलम्बन बनाएनन् केवल शमथ भावना मात्र गरिराखे जसको फलस्वरूप उनलाई पहिले भन्दा राम्रो शून्यता प्रभास्वर-को अनुभूति हुन थाल्यो ।

त्यसपछि, बाटामा भेटेका ती तीनजना मगन्तेहरूलाई गम्पोपाले घरमै बोलाई सागसब्जीले युक्त भोजन तयार गरी पेट नभरून्जेल खुवाए । त्यसै बीच उनले उहाँ महायोगी कहा बस्नुहुन्छ, उहाँको बारे अरू के थाहा छ इत्यादि अनेक प्रश्नहरू उनीहरूसित सोधिरहे । जवाफमा एकजना मगन्ते भन्दछन्, "उहाँ कुतीको गुन्थाङ भन्ने ठाउँमा बस्नुहुन्छ रे । त्यसो त म











आफैले पनि उहाँलाई देखेको छैन तर धेरैजना उहाँलाई भेट्न त्यतातर्फ जाँदारहेछन् । तैपनि धेरैजसोले त उहाँलाई भेट्नै सक्तैनन् । कसैले कुनै स्फटिकले बनेको स्तूप देखें भन्छ भने कसैले उहाँलाई साक्षात् शाक्यमुनि बुद्धकै रूपमा देखें भन्दछ । उहाँ थरी थरी रूपहरूमा प्रकट हुनुहुन्छ । धेरैजसो समय उहाँ ड्रिन र ञनम पहाडहरूमै बिताउनुहुन्छ ।"

गम्पोपाले भने, "म त्यहाँ जान चाहन्छु । के तपाई मसित आउन सक्नुहुन्छ ?" उनीहरूले जवाफ दिए, "हेर्दाखेरी तपाईं निकै तन्नेरी देखिनु-हुन्छ । हामी तपाईसित हिड्न सकौंला त ? तपाईं तिब्बतको दक्षिणी प्रान्ततर्फ जानुहोस्, उहाँलाई भेटाइहाल्नुहुनेछ । किनकि त्यहाँ उहाँको ठूलो ख्याति फैलिएको छ र त्यतातर्फ शायद कमैले मात्र उहाँको नाम न-सुनेका होलान् ।" भोलिपल्ट ती मगन्तेहरू तीनै जना लोप भइ-सकेका रहेछन् । त्यसैले उनीहरू त मिलारेपालाई भेट्न गम्पोपालाई प्रेरणा दिन आएका मिलारेपाकै निर्मित रूपहरू रहेछन् । गम्पोपामा पहिले पनि लामाप्रति अगाध श्रद्धा थियो नै तर यस घटनाले उनको श्रद्धा झनै बढ्न थाल्यो । त्यसपछि उनी अब त म जान्छु जान्छु भनी दृढ निश्चय गरेर कदम्पा गुरुहरूसंग जाने अनुमति माग्न गए । आफ्ना जायजेथा सबै बेचेर केही सुन र चिया किने । यसरी एकजना साथीको साथमा उनले आफ्नो यात्रा प्रारम्भ गरे ।

हिड्दा हिड्दै गुर्मोसम्म आइपुग्दा उनको साथीले अरू अगाडि बढ्न नसक्ने कुरा गऱ्यो । त्यसैले बाटामा भेट्ने विभिन्न मानिसहरूसित त्यस ठाउँका बारे सोध्दै अघि बढ्नु भन्दै गम्पोपालाई एक्लै पठायो । जाँदा जाँदै उनले ञानममा बस्ने दासाङ भन्ने एकजना व्यापारीलाई बाटैमा भेटे । त्यो व्यापारीले भन्यो, "ए योगेश्वर मिलारेपा भन्नुभएको, जसको सुप्रसिद्ध ज्ञान सम्पूर्ण तिब्बतमै व्याप्त छ । अचेल उहाँ छुवारमा बस्नुहुन्छ ।" गम्पोपालाई त साक्षात् मिलारेपाकै दर्शन भएजस्तो अनुभव भयो । खुशीले विभोर भई आँखाभरी आँसु लिएर त्यो व्यापारीलाई अंगालो हाल्नपुगे । त्यसबाट आफ्नो गन्तव्यसम्म पुग्ने सही दिशाका विवरणहरू पाइसकेपछि गम्पोपा आफ्नो बाटो लागे ।











डिंग्रीसम्म पुग्दा नपुग्दै गम्पोपा प्राण वायुको गडवडीले गर्दा असाध्यै विरामी परेर झन्नै मर्नै आँटेका थिए । पानी समेत पिउन नपाई त्यसै अवस्थामा उनी सात दिनसम्म परिरहे । यस्तो अशक्त अवस्थामा पनि उनले आफू जानुपर्ने दिशातर्फ हेर्दै अत्यन्तै श्रद्धाका साथ मिलारेपालाई प्रार्थना गरिनै रहे ।

त्यत्तिबेला, मिलारेपा टासीगाङमा आफ्ना शिष्यहरूलाई धर्मोपदेश गर्दै हुनुहुन्थ्यो । त्यत्तिकैमा उहाँ ध्यानमा लीन हुनुभयो र अकस्मात् हाँस्न थाल्नुभयो । यो देखेर शिष्यहरूले मिलारेपालाई सोधे, "के तपाईले उत्तम शिष्यका मनमा कुनै त्यस्तो विशेष ज्ञान वा प्रतिपत्ति भइरहेको देख्नुभएको हो वा अधम शिष्यको मनमा कुनै मिथ्यादृष्टि मडारिरहेको देख्नुभयो ?"

मिलारेपाले भन्नुभयो, "मैले दुवै देखेको होइन ।"

उनीहरूले फेरि यस्तो विन्ती गरे, "त्यसोभए तपाई किन हाँस्नु-भएको ?"

मिलारेपाले भन्नुभयो, "मध्य तिब्बतका मेरो शिष्य अहिले डिंग्री पुगिसकेका छन् । त्यहाँ उनी असाध्यै विरामी परे । त्यसैले उनले रुदै रुदै मलाई अगाध श्रद्धाका साथ पुकारे । उनको त्यत्रो श्रद्धा देख्दा म मा उनीप्रति ठूलो करुणा जागृत भयो र समाधिमा मैले उनलाई अधिष्ठित गरिदिएकोले उनको रोग सबै निको भएर गए। त्यसैले अत्यधिक खुसी भएर म हाँसेको थिएँ ।" भन्दाभन्दै मिलारेपाको आँखाबाट पनि आँसु झर्न थाले । स्वास्थलाभ भइसकेपछि, गम्पोपा आफूले भेटेका सबैलाई मिलारेपा कहाँ बस्नुहुन्छ भनी सोध्दै हिडिरहेकै बेला अकस्मात् एकजना दानपति स्त्रीसित उनको भेट भयो । दानपति स्त्रीले भनिन्, "तपाईं कहाँबाट आउनुभएको र कता जाँदै हुनुहुन्छ । "म मध्य तिब्बतबाट आएको हुँ र मिलारेपाको दर्शन गर्न जाँदैछु । त्यसपछि ती स्त्रीले निवेदन गरीन, "ए त्यसोभए ठीकै भयो, आज मेरो घरमा आउनुभै भोजन ग्रहण गर्नुहोस् । तपाई आउनुहुन्छ भनेर पूज्य गुरु मिलारेपाले हिजै भविष्यवाणी गर्नुभएको थियो । हिजो तपाई अस्वस्थ हुनुभएकोले उहाँले समाधिको अवस्थामै तपाईलाई अधिष्ठित पनि गरिदिनुभएको थियो । उहाँले यो पनि भन्नुभएको छ कि जसले तपाईलाई











उहाँ सामु ल्याईपुऱ्याउछ ऊ साँच्चिकै मोक्षको भागी बन्नेछ । त्यसैले भोलि नै म तपाईंलाई उहाँकहाँ पुऱ्याईदिन्छु हुन्न ।"

यो सब सुनेर गम्पोपाको मनमा अनायासै अलिकता अहंभाव पसेछ र आफू त अत्यन्तै पुण्यवान रहेछु भनेर सोँच्नपुगे । यो कुरा मिलारेपाले आफ्नो योगबलले थाहा पाउनुभएको रहेछ । अतः गम्पोपाको अहंकार-लाई नाश गर्न १५ दिनसम्म मिलारेपाले दर्शन नै दिनुभएन । १५ दिनपछि गम्पोपाले मिलारेपालाई टाशीगाङ्गमा पहिलोचोटि भेट्ने अवसर प्राप्त गरे । त्यहाँ आफूले ल्याएका चिया, सून र अन्य सामग्रीहरू सबै चढाएर गुरुलाई अनेकौ चोटि दण्डवत गरे । छातिको ठीक अगाडि दुवै हात जोडेर उनले विन्ति चढाए, "म धेरै नै टाढाबाट केयौं कठिनाई कष्टहरू भेली कहिले सद्धर्म प्राप्त गर्न पाउँला भन्ने तीव्र खुल्दुलीका साथ बल्ल यहाँ आइपुगेको छु । हे परमपूज्य गुरु ! कृपया मलाई शिष्यको रूपमा स्वीकार्नुहोस् ।"

मिलारेपाले भन्नुभयो, "मेरा भारतबाट आएका केही शिष्यहरू छन् । उनीहरू त तिमी भन्दा पनि टाढाबाट आएका छन् ।" त्यस समय मिला-रेपा मद्यपान गरिरहनुभएको थियो । कपालमा अलिकति रक्सी बाँकी नै थियो । सबै गम्पोपालाई नै पिउन भन्नुभयो । एक भिक्षु भएको नाताले गम्पोपा त्यतिका मानिसहरूको अगाडि त्यो रक्सी पिउन हिच्किचाए । त्यो देखेर गुरुले भन्नुभयो, "ज्याँदा नसोच, खुरुक्क पिइहाल त !" गल्ती होला कि भन्ने डरले गम्पोपाले कपालमा भएको रक्सी जम्मै एकै घुटमा पिएर सिध्याइदिए । त्यो राम्रै लक्षण थियो जसले मिलारेपासित भएका जम्मै उप-देश कुनै नछुटाइकन प्राप्त गर्नमा गम्पोपा योग्य छन् भन्ने जनाउँदथ्यो ।

मिलारेपाले सोध्नुभयो, "तिम्रो नाम के हो ?"

उनले उत्तर दिए, "मलाई सोनाम रिन्छेन (पुण्यरत्न) भनेर बोलाइन्छ ।"

मिलारेपाले भन्नुभयो, "सोनामको अर्थ पुण्य सम्भार हो र रिन्छेन भन्नाले तिमी सबै सत्त्वहरूका लागि रत्नसमान दुर्लभ छौ भन्ने हो ।" यसरी नै तीनपटकसम्म भन्नुभयो । त्यसपछि गम्पोपाले गुरुको जीवनी र मुक्तिका कथा भन्न अनुरोध गरे । गुरु मिलारेपाले भन्नुभयो, "मप्रति अगाध श्रद्धा लिएर तिमी यहाँ आयौ, यो साँच्चै नै आश्चर्य एवं खुशीको कुरो हो











तर मलाई तिम्रो सुन र चिया चाँहि चाहिँदैन । पछि तिम्रै साधनाका लागि यी सब सामग्रीहरूलाई प्रयोग गर्नू । मेरो जीवनी र मुक्तिका बारेमा म यो गीत गाउँदैछु, ध्यान दिएर सुन :

निष्प्रपञ्च धर्मकायरूपी आकाशमा
अविच्छिन्न करुणाको बादल एकत्रित पार ।
म मेरा अति करुणावान
एवं संस्कारसम्पन्नहरूका शरण
परमपूज्य गुरु मारपाको चरणकमलमा दण्डवत गर्छु ।

दाँहिनेतर्फ मेरो औरस पुत्र रेच्छुङ पा छन्
र बाँयातर्फ शिवा ओ छन् ।
दुवैजनाले मेरो यो गीतमा साथ दिएका छन् ।
हे वैद्य, मेरो गीत सुन ।

भारतको परम पावन भूमिमा
थुप्रै त्यस्ता गुरुहरू पनि छन् जो रवाफ देखाउँदै हिड्छन् ।
तर त्यहीँ दुईजना त्यस्ता व्यक्ति पनि छन्
जो सूर्य र चन्द्रका रूपमा चिनिन्छन् ।
ती हुन् नारोपा र मैत्रीपा ।
यी दुवै महासिद्धका औरस पुत्र, त्रिकाल बुद्धका निर्माणकाय
महा अनुवादक (महालोचावा) मारपा नै हुनुहुन्छ ।
उहाँ मण्डलका प्रमुख देव हुनुहुन्छ
र संस्कारसम्पन्न सत्त्वहरूलाई (धर्मतिर) आकृष्ट गर्न
उहाँको ख्याति डाक तथा डाकिनीहरूले सर्वत्र फैलाउँदछन् ।
उहाँको नाम सुन्दा म आफूलाई थाम्नै सकिन ।
ठूलो परिश्रमले म उहाँको नजीक पुगेँ ।
उहाँलाई देख्ने वित्तिकै मभित्र ठूलो प्रीति











र सुखको अनुभूति सञ्चार हुनथाल्यो ।
अनि तत्कालै उहाँको चरणकमलमा नतमस्तक भएर
मलाई गम्भीर उपदेश प्रदान गर्नुहोस् भनी विन्ति चढाएँ ।
बुद्धसमान मेरा पिता गुरुले भन्नुभयो,
'नारोपाको कृपा एवं अनुकम्पाले
म आज तलवारसरी धारिला उपदेशहरूले समन्वित भएको छुँ
जसले यसै जूनीमा संसारको सन्ततिलाई चटक्कै काट्न सक्दछ ।'
एकदमै गरीब भएकाले गुरुदक्षिणा दिनको लागि
पनि मसँग पैसा थिएन ।
तैपनि काय, वाक र चित्त यी त्रिद्वारले
भरमग्दुर परिश्रम गरेर मैले उहाँलाई खुसी पारेँ ।
मेरो उत्साह र श्रद्धा देखेर
आफ्नो सर्वदर्शी नेत्रले हेरी उहाँले मलाई करुणापूर्वक भन्नुभयो,
चार योगका उपदेशहरू अहिले उपयुक्त छैनन्
कुनै ज्यादै काँचा छन् भने कुनैमा ज्यादै पाका छन् ।
सब थाहा पाउँदा पाउँदै जोखिमै उठाएर
आफ्नो शिष्यलाई ती उपदेशहरू प्रदान गरिए पनि
खालि टाउको दुःखाई मात्र हुनेछ,
त्यसबाट लाभ केही हुनेछैन ।
'यस कलियुगमा क्षण (फुर्सद समय) कमै मात्र पाइन्छ
पूरै जीवन वृथा कार्यहरू र व्यस्तताले भरिन जान्छ ।
त्यसैले खालि अध्ययनमा मात्र आफ्नो समय खेर नफाल ।
भावनालाई नै आफ्नो मूलभूत अभ्यास बनाऊ ।'
मेरा गुरुले ममाथि लगाउनु भएको गुणको बदला चुकाउन,
र मृत्युको भयबाट आफू सदाको लागि मुक्त हुन,
मैले ठूलो संकल्पका साथ कठोर परिश्रम गरेर ध्यान गरेँ र
आफ्ना अकुशल चित्तलाई अधिष्ठानमा बदलिदिएँ ।
त्रिविष (राग, द्वेष र मोह) का वास्तविक स्वरूपलाई नै











यर्थाथरूपले बोध गरिसकेपछि
मलाई सर्वत्रगत त्रिकाय (निर्माणकाय,
सम्भोगकाय र रूपकाय) को अवबोध हुनथाल्यो ।
संस्कारसम्पन्न भएकाहरूलाई परम्पराका
सबै अधिष्ठान, अनुभूति (अधिगम) र प्रतिपत्ति
हस्तान्तरण गर्नका लागि,
म तिमीलाई गम्भीर मौखिक उपदेशको शिक्षा दिदैंछु ।
त्यसैले खुब अभ्यास गरेर ती बुद्धका
उपदेशहरूलाई यत्रतत्र फैलाउनू ।
हे वैद्य, यी कुराहरूलाई मनमा बसाइराख्नू ।
अनि शीघ्र नै तिमी वीतराग सुखको अवस्थामा पुग्नेछौ ।
यहीं मेरो एक योगीको संक्षिप्त जीवनी र मुक्ति हो ।
अरू बढी छलफल पछि गर्दै गरौंला ।
यो सुन यस वृद्ध व्यक्तिलाई पटक्कै सुहाँउदैन ।
र चिया उमाल्न मसंग कुनै भाँडो छैन ।
काग्यु परम्परालाई धारण गर्ने हो भने
मेरो जीवनलाई हेर र मैले जस्तै अभ्यास गर ।
तिम्रो प्रश्नको मेरो उत्तर यहीं हो ।

“तिमीले पहिले पाएका अभिषेक र उपदेश अपर्याप्त छन् भन्न खोजेको होइन तर सही कर्मजन्य सम्बन्धलाई जोड दिन मात्र खोजेको हुँ । त्यसैले म अब तिमीलाई अभिषेक दिंदैछु ।” त्यसपछि सिन्दुर पोतेर वज्रयोगिनीको मण्डल बनाई मिलारेपाले सबै अभिषेकहरू र श्रुत परम्पराका सबै अधिष्ठानहरू प्रदान गर्नुभयो । विस्तारै विस्तारै क्रमबद्धरूपले गम्पोपालाई उहाँले खुसीसाथ सबै गम्भीर उपदेशहरू र शिक्षाहरू दिनुभयो । त्यसपछि एकवर्षसम्म ध्यानको अभ्यास गरेर गम्पोपाले नाडी र चक्रका सबै गुणहरूलाई सिद्ध गरे । यसले गर्दा गुरुका उपदेशप्रतिको उनको गहिरो विश्वास एवं निश्चितता अझ बढ्न थाल्यो ।











पहिले आफूले पहिले पाएका शिक्षा र उपदेशहरूप्रति उनको मनमा थुप्रै शंका उपशंका उब्जिन थाले । पछि ती सबै शंकाहरूका विषयमा मिलारेपासित छलफल गरेर समाधान गरे । अनि मिलारेपाले उनलाई यस्तो उपदेश दिनुभयो, “हे वैद्यगुरु, दृष्टिको पछि नलाग्नू, बरु भावनालाई मात्र पछ्याइराख्नू । शून्यताको भावना गर्दा भ्रमित हुने धेरै कारणहरू छन् । आफ्नै अधिगम (प्रतिपत्ति, बोध)मा पनि भ्रमित हुनसक्छ मान्छे ।” यसरी मिलारेपाले विस्तृतरूपले व्याख्या गर्नुभयो । त्यसपछि निम्न गीत गाउनुभयो :

हे वैद्य ! आफ्नो चित्तलाई हेर्नु नै दृष्टि हो ।
अवश्यपनि त्यो अग्र दृष्टि हो ।
आफ्नो चित्तभन्दा बाहिर दृष्टि खोज्यौ भने
अन्धो धनीले घर छोडी सुनको खोजीमा
यताउता बरालिएसरह हुनेछ ।

हे वैद्य ! स्त्यानमिद्ध र औद्धत्यलाई हटाउनुपर्दैन ।
अवश्यपनि त्यो अग्र भावना हो जसमा
ती निवरणहरूलाई हटाइदैन ।
ती नीवरणहरूलाई हटाउने कोशिस गरे
उज्यालो घाममा बत्ती बाले सरह हुनेछ ।
हे वैद्य ! उपादेय र हेय बीच भेदभाव नराख ।
अवश्यपनि त्यो अग्र भावना हो जसमा
उपादेय र हेय बीच भेदभाव राखिन्न ।
चर्या गर्दा उपादेय र हेय बीच भेदभाव राख्न थाल्यौ भने
हे वैद्य ! माकुराको जालमा मौरी अल्झिन पुगेको जस्तो हुनेछ ।

हे वैद्य ! शुद्धात्म धर्मासन्देह (confidence in the pure mind)
ले युक्त भएर समभावमा रहनू











अवश्यपनि त्यो अग्र समय हो
अन्यत्र समय खोज्यौ भने
नदीलाई उल्टो दिशातर्फ बगाउनु सरह हुन्छ ।

हे वैद्य ! तिम्रो आफ्नै मनमा भएको
गहिरो अनादिज्ञानसित परिचित हुनू ।
अवश्यपनि त्यो आफैमा अग्र फल हो
स्वयम्भू अनादिज्ञानको फल अन्त कतै खोज्यौ भने
भ्यागुतोले उफ्रेर आकाश छुन खोजे सरह हो ।

हे वैद्य ! परम गुरु तिम्रो मनभित्रै छ, त्यसलाई चिन ।
अवश्यपनि त्यो परम गुरु हो
गुरुलाई बाहिर अन्त कतै खोज्यौ भने
आफ्नै मनलाई त्यागेको सरह हुनेछ ।

हे वैद्य ! त्यसैले, संसार र निर्वाणका सम्पूर्ण दृष्टधर्महरू
खालि तिम्रै मनका उपज मात्र हुन् ।

तसर्थ, गम्पोपाले "गुरुका शब्दहरू साँचा रहेछन्" भन्ने सोची पहिले भन्दा ज्यादा मिहेनत गरेर ध्यान गर्न पुगेछन् ।

कुनै बेला गम्पोपाले चौविसवटा वेग्ला वेग्लै लक्षणहरू भएका सपना देख्नपुगे । ती सबैलाई उनले गएर मिलारेपालाई सुनाएपछि मिलारेपाले गीतमै ढालेर सबैको व्याख्या गरिदिनुभयो र भन्नुभयो, "हे पुत्र, हे विनयधर भिक्षु वैद्य, तिमीले पाएका लक्षणहरू सबै तिम्रै भावी परम्परासित सम्बन्धित छन् । मैले भर्खर भनेका कुराहरूलाई कहिलेपनि नविर्सिकन मनमा साँचेर राख्नू, र पछि ती सब सही हुन या गलत आफैले पहिल्याउनू वा तिनको साक्षी तिमी आफै बन्नू । तिमीले चित्तको अकृत्रिम (अबनावटी) स्वरूपलाई











साक्षात्कार गर्नेछौ । त्यसबेला तिम्रो मनले अहिले भन्दा अधिक श्रद्धा उत्पाद गर्नेछ जसको फलस्वरूप तिमीले मलाई नै बुद्ध वज्रधरको रूपमा देख्नेछौ । यही जन्ममा तिमी जन्म र मरणबाट मुक्त हुनेछौ ।

सामान्यतया, श्रेष्ठ ध्यानी नै बन्न चाहन्छौ भने यस्ता सपना वा अन्य अनुभूतिहरूमा आशक्त हुनु हुँदैन । अन्यथा तिमीलाई सधैं मारले पछ्याउनेछन् । "अरूले जे भन्छन्, ती सबैलाई सुन्दै नसुन्नू, गुरुका उपदेश र तिम्रो आफ्नै अधिष्ठानमा मात्र आश्रित हुनू । अन्यथा तिम्रो मन विक्षिप्त हुनेछ । गुरुलाई आफ्नो काय, वाक् र चित्त चढाउनू ।"

आफ्नो मनलाई यस जन्म र पुनर्जन्मका कुराहरूमा भटक्न नदिई केवल गुरुका उपदेशहरूलाई मात्र अनुशरण गरिराख । अन्यथा गुह्य मन्त्रको प्रथम मूलापत्तिमा फस्ने डर हुन्छ । जसले यस जन्म र पुनर्जन्मका सबै सुखका मूलहरूलाई नष्ट पारिदिन्छ ।

कल्याणमित्रहरूका दोष खोज्दै नहिड्नू । कपटी नहुनू वा अकुशल विचारहरू मनमा नल्याउनू ; परचित्त ज्ञान नभैकन यसरी दोष खोज्दै हिड्यौ भने मूलापत्ति हुनेछ ।" इत्यादि थुप्रै कुट उपदेशहरू (pith instructions) मिलारेपाले गम्पोपालाई प्रदान गर्नुभयो ।

त्यसपछि उहाँले भन्नुभयो, "तिमी यहाँ बस्नुपर्दैन । पूर्वमा अवस्थित 'गम्पो' भन्ने पर्वततिर प्रस्थान गर । त्यो पर्वत सिँहासनमा बसिरहेका राजा सरह हो र त्यसको चुचुरो मेरै टोपी सरह हो । त्यो भिरालो पर्वतमा लटरम्म उम्रेका हरिया रूखहरू सुवर्ण मण्डलसरी छन् । त्यस्कै अगाडि बहुमूल्य रत्नहरूका थुप्रा जस्ता देखिने सात पहाडहरू छन् । ती अगाडिका सातै पहाडहरूले त्यो मूल पर्वतलाई मन्त्रीहरू राजासामु नतमस्तक भएझैं झुकेर वन्दना गरिराखेको जस्तो भान हुन्छ । त्यतैतर्फ जाऊ, त्यहाँ तिमीले थुप्रै शिष्यहरू बनाउनेछौ ।" यति भन्दै, मिलारेपाले यस्तो गीत गाउनुभयो :

मेरो पुत्र, हे विनयधर भिक्षु,











तिमी मध्य तिव्वत जाने हो कि होइन ?
यदि जाने हो भने त्यहाँ कहिलेकाही
तिम्रो मनमा भोजन गर्ने इच्छा जाग्ला ।
जब जब यस्ता रहरहरू मनमा जाग्छन्,
तब भोजनको रूपमा अनाश्रव समाधिलाई नै ग्रहण गर ।
सबै मिठा मिठा भोजनहरू भ्रान्ति मात्र हुन भनेर जान ।
मनमा जस्तो सुकै अनुभूतिहरू उत्पन्न भए पनि
तिनलाई धर्मकायकै रूपमा लिनू ।

कहिलेकाही चिसो हुँदा कपडाहरूप्रति मोह जाग्ला ।
कपडाप्रति मोह जाग्दा चण्डालीका न्यानो
सुखद अनुभूतिलाई नै कपडाको रूपमा पहिरिनू ।
सबै नरम र राम्रा वस्तुहरू भ्रान्ति मात्र हुन् भनेर जान ।
मनमा जस्तो सुकै अनुभूतिहरू उत्पन्न भए पनि
तिनलाई धर्मकायकै रूपमा लिनू ।

कहिलेकाही आफ्नो घरप्रति मोह जाग्ला ।
घरप्रति मोह जाग्दा धर्मताको नित्य स्थानलाई
आफ्नो घरका रूपमा प्रयोग गर ।
तिम्रो घर खालि भ्रान्ति मात्र हो भनेर जान ।
मनमा जस्तो सुकै अनुभूतिहरू उत्पन्न भए पनि
तिनलाई धर्मकायकै रूपमा लिनू ।

कहिलेकाही धनप्रति मोह जाग्ला ।
धनप्रति मोह जाग्दा सप्तरत्नलाई नै
धनको रूपमा प्रयोग गर ।
तिम्रा सबै धन खालि भ्रान्ति
मात्र हुन् भनेर जान मनमा जस्तो सुकै











अनुभूतिहरू उत्पन्न भए पनि
तिनलाई धर्मकायकै रूपमा लिनू ।

कहिलेकाही साथीहरूप्रति मोह जाग्ला ।
साथीहरूप्रति मोह जाग्दा स्वयम्भू
ज्ञानलाई नै आफ्नो साथी बनाऊ ।
सबै साथीहरू भनेका भ्रान्ति मात्र हुन् भनेर जान ।
मनमा जस्तो सुकै अनुभूतिहरू उत्पन्न भए पनि
तिनलाई धर्मकायकै रूपमा लिनू ।

कहिलेकाही गुरुलाई भेट्ने ठूलो रहर मनमा उठ्ला ।
गुरुलाई भेट्ने रहर उठ्दा गुरु तिम्रै
ब्रह्मरन्ध्र (शीर) मा तिमीबाट अभिन्न भै
बसिरहनुभएको छ भनी भावना गर ।
तिम्रै हृदयमा गुरु बसिरहनुभएको छ भनी भावना गर ।
उहाँलाई कदापि नभुल्नू ।
आखिर गुरु पनि खालि भ्रान्ति बाहेक केही होइनन् ।
यो कुरा तिमी बुझ ।
संक्षेपमा सबै धर्म भ्रान्तिमय छन् भनी बोध गर ।

पूर्वमा अवस्थित गम्पो पर्वत सिँहासनमा आसीन राजा सरह हो ।
त्यो पर्वतको सामुन्ने विनयजनहरू पर्खेर बसिरहेका छन् ।
जाऊ त्यहाँ गएर सत्त्वहरूको हित गर ।
जाऊ, तिमी सत्त्वार्थ क्रियामा सफल हुनेछौ पुत्र ।

आजदेखि तिम्रो नाम भिक्षु वज्रधृक जम्बुद्वीपकीर्ति हुनेछ । त्यसपछि मिलारेपाले गम्पोपालाई सबै पूराका पूरै अभिषेकहरू, अधिष्ठानहरू, कुट उपदेशहरू, डाकिनी र धर्मपालहरूको तोर्मा अभिषेकहरू प्रदान गर्नुभयो र











भन्नुभयो, "पुत्र, तिमीले असंख्य सत्त्वहरूको हित गर्नेछौ । तिमी पहिलो-चोटि यहाँ आउँदा धेरै अद्भूत निमित्तहरू देखापरेका थिए । तिमी यहाँ छँदा, हामीले एक आपसमा दाँजेर हेऱ्यौं, र तिमी मलाई उछिनेर गयौ । मेरो दाँजोमा तिमीले धेरै नै ज्यादा सत्त्वहरूको हित गर्नेछौ भन्ने कुराको संकेत मैले सपनामा पाएँ ।" त्यसैले गुरु खुसी साथ गम्पोपालाई केही दुरीसम्म छोड्न जानुभयो ।

केही दुरीसम्म दुवै संगै हिडे । जाँदा जाँदा एउटा पुलतिर आइपुग्दा मिलारेपाले भन्नुभयो, "केही कारणवश्, म तिमीसित यो पुल नाँघेर जान सक्दिन । एकछिनको लागि तिम्रो भारी यहीँ बिसाऊ, अब अन्तिम-चोटि केहिबेर हामी दुई पितापुत्र यहाँ बसी कुरा गरौँ ।" यति भन्दै मिलारेपाले अधिष्ठित गरिएको सुनौलो रङ्गको अरुर र पितलको सलाई गम्पोपालाई विदाइका कोशेलीका रूपमा दिनुभयो र भन्नुभयो, "जब मलाई अधिगम (Realization) को अनुभूति गर्न निकै गाऱ्हो पर्थ्यो, त्यस-बेला यी साधनहरूबाट म अत्यन्तै लाभान्वित भएँ । आफ्नो ध्यान बढाउन वा घटाउन नसकी तिमीले पनि एक दुइपल्ट कठिनाईहरू झेल्न सक्नेछौ, त्यसबेला यी साधनहरूले तिमीलाई पनि मद्दत नै गर्नेछ ।" तसर्थ मिला-रेपाले महामुद्राका मनको अद्वय स्वरूप र प्राण सम्बन्धी उपदेशहरू प्रदान गरेर भन्नुभयो,

"हे मध्य तिब्बतबाट आएका भिक्षु, घमण्ड र अहंकारलाई त्यागिदिनू, स्नेह र आसक्तिका डोरीहरूलाई चुँडाल्नू र यस जीवनका सबै सांसारिक तृष्णा रागहरूलाई त्याग्नू । अनि मात्र तिमी सच्चा बौद्ध साधक हुनेछौ । सबै उपदेशहरूलाई अभ्यासमा उतार । सधैं मलाई पुकार्नू ; राग, द्वेष र मोहको वशमा परेका दुष्ट व्यक्तिहरूसित कहिल्यै संगत नगर किनकि तिनीहरूको पापको छायाँले तिमीलाई पनि दुषित पारिदिन सक्दछ । कुनै मानिसहरू अरूको दोष बाहेक केही नदेख्ने हुन्छन् र सबैलाई आफ्नै शत्रु ठान्छन् । उनीहरू अरूलाई होच्याउँदै हिड्छन्, धर्मकै आलोचना गर्दै हिड्छन् र सबैको मनमा नराम्रो प्रभाव पार्दै हिड्छन् किनभने उनीहरूको हृदयको भित्री गहिराईमा द्वेषरूपी आगो सधैं दन्किराखेको हुन्छ । उदाहरणको लागि











सर्पलाई लिऔँ । सर्पका पखेटा, हात खुट्टा केही हुँदैनन् । तर्क नै गर्ने हो भने तिनीहरू एकदम कमजोर र निरिह प्राणी हुन् । तैपनि कसैले सर्प देख्यो कि उसको मनमा द्वेष र डर पैदा भइ नै हाल्छ । किनकी सर्प आफैमा पनि द्वेष लुकिबसेको हुन्छ । मनमा द्वेष राख्नेहरूले सबैलाई आफ्ना शत्रु ठान्दछन् ।

अर्कोतर्फ कोही कोही मानिसहरू असाध्यै कञ्जुस हुन्छन् । तुच्छ मन-सायका हुन्छन् - उनीहरूले सब वस्तुको लोभ गर्छन् र सबैथोक थुपार्छन् यहाँसम्म कि एक टुक्रा काठ र केही ढुङ्गाहरू सम्म पनि बाकी राख्दै-नन् । तिनीहरू भन्छन्, “जब हामी बुढो हुन्छौ, हामीलाई जीवन धान्न यी साम्रगीको खाँचो पर्ला, जब हामी मर्छौ, मसानमा हाम्रो नाममा श्राद्ध गरिदिन यी खानेकुरा चाहिएला ।” यस्तो सोँच्दै सामानहरू थुपार्दै जान्छन् । पैसा नभईकन धर्मको अभ्यास पनि गर्न सकिन्न र बोधिसत्त्वलाई पनि पुण्यसंभारका लागि पैसा नभइ हुन्न भन्छन् तिनीहरू । अनि अर्काको छिन्दै सबै प्रकारका लाभ हुने कार्यहरू गर्नमा उनीहरू तम्सिन्छन् । तिनीहरूका रगतै लोभसित मिसिएर भक भक उम्लिरहेको हुन्छ । अझ कोही कोही भन्छन्, “हामीले महायानका उपदेशहरूलाई अभ्यास गर्ने बेला भएको छैन । करुणाको अभ्यास नगर्ने यी मानिसहरू हिनयानको मार्गमा फँस्छन् । हामीले कहिलेपनि एकै मात्र उपदेशमा टाँस्सिएर बस्नु हुन्न । अन्यथा हाम्रो मन साँगुरो र संकीर्ण हुनेछ । माथि भनिएका ती मानिसहरू सबै महा अविद्याको आवरणले ढाकिएका छन् - तिमीले कहिलेपनि तिनीहरूसित संगत नगर्नू, तिनीहरूको कुरालाई वास्तै नगर्नू । तिनीहरूसित कुरा गर्न थाल्यौ भने तिम्रा गुरु को हुन्, के धर्म मान्छौ इत्यादि प्रश्न त उठि-हाल्नेछ । तिम्रो जवाफले गर्दा अन्ततः तिनीहरू क्रोधित हुनेछन् । तिनीहरूको मनमा संकीर्णता जरा गाडेर बसेकाले तिम्रो जस्तोसुकै र ाम्रो सल्लाह उपदेश पनि तिनीहरूले स्वीकार्दैनन्, उल्टै उनीहरूकै रिस खप्नुपर्नेछ । फलस्वरूप उनीहरूले दुर्गतिमा पतन हुने बीउ रोप्नेछन् ।

त्यसैले अर्को शब्दमा भन्दा उपदेश वा सल्लाह राम्रै भए पनि, कुशलै भए पनि उनीहरूलाई पाप गर्नतिर अग्रसर गराउने कारण बन्दछ ।











त्यसैले सधैं बढिरहने त्रिविषका वश्मा परेका ती मानिसहरूसित संगतै नगर्नू वेश ।

तान्त्रिक समयमा भनिएको छ :

श्रावकहरूसित सात दिन भन्दा बढी बस्यौ भने
कुनै तान्त्रिक योगीलाई लाभ भन्दा पनि हानि धेरै हुन्छन् ।
सानो चलाख, सावधान भङ्गेराले जस्तै
आफ्नो चर्याप्रति निकै सावधानी हुनू ।

हे पुत्र ! आफ्नो विनयप्रति घमण्ड नगर । सबै प्राणीलाई करुणा भावले हेर्नू र सबैसित मिलेर बस्नू । सधैं शान्त, करुणावान, क्षान्तिवान, पुण्यवान भइ बस्नू, सधैं ब्रह्मचर्य जीवन निर्वाह गर्नू । आफ्ना विक्षिप्त चित्तमा लगाम लगाऊ । सधैं कम मात्र बोल्ने गर र विक्षेपबाट आफू सधैं जोगिनू । सधैं शान्त र एकान्त अरण्य कुटीमा रहनू, र केही विशेष परि स्थितिमा बाहेक आफ्नो ध्यान आसन छोड्दै नछोड्नू । त्रिशिक्षा (अधिशील, अधिसमाधि र अधिप्रज्ञा) लाई बढाउने कार्यमा आफ्नो सम्पूर्ण समय व्यतीत गरिदिनू ।

तिम्रो आफ्नो चित्त नै बुद्ध हो, गुरु हो भन्ने बोध भए तापनि तिम्रो गुरु, वज्र आचार्यलाई कदापि नत्याग्नू । सबै कर्महरू स्वभावैले शुद्ध हुन्छन् भन्ने बोध भए तापनि साना भन्दा साना कुशल कर्म पनि गरिहाल्नू र विशुद्धि कर्म गरिरहनू । कर्म, हेतु र फलहरू शून्य छन् भन्ने बोध भए तापनि साना भन्दा साना अकुशल कर्म पनि नगर्नू । समापत्ति र पृष्ठलब्धबीचको अभिन्नतालाई पूर्णरूपले बोध गरिए तापनि दिनको चारै प्रहरमा गुरु योगको अभ्यास नबिराइकन गरि नै राख्नू । आफू र अरूबीचको समता (परात्मसमता)लाई राम्ररी बोध गरिए तापनि अरू धर्म वा प्राणीहरूको त्याग अथवा निन्दा नगर्नू । पुत्र ! खरायो वर्ष, अश्व महिनाको चौधौं दिनभित्र मकहाँ फर्कनू । अब मेरो यो गीत सून :











विकल्परहित यथाभूत ज्ञानको उदय
तिम्रो मनभित्र भइसकेपछि
दर्शन, कुराहरूमा नअल्भिनू,
यदि अल्भियौ भने तिमीमा अभिमान बढ्नेछ र
अष्ट लोक धर्ममा फँस्नेछौ ।
हे 'उः' बाट आएका भिक्षु, यो कुरा बुभिन्छ कि बुभिँदैन ?
हे दाक्पोका वैद्य, यो कुरा बुभिन्छ कि बुभिँदैन ?

तिम्रो मन भित्रै स्वयं मुक्तिको उदय भइसकेपछि
तर्क, अनुमान इत्यादिमा नअल्भिनू ।
यदि अल्भियौ भने अनर्थका कार्यकलापमा समय खेर जानेछ ।
विकल्पले रहित अवस्थामा आफूलाई शान्तपूर्वक रहनदेऊ ।
हे उः बाट आएका भिक्षु, यो कुरा बुभिन्छ कि बुभिँदैन ?
हे दाक्पोका वैद्य, यो कुरा बुभिन्छ कि बुभिँदैन ?

जब तिमीले चित्तको शून्य स्वभावलाई साक्षात्कार गर्छौ
एक वा अनेकका धारणाहरूमा नअल्भिनू ।
यदि अल्भियौ भने तिमी उच्छेद अन्तमा फँस्नेछौ ।
शब्द भन्दा पर र विकल्पले रहित धर्मधातुमा
आफूलाई शान्तपूर्वक रहनदेऊ ।
हे उः बाट आएका भिक्षु, यो कुरा बुभिन्छ कि बुभिँदैन ?
हे दाक्पोका वैद्य, यो कुरा बुभिन्छ कि बुभिँदैन ?

जब तिमी महामुद्राको भावना गर्छौ,
आफूलाई काय र वाक्‌ले गरिने
विभिन्न कुशल कर्मका नित्य कर्महरूमा व्यस्त हुन नदिनू ।
अन्यथा तिम्रो अद्वय निष्प्रपञ्च ज्ञान बिलाएर जानेछ ।
मनको अकृत्रिम निज अवस्था (सहज अवस्था) मा रहनू











हे 'उः' बाट आएका भिक्षु, यो कुरा बुझिन्छ कि बुझिँदैन ?
हे दाक्पोका वैद्य, यो कुरा बुझिन्छ कि बुझिँदैन ?

जब भविष्यसूचक संकेतहरू, निमित्तहरू देखापर्दछन्
तिनमा ग्राह वा आशक्ति राखेर अहंकारी वा प्रफुल्लित नहुनू ।
अन्यथा निमित्तहरू पनि मारका सन्देश हुनपुग्छन् ।
अग्राह स्थितिमा रहनू,
हे 'उः' बाट आएका भिक्षु, यो कुरा बुझिन्छ कि बुझिँदैन ?
हे दाक्पोका वैद्य, यो कुरा बुझिन्छ कि बुझिँदैन ?

चित्तलाई हेरी ध्यान गर्दा गर्दै
तिमीले ऋद्धि इत्यादि अभिज्ञाहरूको लोभ नगर्नू
अन्यथा तिमी राग द्वेष र मोहरूपी मारको पञ्जामा फँस्नेछौ ।
इच्छारहित अवस्थामा रहनू ।
हे 'उः' बाट आएका भिक्षु, यो कुरा बुझिन्छ कि बुझिँदैन ?
हे दाक्पोका वैद्य, यो कुरा बुझिन्छ कि बुझिँदैन ?

त्यसपछि मध्य तिब्बतका विनयधर भिक्षु आँखाभरी आँसु पारेर गम्पोपाले मिलारेपाको चरणकमलमा दण्डवत् गरेपछि मिलारेपाले भन्नुभयो, "हे मध्य तिब्बतका विनयधर भिक्षु, अब म तिमीलाई चारैवटा अभिषेकहरू प्रदान गर्दैछु । त्यसैले प्रसन्न हुनू, खुसी हुनू !" यसरी शब्द, गीत र मुद्रा मार्फत जेचुन् मिलारेपाले गम्पोपालाई चारैवटा अभिषेकहरू प्रदान गर्नुभयो । देवाभिषेकद्वारा गम्पोपाको कायलाई देव मण्डलमा अधिष्ठित गरियो । मन्त्राभिषेकद्वारा उनको वाक्लाई अधिष्ठित गरियो र उनले मन्त्रको रूपमा वाक् अधिष्ठान प्राप्त गरे । धर्माभिषेकद्वारा उनको चित्तलाई अधिष्ठित गरियो र धर्मकायरूपी अनुत्पन्न चित्त उनले प्राप्त गरे । त्यसपछि मिलारेपाले आफ्नो खुट्टा गम्पोपाको शिरको ब्रह्मरन्ध्रमा राखेर वज्र आचार्यका अनन्त गुणहरूको सञ्चार गरिदिनुभयो । त्यसपछि समाधि अभिषेक पनि











दिँदै मिलारेपा भन्नुहुन्छ, "मसँग अझै एउटा गम्भीर कुट उपदेश बाँकी छ, तर म त्यसलाई अहिले दिने आँट गर्न सक्दिन, त्यसैले तिमी अहिले जाऊ ।"

गम्पोपालाई एक्लै पठाई आफू त्यही बसिरहनुभयो । गम्पोपा पुल नाँघेर सरासर केही दुरीसम्म हिड्नै पाएका थिएनन्, मिलारेपाले फेरि उनलाई बोलाएर आफूकहाँ फर्कन अऱ्हाउनुभयो । अनि गम्पोपा यसरी फर्केपछि मिलारेपाले भन्नुभयो, "हुन त यो उपदेश दिने आँट त ममा छैन तर तिमीलाई नदिए अरू कसलाई दिने त ? यस्तो सुन्दा गम्पोपाले अत्यन्तै प्रसन्न भएर गुरुलाई सोधे, "त्यसो भए के म मण्डल चढाउँ त ?"

मिलारेपाले जवाफ दिनुभयो, "पर्दैन, मण्डल चढाइ राख्नुपर्दैन, तर यो उपदेशलाई चाँहि त्यसै खेर नफाल्नू नि ।" यति भन्दै मिलारेपाले पछाडिको तल्लो कपडालाई माथि तानेर ठेलै ठेला उठेर घोडाको खुर झैं कडा भइसकेको आफ्नो चाक देखाइदिनुभयो । धेरैसमयसम्म विना चकटी त्यसरी ध्यानमा बसेको बस्यै गरेकाले त्यस्तो हुन गएको थियो । अनि गुरुले भन्नुभयो, "यो भन्दा गम्भीर उपदेश अब मसित छैन । ध्यानभन्दा ठूलो उपदेश अरू हुनै सक्दैन । अब तिमीले यो हेरेरै मैले ध्यान गर्दा गर्दै कति कठिनाई सहें होला भन्ने कुराको चाल पाउन सक्छौ । मेरा अधिगम, ज्ञान वा सिद्धि सबैको श्रोत यहीँ हो । त्यसैले तिमीले पनि अत्यन्तै ठूलो प्रयत्न गरेर आफूलाई ध्यानाभ्यासमा समर्पित गरिदिनू ।"

यो उपदेश गम्पोपाको मनमा पछिसम्म एउटा गम्भीर छाप बनेर रह्‍यो । त्यसपछि गुरुको आज्ञालाई शिरोपर गरेर उनी मध्य तिब्बततिर प्रस्थान गरे ।

उनी गइसकेपछि मिलारेपाले सबै शिष्यहरूलाई जम्मा पारेर भन्नुभयो, "यस विनयधर वैद्य भिक्षुले थुप्रै सत्त्वहरूको हित गर्नेछन् । किनभने आज-राति मैले यस्तो सपना देखेको थिए, एउटा गिद्ध मेरो ठाउँबाट मध्य तिब्बतसम्म उड्दै पुग्यो र त्यहाँ एउटा विशाल पर्वतको चुचुरोमा गइ-बसेछ । अनेक दिशाहरूबाट बथानका बथान सुनौला रङ्ग भएका हाँसहरू











आई त्यहाँ एकत्रित भएछन् । एकैछिनपछि ती हाँसहरू त्यहाँबाट गायब भए तर तुरुन्तै तिनीहरूले आफूसाथ अरू पाँचसय हाँसहरू पनि ल्याए । हुँदा हुँदा पछि त पूरै देश हाँसै हांसले भरिन थाल्यो । हुन त म योगी नै हुँ । तर पनि मेरो परम्परामा अनेक भिक्षु शिष्यहरू हुनेछन् । यस वैद्य भिक्षुले अनेक सत्त्वहरूलाई उद्धार गर्नेछन् । यसप्रकारले बुद्धको उपदेशप्रति मैले सेवा गरेँ, र भगवान् बुद्धको व्याकरणलाई चरीतार्थ पारिदिएँ ।" यस्तो उद्‍गार प्रकट गरी उहाँ औधी खुसी हुनुभयो ।

उता, गम्पोपा लामो बाटो हिडेर मध्य तिब्बतसम्म आइपुगेछन् । त्यहाँ उनले आफ्ना पुराना कदम्पा गुरुहरूसित भेटे । त्यहाँ धेरै छलफलहरू भए । गम्पोपाले कर्मकाण्डका अभ्यासहरूमा मात्र जोड दिन थालेकोले होला, उनको ध्यानमा कुनै प्रगति भएन, पहिले झैँ उष्माको पनि अनुभव हुन छोड्यो र कुनैपनि समाधिगत लक्षणहरू देखापरेनन् । तसर्थ, गम्पोपा-ले हतोत्साहित भएर मिलारेपालाई सम्झी करुण स्वरले भित्रि हृदयदेखि पुकारे । तुरुन्तै उनले आफ्नै अगाडि मिलारेपा उपस्थित भएको अनुभव गरे । त्यसै क्षणमा उनले चित्तको अकृत्रिम स्वरूप (निज स्वरूप) दर्शन गराउने महामुद्राको पूर्णरूपले साक्षात्कार गरे । त्यसपछि उनले यो गीत गाए :

ए मा हो ! (कस्तो अद्‍भूत !)
स्वयम्भू अनादि ज्ञानको यो प्रभास्वर
भव र अभव (सत् र असत्) दुवै अन्तभन्दा पर छ,
शास्वत र उच्छेद अन्तबाट मुक्त छ, निमित्तले रहित छ ।
उत्पाद र निरोध नभएकाले
स्वयम्भू अनादि ज्ञान निष्प्रपञ्च, सुखमयी,
स्वभावैले प्रभास्वर र निराकार (निरालम्ब) छ ।

अनिमित्त सुखको अनुभूति प्राप्त गर्नू,
प्रभास्वर शून्यताको अनुभूति प्राप्त गर्नू,











अभेद्य अद्वयको अनुभूति प्राप्त गर्नू, ग्रहण र त्यागले
रहित प्रभास्वरको अनुभूति प्राप्त गर्नू,
अभिलाषा र भयले रहित फलको अनुभूति प्राप्त गर्नू,
अहो कस्तो अद्‌भूत, मेरो मनले यी
सबैको अर्थ पहिल्याइसकेको छ ।

मनमा असन्देह स्थापित गरेकोले अन्तर्द्वन्दरहित छु,
सबै धर्म मायावत् छन् भन्ने
बोध गरेकोले आशक्ति भय छैन,
सबै विविध धर्म चित्त नै हुन् भन्ने बोध गरेकोले
त्याग र प्राप्तिबाट मुक्त छु ।

सबै क्लेशहरूलाई नै ज्ञानका रूपमा
बोध गरेकोले प्रतिपक्षको जरुरतै पर्दैन ।
चित्तलाई यसरी बोध गरिसकेपछि
धर्मकायको सिद्धि हुन्छ ।

त्यसपछि गम्पोपाले १२१ गेडा भएको बोधिचित्त माला एउटा रूखको काण्डमा बाँधेर यस्तो घोषणा गरे, “यदि मेरो व्याकरण त्रिकाल बुद्धहरूले गरेका हुन् भने यो सजीव रूखबाट यो बोधिचित्त माला पलाएर आओस् ।” त्यसपछि तुरुन्तै हाँगा र हरिया पातहरू पलाउन थाले जसको साक्षी त्यही बोधिचित्त माला नै थियो । त्यही बेला, गम्पोपाले यस्तो उद्‌गार प्रकट गरे, “अनुत्पन्न स्वभाव भएको चित्तको अस्तित्व कुनै पनि रूपमा छैन । तैपनि, यसले सुस्पष्टरूपले सबै रूपहरूमा प्रकट गर्न सक्दछ, र यसबाट सबै-थोक सम्भव छ । कस्तो अचम्म !” त्यसपछि उनले निम्न गीत गाए :

यो प्रभास्वर र शून्य चित्त
दृष्टि हो जुन आज मैले बुझेँ ।











यो अविक्षिप्त, 'सामान्य मन'
भावना हो जुन आज मैले बुझैँ ।

यो प्रतीत्यसमुत्पन्न, अग्राह ज्ञान
अनुभव हो जुन आज मैले बुझैँ ।

यो चित्तमा असन्देह ज्ञानको उदय
बोध हो जुन आज मैले बुझैँ ।
यो स्वतःस्फूर्त अनासक्ति चर्या हो जुन आज मैले बुझैँ ।

यो शून्य, सुस्पष्ट स्वसंवेद्य ज्ञान
धर्मकाय हो, जुन आज मैले बुझैँ ।

अग्रहणको यो शुद्ध मन
फल हो जुन आज मैले बुझैँ ।

अहो कस्तो विशाल रहेछ यो दुर्लभ चित्त !
हेतुकै अवस्थामा पनि फल प्राप्त हुँदो रहेछ ।

अबोध, अदृश्य आश्रवयुक्त विज्ञप्तिको
आवरण नभएको चित्त हो यो ।

तत्पश्चात् गम्पोपा वोल्खा, ञङ गम् सङरिरेपा इत्यादि ठाउँहरूमा गई अनेक शिष्यहरूलाई परिपाक गरेर मुक्तिसम्म पुऱ्याइदिए । त्यसपछि उनले निम्न गीत गाए :

म महासुखदायक धर्मधातुको गीत गाउँदैछु,
प्रज्ञामा स्थित भै म यी शब्दहरू भन्दैछु











र अद्वय तत्त्वलाई प्रतिष्ठापित गर्दैछु ।
आसक्तिले रहित सत्त्वानुलम्बिनी करुणा,
यसलाई महोपायको रूपमा धारण गर ।
यस सहज ज्ञान, यसलाई ज्ञानको रूपमा धारण गर ।

विकल्पका विज्ञप्तिप्रति असन्देहको अनुभूति,
यसलाई धर्मकायको रूपमा धारण गर ।
साँच्चिकै अनुभवै गरेपछि मात्र
तिमीले यसको स्वरूप थाहा पाउन सक्छौ ।
यस वासनागत (संवृति) प्रतिभास र परिकल्पित संज्ञाका शब्दहरू,
यिनलाई परमार्थका रूपमा धारण गर,
जब दृढ विश्वास (असन्देह) प्राप्त हुन्छ,
तब तत्त्वको साक्षात्कार हुन्छ ।




यसका अर्थ पहिल्याउन चाहन्छौ भने
अविरल प्रवाहका साथ बग्ने नदी जस्तै
निरन्तर अभ्यास गरिराख्नू
मनलाई अकृत्रिम (अबनावटी) अवस्थामा
रहन दिई होलो तुल्याउनू
मनलाई प्रविचय (उत्सुकतावश अरू जान्ने,
खोजीनीति गर्ने स्वभाव) गर्न नदिई निज अवस्थामा राख्नू ।
निष्प्रपञ्च, निर्विकल्प एवं निरालम्ब अवस्थामा मनलाई राख्नू ।

अनुभव र अधिगम (बोध) लाई एकत्रित पार,
अविच्छिन्नरूपले भइरहेको अनुभव नै अधिगम (बोध) हो ।
आकाश जस्तै भएका हुँदा यी समरसका छन् ।
जब चित्तलाई बुद्धको रूपमा हेरिन्छ
यी समरसका बन्न पुग्दछन् ।











अहिले धर्मतालाई मैले वस्तुतः साक्षात्कार गरेको छुँ ।
विज्ञप्ति स्वयंमुक्त भएको छ ।
निर्विकल्प अवस्थामै मलाई अनाभोग
ज्ञानको साक्षात्कार भएको छ ।

यो सर्वसाधारण (पृथग्जन) को विषय होइन ।
धेरै महान प्रकाण्ड विद्वानले पनि यसलाई बुझ्न सक्दैनन् ।
बुद्धिमानहरूको बुद्धिले पनि यसलाई बुझ्न सक्दैन ।
यो विकल्पभन्दा पर छ ।

म अधिष्ठान मार्गमा स्थित हुन्छु ।
गुरुका वचनलाई अनुसरण गर्छु ।
श्रद्धाले युक्त भएकाहरूले बोध गर्छन् यी कुराहरूलाई ।
के तिमीहरूसित यस्तै श्रद्धा छ
हे महाध्यानी, महासाधकहरू हो !
यो कसैलाई भनिहिड्ने कुरा होइन ।

त्यसपछि गम्पोपा चीरकालसम्म समाधिस्थ रहे र पछि थुप्रै शिष्यहरूलाई उपदेशहरू प्रदान गर्दै हिँडे । मिलारेपाले भविष्यवाणी गरेबमोजिम वोत गङ ग्यल भन्ने स्थानीय देवता आएर उनलाई दाल्खा गम्पोका लागि प्रस्थान गर्ने कुरा याद दिलाए । सोही निर्देशन अनुसार गम्पोपा त्यहाँ पुगे । त्यतैतिर कुनै गुफामा बसेर १२ वर्षसम्म सिद्धचर्या गरेर बिताउने निधो गरे । तर कुनै डाकिनीले आएर उनलाई यसरी अर्ती दिँदै भनिन् :

कुनै गुफाभित्र ढोका बन्द गरी बसेर १२ वर्षसम्म
सिद्धचर्या गर्नुभन्दा त्यत्ति नै वर्ष सत्त्वहरूलाई
धर्मोपदेश गर्दै विताउनु नै वेश !











यति भन्दै उनी अन्तर्धान भइन् ।

यसको लगत्तै, चाङका लोक क्य नामक अति नै आडम्बरी र अष्ट-लोकधर्ममा चुर्लुम्म डुबेका एक व्यक्ति विनयधर भिक्षु गम्पोपाकहाँ आइपुग्यो । ती भिक्षुद्वारा उपदेशको लागि अनुरोध गरिँदा गम्पोपाले यस्तो गीत गाएर सुनाइदिए ।

पञ्च स्कन्ध बुद्ध हुन् ।
कायप्रतिको आसक्तिले बाँधिएका छैनौ त तिमी ?

अभ्यन्तर गुह्य मन्त्रको चर्या -
हीन चर्याबाट भ्रमित भएका छैनौ त तिमी ?

समय र संवरका जिवित वृक्ष -
क्लेशरूका अग्निले त्यसलाई जलाएका छैनौ त तिमीले ?

मातारूपी षड्गतिका सत्त्वहरू -
आफ्नो क्षुद्र लाभ वा स्वार्थको लागि
तिनीहरूलाई त्यागेका छैनौ त तिमीले ?

अविच्छिन्न समाधि -विकल्पले तितरवितर
त भएका छैनौ त तिमी ?

अनाभोग र अविपरिणामित दृष्टि
दुई अन्तमा फँसेका छैनौ त तिमी ?

आसक्तिरहित महासुख र सुस्पष्टताको यस भावना -
अनुभूतिका सरेसमा टाँसिएका छैनौ त तिमी ?











अनाभोग स्वयम्भू चर्या -
कृत्रिम चर्याबाट मोहित भएका छैनौ त तिमी ?

अनुत्तर संवरका विकाल चर्या -
गुह्य मन्त्रका समयलाई तोडेका छैनौ त तिमीले ?

भित्रि विश्वासको अभाव -
कर्म र फलको नियमलाई विरोध गरेका छैनौ त तिमीले ?

सबै योग्यताहिन साधकहरू -
के तिनीहरू घमण्ड (अहंकार) को पहाडमुनि थिचिएका छैनन् त ?

के तिमी अष्टलोक धर्मको जालोभित्र फँसेका छैनौ त ?
यस भवको अङ्कुशमा अल्झिएका छैनौ त ?
सबै साधकहरू हो, होस गर !
यहाँ थुप्रै भयावह र नदेखिने भीरहरू छन्
जहाँबाट तिमीहरू खस्न सक्छौ ।

गम्पोपाले यस्तो धर्मगीत गाएपछि लोकक्या भिक्षुले त्यसको अर्थ पूर्णरूपले बुझेर तदनुसार महती श्रद्धाका साथ भित्री हृदयदेखि अभ्यास गर्न थाल्यो । पछि ऊ एक ख्यातिप्राप्त योगी भएर निस्क्यो ।

समय वित्दै जाँदा गम्पोपाले मध्य, दक्षिण पश्चिमी, र पूर्वी तिब्बतका अनगिन्ती व्यक्तिहरूलाई आफ्ना शिष्य बनाए । आचार्य गम्पोपाले कदम्पा र महामुद्रा परम्पराका दुई धाराहरूलाई एकाकार गरेर नूतन परम्पराको स्थापना गरे । जस अनुसार उस्, चङ र खाम प्रान्तका असंख्य शिष्यहरूलाई आफ्नो बौद्धिक स्तरले निर्देश, व्याख्यान र उपदेश दिए । उनका शिष्य मण्डलीमा सूत्र, तन्त्र तथा अन्य अन्य विद्याहरूमा पारंगत, नाडी र बिन्दुयोग-मा दक्षता प्राप्त, बाऱ्ह धुताङ्ग शिक्षामा निष्णात अनेक शिष्यहरू थिए । ती











सबै शिष्यहरू पवित्र स्थलहरूमा एकान्तवास गर्दै आ-आफ्ना साधनामा तल्लीन रहे । यसरी पुरा देश नै त्यस्ता सिद्ध गुरूहरूले खचाखच भरिन थाल्यो ।

## खण्ड २ : ऋद्धिप्रातिहार्य

गम्पोपाले अचिन्त्य ऋद्धिप्रातिहार्य गरेका थिए जसको संक्षिप्त विवरण तल दिइनेछ ।

गम्पोपा पहिलो महिनाको तेऱ्हौं दिनमा ल्हासा आइपुगे । त्यहाँ उनी अभिषेकको लागि तयारी गर्नतिर लागे । भोलिपल्ट अर्थात् चौधौं दिनमा उनले अभिषेक प्रदान गरे । र गणचक्र पूजाका साथ समारोहको अन्त्य गरियो । यो घटनाका बारेमा ल्हासाका थुप्रै मानिसहरूले एक आपसमा छलफल गर्दै थिए । यजमान गेबुम्ले यस्तै कुरा सुनाउँदै थियो, 'गुरु तेऱ्हौ दिनमै मेरो घरमा पाल्नुभई आवश्यक तयारी गर्नुभयो र चौधौ दिन-मा अभिषेक प्रदान गरेर पन्ध्रौ दिनमा गणचक्र पूजा गर्नुभएको थियो । त्यसपछि उहाँ आकाशमा उडेर जानुभयो । अहो कस्तो आश्चर्यलाग्दो घटना !' गम्पोपाकै मूल विहारमा बस्ने भिक्षुहरू भन्दछन्, "पूज्य गम्पोपा गुरु आफ्नो पुरश्चरण साधना गृहबाट तेऱ्हौं दिनमा बाहिर निस्कनुभयो । चौधौं, पन्ध्रौं र सोऱ्हौं दिनमा उहाँले तिब्बतका सबै ठाउँहरूबाट आएका शिष्यहरूलाई ध्यानका बारेमा प्रवचन दिनुभयो । त्यतिबेलासम्म त्यहाँबाट कतै जानुभएको थिएन ।" तर उनकै अनुचर सल् ग्यङ् भने यसो भन्छन्, "परम पूज्य गुरुले पूरै तीन महिनासम्म आफ्नो साधनागृहमै बिताउनु-भएको थियो । त्यसबीच उहाँले उपदेश पनि दिनुभएन केवल मौन व्रत लिई पुरश्चरण अभ्यासमा ती सम्पूर्ण दिनहरू बिताउनुभयो ।" यस प्रकार एकैचोटि गम्पोपा चार ठाउँहरूमा प्रकट भएका थिए ।

कुनै बेला, उनकै शिष्य लेग्जेले यस्तो प्रश्न सोधेको थियो, "पहिले-का समयमा श्रावक तथा अन्य बौद्ध अनुयायीहरूले वशीकरण समाधि तथा सर्वत्रग समाधि इत्यादि लाभ गरेका थिए । उहाँहरूले त्यस्ता समाधि











कसरी लाभ गर्नुभयो होला ?" अनि गम्पोपाले जवाफ दिए, "यदि अभ्यास गरेका खण्डमा साधकहरूले त्यस्ता समाधिहरू आज पनि पाउन सक्छन् । त्यसमा कुनै शंकै छैन ।" भोलिपल्ट विहान गुरुलाई दही टक्र्याउन गुरुको कोठा भित्र पस्दा लेग्जेले त्यहाँ गुरुलाई देखेन । त्यहाँ गुरु सुत्ने ओछ्यानमा त दन दन आगो बल्दैथियो । त्यसरी दलिनै छुने गरी भयानक तवरले दन्किराखेको आगोको लप्का देख्दा डरले उसको सातो पुत्लो उड्यो । अनि हतार हतार कोठाबाट हुत्तिएर बाहिर निस्क्यो । यी सबै कुरा उसले डराई डराई सल ग्यइलाई सुनायो । त्यसपछि दगुर्दै उनीहरू त्यही कोठाभित्र पस्दा भित्र त आगो को चिन्ह समेत पनि थिएन, त्यहाँ त धर्म गुरु गम्पो पा आफ्नो धर्मासनमा बसिरहेका थिए । यस तवरले उनले पाँच धातुलाई वशमा पारेर सर्वत्रग धर्मधातुमा परिणत गर्ने समाधिको नमूना प्रदर्शन गरिदिए ।

अरू कुनै बेला, दिउँसो गम्पोपा बाहिर घाममा उभिरहेका थिए । तर अच्चमको कुरो ! त्यस्तो घाममा उँभिदा पनि उनको त छायाँ नै देखिएको थिएन । त्यस्तै राति बत्तीको सामु उभिँदा पनि उनको छायाँ देखिएन ।

एकपल्ट, गम्पा लो द्रो गुरुलाई एकलाख कार्पाषिक पत्रहरू चढाउन आएको थियो । गम्पोपाको कोठाभित्र पस्ने अनुमति पाएपछि ऊ सरासर भित्र पस्यो । भित्र त उसले साक्षात् सहस्रभुज लोकेश्वरको रूप देख्यो । कोठाबाट बाहिर आई गम्पोपाको अनुचर लेग्जेलाई आश्चर्य मान्दै सोध्यो, "हैन, त्यस्तो राम्रो भव्य सहस्रभुज लोकेश्वरको प्रतिमा कसले बनाएका हुन् ? गुरुलाई त मैले देखिन, उहाँ अहिले कहाँ हुनुहुन्छ ? यस्तो कुरा सुने पछि गम्पोपाको अनुचरलाई घोर आश्चर्य लाग्यो । त्यसपछि दुवैजना गम्पो पाको कोठातिर गए । गम्पोपा त भित्र त्यहीँ आसनमा विराजमान भएका थिए जहाँ पहिले सहस्रभुज लोकेश्वरको रूप देखिएको थियो । तर त्यहाँ कुनै पनि प्रतिमा थिएन ।

फेरि एकपल्ट, लामा गोम्छुलले गम्पोपालाई भनेका थिए, "उच्च भूमि प्राप्त भइसकेका बोधिसत्त्वले एउटा एकदमै सानो तोरीको गेडाभित्र तीन हजार लोकधातुहरू प्रकट गर्न सक्दछन् । तोरीको गेडा ठूलो हुँदै जाने वा











तीन हजार लोकधातुहरू सानो हुँदै जाने होइन । तैपनि त्यो गेडाभित्र ती सबै लोकधातुहरू अटछन् । कस्तो आश्चर्यलाग्दो कुरा !"

गम्पोपाले उत्तर दिए, "यही धर्मताको स्वाभाविक अवस्था हो। सांवृतिक अवस्थामा जे कुरा पनि सम्भव छ। मनुष्यका दुइटा साना आँखाले अरूको पूरै शरीर देख्न सकिन्छ । जाबो चार इञ्चको ऐनामा घोडा र हात्तीका ठूल्ठूला जीऊ प्रतिबिम्वित हुन्छन् । एउटा सानो कचौरामा भरिएको पानी-मा पूरै चन्द्रमाको प्रतिबिम्व देख्न सकिन्छ। ल अब मलाई हेर्नुहोस् त ?"

लामा गम्पाले गम्पोपालाई हेर्दा गम्पोपाको शरीर त एउटा विशाल बुद्धको कायमा परिवर्तित भएको देखे । त्यत्रो दाक्ला गम्पोको पहाड जत्तिकै अग्लो विशाल बुद्धको काय पनि त्यही हेर्दैमा पाँचजना मानिस मात्र अटाउने कोठामा पनि मजासंग अटेको देख्दा उनी तिनछक्क परे किनकि कोठाको आकार त बढेको थिएन जस्ताको तस्तै थियो तर तथागत कायको आकार पनि घटेको थिएन विशालै थियो ।

गम्पोपाले भने, "मैले सङ् लुङ्मा बसिरहेको बेला तीन काय कसरी प्रकट हुदारहेछन् भन्ने कुरा थाहा पाएँ । त्यसपछि म औंधी खुसी भएँ । पहिले धेरै मन्त्रहरू जप्दा पनि म पिशाच, प्रेतको प्रभावबाट पूर्णरूपले सुरक्षित भएको थिइन । तर अब भने, मन्त्रै नजप्दा पनि ती प्रेत पिशाचले मेरो केही पनि विगार्न सक्दैनन् । पहिले, विज्ञजनहरू, गेशेहरूलाई भेट्दा मलाई असुरक्षित महशुस हुन्थ्यो । तर अहिले जस्तोसुकै ठूलो विद्वान मेरो सामु आएपनि ममा अलिकति पनि असुरक्षाको अनुभव हुँदैन । किनभने मेरो मनभित्र प्रज्ञाको द्वार खुल्लै छ ।"

एकपल्ट, गर्गम् कार्पोले तेऱ्ह इष्टदेवताहरूको दीक्षा (transmissions) प्रदान गरिदिन गुरु गम्पोपालाई अनुरोध गरे । गुरुले पनि यसमा स्वीकृति जनाए, र मन्त्र पाठ गर्दा गर्दै उनको मुखबाट रातो रश्मी निस्केर गर्गमको शरीरमा गई बिलिन भयो। त्यसपछि, गर्गम्ले ठूलो श्रद्धा उत्पाद गरी गुरुलाई अनेक चोटि दण्डवत् गरे । उनले दण्डवत् गरिरहेको बेला गुरुले आफैलाई चतुर्मुखी बाऱ्ह हात भएका साक्षात् चक्रसम्वर ईष्टदेवको रूपमा परि-वर्तित गरे ।











एकपल्ट, आफ्नी दिवंगत आमाको नाममा क्योगम्ले पञ्चकूलका बुद्धहरूको एउटा चित्र तयार पार्न लगाए । त्यसलाई लिएर उनी गुरु गम्पोपाकहाँ प्राण प्रतिष्ठा गराउन लगे। उनले विनम्र अनुरोध गरे, "हे परम-पूज्य गुरु ! पार्थिव शरीरको तुरुन्तै दाह संस्कार गर्नुपर्ने हुनाले कृपया यसलाई अतिशीघ्र अधिष्ठित गरिदिनुहोस् । गम्पोपाले जवाफ दिए, "हुन्छ गरिदिउँला। तुरुन्तै धूप बाली मण्डल चढाउनुहोस् त।" उनी आफै बुद्धको रूपमा प्रकट भए । उनको उष्णीषबाट इन्द्रेणीका सात रङ्ग भएका रश्मी निस्किएर सो चित्रमा लय भए । आकाशबाट आश्चर्यलाग्दो अत्याद्‌भूत ध्वनिहरू गुञ्जिन थाले। अनि लगत्तै पुष्पवृष्टि भए। क्योगम्ले आकाशतिर हेरेर आश्चर्यचकीत भएर भनेछन्, "शीघ्र प्राण प्रतिष्ठा यसरी पो गरिँदो रहेछ ।"

कुनैबेला, गम्पोपाको नाम मात्र सुनेको भरमै एउटा गोठालेको ध्यान अभ्यासमा अप्रत्यासित प्रगति भएको थियो । त्यस्तै ग्यलगम् दोर्जे भन्ने साधकले गम्पोपालाई कहिल्यै भेटेकै थिएन, तैपनि उनलाई सम्भी अकृत्रिम श्रद्धाका साथ मण्डल मात्रै चढाएको भरमा उनलाई समाधिका बोधहरू भएका थिए ।

एकपल्ट, ञङ् टङ् र शर गम् गम्पोपाबाट ध्यानका उपदेशहरू प्राप्त गर्न हिडिरहेका थिए। तर त्यो दिन, उनीहरू गम्पोसम्म कुनै हालतमा पनि पुग्न नसक्ने भएपछि कुनै रमणीय पहाडी गाउँमै बास बसे । उनीहरूको मनमा ठूलो श्रद्धा उर्लिरहेको थियो। त्यही श्रद्धाले गर्दा नै होला, ञङ् टङ्ले मध्यरातमै महामुद्राको सिद्धि लाभ गरे । पछि विहानपख उनको मित्र शर गम्ले पनि महामुद्राको सिद्धि लाभ गरे ।

कुनैबेला वल् खा की एकजना आइमाईलाई कुष्ठरोगले असाध्यै च्यापे को रहेछ। खुट्टा र हातभरी घाउैघाउ भएकाले उनी हिड्नै नसक्ने अवस्थामा थिइन् । तैपनि ठूलो अकृत्रिम श्रद्धाका साथ गम्पोपा बसिरहेको पहाडतिर हेरी उनले गम्पोपालाई प्रार्थना गरीन् र बारम्बार पुकारीन् । पछि, उनको रोग त पूरै निको भएर गयो । त्यसपछि उनी गुरुलाई भेट्‌न गई गुरुबाट थुप्रै उपदेशहरू प्राप्त गरीन् । पछि उनले ठूलो सिद्धि लाभ गरिन् ।











एकपल्ट गम्पोपा त्रिचिविर पहिरिएर हातका दुवै बुढी औंलाहरू जोडी अमृतमुद्रा बनाएर तीन दिनसम्म उभिरहेका थिए । पहिलो दिनमा उनले सातवटा शरीरहरू प्रकट गरे, दोश्रो दिनमा चौधवटा रूपहरूमा उनी प्रकट भए र तेश्रो दिनमा उनका रूपहरू यति धेरै भए कि पूरै साधनागृह तिनले भरिभराऊ हुन थाले । त्यसपछि फेरि, ती सबै निर्मित रूपहरू एउटै शरीरमा गई विलिन भए ।

यसरी स्वामी गम्पोपाले अचिन्त्य ऋद्धिप्रातिहार्य गरेर देखाए । यहाँ त केवल केही अंशको मात्र व्याख्या गरियो ।

**खण्ड ३ : गम्पोपाको धर्मोपदेश गर्ने शैली**

गुरु गम्पोपाले आफ्नो सबैजसो शिष्यहरूलाई मार्गक्रम (लाम् रिम्) का उपदेशहरू मार्फत विनित गरे । तर कुनै कुनै ज्यादै उच्च श्रेणीका साधक-हरू (उत्तम पुरुषहरू) लाई भने उनले महामुद्रा र नारोपाका षड्योगका उपदेशहरू पनि दिने गर्थे । यसरी उनले अनगिन्ती वैपुल्य र गम्भीर उपदेशहरू आफ्ना कैयौं महाशिष्यहरूलाई प्रदान गरे । यी उपदेशका संग्रहहरू जोसुकैलाई पनि चासोका विषय हुन सक्दछन् । साक्षात् करुणाका निर्माणकाय भएका गुरु गम्पोपाले भ्रमरहित र दुःखका मूलरहित ज्ञानतर्फ आफ्ना शिष्यहरूलाई डोऱ्याएर लैजान अनेकौ उत्कृष्ट उपायकौशल्यहरू प्रयोग गर्दथे । एकपल्ट, उनले आफ्ना शिष्यहरूलाई यसरी उपदेश दिए :

> अनित्यताको भावना सफल ध्यानाभ्यासका लागि मूल जड हो । तसर्थ, आसक्तिबाट आफ्नो मनलाई मुक्त गर्न यसको बारम्बार भावना गरिराख्नू । हेतु-प्रत्यय तथा कर्म-फलका कुरा-हरूमा आफ्नो मनलाई बसाइराख्नू अति जरुरी छ किनभने यिनले गर्दा नै हामी धर्म अभ्यास र चर्यामा भित्रि हृदयदेखि नै समर्पित भएर लागिपर्छौं । यी उपदेशहरू मनमा बेस्सरी समातेर राखिएन भने तिम्रो धर्म अभ्यास फित्तलो हुनेछ ।











त्यसले राम्रो उत्तरोत्तर प्रगतिको गति लिन सक्दैन । यिनलाई हृदयमा बसाई राख्ने व्यक्ति नै एकदम श्रद्धावान् निष्कपट साधक ठहर्नेछन् जसले संसारबाट मुक्त हुन सधैं मरिमेट्ने गरी प्रयास गर्नेछन् । मैत्री, करुणा र बोधिचित्तमा आफ्नो चित्तलाई अभिसंस्कृत पार्नु नित्तान्त आवश्यक छ । यी तीन कुरा भित्री हृदयदेखि जान्यौ, राम्ररी आत्मसात गर्‍यौ भने तिम्रा हरेक क्रियाकलाप परार्थक्रियाको हेतु बन्न पुग्छ ।

यिनीहरू नभए दुइटा काय अर्थात निर्माणकाय र सम्भोग-काय प्राप्त गर्न सकिन्न । ती दुई काय प्राप्त नगरीकन धर्मकाय लाभ हुन्न किनभने ती सबै एक आपसमा अन्योन्या-श्रित सम्बन्ध राख्ने कुराहरू भए । धर्मकाय नै बोध नभएमा प्राणी संसारबाट मुक्त हुन सक्दैन । मानौं आकाशदेखि डराएर भागेजस्तै हामी जहाँसुकै जन्मिएपनि सधैं यही संसारभित्रै पर्नेछौं ।

सबभन्दा पहिले (आदि - शुरुवातमा) संवृति बोधिचित्त एकदम महत्त्वपूर्ण हुन्छ किनभने संवृति बोधिचित्तको अभावमा महायान गोत्रभित्र प्रवेश गर्न सकिन्न । मध्यमा पनि यो उत्तिकै महत्त्वपूर्ण छ किनभने यसको अभावमा प्राणी श्रावक वा प्रत्येकबुद्ध गोत्रमा पतन हुन सक्दछ । अन्तमा पनि यो उत्तिकै आवश्यक छ किनभने यसको अभावमा दुई कायहरू प्राप्त गर्न सकिन्न ।

सबभन्दा पहिले (आदि - सुरुवातमा) अनित्यताको भावना एकदम महत्त्वपूर्ण हुन्छ किनभने अनित्यताको भावना गरिएन भने मानिस यस भव (जीवन) बाट विरक्त हुन सक्दैन । मध्यमा पनि यो भावना आवश्यक छ किनभने यसको अभावमा वस्तु (धर्म) लाई नित्य ठानिने हुँदा मुक्ति पाउन सकिन्न । अन्तमा पनि त्यत्ति नै आवश्यक छ किनभने अनित्य र शून्यताका अर्थ एउटै हुन् ।











> कर्म र फलको ज्ञान शुरुमा पनि आवश्यक छ किनभने यसले गर्दा हामीले शुद्ध शीलको पालन गर्छौं र दुर्गतिका द्वार-लाई बन्द गर्छौं । मध्यमा पनि आवश्यक छ किनभने सबै धर्मलाई स्वप्नवत् वा मायावत् ठान्ने हुँदा सम्भार द्वय (पुण्य सम्भार र ज्ञान सम्भार) सञ्चय गर्न सक्छौं । यो अन्तमा पनि उत्तिकै आवश्यक छ किनभने संवृति वा आवस्थिक फलस्वरूप हामीले दुइटा रूपकाय (निर्माणकाय र सम्भोगकाय) पाउँछौं ।
>
> मार्गका सबै क्रमहरू उत्तिकै आवश्यक छन्, महत्त्वपूर्ण छन् । यी उपदेशलाई हृदयंगम गरिएन भने आफन्त, ईष्टमित्र, धनसम्पत्तिप्रतिको आसक्ति सधै रहिरहन्छ र शून्यताको अविपरिणामित स्वभावै जाने वा बोध गरेपनि केही लाभ हुन्न, सुगति तर्फ जानु त दूर, यसले हामीलाई झन् दुर्गतितर्फ घचेटिरहेको हुन्छ ।
>
> त्यसैले, यस भव (जुनी) प्रति आसक्त हुनुहुन्न । सबै धर्मलाई स्वप्तवत् वा मायावत् रूपले हेर्नमा आफ्नो मनलाई अभिसंस्कृत तुल्याऊ । आफ्नो मनलाई मैत्री, करुणा र बोधि-चित्तमा अभिसंस्कृत तुल्याऊ । यी सबको राम्ररी अभ्यास गर्न सक्यौ भने तिमी सुगतिमै जन्मिनेछौ र दुर्गतिमा पतन हुनेछैनौ ।

यी उपदेशले उपायकौशल्यको महत्त्वलाई जोड दिन्छन् । कहिलेकाही उनले यस्तो उपदेश पनि दिन्छन् :

> चण्डाली अभ्यासद्वारा शून्यता बोध हुनु प्रज्ञापारमितामा केन्द्री-भूत हुनु हो । शून्यताको भावना गर्नु नै धर्मधातुको शरण हो । यही परमार्थ बोधिचित्त हो । यो अनाश्रव संवर हो । यहीं परमार्थ-तवरले समय-पालन हो । यही अनालम्बिनी करुणा इत्यादि हो । अरू सबै धर्माभ्यासहरू यसैमा समाविष्ट हुन्छन् ।











धर्मको शुद्ध र परमार्थ ज्ञान प्राप्त गर्न चाहन्छौ भने धर्मलाई धर्म अनुसार नै अभ्यास गर्नुपर्छ। धर्माभ्यासले बोधि-मार्ग अनुशरण गरिरहेको हुनैपर्छ र मार्गबाट सबै भ्रान्तिहरू हटाइनुपर्छ। भ्रान्तिलाई ज्ञानको रूपमा बोध गरिनुपर्छ।

मरणानुस्मृति वा मृत्युको भावना गर्दा, संसारप्रतिको आसक्ति हटेर जान्छ। संसारका आदीनव, हेतु-प्रत्ययको भावना गर्नाले अकुशल कर्मबाट हामी विमुख हुन्छौं। मैत्री, करुणा र बोधिचित्तको भावना गर्नाले आफ्नै मात्र मुक्ति, शान्तिप्रतिको अधिमुक्ति (इच्छा) बाट हाम्रो मन विमुख हुन्छ। सर्वत्रग शून्यताको भावना गर्नाले विकल्प र विषयलाई सत् वा भावका रूपमा ग्राह गर्न छोड्छौं।

यी ध्यानका विधिहरू बारे उपदेश प्रज्ञा र उपाय दुवैका रूपमा दिइन्थे :





आफ्नो चित्तलाई नै बुद्धको रूपमा बोध गरे तापनि वज्र गुरुलाई कदापि नत्याग्नू। सबै प्रतिभास मनै हुन् भनी बोध गरे पनि पुण्य संभार गर्न कहिल्यै नछोड्नू। नरकमा जन्मिएला भन्ने कुनै भय नरहे तापनि अकुशल (पाप) बाट सधैं टाढै रहनू। बुद्धत्वै प्राप्त भए तापनि धर्मको तिरस्कार वा अप-हेलना कहिल्यै नगर्नू। आफूसँग समाधिका विशेष गुणहरू भए तापनि घमण्डी (अहंकारी) नहुनू। संसार र निर्वाणको अद्वय स्वरूप बोध भइसके तापनि सदा एकान्त अरण्यवास गरि-रहनू। आफू र अरूबीचको अभिन्न स्वभाव बोध भइसके तापनि महाकरुणाको अभ्यासलाई कहिल्यै नत्याग्नू।

यी उपदेशहरू ज्यादै ठूलो सिद्धि पाइसकेका शिष्यहरूलाई दिइन्थ्यो।

माथिका सबै उपदेशहरू नर नारी, बुढा तन्नेरी, विद्वान मूर्ख, इत्यादि सबै भिक्षु तथा उपासक उपासिकाहरूलाई कुनै भेदभाव नराखी दिइन्थ्यो।











साधकका चित्तलाई राम्ररी पढेर बुझेर गम्पोपाले हरेक साधकको मानसिक क्षमता, अधिमुक्ति, आशय र ध्यानाभ्यासको स्तर अनुसार नै उपदेश दिन्थे । तसर्थ, स्वामी फाग्मो डुक्पाले गम्पोपालाई सोधेका थिए, “कति बेला हामी पूर्णरूपले परार्थ क्रिया गर्न सक्छौँ ?” गम्पोपाले यसरी उत्तर दिन्थे,

> महा समरसताको भूमि प्राप्त भइसकेपछि हामीले शिष्यहरूलाई विनीत गर्न सक्छौँ । त्यो भूमि प्राप्त नभएसम्म हामीसँग अभिज्ञा (ऋद्धि) हुन्न जसको कारण हामी अर्काको चित्तको स्तर जान्न असक्षम हुने मात्र नभई कुन उपदेश समय सापेक्ष छन् कुन छैनन् भन्ने कुरा समेत किटानका साथ यकिन गर्न नसक्ने हुन्छौँ । अभावनाको भूमिसम्म पुग्दा हाम्रो चित्तमा महा करुणा पैदा हुन्छ र परार्थ क्रियामा हाम्रो चित्त अनायासै तत्पर भइ-रहन्छ । जब हामी आसक्ति र यस जीवनप्रतिको मोह बाट मुक्त हुन्छौँ, महाकरुणा अविरलरूपले उत्पन्न भइरहने हुनाले अरू सत्त्वहरूलाई पूर्णरूपले उद्धार गर्न सक्षम हुन्छौँ ।

संक्षेपमा धर्म गुरु गम्पोपाले ठूलो उपायकौशल्यको प्रयोग गरेर धर्मो-पदेश गर्दथे । विद्वानहरूलाई आगम प्रमाणकै आधारमा उपदेश दिन्थे । अशिक्षित अनपढहरूलाई विभिन्न उपमा दृष्टान्तहरू प्रयोग गरेर प्रत्यक्ष तवरले उपदशे दिन्थे । लामो छोटो जस्तोसुकै प्रवचन विधि प्रयोग गरिए पनि आखिर तिनको एउटै लक्ष्य प्राणीहरूलाई प्रज्ञा र उपायको संमिश्रणद्वारा बोधिसम्म पुऱ्याउनु नै थियो । सबै श्रद्धावान् तथा शुद्ध चित्त भएका साधकहरूलाई तिनीहरूकै शुद्ध आचरणका लागि निम्न उपदेश दिन्थे :

> शत्रुहरूप्रति ठूलो द्वेष,
> साथी आफन्तहरूप्रति ठूलो मोह
> र धनप्रति ठूलो आसक्ति–











यी धर्म साधकहरूका लागि लोक धर्महरू हुन् ।
यदि शुद्धरूपले धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।
यदि भित्रि हृदयदेखि धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।
दक्षिणबाट पूर्वतिर व्यापार गर्न हिड्नु,
खालि यता उता बरालिँदै यात्रा गरिराख्नु,
ठूल-ठूला घरहरू बनाउँदै बस्नु,
यी धर्म साधकहरूका लागि लोक धर्महरू हुन् ।
यदि शुद्धरूपले धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।
यदि भित्रि हृदयदेखि धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।




पाको उमेरका विनयधर भिक्षु गृहस्थ जीवनमा रमाउनु,
वैरागी भएर पनि धन थुपार्दै जानु,
खालि अध्ययन मात्र गर्नु, बोध केही नहुनु,
यी तीन धर्म साधकहरूका लागि कलंक हुन् ।
यदि शुद्धरूपले धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।
यदि भित्रि हृदयदेखि धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।

थुप्रै विषय जानेको छुँ भनेर आफ्नो विद्वताको धाक लगाउनु,
एकान्तमा बसेर खुबै ध्यान गरेको छुँ भनेर धाक लगाउनु,
आफ्नो मुनि चर्याका बारे धाक लगाउनु,
यी तीन लोकधर्मले साधकलाई क्षत् विक्षत पार्दछन् ।
यदि शुद्धरूपले धर्मको अभ्यास गर्ने हो











भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।
यदि भित्रि हृदयदेखि धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।

वोसोयुक्त मासु, अकुशल आहार,
मात लगाउने मद्य,
र छली तरुण शरीर-
यी तीन धर्म साधकहरूका लागि विष हुन् ।
यदि शुद्धरूपले धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।
यदि भित्रि हृदयदेखि धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।

अड्कलवाजी गरेर भविष्यवाणी गर्नु,
सर्वसाधारण मानिसहरूका मृत
सन्तानलाई जीवित पार्न खोज्नु
रोगीको सेवा गर्न नसक्नु,
धर्म साधकका लागि यी तीन हिउँका पत्र समान हुन् ।
यदि शुद्धरूपले धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।
यदि भित्रि हृदयदेखि धर्मको अभ्यास गर्ने हो
भने यी तीन लोक धर्मलाई त्यागिनै पर्छ ।

अनन्त संसार, धन आर्जन गर्न गरिने अनन्त काम,
र अनन्त पैशुन्य प्रलापहरू (नचाहिँदा गफहरू) –
यी तीन धर्म विरुद्धका कुराहरू हुन् ।
मैले यिनलाई त्यागिसकेको छु ।
तिमीहरूले पनि यिनलाई त्याग्यौ भने राम्रो हुनेछ ।











पिशाचको बन्धनागार जस्तो घरवार, अत्यन्तै दुःख कष्ट
झेलेर थुपारिएका धन, अर्काको कहिल्यै तृप्त
नहुने इच्छाका अगाडि झुक्नु,
यी तीन धर्म विरुद्धका कुराहरू हुन् ।
यी तीनलाई मैले त्यागिसकेको छु ।
तिमीहरूले पनि यिनलाई त्याग्यौ भने राम्रो हुनेछ ।

काम नलाग्ने प्रेमी वा प्रमिकाहरूप्रति कामुक मायाप्रीति,
आफ्नै शत्रु भएर निस्कने सन्तानहरूप्रति ठूलो मोह,
र यताउता विना कुनै काम बराँलिदै हिड्नु,
यी तीन धर्म विरुद्धका कुराहरू हुन् ।
यी तीनलाई मैले त्यागिसकेको छु ।
तिमीहरूले पनि यिनलाई त्याग्यौ भने राम्रो हुनेछ ।



यस प्रकार गम्पोपाले पद्य र गद्य दुवै शैलीमा साधारण एवं विशिष्ट तवरले उपदेश दिन्थे । उनी भन्थे,



> ध्यानाभ्यासमा मलाई सिद्धिहरू प्राप्त गर्न असाध्यै कठिन हुन्थ्यो । तर तिमीहरूले त्यस्तो कठिनाईहरूको सामना गर्न नपर्ला शायद किनभने यी उपदेशहरू ठूलो उपायकौशल्यको रूपमा दिइएका छन् । यति मात्र नभएर, काग्यु परम्परा अरू परम्परा जस्तै होइन । यो परम्परा अत्यन्तै अद्भूत अधिष्ठानहरूले समन्वित छ । निकै कठिनाईहरू झेलेर मनमा असन्देह वा निश्चितता ल्याउन सकेको खण्डमा यो मार्ग अवलम्वन गर्न नसकिने भन्ने कुरै आउँदैन । ध्यानाभ्यासमा सुधार ल्याउन, मार्गका वाधा अड्चनहरूलाई पन्छाउन र उपदेशलाई अनुभूतिमा उतार्न आवश्यक अभिषेकहरू प्राप्त गरेर चण्डाली तथा महामुद्राका ध्यान गर्नुका साथ साथै











गम्भीर गुरुयोगको पनि अभ्यास गर्दा असाध्यै प्रभावशाली
सिद्ध हुनेछ ।

यसरी असंख्य विनेयजनहरूलाई असीम धर्मचक्र प्रवर्त्तनहरू गरे । आफू जन्म र मृत्युका विकल्पबाट धेरै माथि उठिसकेतापनि, सबै धर्म अनित्य छन् भन्ने तथ्य (विशेषरूपले जन्म र मृत्युको तथ्य) प्रस्तुत गरेर देखाइदिएर अल्छीहरूलाई पनि जागरुक पार्ने सोंच उनले लिए । आफ्नो जीवनको अन्त्यतिर आइपुग्दा गम्पोपाले आफूले सम्हाल्दै गरेको धर्मासन धर्मगुरु गम्छुल लाई हस्तान्तरण गरेर उपस्थित सबैलाई यसरी सम्बोधन गरे, "अब म यस लोकमा धेरै समयसम्म रहन सक्दिन होला शायद । यदि अझै कसैको मनमा शंका वा प्रश्नहरू शेष छन् भने आएर मलाई सोधे हुन्छ । मन लगाएर अभ्यास गर्नेहरूलाई धेरै शब्दहरू भनिरहनु पर्दैन, तिनीहरूले मात्र यी सार उपदेशलाई हृदयमा साँचेर राखेपुग्छ : कुट उपदेशको सार यस्तो हो :

त्रिकालका सबै बुद्धहरूका निर्माणकाय,
करुणाको ज्योति फैलाई दशै दिशामा व्याप्त हुनु भएका,
मेरो मनभित्रको अन्धकारलाई हटाइदिनुहुने
त्रिकालका सबै गुरुहरूको चरणकमलमा मेरो दण्डवत !

अति मनोहर !
आद्य स्वसंवेद्य ज्ञानमा रहिरहने इच्छा भएकाहरू !
चित्तलाई कपासको डल्लो जस्तो निजरूपमा रहनदेऊ ;
कुनै आलम्बनमा चित्तलाई नराखी, सबै कर्महरूलाई त्यागिदेऊ ;
चित्तलाई विना नियन्त्रण स्वतन्त्रपूर्वक रहनदेऊ ;
प्रत्यक्षरूपले चित्तलाई हेर ;
स्त्यानमिद्ध र औद्धत्यकौकृत्य उत्पन्न भए चित्तलाई नै हेर्नू ;
चित्तलाई विक्षिप्त पार्ने सबै क्रियाकलापहरूलाई त्यागिदेऊ ;











इच्छा आशाहरू पलाउन थालेमा
मारको वशमा फँसिन्छ, यसप्रति सचेत रहनू ;

अकृत्रिम मन नै बुद्धत्त्व हो ।
प्रपञ्चले युक्त मन बुद्धत्त्व होइन ।

दिन र रात इत्यादि सबै भेदले रहित
स्वभाविक चित्तलाई यसरी नै चिनिन्छ ।

ग्राहरहित, आकाश जस्तै शून्य तर सुस्पष्ट (प्रभास्वर) -
यो यस्तो दृष्टि हो जुन कुनै पनि दिशामा अवस्थित छैन ।
असन्देह सहजरूपले स्वतः स्फूर्तरूपले उत्पन्न हुन्छ
जुन स्फटिक झैं शुद्ध र वेदाग छ ।
ग्राहरहित प्रभाश्वर (शुन्यता प्रभास्वरको युगनद्ध)
यो चित्तमा अविच्छिन्न सन्ततिको प्रवाह
सहजरूपले भइरहेको हुन्छ ।
कुनै एक शिशुजस्तो यो अकृत्रिम चित्त
आसक्तिरहित चर्या हो जसमा अग्राह र अत्याग
सहजरूपमा (अनाभोगरूपमा) भइराखेको हुन्छ ।
अमृत सरह हेतु र फल साथसाथै उत्पन्न भइराखेको हुन्छ ।
अनाभोग स्वसंवेद्य ज्ञान सहजरूपले प्रवाहित भइराखेको हुन्छ ।
यसरी, आफ्नै चित्तलाई बुद्धको रूपमा देख्न सक्दैनौ भने
तिमीले दशै दिशामा वा तिनै कालमा खोजे
पनि बुद्धलाई भेट्टाउन सक्नेछैनौ ।
तसर्थ, तिम्रो आफ्नै चित्तको दृष्टिलाई
अभिसंस्कृत पार्ने कोशिस गर ।

यसरी, उनले वज्रवाक् मा यी उपदेशहरू दिए ।











"यी बाहेक," उनी भन्दै लग्दछन्, "यी कुराहरू म भावी पुस्ताहरूको लागि भन्दैछु । जब म अद्वय धर्मधातुमा लीन हुन्छु, तिमीहरूले यस्तो नसोच्नू कि "अब गुरु हामी सामु रहनुभएन ।" मेरो चित्त सबै काल वर्ण र संस्थानमा व्याप्त परमपूज्य गुरु र त्रिकाल बुद्धहरू भन्दा भिन्न छैन । मेरो ध्यान गर्नू, मलाई पुकार्नू वा मेरो बारेमा चिन्तन गर्नू, मेरो अधिष्ठान त त्यहाँ निर्बाध तिमीहरूलाई प्राप्त भइनै रहनेछ ।

"जो साधनामा धेरै माथि पुगिसकेका छन्, उनीहरूले द्वयान्तलाई छेदन गर्ने प्रज्ञा र करुणा को अभिन्न स्वरूपको बारेमा ध्यान गर्नुपर्छ । नारोपाका षडयोगको अभ्यास गर्नू । यी अभ्यास ध्यानका सबैभन्दा गम्भीर अभ्यासमा पर्दछन् । तिमीहरूलाई जस्तोसुकै सिद्धि हासिल भएपनि आसक्तिरहित भएर अझ माथिको ज्ञानको लागि अग्रसर भइरहनू ।

"तिमीहरूको मनमा सन्देह वा बाधा व्यवधानहरू उत्पन्न भएमा ती सन्देह वा बाधा व्यवधान हटाउने उपदेश भएका विभिन्न ग्रन्थहरू पढ्नू र महान गुरुहरूप्रति सदैव श्रद्धोत्पाद गरिराख्नू । यदि तिमीहरू शान्ति र सुखको कामना गर्छौ भने सन्तुष्टिको अभ्यास गरेर सधैं थोरैको मात्र चाहना गर । यदि सम्यक् सम्बोधि नै चाहन्छौ भने अरण्यवास वा एकान्त ठाउँमा अभ्यास गरेर बिताऊ । संसारको दुःखलाई बारंबार सम्झेर यस जुनीप्रतिको आसक्तिबाट मुक्त हुनू । साँचो गुरु त तिम्रो आफ्नै मन हो ; अन्यत्र कतै खोज्नै पर्दैन ।

"विकल्परहित भएर अनादि प्रतीत्यसमुत्पादलाई स्पष्टसँग बोध गर्नू । तिमीहरूले जे जस्तो प्रणिधान गरेपनि वा जे जस्तो परिणामना पाठ गरेपनि ती सबै पूर्ण हुनेछन् । तसर्थ, त्यस्ता प्रणिधानहरू गरिरहनू । अरूहरूको बोधि प्राप्तिका लागि विपुल र गम्भीर परिणामना गरिरहनू ।

"अनुत्पन्न भूमि धर्मकाय हो र अनन्त मार्ग सम्भोगकाय हो र अनाभोग फल निर्माणकाय हो । यही मेरा सबै उपदेशहरूको सारांश हो, त्यसैले तिमीहरूले यसरी बुझ्नुपर्छ ।

"भविष्यमा 'अहो ! मैले त उहाँलाई भेट्नै पाइन' भनी सोंच्ने प्राणीहरूले मैले लेखेका '*सद्धर्मचिन्तामणिमुक्तिरत्नालङ्कार*', '*मार्गोत्तमरत्नमाला*' इत्यादि











ग्रन्थहरूको अध्ययन गरुन् र तदनुसार अभ्यास गरुन् । मलाई प्रत्यक्षरूपले भेट्नु र मेरा यी कृतिहरूको अध्ययन गर्नुमा कुनै विशेष अन्तर छैन । धर्मलाई बुझ्न र अभ्यास गर्न गाऱ्हो भइराखेका प्राणीहरूले मलाई संझेर श्रद्धाका साथ पुकार्नु अधिष्ठान सहज रूपले प्रवाहित हुनेछन् ।

"पछि सत्त्वहरू अनेक अनिष्ठकारी कुराहरूले ग्रसित हुनेछन् र उनीहरूलाई उद्धार गर्न कठिन हुनेछ । धर्मासनहरू बनाउने, प्रतिमा, मूर्ति इत्यादि बनाउनेतिर मात्र नलागी धर्मलाई धर्मोपदेश अनुसार नै राम्ररी अभ्यास गरिराख्नू । यही नै वास्तविक धर्मासन हुनेछ, यही नै गुरुहरूका जीवनी र मुक्ति हुन् । तसर्थ, बुद्धका उपदेशको विपरित नगइकन धर्मको अभ्यास गर्नू । सामान्यतया, गुरुको प्रादुर्भाव एक सपना सरह हो । मलाई अहिले र पछि अनुशरण गर्नेहरूलाई संसारको दु:खबाट रक्षा गर्ने मेरो उत्तर-दायित्त्व हो । त्यसैले श्रद्धोत्पाद र प्रणिधि चित्त उत्पन्न गर्न नविर्सनू ।" यसरी, असंख्य उपदेश र अर्तीहरू त्यत्तिकै प्रदान गरिए ।

सन् ११५५ मा पच्चहत्तरौ वर्षको उमेरमा जल-शकुनि वर्षको छैठौ महिनामा पूर्णिमाको दिन गम्पोपा त्रिचिवर लगाइकनै पर्यंकबद्ध आसनमा माथि आकाशमा हेरेको हेऱ्यै उत्पाद, निरोधबाट मुक्त प्रभास्वर धर्मधातुमा लय भए । यसरी गम्पोपाको निर्वाण भयो । त्यसबेला अनेक प्रकारका अद्‌भुत शुभ निमित्तहरू देखापरे । पूरै आकाश विविध इन्द्रधनुष, प्रकाशले व्याप्त थियो । देवताहरूका दुन्दुभिका ध्वनिहरू प्रतिध्वनित भए । पुष्पको वर्षा भयो । भुकम्प र वज्रपात भए । सबै पूजाका देवीहरू साक्षात् प्रकट भएर पूजाहरू चढाए इत्यादि.. । देवमनुष्यका पूजामेघले सबैथोक यसरी व्याप्त थिए जुन शब्दद्वारा व्यक्त गर्नै सकिन्न ।

यस प्रकार, बुद्धकै निर्माणकाय महा आचार्य गम्पोपा सहेतुतः उचित काल र उचित समयमा यस लोकमा उत्पन्न भई बुद्धको उपदेशलाई सम्पूर्ण रूपमा स्थापना गरेर जानुभयो । हुनतः बुद्धका उपदेश तिब्बतमा पहिले नै पुगिसकेर कुनै कुनै ठाउँमा त फस्टाइसकेका पनि थिए । तर उहाँ नै त्यस्तो व्यक्ति हुनुहुन्थ्यो जसले सूर्य उदाएझैं बुद्धका उपदेशलाई सर्वसुलभ र व्यापक प्रचारप्रसार गरिदिनुभयो । कुनै विरोधाभास विना नै











आज सूत्र र तन्त्रका उपदेशहरू एक व्यक्तिले एकिकृत रूपमा वा साथसाथै अभ्यास गर्न सक्दछ। त्यो उहाँकै देन थियो।

ठूला ठूला सम्प्रदायका महा आचार्यहरूले आचार्य गम्पोपाका बारेमा धेरै लेखिसक्नुभएको छ। यो उहाँको अथाह महासागररूपी जीवनीबाट केही अंश मात्र हो।















# ग्रन्थमा उल्लेखित महापुरूषहरूको संक्षिप्त जीवनी

१. **सुधन** : तेश्रो परिच्छेदमा कल्याणमित्र संश्रयको व्याख्या गर्दा गम्पोपाले सुधनको दृष्टान्त प्रस्तुत गर्नुभएको थियो। सुधनले कसरी कल्याणमित्रहरू-सित सत्संगत गरे भन्ने विषयमा गण्डव्यूह सूत्रमा विस्तृतरूपले व्याख्या गरेको पाइन्छ । प्राचीन कालमा धन्याकर नामक नगरमा सुधन नाम गरेका श्रेष्ठीदारक पुत्रको जन्म भएको थियो । भनिन्छ, सुधनले आफ्नी आमाको गर्भमा प्रवेश गर्ने वित्तिकै विभिन्न प्रकारका रत्नहरूको खानी घरको नजीकै भेटिएको थियो ।

सुधनले अनेक कल्याणमित्रहरूसित सत्संगत गरे । सूत्रका अनुसार उनले एकशय दश कल्याणमित्रहरूको सेवा गरेका थिए। सर्वप्रथम सुधनले बोधिसत्त्व मञ्जुश्रीको सामुन्ने बोधिचित्तोत्पाद गरेका थिए । मञ्जुश्रीले सुधनलाई भिक्षु मेघहीकहाँ गई उनको उपदेश ग्रहण गर्न भन्नुभयो। सुधनले सागरमेघ जस्ता विभिन्न कल्याणमित्रहरूको सहारा लिँदै उनीहरूको उप-देश ग्रहण गर्दै अन्तमा मैत्रेय बोधिसत्त्वको दर्शन प्राप्त गरे । बोधिसत्त्व मैत्रेयले फेरि मञ्जुश्रीकहाँ जान भन्नुभयो । मञ्जुश्रीको सत्संगतपछि सुधनले समन्तभद्र बोधिसत्त्वलाई भेटे । समन्तभद्र बोधिसत्त्वले सुधनलाई भद्रचर्या प्रणिधानको उपदेश दिनुभयो । यसरी सुधनले मञ्जुश्रीलाई नै दुईपटक भेटेर उहाँबाट उपदेश प्राप्त गरेका थिए । एवं रीतले सुधनले जम्मा त्रिपन्न कल्याणमित्रहरू सत्संगत गरेका थिए ।

सुधनले कल्याणमित्रहरूसित सत्संगत गरेको विषयमा श्रीसम्भवविमो क्षमा यस्तो उल्लेख गरिएको छ : दारक श्रीसंभव र उहाँकी श्रीमतिले कल्याणमित्रबाट हुने अनुशंसा (लाभ) र कल्याणमित्र सेवनका उपायहरू वा विधिहरूको सविस्तार व्याख्या गर्दै सुधनलाई मैत्रेयको दर्शन गर्न पठाउनुभयो ।











उपर्युक्त प्रकारले सुधनले कल्याणमित्रहरूलाई वन्दना र लाखौं प्रदक्षिणा गरे । कल्याणमित्र खोज्ने क्रममा विभिन्न दुःख कष्टहरू आइपरे । तर ती सबै दुःख कष्टलाई वास्ता नगरी एकदम आदरपूर्वक सुधनले कल्याणमित्रहरूको सेवा गरे र अन्तमा बोधिसत्त्वचर्या, प्रणिधान, बल, ज्ञान आदिमा समन्तभद्र जस्तै नै हुन सफल भए ।

सुधनको सन्दर्भमा उपासिका अचलाको उल्लेख जोड्नु पनि सान्दर्भिकै होला । उपासिका अचला स्थिरा नामक राजधानीमा बस्दथिन् र त्यहीं, आफ्नो घरमा आफ्ना माता-पिता र अन्य आफन्तहरूका विशाल समुदायलाई धर्मोपदेश गरिरहन्थिन् । त्यही बखत सुधन उनको घरको द्वारमा आइपुगे । त्यहाँ पुग्नेवित्तिकै उनको चित्त सन्ततिमा अनेक समाधिहरू उत्पन्न भए । सुधनले उपासिका अचलाबाट अनेक उपदेशहरू प्राप्त गरेका थिए ।[1]

२. **सदाप्ररुदित** : तेश्रो परिच्छेदमा कल्याणमित्र संश्रयको व्याख्या गर्दा गम्पोपाले सदाप्ररुदितको दृष्टान्त प्रस्तुत गर्नुभएको थियो ।

सदाप्ररुदितले कसरी कल्याणमित्रको संश्रय गरे भन्ने बारेमा अष्टसाहस्रिका प्रज्ञापारमिता इत्यादिमा वर्णन पाइन्छ । अष्टसाहस्रिकाको सदाप्ररुदित परिवर्तका अनुसार प्रज्ञापारमिताको खोजी गर्दा गर्दै सदाप्ररुदित जंगलभित्र पसे । त्यसबेला यस्तो आकाशवाणी भयो :

"पूर्व दिशातर्फ पाँचसय योजनपर गन्धवती नामक एउटा नगर छ । त्यहाँ बोधिसत्त्व धर्मोद्गत प्रज्ञापारमिताको उपदेश दिँदै हुनुहुन्छ । त्यहाँ गएर उहाँबाट प्रज्ञापारमिताको उपदेश सुन्नू ।"

त्यो आकाशवाणी सुनेर सदाप्ररुदित असाध्यै खुसी भए । तैपनि उनले एउटा समस्याको सामना गर्नुपर्‍यो । अतः आफ्नो शरीरै बेचेर भएपनि पैसा संकलन गर्नुपर्‍यो भनेर पण्य स्थल पुगे । "मलाई किन्ने मान्छे को छ" भनेर बेस्सरी कराउँदा पनि मारले विघ्न पुर्‍याएका कारणले उनको त्यो चित्कार कसैले सुनेन । त्यही बखत सदाप्ररुदितको आशय कस्तो रहेछ भनी जाँच्नको लागि देवराज इन्द्र ब्राह्मणको भेष बदलेर उनीसामु प्रकट भए । त्यसरी भेष बदलेर आएका इन्द्रले सदाप्ररुदितलाई











सम्बोधन गर्दै भने, "मलाई मान्छेको आवश्यकता छैन । बरु यज्ञको लागि मलाई मनुष्यको मासु, रगत र हाडहरूको खाँचो छ । इन्द्रको यस्तो कुरा सुनेर अति प्रसन्न भई सदाप्ररुदितले एकदम तीखो हतियारले आफ्नो दाहिने खुट्टाको फिलाको मासु काटेर दिए र हाड टुक्र्याउन पर्खाल तर्फ गए । यो सबै महलको माथिबाट श्रेष्ठीकी पुत्रीले हेरिरहेकी थिइन् । तल ओर्लेर उनले यस्तो कठोर कार्यको कारण सदाप्ररुदितसंग सोधिन् । धर्मोद्गतलाई चढाउने पूजा सामग्रीको आवश्यकता सदाप्ररुदितलाई भएको कुरा उनले थाहा पाइन् । त्यसपछि श्रेष्ठीपुत्रीले चाहिने सबै सरसामग्रीहरू सदाप्ररुदितलाई दिइन् । सदाप्ररुदित संगै पाँचसय व्यक्तिहरूका साथमा श्रेष्ठीपुत्री रथमा बसेर पद्मावती नामक नगरतर्फ प्रस्थान गरिन् । त्यहाँ पुग्नेवित्तिकै सदाप्ररुदितले धर्मोद्गतको दर्शन प्राप्त गरी बोधिचित्तोत्पाद गरे । सदाप्ररुदितले धर्मोद्गतलाई यसरी विनम्र निवेदन गरे, "पहिलेका बुद्धहरू कहाँबाट आउनुभयो र कहाँ जानुभयो ?" यस प्रश्नको जवाफमा धर्मोद्गतले बुद्धहरूका आवागमणको धारणालाई विस्तृतरूपले खण्डन गरे । सदाप्ररुदितले सात वर्षसम्म समाधिष्ठ रहेर प्रज्ञापारमिता ग्रन्थहरूका लागि अभ्यर्चना गरे ।

सात वर्षपछि समाधिबाट उठ्दा, त्यो ठाउँभरी धूलै धूलो जमिएको थियो । पानी छर्केर सफा गर्नु पऱ्यो भनी सोंच्दै सदाप्ररुदित जल खोज्न बाहिर निस्के । तर मारले जल र पुष्पलाई अदृष्य बनाइदिएका थिए । त्यसपछि सदाप्ररुदित, श्रेष्ठीकन्या र उनका गण सबैले आ-आफ्नो शरीर को नाडी काटी रगत निकालेर त्यही रगत छर्केर त्यो ठाउँलाई सफा गरे र गुरुलाई विराजमान गराउन एउटा आसनको पनि निर्माण गरे । त्यसपछि धर्मोद्गतले त्यो ठाउँमा आएर प्रज्ञापारमिताको देशना गरे । त्यस बखत सदाप्ररुदितले धेरै समाधिहरू प्राप्त गरे र असंख्य बुद्धहरूको दर्शन पनि गरे ।[२]

३. **नरोपा** (**नाडपाद**) : तेश्रो परिच्छेदमा कल्याणमित्र संश्रयको व्याख्या गर्दा गम्पोपाले नरोपाको दृष्टान्त प्रस्तुत गर्नुभएको थियो । महापण्डित











नरोपा (१०१६-११०० ई.) सिद्धाचार्य तिलोपाका प्रमुख शिष्य थिए। उनका पिता काश्मीरका राजा कुशलवर्मा थिए। बाल्यकालमै नरोपाले वैदिक परम्पराका सबै विद्याहरूको अध्ययन गरेका थिए। पछि उनी जिनमित्रकहाँ गए। उनी जिनमित्रबाट बौद्ध शासनमा प्रव्रज्या लिएर त्रिपिटकधर बने। त्यसपछि नालन्दा विश्वविद्यालयमा प्रस्थान गरी त्यहाँका स्थविर नाग-सेन, आकार शान्ति जस्ता आचार्यहरूबाट उच्च बौद्ध शिक्षा हासिल गरे। उनी आगम र युक्तिमा प्रकाण्ड विद्वान थिए। उनको सोही विद्वताको अन्य विद्वज्जनहरूले मुक्त कण्ठले तारीफ गर्दथे। नरोपा नालन्दा महाविहारका उपाध्याय पनि भएका थिए। उनले कालचक्र, हेवज्र आदिसित सम्बन्धित ग्रन्थहरूको टीका पनि लेखेका थिए।

एकचोटि अध्ययन गरिराखेका बेला नरोपाको अगाडि एकदम भयानक कुरूप आइमाई प्रकट भइन्। ती आईमाईले नरोपालाई सोधिन्, “के तपाई ग्रन्थका शब्दहरू बुझ्नुहुन्छ ? नरोपाले ‘बुझ्छु’ भनी जवाफ दिएपछि आइमाई खुसी भएर गलल हासिन्। फेरि ती आईमाईले सोधिन्, “के तपाईंलाई तिनको अर्थ पनि थाहा छ ?” नरोपाले ‘थाहा छ।’ भनी भन्दा आइमाई रुन थालिन्। नरोपाले यस्तो अचम्मलाग्दो व्यवहारको कारण जान्न खोज्दा आइमाईले भनिन्, ‘तिमी एक पण्डित हौ र शब्द शब्द राम्रै बुझ्छौ - त्यो तिमीले साँचो बोल्यौ। त्यसैले प्रसन्न भएर म हाँसेकी। तर तिमीले त्यसको अर्थ पनि जानेको छु भनी झुठो बोलेका थियौ, त्यसैले त्यस्तो झुठो कुरा सुनेर म रोएकी थिई। त्यसपछि नरोपाले सोधे, ‘त्यसो भए, यसको अर्थ कसलाई थाहा छ त ?’ ती आईमाईले जवाफ दिईन्, ‘तिलोपा’। यति भन्दै उनी अन्तर्धान भइन्। त्यसपछि नरोपाले विचार गरे, ‘ती आइमाई कुनै डाकिनी हुनुपर्छ।’ यस घटनापछि नरोपाले चक्रसम्वर-को भावना र जप गर्न थाले। सातौं दिनपछि उनलाई पूर्वीय भारतमा तिलोपालाई भेट्नेछौ भनी आकाशवाणीले सन्देश दियो।

त्यसपछि, नरोपाले सिद्धाचार्य तिलोपाको खोजी गर्ने निधो गरे। यो कुरा नालन्दाका रत्नवज्र इत्यादि आचार्यहरूले थाहा पाएपछि उनलाई रोक्न हरसंभव प्रयास गरे। तर केही सीप लागेन। आफ्नो निर्णयबाट











नरोपा अलिकति पनि पछि हटेनन्। त्यसपछि नालन्दा महाविहारको उपाध्याय पद रत्नवज्रलाई सुम्पेर तिलोपालाई खोज्न नरोपा गौड् देशतर्फ प्रस्थान गरे। उक्त देशका राजाले आफ्नो देशमा महापण्डित नरोपाको उपस्थितिबारे थाहा पाउनासाथै नरोपालाई आमन्त्रित गरेर विद्वत शिरोमणिको पदबाटै सम्मानित गऱ्यो ।

त्यसपछि सपनामा 'तिम्रो सात जन्मदेखिको गुरु तिलोपा यस बखत बंगालमा हुनुहुन्छ । तिमी त्यही गए हुन्छ ।' भनी डाकिनीहरूले संकेत दिए ।

यस्तो संकेत पाइसकेपछि नरोपा बंगालमा गएर आफ्नो गुरुको खोजी गर्न थाले, खोज्दा खोज्दै उनी ओदन्तपुरी विहारमा पुगे । त्यस विहारका भिक्षुसंघले नरोपाको हार्दिक स्वागत-सत्कार गरे। नरोपाले त्यहाँ तिलोपाको बारे जान्ने कोशिस गरे । तर भिक्षुहरूले तिलोपा भन्ने कुनै सिद्धको जानकारी आफूहरूसंग नभएको तर त्यही नाम गरेको एकजना मगन्ते त्यही विहारमा अवश्यपनि बस्दछन् भनी बताए । त्यही मगन्तेलाई खोज्दा खोज्दै भान्छाघरभित्र लामो जटा पालेका, धोती जस्तो मात्र पहिरिएका व्यक्ति धमाधम माछा तार्दै थिए । त्यस्तो कार्य मान्छेले देखेपछि गाली गर्दै त्यो मगन्तेलाई पिट्न थाल्यो । त्यसपछि मगन्तेले 'लु ही ज ज' मन्त्रको उच्चारण गर्नेवित्तिकै त्यही क्षणमा तारिएका सबै माछा पुनर्जीवित भएर आकाशमा उडेर गए । यस्तो चमत्कार आफ्नै आँखाले देखेपछि भिक्षुहरूले माफी माँगे । त्यो मगन्ते वास्तवमा एक सिद्ध पुरुष नै रहेछ भनी सबैलाई थाहा भयो । यो घटना देखिसकेपछि 'त्यो व्यक्ति नै तिलोपा हुनुपर्छ' भन्ने कुरामा नरोपालाई विश्वास भयो । त्यसपछि उनी तिलोपाको पछि पछि लागि नै रहे । एक वर्षसम्म उपदेश पाउनु त परै छ, तिलोपाको एक वचन सुन्नु पनि गाऱ्हो थियो ।

बाऱ्ह वर्षसम्म नरोपाले आफ्नो गुरु तिलोपाको निर्देशनलाई पालना गरी निकै ठूलो परीक्षा, दुःख कष्टहरू (१२ वटा दुष्कर चर्या) भ्रेल्नुपऱ्यो । पहिलो परीक्षास्वरूप गुरुको आज्ञा पालन गरेर विहारको कौशीबाट तल हाम्फाले। दोश्रो परीक्षास्वरूप त्यस्तै कष्ट सहनुपऱ्यो। तेश्रो परीक्षास्वरूप











दन दन बलिरहेको आगोमा आफू होमिए । चौथो परीक्षास्वरूप, अशुचि (फोहर) पदार्थ, मल इत्यादि खानुपऱ्यो ; पाँचौ, उत्सव भइरहेको ठाँउबाट भोजना चोर्दा मरणासन्न हुनेगरी कुटाई खानुपऱ्यो ; छैठौँ, रानीको शरीरमा स्पर्श गर्दा ठूलो दुर्दशा भोल्नुपऱ्यो ; सातौं, मन्त्रीकी बुहारीलाई जबरजस्ती अपहरण गर्न खोज्दा हात खुट्टा भाचिने गरी कुटाई खानुपऱ्यो ; आठौं, स्त्री ग्रहण गर्न लगाइयो ; नवौं आफ्नै लिङ्गमा हठौडाले बेस्सरी हानेर क्षतविक्षत भए ; दशौ, गुरुलाई आफ्नी स्त्री अर्पण गरे ; एघारौं, कीराहरू सल्बलाइराखेको हिलोमा आफू पूल जस्तै लम्पसार सुतिदिए । बाऱ्हौं, पानी नभएकोले आफ्नै नसा काटेर रगत निकाली छर्केर उपदेशस्थल सफा गरे र फूल इत्यादि नभएकाले आफ्नै कान इत्यादि अंग काटेर मण्डलमा राखेर गुरुलाई चढाए । यसरी बाऱ्ह वर्षसम्म नरोपाले कठीन परीक्षाहरूको सामना गर्नुपऱ्यो ।

त्यसपछि तिलोपाले आफ्नो चप्पलले हिर्काएर नरोपालाई बेहोश पारि दिए । नरोपाको होश फर्केपछि, तिलोपाले उनलाई आफ्नो औँलाले माथि आकाशतर्फ देखाउँदै भने, "वस्तुतः, तत्त्व यस आकाश समान स्वयम्भू ज्ञान हो । त्यसलाई शब्दमा व्यक्त गर्न सकिन्न । यो मनको गोचरवस्तु पनि होइन । त्यसैले, म तिलोपासित तिमीलाई उपदेश दिन वा बताउन केही पनि छैन । आफैले निरिक्षण गरेर तत्त्वलाई जान्ने प्रयास गर ।"

सिद्ध तिलोपाको उपर्युक्त उपदेश सुनेपछि नरोपालाई तत्त्वको ज्ञान भयो । त्यसपछि, तिलोपाले आफ्ना सबै ज्ञान नरोपालाई प्रदान गरे, एउटा भाडाँको पानी पूरै अर्को भाँडोमा खन्याए सरह नै । कालान्तरमा तिलोपा गुरुको अनुमति लिएर नरोपा विक्रमशील महाविहारमा गई त्यहाँको द्वार-पाल पण्डित बने । त्यो पद पहिले आचार्य जितारीले सम्हाल्दै आएका थिए । तर जितारीपछि त्यो पद रिक्त हुन गयो । नरोपा विक्रमशील महाविहार को उत्तर द्वारको प्रधान पण्डित बनेका थिए । त्यसबेला, विक्रमशील महा-विहारको पूर्व द्वारका प्रधान पण्डित शान्तिपा, दक्षिण द्वारका वागीश्वर, पश्चिम द्वारका प्रज्ञाकरमति तथा मध्यका काश्मीरी पण्डित रत्नवज्र र ज्ञानश्रीमित्र थिए ।











तत्कालीन काश्मीरी राजा नरोपाका विद्वदता र सिद्धिहरूबाट एकदम प्रभावित भएर आफ्नो राज्यमा पुष्पहरी नामक विहार निर्माण गराएर नरोपालाई ससम्मान चढाए । आफ्नो जीवनको अन्तिम कालमा नरोपा एक विशेष प्रकारको सिद्धचर्यामा लीन भए र अन्ततः सशरीर खेचर-लोकमा प्रस्थान गरेका थिए ।

नरोपाका असंख्य शिष्यहरू थिए । तिनमध्ये केही प्रसिद्ध शिष्यहरू यस प्रकार थिए : शान्तिभद्र, शान्तिपाद, मैत्रीपाद, डोम्बीपाद, स्थविर बोधिभद्र, स्मृतिज्ञान, अतीश दीपंकर श्रीज्ञान, काश्मीरका आकारसिद्ध, तिब्बतका महान अनुवादक मार्पा छ्योकी लोद्रो इत्यादि थिए ।[३]

४. **अनल** : तेश्रो परिच्छेदमा हामीले कल्याणमित्रप्रति मिथ्यादृष्टि राख्नु हुन्न भन्ने शिक्षाको दृष्टान्तस्वरूप अनलको उल्लेख भएको थियो । श्रेष्ठीदारक पुत्र सुधनको नवौं कल्याणमित्र जयोष्मायतन थिए । उनले सधै वरिपरी अत्यन्तै तीखा धारिला तलवारहरूले घेरेर बीचमा राखिएको अग्निकुण्डमा आगो बाल्ने गर्दथे । उनी हरेक दिन चीन चोटी पञ्चाग्नि तप गर्दथे । सुधनले उनलाई भेटी बोधिसत्त्व चर्याको शिक्षा दिनुहोस् भनी अनुरोध गरे । जवाफमा जयोष्मायतनले भने, "यस तलवार-को घेरा नाघेर अग्निभित्र प्रवेश गर्नू । त्यसले बोधिसत्त्वचर्याको विशुद्धि हुनेछ । यस्तो जवाफ सुनेर सुधन अलमल्ल भए र गम्भीर द्विविधामा परे ।

त्यसपछि दश हजार ब्रह्मलोक वासीहरूको आवाज सुनियो, "जयो-ष्मायतनले 'वज्रार्चि समाध्यवभास' प्राप्त गर्नुभएको छ । उहाँको पञ्चाङ्ग तपले अनेक रश्मी निस्केकाले हामी ब्रह्मलोक वासीले पनि तिनलाई खप्न सकेनौं । त्यसैले हामी ब्रह्मलोकवासीहरू उहाँकहाँ आयौं । जयोष्मायतनले आमीलाई बुद्धत्व प्राप्तिसित सम्बन्धित उपदेशहरू दिनुहुन्छ ।" यस्ता धेरै वाणीहरू सुनेपछि सुधनको दुविधा हटेर गए र यस्तो महान गुरुको चर्यामा शंका गरेकोमा उनलाई ठूलो पश्चाताप पनि भयो । गुरुसंग क्षमा मागेर उनी तलवारको धारमाथि चढे ।











चढ्नेवित्तिकै उनलाई अभूतपूर्व सुख आनन्दको अनुभूति भयो । अनि अग्निभित्र प्रवेश गर्नासाथ उनलाई 'प्रशम सुखाभिज्ञ' नामक समाधि प्राप्त भयो ।

त्यसरी नै उनी कल्याणमित्र राजा अनलकहाँ पनि पुगे । राजा अनलले अपराधीहरूका टाउको काट्ने, छाला काढ्ने, आँखा निकाल्ने इत्यादि गर्थे । राजाको त्यस्तो वर्बर र क्रूर व्यवहार देखेर सुधनको मनमा फेरि शंका उब्जिन थाले । त्यसैबेला आकाशमा देवताहरूले भने, "के तिमीले जयोष्मायतन कल्याणमित्रको उपायकौशल्य विर्स्यौ ?" यस्तो वाणी सुनिसके पछि सुधनले पहिलेका सबै कुराहरू सम्झे र राजा अनलसित क्षमा मागेँ । त्यसपछि राजा अनलले राजदरवार लगेर "पहिलेका सबै केवल माया थिए ।" भन्दै शिक्षाहरू दिए ।[४]

**५. मौद्गल्यायन** : पाँचौ परिच्छेदमा संसारको दुःख सम्बन्धी व्याख्या गर्ने क्रममा मौद्गल्यायनले प्रेत दर्शन गरेको विवरण उल्लेख भएको थियो । मौद्गल्यायनले प्रेतहरू देखेको सम्बन्धमा दमक्षमूकोनाम सूत्रमा यसरी बताइएको छ - "आफै प्रव्रजित हुनु र अरूलाई पनि प्रव्रजित गराउनुमा धेरै अनुशंसा हुने कुरा भगवान् बुद्धले बताउनुभएको छ । राजगृह नगरमा श्रीजात नाम गरेका एक सय वर्ष पुगिसकेका एकजना गृहपति बस्दथ्यो । ऊ आफ्ना आफन्तहरूको व्यवहारदेखि एकदम पीडित र दुःखी थियो ।

एकदिन, आफन्तहरूलाई आफूले दीक्षा लिन जाने र प्रव्रज्या लिने कुरा सुनायो । यसमा उनीहरूले स्वीकृति जनाएँ । शारिपुत्र सबैभन्दा श्रेष्ठ श्रावक हुन् भन्ने कुरा उसलाई थाहा थियो । तसर्थ उनीबाटै प्रव्रज्या ग्रहण गर्ने सोंचाई मनमा लिई सो को लागि शारिपुत्रसंग निवेदन गर्‍यो । तर शारिपुत्रले त्यो बुढो व्यक्ति तीनवटै चक्र, श्रुत, चिन्तन, समाधि र कर्मका लागि अक्षम भएको ठानी उसलाई दीक्षा दिएनन् ।

अनि एकदम निराश भएर उसले विचार गर्‍यो, "अब म बुद्धशासनमा पनि प्रवेश गर्न नसक्ने भएँ ।" यस घटनालाई राम्ररी हेरिरहनुभएका शास्ता भगवान् बुद्धले मौद्गल्यायन मार्फत त्यो वृद्ध व्यक्तिलाई प्रव्रजित गरा-











उनुभयो । श्रुति वा सुन्नमा निकै ठूलो अभिरुची थियो श्रीजातमा । त्यसैले ऊ त्रिपिटकधर नै भयो । तैपनि ऊ आफ्ना वरिष्ठ सहपाठीहरूको राम्ररी सेवा गर्नमा असमर्थ नै थियो । त्यसै कारणले उनीहरूले श्रीजातलाई हेला गर्ने र उपहास गर्ने गर्थे । "घरमा आफ्नै आफन्तले दुःख दिएर त्यहाँ बस्न नसकी म यहाँ आएँ । तर यहाँ पनि मैले यस्तै दुःख सहनुपऱ्यो ।" भनी सोंच्दै उनले पानीमा हाम्फालेर आत्महत्या गर्ने प्रयाश गरे । यो सबै मौद्गल्यायनले आफ्नो अभिज्ञाबलद्वारा थाहा पाए । तुरुन्तै उनी श्रीजातकहाँ गए । मौद्गल्यायन त्यहाँ पुग्दासम्म श्रीजात समुद्रमा हाम्फालिसकेको रहेछ । तैपनि आफ्नो चीवरको कुना समात्न लगाई मौद्गल्यायनले श्रीजातलाई पानीबाहिर तानेर लिए । यसरी श्रीजातको ज्यान बच्यो ।

त्यसपछि मौद्गल्यायनले श्रीजातलाई विभिन्न प्रकारका प्रेतहरूलाई देखाउन लगे । जाँदा जाँदै कुनै ठाउँमा उनीहरूले एक सुन्दर स्त्रीको लास देखे । लासका इन्द्रियहरू जस्तै नाक, मुख इत्यादिमा सर्प परिरहेको थियो । त्यस्तै अर्को ठाउँमा पुगे । त्यहाँ एक आइमाईले भाडोँमा पानी खन्याएर त्यसलाई उमालिन् र त्यो उम्लिएको तातो पानी भएको ठूलो भाडोँमा आफै हाम्फालिन् । एकक्षणपछि उसको शरीरको मासु र हाड अलग अलग हुने गरी छुट्टिए । सबै हाड जति बाहिर निस्कन थाले र सबै एक ठाउँमा एकत्रित भएर आईमाईको रूप लिए र त्यसरी हाडबाट परिणत भएकी आइमाईले भाडोँ भित्र रहेको मासु खान थाली । फेरि अर्को पटक उनीहरूले एउटा भयावह रूख जस्तै आकृतिको जन्तुलाई देखे । उसको पूरै शरीर विभिन्न प्रकारका जनावरहरूले भरिएको थियो । ती जनावरहरू (कीराहरू) ले त्यो जीवलाई टोकेर खाँदै थिए । असह्य पीडा सहन नसकी ऊ ठूलो करुण स्वरले विलाप गर्दै चिच्याउँदै थियो ।

मौद्गल्यायन र श्रीजात अझै यात्रा गर्दै थिए । एउटा ठाउँमा एउटा व्यक्तिलाई हिंसक जनावरहरूका टाउका भएका प्राणीहरूले घेरिराखेको देखे । ती सबै जनावरहरूले त्यो व्यक्तितिर वाण प्रहार गर्दै थिए । जसले उसको शरीर प्रज्वलित भइराखेको थियो । पीडाले त्यो व्यक्ति बेस्सरी चिच्याइराखेको थियो । त्यस्तै गरी, एकजना व्यक्ति विभिन्न प्रकारका











अस्त्रशस्त्रहरू माथि बेतोडले दगुरिराखेको थियो । ती अस्त्र (हतियार) हरूको धारले उसको शरीर क्षतविक्षत भइसकेको थियो । श्रीजात र मौद्‌गल्यायनले सात शय योजन अग्लो हाडै हाडले बनेको एउटा विशाल पर्वत पनि देखे । त्यो पर्वत ठीँग उभिएकाले समुद्रमा अँध्यारो छाएको थियो । श्रीजातले "यी सबै के हुन् ?" भनी मौद्‌गल्यायनलाई सोद्धा मौद् गल्यायनले 'समय आएपछि बताउँला' भनेर जवाफ दिए । त्यसपछि उक्त पहाडको पछाडिपट्टिको फेदबाट उनीहरू सरासर हिँडे ।

केही समय (दिन) पछि मौद्‌गल्यायन विश्राम गरिरहेको बेला यही उचित समय हो भन्ठानी श्रीजात मौद्‌गल्यायनकहाँ भेट्न गए । मौद्-गल्यायनले पनि उचित समय नै ठानेर श्रीजातका प्रश्नहरूको उत्तर दिन थाले । ती स्त्री जसलाई सबैभन्दा पहिले भेटिएको थियो, पूर्वकालमा राज-गृह नगरमा बस्ने महासर्व नामक व्यक्तिकी पत्नी थिई । एकपल्ट उनका पतिले उनलाई सामुद्रिक यात्रामा लग्यो । ऊ पटक पटक एनामा आफ्नो रूप नियालेर हेर्दथी । आफ्नो रूपप्रति एकदम ठूलो आसक्ति थियो ती स्त्रीमा । तर एउटा कछुवाको कारणले उनीहरू यात्रा गरिरहेको जहाज पानीमा डुबी दुर्घटनाग्रस्त हुँदा पति-पत्नी दुवैको मृत्यु भयो । त्यसपछि ती आइमाईले सर्प भएर जन्म लिई र पूर्व जन्ममा आफ्नो रूपप्रति ठूलो आसक्ति भएको कारणले यस जन्मा पनि आफ्नो त्यो पूर्वजन्मको मृत शरीरका इन्द्रियहरूमा वास गर्न थाल्यो । त्यसैले भनिन्छ, मर्ने बेला मानिस जुन चीजप्रति आसक्त भयो त्यसैमा उत्पन्न हुन्छ । श्रीजातले सोधे, "प्राणी दुर्गतिमा किन जन्म लिन पुग्छ ?" मौद्‌गल्यायनले जवाफ दिए, "प्राणी आफ्नै दुष्कर्मको फलस्वरूप नरक, इत्यादि दुर्गतिमा जन्म लिन पुग्छ ।" जब ऊ शीत नरकको अत्यन्तै चिसोले छटपछिन थाल्छ, तब तातो ठाउँ खोज्दै उष्ण नरकमा जन्मिन्छ । फेरि, प्रचण्ड ताप सहन नसकी ऊ शीत नरकमै जन्मिन्छ । जब कुनै व्यक्तिले धेरै भोजन खाएपछि अघाउँछ, तब भोजन वा पेयप्रति वितृष्णा हुन थाल्छ र उसले त्यसबेला सोच्छ, "यो भोजन र पेय (पिउने वस्तु) त कहिल्यै देख्नै नपरोस् ।" त्यसको फलस्वरूप ऊ प्रेतलोकमा जन्मिन्छ । धर्म-उपदेश सुनेर क्रोधले चुर चुर भई कसैले











यस्तो सोंच्छ, "यस्तो त मैले कहिल्यै सुन्नै नपरोस् ।" त्यस्तो प्राणी तिर्यक् लोकमा जन्मिनेछ ।

आफ्नै मासु खाने आइमाई पूर्वजन्ममा एउटी नोकर्नी थिई । एक गृहस्थीको घरमा काम गर्थी । त्यो गृहस्थीले एकजना भिक्षुलाई तीन महिने वर्षावासका लागि आफ्नो घरमा आमन्त्रण गरेको थियो र तदनुसार बन्दो-वस्त पनि मिलाएको थियो । त्यसको लागि भिक्षुलाई दिनदिनै स्वादिष्ट भोजन ती नोकर्नीलाई दिएर पठाइन्थ्यो । एकदिन गृहणी (मालिकनी) ले नोकर्नीलाई सोधिन्, "भिक्षुलाई भनेर लगेको भोजन तिमी आफै त खाँदिनौ ?" यस्तो कुरा सुनेर नोकर्नीले पनि तुरुन्तै जवाफ दिई, "त्यस्तो किन गर्थें र मैले ? ममा पनि भिक्षुप्रति श्रद्धा छ । हो म भिक्षुले खाइसकेर बचेको भोजन मात्र लिन्छु । त्यो भन्दा पहिले मैले कहिल्यै खाएकी छैन । यदि खाएकी भए म आफ्नै मासु खानेछु ।" यसरी क्रिया खाएकीले नो कर्नीको यस्तो अवस्था हुनपुग्यो ।

रूख आकृतिको पुरुष पूर्व जन्ममा लित नाम गरेका भिक्षु थिए । त्यो भिक्षु संघ-व्यवस्थापक थियो । त्यसबेला उसले संघका सम्पत्तिहरूको दुरुपयोग गरेर आफैले लिन्थ्यो र गृहस्थीहरू र आफन्तहरूलाई बाँड्थ्यो । ती सम्पत्तिको त्यसरी उपभोग गरिन्थ्यो । संघको सम्पति हिनामिना गरेको फलस्वरूप आज त्यो व्यक्तिको यो रूप भयो ।

त्यो व्यक्ति जसलाई विभिन्न प्रकारका हिंसक जनावरहरूका टाउका भएका जीवले वाण प्रहार गर्दै थिए, त्यो पूर्वजन्ममा एकजना व्याधा थियो । विभिन्न प्रकारका हिंसक जनावरहरूका टाउका भएका जीव त्यही प्राणी थियो जसलाई त्यो व्याधाले मारेको थियो ।

धारिला हातहतियारमाथि दौड्ने मान्छे पूर्वजन्ममा राजाको सेनापति थियो । उसको मृत्युपछि त्यो रूपमा जन्मिएको हो । ती सबै सत्त्वहरू मृत्युपछि महानरकमा जन्मिनेछन् । हाडहरूका त्यो विशाल पर्वत चाहिँ तिम्रो आफ्नै पूर्वजन्मका हाडहरू हुन् । पूर्वजन्ममा तिमी एक विशाल काय भएको लामखुट्टे थियौ । तिमी सयौ वर्षसम्म आफ्नो मुख खुल्ला राखेर सुत्दथ्यौ । एकपल्ट एकजना उपासक पाँच सय व्यापारीहरूको साथमा











सामुद्रिक यात्रा गर्दैथियो । यात्रा गर्दा गर्दै जहाज त्यो ठूलो लामखुट्टेको खुल्ला मुखभित्र छिर्ने लागेको थियो, त्यही क्षण सबैले एकै स्वरमा 'बुद्धलाई वन्दना' भन्न थाले । यति उच्चारण हुने वितिकै लामखुट्टले आफ्नो मुख बन्द गऱ्यो र त्यही मऱ्यो । पछि एक राक्षसले त्यो लामखुट्टको मृत शरीर लाई बाहिर निकाली त्यहाँ राखिदियो । त्यो विशाल लामखुट्टेको रगत, मासु जम्मै नष्ट भएर गए, खाली हाडहरू मात्र बाँकी रहे । यस्तो कुरा सुनेर बुढो श्रीजातको मनमा ठूलो संवेग उत्पन्न भयो । त्यसपछि उसले पहिले आफूले सुनेका उपदेशहरूको भावना गर्न थाल्यो र तत्कालै अर्हतपद प्राप्त गऱ्यो ।[५]

६. **संघरक्षित** : पाँचौ परिच्छेदमा संसारको दुःख सम्बन्धी व्याख्या गर्ने क्रममा संघरक्षितले प्रेत दर्शन गरेको विवरण उल्लेख भएको थियो । श्रावस्ती नगरका एक सम्पन्न गृहपति बुद्धरक्षितका पुत्र थिए संघरक्षित । उनले शारिपुत्रबाट उपसम्पदा प्राप्त गरेका थिए र पछि त्रिपिटकधर पनि बनेका थिए । त्यस समय, उनका पाँचसय मित्रहरूको समूह सामुद्रिक यात्रामा जानको लागि तयार भएर बसेका थिए । ती साथीहरूको जमातले संघरक्षितलाई पनि आफूहरूसंगै पठाउनको लागि भगवान् बुद्धसंग विनम्र आग्रह गरे । भगवान् बुद्धले 'सबै भय र आपद्विपदहरूलाई सहेर यात्रा गर्नू" भनेर संघरक्षितलाई जाने अनुमति दिनुभयो । जब संघरक्षित जहाजमा चढेर आफ्ना साथीहरूसंग यात्रा गर्दै थिए, त्यसबेला सागरमा नागहरूले भने, "संघरक्षित हामीलाई दिनुहोस् ।" साथीहरूले नागहरूको आग्रहलाई स्वीकार गरेनन् । तर विदाईको बखत भगवान् बुद्धले भन्नुभएको कुरा सम्भी संघरक्षित सरासर नागहरूसितै गए र तिनीहरूलाई धर्मोपदेश दिएर धान्य तुल्याए । साथीहरू सामुद्रिक यात्रा पूरा गरेर फर्किराखेका बेला, नागहरूले संघरक्षितलाई लगी त्यहीँ जहाजमा राखिदिए । सामुद्रिक यात्रा समाप्त गरी सबैले कुनै ठाउँमा विश्राम गर्ने निधो गरे र विश्राम गरे । भोलिपल्ट संघरक्षित उठ्नु अगावै उनका साथीहरू सबै उनलाई त्यतै एक्लै छोडेर हिँडिदिए । ब्यूझेर यताउता हेर्दा संघरक्षितले कसैलाई











पनि  देखेनन् । उनलाई घर फर्कने बाटो पनि थाहा थिएन । यसरी बाटो बिराएर यता उता भौतारिँदै हिड्दा हिड्दै संघरक्षित एउटा विहारमा आइपुगे । त्यहाँ संघरक्षितले भिक्षुहरूले भोजन गर्न लागिराखेको दृश्य देखे । धेरै भोजनका परिकारहरू सजाएर राखिएका थिए । जब भोजन पस्किन थालियो, तब त्यो विहार अदृश्य भयो, थाल र खानेकुरा पनि हथौडा र तलवार आदिमा परिणत भए । पहिला खान बसेका मानिसहरूले त्यही हथौडा र तलवारले एक अर्कालाई प्रहार गर्न लागे । भोजनको समय बितेर दिउँसो भएपछि, त्यो विहार पहिले झै देखापऱ्यो, त्यहाँ पहिलेजस्तै भिक्षुसंघ थियो । यस घटनाको कारण सोद्धा "हामीहरू पूर्वजन्ममा काश्यप बुद्धको धर्म शासनमा भिक्षु थियौं । हामी भोजन गर्ने समयमा झगडा गर्थ्यौं । त्यसैको फलस्वरूप आज हाम्रो यो दशा भयो । त्यस्तो कर्म गर्न नहुने रहेछ ।" भनी जवाफ दिइयो ।

त्यो विहार छोडेर संघरक्षित अघि बढ्दै गए । उनले फेरि पहिलेकै जस्तै अर्को विहार देखे । विहारमा बस्नेहरूले संघरक्षितलाई भोजनको लागि बोलाए । पहिलेको विहारमा घटेको घटनाको संझना ताजै थियो, त्यसैले संघरक्षित तिनीहरू कहाँ जान मानेनन् । भिक्षुसंघ भोजन ग्रहण गर्न बसे । भोजन पस्किने वित्तिकै विहार त एक विशाल आगोको ज्वालामा परिणत भयो जसमा जलेर सबै भष्म भए । भोजनको समय बितेर दिउँसो हुनासाथ फेरि सबै पहिले जस्तै भए । यस विचित्र घटनाको बारे पनि सोद्धाखेरी "हामी काश्यप बुद्धको धर्मशासनमा भिक्षु थियौं । त्यस-बेला सर्वसाधारण भक्तजनहरूले चढाएका दानद्रव्यहरूको हामीले दुरु-पयोग गऱ्यौं । त्यसैको फलस्वरूप आज हामीहरू यहाँ उत्पन्न भयौं ।" भनेर एकजनाले उत्तर दियो ।

त्यहाँबाट पनि सरासर अघि हिडेपछि संघरक्षितले स्तम्भ, भित्ता, पर्खाल, कुँचो इत्यादि आकृतिका प्राणीहरूलाई देखे । एउटा जीर्ण एवं पातलो नसाले मात्र जोडिएको शरीरको माथिल्लो र तल्लो भाग नसा चुडिनासाथ अलग अलग छुट्टिए । त्यसबाट असाध्यै पीडा भएकाले उनीहरू रुँदै कराउँदै थिए ।











त्यसपछि संघरक्षित त्यस ठाउँमा पुगे जहाँ पाँच सय ऋषिहरू बस्दथे। संघरक्षित एक श्रमण भएकाले ती ऋषिहरूले "श्रमणहरू कुरौटे हुन्छन्" भन्ने सोंची उसलाई बस्ने ठाउँ नदिने निधो गरे। उनीहरू मध्ये एकजनाले, "केही नबोली चूपचाप बस" भन्दै भान्छा कोठामा संघरक्षितलाई बस्न दियो। रातको पहिलो प्रहर र मध्यरातमा त्यहाँ बसिरहेकी एकजना देवीले आएर संघरक्षितसित धर्मोपदेशको लागि याचना गरिन्। "त्यसो गरें भने म यस ठाउँबाट निकालिनेछु" भन्दै संघरक्षितले उपदेश दिन मानेनन्। रातको अन्तिम प्रहरमा "अब त बिहान हुनै लाग्ये, उपदेश दिए पनि केही फरक पर्नेछैन" भनी सोच्दै संघरक्षितले धर्मोपदेश दिए। पाँच शय ऋषिहरू पनि धर्म सुन्न त्यहाँ आए। ती देवीको शक्तिले गर्दा ती ऋषिहरू एकले अर्कालाई देख्न नसक्ने भएका थिए। उपदेश सुन्दा सुन्दै उनीहरूले अनागामी भूमि प्राप्त गरे। त्यसबेला फेरि एकले अर्कालाई देख्न सक्ने भएपछि उनीहरूले साधुवाद भन्न थाले। त्यसपछि उनीहरूको मनमा भगवान् बुद्धलाई भेट्ने अभिलाष जागृत भयो। उनीहरूले संघरक्षितसित सोधे, "हामी आ-आफ्नो ऋद्धिबलद्वारा भगवान् बुद्धकहाँ जाऔं कि तपाई नै हामीलाई आफ्नो ऋद्धिबलद्वारा त्यहाँ लग्नुहुन्छ ?" त्यो सुनेर संघरक्षित निराश भए किनभने त्यसबेलासम्म उनी पृथग्जन नै थिए। "तपाईहरू एकछिन यहाँ पर्खदै गर्नुहोस् है। मेरो त्यहाँ केही काम छ।" भन्दै संघरक्षित एउटा रूखको छहारी तर्फ गए। त्यहाँ बसेर उनले पहिले सुनेका उपदेशहरूको गम्भीर भावना गरे र एकै क्षणमा उनी अर्हत भए। त्यसपछि सबै ऋषिहरूले संघरक्षितको चीवरको कुना समातेर संगसंगै भगवान् बुद्धकहाँ आइपुगे। बुद्धबाट उपसम्पदा प्राप्त गरेर पछि सबै अर्हत भए।

प्लाष्टर, पर्खाल जस्ता नारकीय सत्त्व त्यहाँ किन देखापरे भन्दापूर्वजन्ममा यिनीहरूले संघ बस्ने विहारलाई फोहर गरेका थिए। यिनीहरूले खम्बा, भित्ता जहाँतहीँ थूक, सिगान इत्यादि फालेर वा पुछेर फोहर गरेका कारणले त्यहाँ त्यसरी उत्पन्न भएका हुन्। कुँचो जस्ता प्राणीहरूले पनि पूर्वजन्ममा संघको कुँचाहरू आफ्नै काममा प्रयोग गरेका थिए। एउटा नसा मात्रले











शरीरको माथिको र तलको भाग जोडिएको प्राणीले त्यस्तो दु:ख किन भोग्नुपऱ्यो भन्दा पूर्वजन्ममा यिनले गर्मी ऋतुमा प्राप्त भएको संघको आम्दानी, दान सबै त्यही बेला संघलाई नबुझाई हिउद ऋतुमा मात्र बुझाउने गर्थ्यो र हिउदमा प्राप्त भएका चीज वर्षा याममा बुझाउँथ्यो । त्यसैले गर्दा त्यस्तो कर्मको फल भोग्नुपऱ्यो । त्यसैले त्यस्ता कर्महरू गर्नुहुन्न । मुख कुल्ला गरेर जथाभावी पानी पिच्च गरी फ्याल्दा गर्दा पनि त्यस्तो भयानक नारकीय दु:ख भोग्नुपर्दोरहेछ ।[६]

७. **श्रोणकोटीकर्ण** : परिच्छेद ५ मा प्रेतहरूको बारेमा व्याख्या गरिँदा श्रोणकोटीकर्णको नाम उल्लेख भएको थियो । विनय-आगमको अनुसार मध्यदेशमा श्रवन नक्षत्रको दिनमा रत्न-कुण्डलले युक्त एकजना बालकको जन्म भयो । उनको नाम श्रोणकोटीकर्ण राखियो ।

उमेर बढ्दै गएर वयस्क युवा भइसकेपछि एकदिन श्रोणकोटीकर्णले माथि कौसीमा बसी काम गरिरहेका बेला टाढा खेतमा आफ्नो बुवाले एकदम परिश्रम गरी काम गरिरखको देखे । उनको बुवाले त्यस्तो प्रचण्ड टन्टलापुर घाममा पसिना चुहाउँदै काम गरिराखेको थियो । उनको बुवा घर फर्केपछि श्रोणकोटीकर्णले सोधे, "किन त्यस्तो कठीन परिश्रम गर्दै काम गरिराख्नुभएको अघि ? तपाई किन यत्रो मिहेनत गर्नुहुन्छ ?"

उनको बुवाले जवाफ दियो, "मिहेन नगरेर के गर्ने, छोरा । हामीले जुन सम्पत्ति उपभोग गर्दैछौ अहिले, त्यो त्यसै आएको भन्ठान्यौँ तिमीले । गमी, जाडो केही नभनी अनेक कष्ट कठीनाई सहेर, बलिदान गरेर काम गरेर बल्ल ती सब जोड्न सफल भएँ ।" यति भनिसकेपछि, धनसम्पत्तिको कोष्ठागारै खोलेर पिताले श्रोणकोटीकर्णलाई देखाइदियो । आफ्नो पिताले आफूलाई पनि व्यापार गर्नको लागि प्रस्थान गर्न यी सब चीजहरू देखाई-रहनुभएको त होइन ? भन्ने विचार मनमा लिई श्रोणकोटीकर्णले आफू पनि बाहिर गइ व्यापार गरेर धन कमाएर ल्याउने निर्णय गरे । हुन त उनका मातापिताले उनलाई रोक्ने हरसंभव प्रयाश त गरेका थिए । तर आफ्नो छोराको अटल निर्णयको अगाडि उनीहरूको केही चलेन ।











त्यसपछि श्रोणकोटीकर्ण आफ्ना केही नोकरचाकरहरू, दुईटा गधा र केही सरसामाग्रीका साथ थुप्रै अन्य व्यापारीहरूसित समुद्र पारी व्यापार गर्न प्रस्थान गरे । श्रोणकोटीकर्णलाई सबै व्यापारीहरूको नाइकेका रूपमा चुनियो । व्यापार निप्ट्याएर समुद्र मार्ग बाटै यिनीहरू भोलिपल्ट घर फर्किन तयार भएर बसिरहेका थिए । त्यस राति सबै आरामपूर्वक निदाए । तर भोलिपल्ट श्रोणकोटीकर्ण विहान भएपछि पनि निकै अवेरसम्म सुतिनै राखे । उनका सबै सहयात्रीहरू पहिल्यै उनलाई छोडेर गइसकेका थिए । उनका नोकरहरू पनि त्यहाँबाट गए । मात्र साथमा ल्याइएका दुईटा गधा थिए । आफ्ना साथीहरूलाई बाटैमा भेट्न श्रोणकोटीकर्ण गधा चढेर बेस्सरी कुदे । तर निकै अत्तालिएकाले उनले बाटो नै बिराए । भौतारिँदा भौतारिँदै उनीएक फलामे नगरमा आइपुगे । त्यहाँ असाध्यै भयानक द्वार-पालहरू उभिराखेका थिए । भोक र प्यास दुवै लागेकाले श्रोणकोटीकर्णले ' मलाई केही खानेकुरा दिनुहुन्छ कि' भनेर आग्रह गरे । "हामीले त भोजन-को नाम सम्म पनि सुनेका छैनौ" भनेर द्वारपालहरूले जवाफ दिए । "पूर्वजन्ममा हामीहरू तक्षशिलाका निवासी थियौँ । असाध्यै कञ्जुश भएर हामीले त्यसबेला दान दिएनौँ । त्यसकै फलस्वरूप आज हामी यस प्रेतलोककम उत्पन्न भएका छौँ । यदि तपाई मनुष्य लोकमा फर्केर जाँदै हुनुहुन्छ भने कृपया हाम्रो लागि एउटा काम गरिदिनुहोस् है । हाम्रो भान्छाको चूलो भित्र एउटा सुनको चूर्णले भरिपूर्ण भाँडो राखिएको छ । त्यसलाई हामीले लुकाएर राखेका थियौँ । यो कुरा तपाईंले  हाम्रा आफन्तहरूलाई सुनाइदिनुहोस् र त्यो सुनले भरिएको भाँडो निकालेर आर्य कात्यायनलाई चढाएर हाम्रो लागि दान दिनू भनी पनि भन्नुहोस् ।

त्यहाँबाट अघि बढ्दै जाँदा श्रोणकोटीकर्ण एउटा दिव्य महल नजीकै आइपुगे । त्यस महलभित्र एक देवकन्या र देवपुत्र रतिक्रिडा गर्दै थिए । जब सूर्यास्त भयो, त्यो महल पनि अदृश्य भयो । देवपुत्र एउटा हिंसक जनावर-मा परिणत भयो र देवकन्यालाई खान खोज्यो । फेरि सूर्योदय हुनासाथ त्यो महल फेरि देखापर्‍यो र सबै पहिलेकै जस्तै भए । श्रोणकोटिकर्णले यस विचित्र घटनाको कारण के रहेछ भनी सोधे । ती आईमाईले जवाफ











दिई, "पूर्वजन्ममा म वासव गाउँकी वेश्या थिएँ । मैले आर्य कात्यायनबाट 'दिनमा कुनै काममिथ्याचार गर्ने छैन' भनी शील ग्रहण गरेकी थिएँ । त्यसै कारण दिनमा मैले दिव्य सुखभोग गर्छु तर राति नरकको दु:खभोग गर्छु । अहिले मेरी छोरी पनि वेश्यावृतिमा लागिरहेकी छे । 'चूलोमूनि सुनै सुनले भरिएको एउटा गाग्री छ, त्यसलाई निकालेर आर्य कात्यायनलाई मेरो तर्फबाट चढाउनू र आफूले पनि वेश्यावृति त्याग्नू भनी तपाईंले मेरी छोरीलाई गएर भनिदिनुपर्‍यो । कृपया तपाईले मेरो लागि त्यति कृपा गरि दिनुहोस् ।

श्रोणकोटिकर्णले त्यस्तो एकजना पुरुषलाई पनि देखे जसले दिनमा नारकीय दु:ख भोग गर्थ्यो भने राति दिव्य सुख भोग्थ्यो । त्यसलाई सोद्धाखेरी के बुझियो भने त्यो व्यक्ति पूर्वजन्ममा वासव नगरमा बस्ने एक कसाई थियो । उसले आर्य कात्यायनबाट कमसेकम राति हत्या नगर्ने शील लिएको थियो । त्यसै कारणले उसले राति दिव्य सुख भोग गर्थ्यो र दिनमा नारकीय दु:खभोग । त्यो पुरुषले श्रोणकोटीकर्णलाई भन्यो, "मेरो छोराले पनि कसाईकै काम गरिराखेको छ । उसलाई गएर एकचोटि भनिदिनुहोस् कि तलवार राख्ने ठाउँमुनि सुनै सुनले भरिएको एउटा भाडाँ छ । त्यसलाई निकालेर आर्य कात्यायनलाई दानस्वरूप चढाउनू । उसलाई अबदेखि प्राणातिपात त्यागिदिनू भनेर पनि भनिदिनुहोस् ।

श्रोणकोटिकर्ण त्यहाँबाट पनि अघि बढ्दै जाँदा एउटा महल नजीकै पुगे । त्यस महलमा एउटी सुन्दरी देवी आसनमा बसिरहेकी थिइ । त्यस आसनका चार खुट्टामा चारै प्रेतलाई बांधिएर राखिएका थिए । ती देवीले श्रोणकोटिकर्णलाई यथेष्ट मात्रामा भोजन टक्र्याइदिई र यस्तो भन्दै ऊ बाहिर गई, "यी प्रेतहरूलाई केहीपनि नदिनुहोस् है ।" प्रेतहरूले "हामीलाई पनि खाने र पिउने कुरा दिनुहोस्' भनी श्रोणकोटिकर्णसंग माग गर्न थाले । श्रोणकोटिकर्णले केही भोजन उनीहरूलाई पनि दिए । चारजना प्रेतमध्ये एकजनाले त्यो भोजन ग्रहण गर्ने वित्तिकै पग्लिएको पिटलमा परिणत भयो, अर्कोले लिन खोज्दा धूलोमा परिणत भयो, त्यस्तै अर्का दुईजनाले लिन खोज्दा क्रमश: पत्थर र खरानीमा परिणत भए । जब ती भोजन उनीहरूको











पेटभित्र गयो, उनीहरूलाई असाध्यै ठूलो खप्नै नसकिने पीडा भयो । एकछिन पछि ती देवी फेरि फर्किन्, त्यसरी सहनै नसक्ने गरी पीडा भोगिरहेका ती प्राणीहरूलाई देखेर भनिन्, "मैले तपाईंलाई यिनीहरूलाई केही नखुवाउनु भनेर गएकी हैन । तपाईले किन खुवाउनुभयो ? के ममा मात्र यिनीहरूप्रति अलिकति पनि दयाकरूणा छैन भन्ठान्नुभएको तपाईं-ले ? उनीहरू यसरी पीडाले छटपटिने भएकाले नै मैले यिनीहरूलाई केही पनि खानेकुरा दिएकी थिइन ।" त्यसपछि श्रोणकोटिकर्णले 'त्यस्तो कस्तो अकुशल कर्म गरेका कारण आज यिनीहरूले यो दुःख भोग्नुपऱ्यो' भनी देवीसित सोधे । देवीले जवाफ दिईन्, "पूर्वजन्ममा हामी पाँच जना, अर्थात म, मेरा पति र मेरा तीन सन्तानहरूको परिवार थियौं । एकदिन मेरो पति र मेरा छोराहरू बाहिर गइरहेको बेला म उनीहरूलाई स्वादिष्ट भोजन तयार गरी उनीहरूको बाटो रुँग्दै बसिरहेकी थिएँ । उनीहरू फर्किनुभन्दा अगाडि एकजना प्रत्येकबुद्ध मेरो घरको दैलोमा भिक्षा माग्दै आइपुगे । प्रत्येक-बुद्धलाई दान दिन मसंग भोजन जुन मैले मेरा पति र छोराहरूका लागि पकाएका थिए, त्यही दिइदिएँ । एकछिनपछि मैले फेरि घरका मानिसहरूका लागि भोजन पकाउन थाले । उनीहरू भोजन पाक्दैगर्दा एक्कासी आइपुगे र आउनासाथ 'हामीलाई भोक लाग्यो, खाना ल्याउनुपऱ्यो' भन्दै खानाको लागि माग गरे । मैले उनीहरूको अनुपस्थितिमा भएका सबै घटना बताईदिएँ र त्यही भएर अलिकता भोजन तयार हुनमा अलिकति ढिलो हुनगयो भनें । उनीहरू यो सुनेर दिक्क भए र त्यो भिक्षुसित एकदम रिसाए पनि । एकजनाले रीसको झोंकमा भन्यो, "त्यो भिक्षुलाई हाम्रा खाना दिनुको सट्टा पग्लेको पिटल दिनुपर्ने ।" अर्कोले भन्यो, 'धूलो दिएर पठाउनुपर्ने', अर्कोले 'ढुङ्गाहरू दिएर पठाउनुपर्ने' र अन्तिमका चाहिँले भन्यो, 'उसलाई त तात्तातो खरानी दिएर पठाउनुपर्ने' ।

यी सब अपशब्दहरू यिनीहरूले रीसको झोँकले बोलिरहँदाखेरी नै मलाई थाहा थियो कि पुण्यानुमोदन गर्नुपर्ने ठाउँमा एक भिक्षुप्रति यस्ता अपशब्दहरू बोलेको फलस्वरूप अवश्यपति यिनीहरूले भयंकर दुःख पाउनेछने । मैले अनि मनमनै प्रण गरें, 'उनीहरू दुःख भोगिरहेको











मेरो आँखाले प्रत्यक्ष देख्न पाऊँ ।' त्यही प्रण वा प्रार्थनाको बलले मैले यिनीहरूलाई आज यो अवस्थामा देखिराखेकी छु। मैले प्रार्थना नगरेकी भए म त्रायस्त्रिंश देवभुवनमा जन्मिने थिएँ । यसरी हामीहरू यहाँ प्रेत भएर जन्मियौँ । प्रत्येकबुद्धलाई दान दिएको फलस्वरूप म यहाँ पनि बलसम्पन्न नै छु ।" यति भन्दै ती आइमाईले अन्य प्रेतहरूलाई भनिन्, "ल, तिमीहरूले अब ऋद्धिबलद्वारा श्रोणकोटिकर्णलाई उहाँको घरसम्म पुऱ्याएर आउनू ।" यसरी एकछिनमै श्रोणकोटिकर्ण आफ्नो घरमा पुगे ।

यसरी १२ वर्षसम्म प्रेतलोकमा श्रोणकोटिकर्ण चाहार्दै बसे । घर पुगे पछि उनले साथीहरूले आफूलाई निन्द्राबाट नब्यूझाएकाले त्यसरी अलपत्र परेको कुरा कसैलाई भनेन । कसैले श्रोणकोटिकर्ण पहिले नै घर फर्किसक्यो भन्यो, कसैले ऊ आउँदैछ भन्यो, कसैले ऊ पछि आउँदैछ भनी भन्यो । तर श्रोणकोटिकर्णका आमाबाबुले कसैलाई पत्याएनन् ।

जब उनी आफ्नो शहरमा आइपुगे, प्रेतहरूका आफन्तहरूलाई आफूले भेटेका प्रेतहरूको सन्देश सबै पुऱ्याइदिए । स्वाभाविकरूपले सुरुमा तिनीहरूले श्रोणकोटिकर्णलाई विश्वास गरेनन् तर जब उनीहरूले सुनका घडा पाए, त्यसपछि मात्र उनीहरू विश्वस्त भए । श्रोणकोटिकर्ण फर्केर आएकाले उनका आमाबाबु पनि अत्यन्तै खुसी भए । तर धेरै दिन बित्न नपाउँदै, आफ्ना आमाबाबुको मृत्यु भएपछि श्रोणकोटिकर्णले आर्य कात्यायन भन्तेकहाँ गएर प्रव्रज्या ग्रहण गरे । कालान्तरमा श्रोणकोटिकर्णले अर्हत्व पनि हासिल गरे ।[७]

८. **स्थविरक** : परिच्छेद ५ मा जन्म दु:खको बारेमा व्याख्या गरिँदा स्थविरकको नाम उल्लेख भएको थियो । राजगृह नगरमा बस्ने एक धनाढ्य व्यापारीकी पत्नी पहिलोचोटी गर्भवती भइ । स्थविरक आफ्नो आमाको पेटभित्र साठी वर्षसम्म रह्यो भनिन्छ । स्थविरक गर्भमा रहँदारहँदै उनकी आमाले एक एक गर्दै दश सन्तानलाई त जन्माइसकेकी नै रहिछे । तैपनि स्थविरक गर्भमै थिए । पछि ती आइमाईलाई ठूलो घातक रोग लागेर मर्नै लागेकी थिइ । उसले आफ्नो पतिलाई भनी, "अझपनि मेरो गर्भमा शिशु











छ । म मरेपछि उसलाई निकाल्नुहोस् ।" यति भन्दै पत्नीको देहवसान भयो । त्यो व्यापारीले जीवक वैद्यलाई बोलाएर शीतवन श्मशानमा ती आइमाईको गर्भबाट बच्चालाई निकाल्न लगाइयो । त्यो निकालिएको बच्चा नवजाल शिशु नै भएपनि चाउरी परेको बुढो व्यक्ति जस्तै देखिन्थ्यो । त्यसैले उसको नामै स्थविरक (Old Born) राखियो । भगवान् बुद्धले उसलाई सोध्नुभयो, "के तिमी बुढो व्यक्ति हौ ?" स्थविरकले जवाफ दियो, "हो, भगवान्, म बुढो नै हुँ ।"

दश वर्षसम्म स्थविरक घरमै बस्यो । त्यसपछि सत्तरी वर्षको पाको उमेरमा ऊ प्रव्रजित भयो । एकचोटि अन्य पच्चीस जना भिक्षुहरूसित गृद्धकुट पर्वतमा वर्षावास बसिरहेका बेला, स्थविरक बाहेक अन्य सबै भिक्षुहरूले अर्हत्व फल प्राप्तगरे । यसले गर्दा स्थविरकको मनमा ठूलो नैराश्य छायो । यसरी व्यर्थमा बाँचिरहनु भन्दा मर्नु नै वेश भनी सोंच्दै उसले आत्महत्या गर्ने प्रयास गऱ्यो ।

भगवान् बुद्धले विचार गर्नुभयो, "अब स्थविरकलाई विनीत गर्ने समय आयो ।" अनि आफ्नो ऋद्धिबलले उहाँ स्थविरककहाँ पुग्नुभयो र धर्मोपदेश दिनुभयो । त्यसपछि स्थविरकले पनि अर्हत्वपद लाभ गऱ्यो ।

भिक्षुहरूले भगवान् बुद्धसित स्थविरक भन्तेका कर्म-विपाकका बारेमा आफ्ना जिज्ञासा व्यक्त गरे । त्यसको जवाफमा बुद्धले भन्नुभयो, "पहिले पहिले, भगवान् काश्यप बुद्धको शासनकालमा एक श्रेष्ठीपुत्र थियो । उसले एक अर्हतबाट प्रव्रज्या ग्रहण गऱ्यो । एकपल्ट त्यो ठाउँमा ठूलो उत्सव भयो । त्यहाँ हेर्न जान त्यो श्रेष्ठीपुत्रले आफ्नो आचार्यसंग अनेक चोटी याचना गऱ्यो । अर्हतले भन्थ्यो, 'केही बेर पर्खनू, यस बीच कुशल कर्म गर्नतिर लाग्नू' । यस्तो जवाफ सुनेर श्रेष्ठीपुत्रलाई ठूलो रीस उठ्यो र रीसकै झोंकमा उसले 'ठीक छ, उसोभए, यहीँ घरबाट बाहिर ननिस्किन यही अँध्यारो कोठामा साठी वर्षसम्म त्यसै परिरहनू ।' यस्तो कटु वचनको विपाकफलस्वरूप यस जन्ममा उसले साठी वर्षसम्म आमाको गर्भमा बसेर दुःख भोगिराख्नुपऱ्यो । पूर्वजन्ममा उनले स्कन्ध, आयतन, धातु, प्रतीत्यसमुत्पाद आदिमा पारंगत्व हासिल गरिसकेका थिए । तर त्यो











अकुशलकर्मको कारणले उनलाई यस जन्ममा अर्हत्व प्राप्त गर्नमा निकै ठूलो कठिनाइ भयो ।"[८]

९. **राजा कृकिका सात पुत्री** : आफ्नै शमसुखमा मात्र चासो राख्ने मध्यम पुरुषको दृष्टान्तको रूपमा कर्म-फल सम्बन्धी छैठौँ परिच्छेदमा राजा कृकि र उनका सात पुत्रीहरूको उल्लेख भयो । विस्तृत वृतान्त यस प्रकार छ :

पहिले पहिले काश्यप बुद्धको शासनकालमा कृकि नाम गरेका एकजना दानपति राजा थिए । उनका सातजना युवती छोरीहरू थिए । उनीहरूको मनमा संसारप्रति वैराग्य भावना उत्पन्न भयो । आफ्ना माता-पितालाई वन्दना गर्दै मधुर स्वरमा उनीहरूले यस प्रकार संसारप्रति आफ्नो वैराग्य भावना व्यक्त गरे : "यो संसार पानीमा देखिने चन्द्रमाको प्रतिबिम्व समान क्षणिक र सारहीन छ ।" यसरी उनीहरूले मध्यम पुरुष (केवल आफ्नो मात्र मुक्तिको आकांक्षा राख्ने व्यक्ति) का चित्त उत्पाद गरे । तर उनीहरूका मातापिताले यस्तो भने, "तिमीहरू अहिले तरुणी छौ । अहिले सुखभोग गर्ने समय हो । आफ्नै इच्छापूर्ति नभइकन पनि तिमीहरूलाई तपोवन जाने आज्ञा कसरी दिऊँ ?"

यसरी सन्तानको वात्सल्यले गर्दा, अत्यन्तै दु:खी मनले आफ्ना छोरी-हरूलाई प्रव्रज्या ग्रहण गर्नबाट रोक्न खोजे । तैपनि मातापिताको केही सीप लागेन । ती सात कन्याहरू तपोवन गएरै छाडे र तपश्चर्याबाट यस भवसागरबाट मुक्त भए ।[९]

१०. **महादत्त (महादान)** : मैत्री उत्पादका दृष्टान्तका रूपमा ब्राह्मण महादानको उल्लेख परिच्छेद ७ मा दुईचोटि भएको थियो । उनको कथा यस प्रकार छ :

प्राचीन कालमा महादान नाम गरेका एकजना ब्राह्मण थिए जो कला आदि सबै विद्याहरूमा पारंगत थिए । एकचोटि नगरबाट बाहिर गएका बेला उनले दरिद्र, रोगी इत्यादि हरूलाई देखे । तिनीहरूलाई देखेर उनको मनमा ठूलो संवेग उत्पन्न भयो । उनी सरासर अघि बढ्दै जाँदा एक











ठाँउमा कसाई र शिकारीहरूले पंक्षी, मृग इत्यादि जनावरहरूलाई मार्दै गरेको देखे । घर फर्केर महादानले आफूले देखेका कुराहरू र कसरी प्राणीहरूले अकुशल कर्म गरिरहेका थिए सबै आफ्ना आमाबाबुलाई बताए । त्यो घटनाले महादान अत्यन्तै दुःखी भए । उनले आफ्ना आमाबाबुलाई भनेर दश हजार योजनसम्मको परिधिमा रहने सबै प्राणीहरूलाई अन्न, धन आदि यथेष्ट मात्रामा बाड्न लगाए । यस प्रकार प्राणीहरूलाई सन्तुष्ट पारियो । तर दान दिँदा दिँदै आमाबाबुको धुकुटी नै रित्तियो । अब दिनलाई केही बाँकी रहेन । त्यसपछि कसरी धन कमाउन सकिन्छ भन्ने सोंचमा डुबी महादानले अन्तमा रत्नहरूको खोजी गर्न सामुद्रिक यात्रा गर्ने निधो गरे ।

आमाबाबुसंग अनुमति माँगेर उनी पाँचसय साथीहरूसित सामुद्रिक यात्रामा निस्के । सातदिनसम्म सामुद्रिक यात्रा गरिसकेपछि उनीहरू मणिद्वीपमा आइपुगे । उनीहरूले त्यो द्वीपमा विभिन्न प्रकारका बहुमूल्य मणि रत्नहरूलाई जम्मा पारे । घर फर्किने बेला भएपछि महादानले आफ्ना मित्रहरूलाई भने, “तिमीहरू जाँदै गर । नागराजको महलबाट चिन्तामणि रत्न नलिइकन म घर फर्केर जान्न । त्यो मणिले म सत्त्वहरूलाई अक्षय दान गर्नेछु ।”

त्यसपछि महादानले पुनः सामुद्रिक यात्रा सुरु गरे । समुद्रमा रहने दुष्ट सर्प र राक्षसहरू सबैलाई मैत्री-भावनाद्वारा शान्त पारे । तिनीहरू सबैले महादानप्रति ठूलो श्रद्धा व्यक्त गरे । तिनीहरूले महादानलाई आकाशबाट उडाई लगेर तुरुन्तै चारसय योजन टाढासम्म पुऱ्याईदिए ।

त्यहाँबाट पनि अघि बढ्दै गएपछि महादान चाँदीले बनेको एउटा विशाल भवननेर पुगे । त्यो भवन वरिपरि सर्पै सर्प थिए । मैत्री भावना गरेपछि ती सर्पहरू शान्त भए र वशमा आए । तत्पश्चात महादान निर्भिकपूर्वक त्यो भवनभित्र पसे । सप्तरत्नद्वारा निर्मित सिँहासनमा विराजमान भएका नागराजले महादानलाई एकदम भव्यरूपले स्वागत गरेर ‘यहाँ किन आउनुभएको’ भनी सोध्यो । जवाफमा महादानले भने, “जम्बुद्वीपका प्राणीहरू अहिले दरिद्रता र भोकमरीले छटपटिराखेका छन् ।











उनीहरूको त्यो दु:ख निवारण गर्नका लागि म यहाँ चिन्तामणि रत्न लिन आएको हुँ ।" महादानको त्यत्रो ठूलो अध्याशयदेखि प्रसन्न भएर नाग-राजले उनलाई एक महिनासम्म आतिथ्य सत्कार गरी त्यही नागलोकमै राख्यो । त्यहाँ बसिरहेका बेला महादानबाट राजाले चार स्मृत्युपस्थानका शिक्षा प्राप्त गर्‍यो । नाग लोकमा धेरै समयसम्म बसिसकेपछि महादानले राजाको मन जित्न सफल भएर पछि मणि पनि प्राप्त गरे । महादानले 'यो चिन्तामणि रत्नको प्रभाव कति छ ?' भनी सोद्धा राजाले जवाफ दियो, "दुई हजार योजनको परिधि जे चाहिएको हो ती सबै, अर्थात इच्छानुसार अन्न, धन इत्यादि वर्षा गराइदिन सक्छ यो मणिले ।" 'मेरा इच्छाहरू यस मणिले पूरा गरिदिन नसक्ने रहेछ त्यसो भए, यहाँबाट अन्तै कतै खोज्न जानुपर्‍यो भनी सोंच्दै महादान त्यहाँबाट प्रस्थान गरे ।

अघि यात्रा गर्दा गर्दै महादान एउटा वैदूर्यले निर्मित घरको नजीक पुगे । त्यहाँ पनि पहिलेको भवनमा जस्तै भयानक सर्पहरूको पहरा थियो । पहिले जस्तै मैत्री भावना गरी यिनीहरूलाई पनि शान्त पारिसके पछि महादान भवन भित्र पसे । त्यहाँ पनि नागराजले पहिले जस्तै भव्य स्वागर गरी आउनाका कारण सोध्यो ।

सबै महादानले पूर्ववत् बताए । त्यहाँ महादान दुई महिनासम्म बस्दा राजालाई चार ऋद्धिपादसम्बन्धी उपदेश दिए र अन्तमा राजाबाट मणि पनि हासिल गरे । पहिले जस्तै महादानले त्यो मणिको प्रभावको बारेमा जान्न खोज्दा नागराजले भन्यो, "यो मणिले चार हजार योजनसम्मको परिधिभित्र येथेष्ट अन्न, धन आदि वर्षाउन सक्छ ।" महादानलाई त्यतिले पनि चित्त बुझेन । फेरि त्यो ठाँउ छाडी अन्तै खोजी गर्ने उद्देश्यले प्रस्थान गरे ।

जाँदा जाँदै उनले सुनले बनेको एउटा देदीप्यमान भवन देखे । पहिलेजस्तै त्यहाँ पहरा दिँदै बसेका सर्पहरूलाई मैत्री भावनाले शान्त पार्दै भवनभित्र प्रवेश गरे । त्यहाँका नागराजले पनि खुब भव्यका साथ स्वागत-सत्कार गरी महादानलाई आउनाका कारण सोध्यो र महादानले सबै पूर्ववत् बताइदिए । त्यहाँ उनले सपरिवार नागराज गणलाई चार











महिनासम्म अनन्त धर्म पर्यायहरूको उपदेश दिए । अन्तमा मणि दिइँदा फेरी त्यही प्रश्न सोधे । जवाफमा नागराजले भने, “यसले आठ हजार योजनसम्मको परिधिभित्र आफ्नो प्रभाव देखाउन सक्छ ।”

त्यसपछि महादानले विचार गरे, “यो जम्बुद्वीप त सात हजार योजन-सम्म मात्र फैलिएको छ, जबकि यो मणिले आठ हजार योजनसम्म काम गर्न सक्छ भनेपछि यसले बल्ल मेरो इच्छा पूरा हुने भयो ।”

पछि कुनैबेला महादान समुद्रको किनारामा बसेर विश्राम गर्दै थिए, उनी गहिरो निद्रामा डुबेका थिए । चिन्तामणि रत्न नागलोकबाट लगिएकाले केही नागहरू दुःखी थिए । त्यसैले महादान निदाइराखेको मौका छोपेर ती नागहरूले त्यो मणि चोरेर लगे । महादानले निद्राबाट ब्युझिएर हेर्दाखेरी त्यहाँ मणि थिएन । त्यत्रो मिहेनत गरेर ल्याएको मणि त्यसरी अदृश्य हुँदा उनलाई ठूलो संताप भयो । “अब म यो समुद्रको पानी सबै निकाली सुख्खा जमीनमा परिणत गरिदिनेछु” भन्ने सोचाई लिएर कछुवाको खोलमा समुद्रको पानी खन्याउँदै अरू ठाउँतिर फाल्दै गरे ।

उनको त्यो साहस र परिश्रम देखेर देवताहरू पनि उनलाई मद्दत गर्न आए र आफ्ना वस्त्र पानीमा भिजाएर अर्को ठाउँमा वस्त्र निचोरेर पानी फाले । हुँदाहुँदै समुद्रको पानी घट्दै जान थाल्यो । नागहरू एकदम डराएर महादानसंग माफी मागे र मणि पनि फर्काइदिए ।

त्यसपछि चिन्तामणि रत्न लिएर महादान घर फर्के । आफ्नो छोरा-को वियोगमा विलाप गर्दै गर्दै उनका मातापिताका अन्धा भइसकेका थिए । चिन्तामणि रत्नको प्रभावले उनीहरूको आँखा ठीक भए । महादानले पिताको धुकुटी रत्नै रत्नले टन्न भरिदिए । त्यसपछि जम्बुद्वीपवासीहरूलाई त्यसमणिको प्रभावले येथेष्ट मात्रामा अन्न, वस्त्र, सुन, चाँदी इत्यादि दान दिन उनी सफल भए । सबै सत्त्वहरूलाई दरिद्रताबाट छुटकारा दिलाई दश कुशल कर्मको बाटोमा लगाइदिए ।[१०]

११. **मैत्रीबल** : मैत्री उत्पादका दृष्टान्तका रूपमा ब्राह्मण मैत्रीबलको उल्लेख परिच्छेद ७ मा भएको थियो । उनको कथा यस प्रकार छ :











बोधिसत्त्व सिद्धार्थ (शाक्यमुनि बुद्ध) कुनै समयमा सबै प्राणीहरूप्रति मैत्री भाव राख्ने मैत्रीबल नामक राजाका रूपमा थिए । संसारको कल्याण र हित चाहाने करुणावान राजा भएका कारण उनको महिमा दिगदिगन्धसम्म फैलिएको थियो । राजा मैत्रीबल दान, करुणा, साहसिकता, सदा आचरण र विनयपूर्वक रहने तथा धर्मप्रेमी, धर्माचरणले युक्त, अत्यधिक सद्‌गुणी भएका कारण लोककल्याणकारी कहलिएका थिए ।

प्रजावत्सल राजा भएका कारणले प्रजाको हरेक सुख र दुःख दुवैको ख्याल राजामा हुने गर्दथ्यो । जसरी एक पिताले आफ्ना सन्ततिहरूप्रति निस्वार्थरूपमा माया प्रदान गरेको हुन्छ त्यसरी नै राज्यको संचालन भएका कारण राज्य संचालनमा कुनै वाधा अड्चन आएको थिएन ।

राजा यस प्रकार सत्य, त्याग, शान्ति, प्रज्ञा आदि गुणले सम्पन्न भई सर्वसत्त्वको कल्याण मार्गमा लागि बोधिप्राप्तिको बाटोमा उन्मुख भइ रहेका बेलामा ५ जना यक्षहरू मैत्रीबलको राज्यमा आए । यी यक्षहरूलाई उनीहरूको स्वामीले कुनै प्रकारको अपराधका कारण देश निकाला गरेका थिए । यी यक्षहरू मैत्रीबल राजाको राज्यका जनताहरूको प्रसन्नता, शान्ति र समृद्धि देखी इर्श्यालु भई जनताको खुशी, शान्ति, अमनचयनलाई भङ्ग गर्ने योजना बनाउन थाले ।

राजा मैत्रीबलको अपरिमित पुण्य तथा मैत्रीको प्रभावले जनताको तेज हरण गर्न उनीहरू असमर्थ भए । मैत्रीबलको राज्यका कुनैपति प्रजाको शान्तिभङ्ग गर्न नसकेकाले यक्षहरू आश्चर्यचकित भए । उनीहरूलाई राजा-को विद्या, तपस्या, सिद्धिको कारणबाट कुनैपनि विघ्न वाधा गर्ने असमर्थ भएका कारणले ती यक्षहरूले ब्राह्मणको रूप धारण गरी घुम्न थाले ।

यक्षहरू घुम्ने क्रममा एक गोपालक जो बनमा घुम्ने गर्दथे उसलाई एउटा रुखको फेदमा हरियो दुवोमा बसिरहेको देखे । उसले जुना लगाएको तथा जङ्गली फूलपातको माला लगाएको थियो । ऊ डोरी वाट्नमा तल्लीन थियो साथमा गीत पनि गाइरहेको थियो । सो ग्वालाको नजीक पुगी यक्षहरूले सोधे, "यस एकान्त निर्जन ठाउँमा एक्लै बस्दा के तिमीलाई डर लाग्दैन ?" ग्वालाले जवाफ दियो, "म केसँग डराउँ ?"











तब ब्राह्मण भेषधारी यक्षहरूले सोधे, “के तिमीले डरलाग्दा प्रकृतिका यक्ष, पिशाच राक्षसका बारेमा कसैबाट केही सुनेकाछैनौ ?”

यस्ता प्रश्नहरू सुनी ग्वालाले भने, “जुन व्यक्ति संयमी, धैर्य, विद्या, समाधिले सम्पन्न छ ऊ सर्वदा राक्षसी भयबाट मुक्त भएको हुन्छ । ग्वालाले पुनः थपे, “यस देशका हरेक नागरिक राजा मैत्रीबलबाट रक्षित छन् जसका कारण साक्षात इन्द्रले त भय उत्पन्न गराउन सक्दैनन्, राक्षस, प्रेत, यक्ष इत्यादिका त के कुरा ? त्यसैकारण म यस निर्जन जङ्गलमा निडर भएर घरमा जस्तै विचरण गर्दछु । मेरा लागि रात पनि दिन सरह नै हो । त्यसैकारण मलाई कुनै प्रकारको भय छैन ।”

तत्पश्चात यक्षहरूले ग्वालालाई सोधे, “हे भद्रपुरुष ! तिम्रा राजा कस्ता छन् त ?” ग्वालाले उत्तर दिए, “हाम्रा राजा स्वर्णपर्वतको शिलासमान विशाल छाति भएका, शरद ऋतुको निर्मल चन्द्रमा समान मुखाकृति भएका, बलिष्ठ हातहरू, साँढेको समान दृष्टि भएका पराक्रमी छन् । हाम्रा राजा मैत्रीबलको प्रभाव सर्वत्र प्रकाशित छ । के तिमीहरूले हाम्रा राजाका बारेमा सुनेका छैनौ ?”

ग्वालाले राजाका बारेमा थप जानकारी दिदै भने, “हाम्रा राजाको वास्तविक शक्ति नै मैत्री हो । उनका सेनाहरूका खालि एउटा आधारमात्र के हुन् भने उनीहरू क्रोधी छैनन्, भयमुक्त छन् र कठोर वचन बोल्दैनन् । यी सेनाहरू समुचित तवरबाट देशको रक्षा गर्दछन् । हाम्रो देशमा धर्मद्वारा नै देशको नेतृत्व हुन्छ, निम्नस्तरको राजनितिबाट होइन । यस देशका धन सज्जनहरूको सत्कारका निम्ति हुन् । यस देशका राजाले दुर्जनका धन र अभिमानको सहारा कहिल्यै पनि लिदैनन् । यसप्रकार हाम्रा राजा मैत्रीबल अगणित गुणहरूले भरिपूर्ण छन् । अतः यक्ष राक्षसले उनको राज्यमा कुनै खालको असर पुऱ्याउन सक्दैनन् । म राजाका सद्‌गुणका बारेमा के-के मात्र बताउँ ? बरु तिमीहरू आफै नगरमा प्रवेश गरेर बुझ्न सक्छौ ? हाम्रा राजा आर्य मर्यादाले बाँधिएका छन् । नित्य कुशल कर्महरू सम्पन्न गर्ने हुनाले अन्नको प्रचुरता र समृद्धिवान छ हाम्रो देश । शीलवान, विनम्र, अतिथिलाई विशेषरूपमा प्रेम गर्ने हुनाले हाम्रा राजाको यश स्तुतीयोग्य











छ।" यस्ता राजाको सद्गुणको बयान सुने तापनि ती पाँचजना यक्षहरूको मन पग्लिएन ।

ती यक्षहरूले राजाको दानपारमिताको अधिकतम फाइदा उठाउने मनसायले राजालाई अत्यन्त कठिन मानसिक अवस्थामा पुऱ्याउने चाल-स्वरूप राजासमक्ष गई भोजन माँगे । अतिथी सत्कारका लागि जुन सुकै नै मुल्य चुकाउन तत्पर राजाका लागि दान गर्न यो एउटा स्वर्ण अवसर नै थियो । उनीहरूलाई दिइएको शाकाहारी भोजन अस्वीकार गर्दै जसरी एक बाघका लागि हरियो घाँस योग्य छैन त्यसैगरी हामी यक्षहरूका लागि शाकाहारी भोजन योग्य छैन भनेर भने । उनीहरूले राजालाई आफूहरूले मनुष्यको ताजा रगत र मासु मात्र खाने कुरा व्यक्त गर्दै आफ्नो भयङ्कर विकृत रूप प्रकट गरे । विकराल आसुरी शरीर लामा-लामा दाऱ्हा भएका आगो समान टल्किएका आंखा भएका राक्षसहरू देखि राजा अत्यन्तै ठूलो करुणाले द्रवीभूत भए ।

बारम्बार निर्दयतापूर्वक पापकर्म गरेका कारण तिनीहरू यक्ष बनेका थिए । राजा यिनीहरूको दु:खलाई कसरी मोचन गर्ने भनी सोंच्न थाले । राजाले भोजन दानका लागि अरू मनुष्यलाई खडा गर्न किञ्चित पनि चाहेनन् र यक्षहरूलाई भोजन नै नदिइ निरुत्साहित पार्न पनि चाहन्नथे । त्यसैले उनले आफ्नै शरीरको मासु र रगत दिने बाहेक अरू कुनै विकल्प देखेनन् ।

राजाले सोंचे "यो मेरो शरीर घाउ नै घाउले भरिएको, पीडाले भरि-एको, रोगको भण्डार हो । अत: यस पुणित अवसरमा म आफ्नो शरीर दान गरी किन पुण्य संभार नगरुँ ?" यस्ता विचारहरू राजाको मनमा प्रबलरूपमा उठे ।

मेरो रगतले भरिएको यो शरिर लोककल्याणकारी अतिथी सत्कार जस्तो महानकार्यका लागि अर्पण गर्दछु भनी राजाले आफ्नो वैद्यलाई आफ्नो नशा काट्ने अनुमति दिए । यस कार्यलाई यक्षगणले खुशीसाथ अनुमोदन गरे । यो कुरा सुनेर राजाको मन्त्री शोक आवेगद्वारा ब्याकुल भए । मन्त्रीले यी सारा प्रजाहरूको हित कल्याणलाई त्यागेर अर्को व्यक्तिको











जीवन हरण गरी त्यसमा संतोष अनुभव गर्ने साहसको कुरालाई नमान्न आग्रह गरे ।

मन्त्रीले 'तपाईको वीरताको फलस्वरूप सुरक्षित यी प्रजागणहरूले तपाईको यो दुष्कर र अनर्थकारी बुद्धिले पराजित मानसिकको दुष्कर चर्यालाई सहन सक्ने छैनन' भने । "यी ५ जनाका लागि सारा संसारको अनर्थ गर्नु महाराजको यो कस्तो खालको धर्म हो । यी सारा जनताहरू प्रतिको स्नेह शून्यताको पराकाष्ठा त भएन ।"

यी कुराहरू सुनिसकेपछि राजाले भने, "मागेको वस्तु जुन आफै सगं विद्यमान छ त्यसैलाई छैन, म दिन्न यस्तो खालको उत्तर म जस्तो दयालु (करुणावान)ले कसरी दिउँ ? धर्मको आचरणले चलिरहेको राज्यको अग्रजले पनि यसरी कुमार्गमा चले भने मेरो आचरणको अनुशरण गर्ने मेरा प्रजाहरूको के दशा होला ? त्यसकारण प्रजाहरूको कल्याणका खातिर र यो प्रभाव आफ्ना प्रजाहरूमा चिरकाल सम्म रहनाका लागि मैले मेरो शरीर दान गर्नु सर्वथा जाहेज छ ।"

यस दानकार्यको प्रयोजनका लागि मन्त्रीले आफूले शरीर दान दिन तयार हुदाँ राजाले भने, "म अरूको पीडालाई कति पनि देख्न सक्दिन अब तपाईको शरीर दान दिदांको प्रत्यक्षदर्शीका रूपमा हेर्न म कदापि सक्दिन । अनि अर्को कुरा शरीरको मासु र रगत यी यक्षगणले तपाईसंग मागेका होइनन् म संग मागेका हुन् त्यसैकारण म नै दान गर्छु" यस्तो उत्तर राजा-ले मन्त्रीलाई दिए । अनि राजाले मन्त्रीलाई सम्झाए, "त्यसकारण तिमी यस्ता खालका आग्रह नगर, मैले भनिरहेका कुराहरूलाई न्यायोचित पारा-बाट बुझ्ने प्रयाश गर । मेरो मन्त्री हुनाले तिमीले मेरा यी कुरामा समर्थन गर नकि ब्याकुल बनेर मेरा यी कुराहरूको विरोध ।

"यस्तो खालको असामान्य याचना गर्ने विशिष्ट अतिथि सौभाग्यबाट प्राप्त हुन्छ । यस्तो शुभ अवशरमा दानमा शंका गर्नुसमेत पाप हुन्छ भने दानलाई निषेध गर्नु त महापाप हुनजान्छ ।" यस्तै कुराहरू गर्दै राजाले आफ्नो मन्त्री परिषदलाई बोलाए र वैद्यको सहयोगबाट आफ्नो शरीरको पांच रक्तधमनीका काट्न लगाएर यक्षहरूलाई यस्तो भने "तपाईहरूले











यस दान कार्यलाई स्वीकार गरेर यस कार्यमा मलाई सहयोग गरी मलाई परम आनन्द प्रदान गर्नुहोस ।

यक्षले राजाको तातो रगत पिउन थाले । यस अवस्थामा राजाको शरीर अत्यधिक प्रेम, धैर्यता तथा सदगुणले युक्त भएका कारण न मुर्छित नै भयो नत रगत नै बन्द हुन छोड्यो ।

यक्षहरूले प्यास र थकावटबाट परम सन्तुष्टि पाई सकेपछि राजामा अझ प्रसन्नता छायो । अब अनले आफ्नो शरीरको मासु काटेर यक्षहरूलाई दिन थाले । तलवारका चोटहरूको दुखाई अपरिमित प्रेमको कारणबाट चोट जस्तै लाग्दैनथ्यो । राजा आफ्नो शरीरको मासुका टुक्राहरू दिँदै उनीहरूलाई तृप्त पार्दै थिए उनमा प्रसन्नताका लहरहरू जगमगाउँदै थियो । यसबाट यक्षहरूको मन समेत पग्लन थाल्यो ।

'आश्चर्य ! अद्‌भूत ! के साँच्चै सत्य हो वा असत्य हो ?' पर्दै आनन्दले आत्मविभोर भए यक्षगणहरू । राजा प्रति द्वेष भावना पूर्णरूपमा निर्मल भयो ; अनि उनीहरूको हृदय एकदम शान्त बन्न पुग्यो । उनीहरूले राजा-को स्तुतिगान, मंगलगान गर्दै, राजाको चरणकमलमा दण्डवत गरे । अब उनीहरूले 'महाराज ! अब भयो, हामी पूर्णतया सन्तुष्ट भयौं' भन्न थाले । उनीहरूले राजालाई अत्यन्त आदरभाव साथै, सम्मानपूर्वक दान कार्यलाई रोक्न आग्रह गरे । उनीहरू तपाई समान महापुरुष पाएर मनुष्यलोक अत्यन्त शौभाग्यशाली भएको छ । तपाईको पीडामा तपाईलाई किंचित पनि दु:ख छैन । तर तपाईको पीडाले हामी जलिरहेका छौं । जस्ता उद्-गारहरू व्यक्त गर्नथाले । उनीहरूले 'राजाको मनोकामना पूर्ण होस' भन्न थाले ।

राजाले यस दानकार्यको प्रयोजन के हो भनेर बुझाउँदै भने, "म यस दान पुण्यद्वारा सर्वदर्शी बुद्ध बनेर राग, द्वेष, मोहलाई जितेर जरा-व्याधि र मृत्युरूपी महासागरबाट सम्पूर्ण जगतका सर्वसत्त्वहरूलाई उद्वार गर्न चाहान्छु ।

यो कुरा सुनेर प्रसन्नतापूर्वक रोमाञ्चकता प्रकट गर्दै यक्षहरूले तपाईको यस महान अभिष्ट लक्ष्य पूरा हुने कुरा व्यक्त गरे ।











यक्षहरूले आफ्नो अज्ञानताको कारणबाट राजालाई यस्तो कष्ट दिएकोमा क्षमा याचना गरे । प्रत्युत्तरमा राजाले भने, "यक्षहरू ! तपाईहरूले मलाई कष्ट होइन उपकार गर्नु भएकोमा क्षमा माग्नु पर्ने कुनै कारण नै छैन ।" यक्षहरूले राजाले बुद्धत्व प्राप्त गरिसकेपछि बोधि धर्म आफूहरूले पनि सुन्ने इच्छा व्यक्त गरे । "यस्तो धर्ममार्गमा सहयोग पुऱ्याउने तपाईहरूलाई म कहिल्यै विर्सने छैन । बुद्धत्व प्राप्त गरिसके पश्चात् मोक्षरूपी अमृत धर्म म सर्वप्रथम तपाईहरूलाई दिउँला" भनेर वचन दिए राजाले । उनीहरू (यक्षगण) अत्यन्त प्रीतिपूर्वक राजाको प्रदक्षिणा गर्दै अर्न्तद्यान भए ।

जुन समयमा राजाले आफ्नो मासु र रगत दान गर्दै थियो त्यस बेला पृथ्वीमा कम्पन आउनाकासाथै स्वर्णपर्वत समेत कम्पित भएको थियो । त्यहाँका देवहरूले बाजा बजाएर स्वागत गरिरहेका थिए । पुष्प लताहरूले पुण्य वर्षा गरिरेहका थिए । महासागरका तरङ्गहरू तरङ्गीदै आवेशमा आएर राजालाई रोक्न चाँहदै थिए । यस्तो कुरा इन्द्रले चाल पाए । राजाधिकारको विनाश हुने डरले तुरुन्त राजभवनमा आए । यस अत्यन्त जटिल र कारुणिक अवस्थामा पनि राजामा प्रसन्नता देखेर मनोहर वाणीले इन्द्रले राजाको दानपारमिताको प्रशंसा गरे । इन्द्रले राजाका घाउहरूमा दिव्य औषधी लगाई दिए । राजाको शरीर पहिलाको सरह वेदना शून्य भयो । राजाबाट बिदा भई इन्द्र अर्न्तध्यान भए ।

यी नै ५ यक्षगण पछि ऋषिपत्तन मृगदावनमा पहिलो धर्म चक्र प्रवर्तनका बेलाका पञ्च भद्रिय भिक्षुहरूका रूपमा धर्म श्रवण गर्न अवसर प्राप्त गरेका थिए ।[११]

१२. **अंगुलिमाल** : चार बलको माध्यमले पापदेशना गर्ने सम्बन्धमा परिच्छेद ९ मा विस्तृतरूपले व्याख्या गरिएको थियो । त्यहाँ अंगुलिमाललाई दृष्टान्तको रूपमा लिइएको थियो । श्रावस्ती नगरमा राजा प्रसेनजीतका एक एकदम विद्वान र सम्पन्न मन्त्री थियो । उसकी पत्नीले एक सुन्दर बालकलाई जन्म दिई जसलाई अहिंसक भन्ने नाम राखियो । अहिंसक ठूलो भइसकेपछि एकजना विद्वान ब्राह्मणकहाँ पढ्न पठाइयो । त्यो ब्राह्मणका











पाँच सय शिष्यहरू थिए । हुने विरुवाको चिल्लो पात भनेझैँ, साने उमेर-देखि नै अहिंसक एकदम बुद्धिमान र मेधावी थिए । अन्य शिष्यहरूले एक वर्ष लगाएर सिक्ने पाठ उनले एकै दिनमा सिक्दथे । त्यसकारण, आचार्यले अहिंसकलाई अरूलाई भन्दा अलि बढ्ता नै माया गर्दथे । यसरी आचार्यसंगै बसेर अहिंसकले आफ्नो अध्ययन जारी राखे ।

आचार्यकी पत्नीले पनि अहिसंकलाई धेरै नै माया गर्थिन् । तर उनी अहिंसकको सौन्दर्यप्रति बढी मोहित भएकी थिइन् र आफ्नो मनको कुरा अहिंसकलाई बताउन पाइरहेकी थिइन । एकदिन कुनै दानपतिको निमन्त्रणामा उसको घरमा शिष्यहरूसहित तीन महिनाको लागि पूजा-पाठ गर्न आचार्य प्रस्थान गरे । घरमा धेरै काम भएकाले अहिसंकलाई साथमा लगिएको थिएन । आचार्यकी पत्नी पनि कुटीमै बसिरहेकी थिई ।

त्यही मौका छोपेर कामले पीडित भएकी आचार्यकी पत्नीले आफ्नो कुरा अहिंसकलाई भन्न थाली । तर 'यो ब्राह्मण धर्मको विरुद्ध हुनेछ । यस्तो छलपूर्ण आचरण गर्नुभन्दा बरु मर्नु जाति ।' भन्ने सोंचाईले अहिंसक आचार्यकी पत्नी नजीकै गएनन् । यसरी आचार्यकी पत्नीको मनोकामना पूरा भएन । त्यसपछि अहिंसकदेखि उनी अत्यन्तै रिसाइन् । त्यही रीसको झोँकमा शिष्य मण्डलीका साथमा आचार्य कुटीमा फर्केपछि ती आइमाईले आचार्यलाई भए नभएका कुराहरू बनाएर अहिंसकमाथि मिथ्या आरोप लगाई आफ्नो दुःखेसो पोखिन् ।

यो सुनेपछि आचार्य पनि असाध्यै क्रोधित भए । अहिंसक मन्त्रीको छोरा भएको कारणले र अत्यन्तै तेजश्वी पनि भएकाले आचार्यमा उनको सामु केही भन्ने आँटै थिएन । त्यसैले आचार्यले उनलाई एउटा कुटिल चाल रचेर दण्ड दिने निधो गरे । उनलाई बोलाएर आचार्यले यस्तो भने, "मैले तिमीलाई मात्र त्यस्तो गम्भीर उपदेश दिएँ जुन मैले अरू कसैलाई दिएको थिएन । अब मेरो कुरा राम्ररी सुन । यदि तिमीले एक हप्ताभित्र एक हजार मान्छे मारेर तिनीहरूका औँलाहरूको माला बनाउन सकेमा साक्षात् ब्रह्माको दर्शन पाउनेछौ । त्यसपछि तिम्रो जन्म पनि देवलोकमै हुनेछ ।" यस्तो कुरा सुनेर अहिंसकको मनमा ठूलो शंका उत्पन्न भयो ।











उनले आचार्यलाई जवाफ दिए, “मान्छे मारेर पनि कोही कसरी ब्रह्मलोकमा जन्मिन सक्छ ।”

आचार्यले तुरुन्तै जवाफ दिए, “तिमी मेरो शिष्य हौ । मेरो कुरा मान्दैनौ र मैले भने अनुसार गर्दैनौ भने ठीकै छ । तिमीमा मप्रति आस्था नै रहेनछ भनी ठानुँला । मप्रति विश्वासै छैन भने यहाँ किन बसिराखेको । फर्केर गए हुन्छ ।”

त्यही बखत आचार्यले तलवार झिकी जमीनमा गाडिदियो । त्यो अभिमन्त्रित गरिएको तलवार देख्ने वित्तिकै अहिसंकमा पनि क्रोध जागेछ । त्यसपछि त्यो तलवार अहिंसकलाई दिइयो । त्यसको प्रभावले अहिंसक अत्यन्तै क्रोध र द्वेषले ग्रसित भई यताउता पागल जस्तै दगुर्न थाले । जो जो बाटोमा आउँथे, अहिंसकले सबैलाई मारेर उनीहरूका औंला काट्दथे । त्यही कुकर्मले गर्दा उनको नामै अंगुलिमाल रहन गयो । एकपल्ट उनकी आमा आफ्नो छोरा भोकाएको होला भनी भोजन लिएर उनलाई खोज्न हिडिन् । आफ्नै आमा भनेर पनि चिन्न छाडिसकेका थिए अंगुलिमालले । उनलाई पनि मार्न अंगुलिमाल दौडे ।

त्यही वखत अंगुलिमालले भगवान बुद्धलाई देखेर उहाँको पछि पछि दगुरे । भगवान् बुद्धले “अब अंगुलिमाललाई विनित गर्ने उचित अवसर आयो” भन्ने विचार लिएर उनलाई नै भेट्न जानुभएको थियो ।

भगवान् बुद्धको ऋद्धि बलले गर्दा अंगुलिमालले जति दौडेपनि भगवान् बुद्धलाई भेट्न सकेका थिएनन् । अन्तमा थकाई लागेर उनले भगवान् बुद्धलाई भने, “त्यही रोक्नुहोस्, अगाडि नबढ्नुहोस् ।” बुद्धले भन्नुभयो, “म कहाँ हिडिरहेको छु र । म त सदा स्थिर नै छु, किनकि मेरा इन्द्रियहरू शान्त छन्, मसंग समाधि वसिता छ । आचार्यको गलत र नचाहिँदा उपदेशका कारण तिम्रो चित्त भ्रमित भयो । त्यसैले तिमी स्थिर छैनौ । पापमाथि पाप गर्दैछौ तिमी ।”

बुद्धको यस वचनको अर्थ बुझेर अंगुलिमालले तलवार भूईमा फालेर आफ्नो कुकर्मको प्रायश्चि गर्न थाले । अंगुलिमालले पाप देशना गरे र चर्तुबलस्वरूप बुद्धको शरणमा गएर अन्ततः अर्हत्व प्राप्त गरे ।[१२]











१३. **उदयन** : चार बलको माध्यमले पापदेशना गर्ने सम्बन्धमा परिच्छेद ९ मा विस्तृतरूपले व्याख्या गरिएको थियो । त्यहाँ उदयनलाई दृष्टान्तको रूपमा लिइएको थियो । श्रावस्तिमा एकजना सार्थवाह गृहपति रहन्थ्यो । उसकी पत्नीले एउटा पुत्रलाई जन्म दिइन । जसको नाम उदयन राखियो । पति अर्कै ठाउँमा व्यापार गर्न गयो । उसकी पत्नी एक्लैले त्यो छोरालाई राम्ररी स्याहार सुसार गरी हुर्काइन् । एकपल्ट उदयन र उनका साथीहरूले कौशीमा बसिरहेकी एउटी युवतीलाई देखे । उदयनको ध्यान आफूतिर तान्न ती युवतीले एउटा फूलको माला उनीतिर फ्यालिदिई । उदयनका साथीहरूले हस्तक्षेप गर्न नचाहेकाले उदयनलाई त्यही छोडी आ-आफ्ना घरतर्फ लागे । उदयनकी आमालाई उनीहरूले सबै कुरा बताईदिए ।

उदयनकी आमा र साथीहरू मिलेर यसबारे व्यापक छलफल गरे । साथीहरूले भने, "उदयनले त्यो केटीलाई भेट्न गयो भने धेरै दुःख पाउनेछ । त्यसैले हामीले उसलाई रोकौँ । आमा, तपाईले राति उसलाई जानबाट रोक्नुपर्छ है ।" आमाले आफ्नो छोराको लागि सुविधायुक्त र आरामदायी पलङ्ग, सौचालय भएको एउटा कोठा बनाएर दिइन् र त्यो कोठाको ढोकामा बाहिरबाट ताल्चा लगाई आफू ढोका छेउ मै सुतिन् ।

राति उदयनको निद्रा खुल्यो । त्यसपछि आमासंग अनुरोध गर्दै भने, "आमा, मलाई शौचालय जानु छ, एकछिन ढोका खोल्नुहोस न ।" त्यसपछि, केही बेर उदयन चुपचाप कोठाभित्र बसिराखे, एकछिनपछि उनी फेरि कराए, "आमा, विन्ति छ, ढोका एकचोटी खोल्नुहोस् । मलाई बाहिर जानु छ ।" आमाले जवाफ दिइन्, "यतिबेला राति पनि कहाँ बाहिर जाने कुरा गर्छस् । भित्र आरामदायी पलङ्ग छँदैछ । सुत खुरुक्क ।" फेरि एकछिनपछि उदयन चिच्याउन थाले, "आमा, म बाहिर जान सक्छु कि सक्दिन । खुरुक्क ढोका खोल्नु भनेको ।" आमाले भनिन्, "तँ किन त्यसो भन्दैछस् मलाई राम्ररी थाहा छ । तँलाई बाहिर पठाउन नचाहेकीले नै तेरो कोठाको ढोका छेउ यसरी सुतिरहेकी छु ।"

त्यसपछि उदयनलाई असाध्यै ठूलो रिस उठ्यो । त्यो रिसको झोंकले उनले केही देख्न सकेनन् । उदयन आफ्नै आमालाई खुकुरी प्रहार गरी











हत्या गरेर त्यो केटीसंग भेट्न गए । केटीसित कुरा गर्दा आफूले गरेको भयानक पाप सम्झी थर थर काँप्दैथिए । त्यो केटीले त्यसको अर्कै अर्थ निकालेर उदयनलाई संझाउने कोशिस गरी, “तिमी यसरी डराउनु पर्दैन । यो घरभित्र कोही पनि छैन हामी दुईजना बाहेक ।” उदयनले सविस्तार भने, “त्यसो हैन, कुरा अर्कै छ । मैले तिम्रो लागि आफ्नै आमालाई हत्या गर्न पुगेँ ।”

केटीले मनमनै विचार गरी, “यो त दुष्ट पापी पो रहेछ । ऊ रिसायो भने मलाई पनि मार्न सक्छ उसले ।” त्यस्तो सोंचेर केटीले भनी, “तिमी एकैछिन यहाँ बस्दै गर्नु है । म कौशीमा एकचोटी गएर आउँछु ।” कौशी-मा गएर युवतीले ठूलो स्वरले ‘चोर आयो, यहाँ चोर आयो’ भनेर कराउन थाली । यसरी कराएको सुनेर उदयन बेतोडले दौडेर आफ्नो घरतर्फ गए । त्यहाँ आफ्नी आमाको लासको छेउँमा रगतले लटपटिएको तलवार फालेर ‘चोरले मेरो आमालाई मार्‍यो’ भन्दै चिच्याउँदै उदयन भागे ।

त्यसको फलस्वरूप उदयनले धेरै दु:ख कष्ट पाए र पछि उनलाई आफ्नो कुकृत्यप्रति ठूलो पश्चाताप भयो । यस्तै भौतारिँदा भौतारिँदै एक दिन उनी जेतवन महाविहार नजीकै पुगे । त्यहाँ एकजना भिक्षुले विनयागमबाट निम्न श्लोक पाठ गर्दै गरेको सुने :

जसले पाप गरेको छ
कुशल कर्म गरेर त्यसको प्रतिकार गर्छ ।

यो श्लोक सुनेर उनी प्रव्रजित भए र विस्तृत अध्ययन र मिहेनत गरिसकेपछि त्रिपिटकधर बने । उनले यस्तो परिश्रम गरेको देखेर अरू भिक्षुहरूले ‘तपाई किन यति धेरै मिहेनत गर्नुहुन्छ’ भनी सोधे । उदयनले जवाफ दिए, “म तपाईंहरू जस्तो हैन । मैले आफ्नै आमाको हत्या गरेँ, त्यसैले म महापापी हुँ । त्यही पाप शोधन गर्न म यतिका मिहेनत गर्छु ।” यो खबर भगवान बुद्धकहाँ पुग्यो । भगवान् बुद्धले भिक्षुहरूलाई भन्नुभयो, “हो, उदयन असाध्यै मिहेनती छन् र धेरै ज्ञान पनि हासिल गर्न सक्षम











भएका छन् । तर उनले आफ्नै आमालाई मारेर आएका छन् । त्यो महापापले गर्दा उनले कुनै फल हासिल गर्नेछैन । त्यसैले भगवान् बुद्धले बडो नम्रपूर्वक उदयनलाई अन्तै जानका लागि आज्ञा दिनुभयो ।

त्यसपछि उदयन अर्कै ठाउँमा गए । त्यहाँ उनले एउटा विहारको निर्माण गरे र उनका धेरै शिष्यहरू पनि भए । अन्तमा एउटा पाठशाला निर्माण गरिरहकै बखत उनको देहवसान भयो । त्यसपछि उनी अवीचि नरकमा पतन भए । त्यहाँ उनले आगोका ज्वालाहरू देखेर भने, "संघ पाठशालाको यो आगोको राप एकदम तातो छ।" यो सुनेर नरकपालहरूले भने, "हे पापी, यो संघ पाठशाला होइन, यो त नरक हो ।" यति भन्दै उनीहरूले विभिन्न शस्त्रहरूले उदयनको टाउकामा हिर्काए । त्यही क्षण उनको मृत्यु भयो र विहार, पाठशाला बनाएको, र धर्मदान गरेको पुण्यले गर्दा उनका धेरै अकुशल कर्महरू शोधन भइसकेका थिए । त्यसैले उनी चतुर्महाजकायिक देवलोकमा जन्म लिन पुगे ।

त्यसपछि सबै देवपुत्रहरू बुद्धको दर्शन र उपदेश प्राप्त गर्न यस पृथ्वीलोकमा आए र उदयन देवपुत्र पनि थुप्रै पुष्पका गुच्छाहरू लिएर आए र बुद्धको पूजा र वन्दना गरे । बुद्धले अनेक धर्मपर्यायहरूको उपदेश दिनुभयो । उदयनले निकै कठोर परिश्रम गरेर अध्ययन, चिन्तन र भावना गरेर स्रोतआपन्न फल प्राप्त गरे ।[१३]

१४. **नन्द** : नवौं परिच्छेदमा प्रत्यापत्ति बलको व्याख्या गर्ने क्रममा नन्दको नाम उल्लिखित गरिएको थियो । नन्द आफ्नी पत्नी सुन्दरीकाप्रति असाध्यै आसक्त थिए । एकपल्ट भगवान् बुद्ध उनको घरमा भिक्षाको लागि जानु-भयो । भगवान बुद्धको उद्देश्य नन्दलाई वीनित गर्नु थियो । भगवान बुद्धको सुनौलो प्रकाशले पूरै घरभित्र देदिप्यमान पारिदियो । यसले गर्दा नन्दलाई घरमा भगवान् बुद्ध आउनुभएको छ भन्ने कुरा थाहा भयो । उनी बुद्धको सामुन्ने उपस्थित भए र उहाँको भिक्षापात्र आफ्नो हातमा लिए । भिक्षापात्रमा स्वादिष्ट भोजन भरेर त्यसलाई भगवान बुद्धलाई फर्काउन लग्दा उनकी पत्नीले उनको निधारमा आफ्नो थुकले टिका लगाइदिइन्











र भनिन्, "तिमीयो थुक सुक्न नपाउँदै यहाँ फर्केर आउनुपर्छ है ।" यदि थुक सुक्यो भने नन्दले पाँच शय कार्षापण (मुद्रा) दण्डस्वरूप आफ्नी पत्नीलाई दिनुपर्थ्यो । तर भगवान् बुद्धले भिक्षापात्र नलिने संकेत दिनुभयो । नन्दले पनि भगवान् बुद्धलाई कर गर्न उचित ठानेनन् । त्यसैले त्यो पात्र आनन्दलाई दिन खोजे । तर आनन्दले "जसबाट यो भिक्षापात्र लिएको हो, उनैलाई आफ्नै हातले फकाईदिनू" भन्दै भिक्षापात्र लिएनन् । त्यसपछि नन्द भिक्षापात्र लिएर बुद्धको पछि पछि गए । विहारमा पुगेपछि बुद्धले भोजन ग्रहण गर्नुभयो र पात्रमा बचेका केही भोजन नन्दलाई दिनु-भयो । त्यसपछि आचमन गर्दै भगवान् बुद्धले नन्दलाई "प्रव्रज्या ग्रहण गर" भन्नुभयो । नन्दले भगवान् बुद्धको आज्ञालाई अवज्ञा गर्न सकेनन् । भिक्षु भइसकेपछि त घर फर्किने अनुमति पाइएला नि भन्ने सोंच्दै नन्दले प्रव्रज्या ग्रहण गरे । त्यसपछि नन्दलाई विहारको सुरक्षा गर्ने दायित्व सुम्पेर भगवान् बुद्ध भिक्षाटनको लागि निक्लनुभयो ।

नन्दले कुचो लाएर एकदम परिश्रमपूर्वक विहारको हरेक ठाउँ बढारेर सफा गर्न खोजे । तर भगवान् बुद्धको उपायकौशल्यको प्रभावले गर्दा, जतिसुकै बढारे पनि उनले सफा गर्न सकेका थिएनन । 'होस्, म ढोका बन्द गरी घर जानेछु', भन्ने विचारले ढोका बन्द गर्ने कोशिस गरे । तर एउटा ढोका बन्दा गर्दा अर्को त्यसै खुल्थ्यो । त्यसबेला नन्दले सोंचे, "ठीकै छ । जब म राजा हुन्छु, तब यो विहारलाई राम्रो तरीकाले पुनर्निमाण गर्न लगाउनेछु ।" यस्तो सोंचाई लिएर उनी फर्केर गए । बाटोमा उनले बुद्धलाई भेटे । उहाँको दृष्टिबाट बच्न एउटा ठूलो रूखको हाँगामूमि्न नन्द लुक्न गए । बुद्धको आगमन हुनासाथ रूख आफै उडेर हावा झुन्डिन लाग्यो र त्यसपछि नन्द कतै लुक्न सकेनन् । भगवान् बुद्धले "मेरो पछि पछि आउनू" भनेर फेरि विहारमै लग्नुभयो ।

एकपल्ट एउटा पत्थरमा आफ्नी पत्नीको चित्र कोरेर नन्दले त्यसै-सित कुरा गरिराखेका थिए । त्यसपछि उनलाई एउटा जंगलमा लिएर गई त्यहाँ एउटा कानो बादरनीलाई देखाउँदै भगवान् बुद्धले भन्नुभयो, "तिम्री पत्नी सुन्दरिका र यो बादरनीमा को अधिक राम्री छिन् ?" नन्दले उत्तर











दिए, "सुन्दरिका अधिक राम्री छिन् । उनी त यस संसारकै परम सुन्दरी आइमाई हुन् ।" त्यसपछि भगवान् बुद्धले नन्दलाई त्रायश्त्रिंश देवभुवनमा लिएर जानुभयो । त्यहाँ आफू एउटा ठाउँमा बस्नुभै नन्दलाई देवलोक घुमेर आउनका लागि आज्ञा दिनुभयो । एउटा विमानमा चढी नन्द देव-लोक घुम्न गए । उनले त्यहाँ देवपुत्र र देवकन्याहरूका वैभव देखे । एउटा विमानमा एउटी देवकन्या एक्लै बसिरहेकी थिइन् । देवकन्यालाई देखेर नन्दले सोधे, "तपाई किन यसरी एक्लै बसिरहनुभएको ?" देवकन्याले जवाफ दिइन्, 'नन्द यस समय ब्रह्मचर्य पालन गर्दैछन् । यदि यस जुनीमा उनलाई पाउन सकिएन भने अर्को जुनीमा त अवश्य पाइएला नि भनेर म उनकै प्रतीक्षामा बसिरहेकी हुँ ।" त्यसपछि भगवान् बुद्धले नन्दलाई सोध्नुभयो, "अब भन त नन्द, सुन्दरीका र देवकन्यामा को ज्यादा राम्री छिन ।" नन्दले जवाफ दिए, "अघि देखेको त्यो कानो बादरनी र सुन्दरीका उस्तै उस्तै छन् ।" तब बुद्धले भन्नुभयो, "यो मात्र होइन, ब्रह्मचर्याका अरू पनि धेरै लाभहरू छन् । त्यसैले ब्रह्मचर्यको पालना गर्नू ।" यो सबै देखेर, सुनेर देवकन्या पाउने अभिलाषाले नन्दले ब्रह्मचर्यको पालना गरे ।

नन्दको मानसिक अवस्था बुझेर भगवान् बुद्धले भिक्षुहरूलाई भन्नुभयो, "तपाईहरू नन्दसित संगत नगर्नुहोस्, उनीसित कुरा पनि नगर्नुहोला ।" सबैबाट उपेक्षित भएर नन्द आनन्दकहाँ गए । आनन्द पनि केही नबोली जुरुक्क उठे । त्यसपछि नन्दले सोधे, "अन्य भिक्षुहरू त मसित संगत गर्न चाहँदैनन्, ठीकै छ ? तपाईंहरू त वरिष्ठ भिक्षु हुनुहुन्छ । तपाईंहरू पनि मदेखि किन टाढा टाढा भाग्नुहुन्छ ।" आनन्दले भने, 'हो, साँच्चै । तिमी देवकन्याको लागि ब्रह्मचर्या पालन गर्दैछौ । जबकी हामीहरू यस संसार-बाट मुक्त हुन ब्रह्मचर्याको पालना गर्छौं । यस्तो जवाफ सुनेर नन्द एकदम लज्जित भए ।

नन्दलाई सन्मार्गमा लगाउन बुद्धले आफ्नो ऋद्धिबलद्वारा एउटा नरक निर्माण गर्नुभयो । फलामको विशाल भाँडोमा प्राणीहरूलाई पकाइ-राखेको भयावह दृश्य नन्दले देखे । त्यस्तै अर्को ठाउँमा एउटा ठूलो भाँडोमा पग्लिएको धातु भकभक उम्लने गरी तताइराखेको थियो । त्यस











भाँडोमा नन्दले कोही पनि पापी देखेन । नन्दले नरकपाललाई सोधे, "यहाँ कोही पनि देख्दिन किन होला ?" नरकपालले जवाफ दिए, "नन्द यस समय देवकन्या प्राप्त गर्ने इच्छाले ब्रह्मचर्या पालन गर्दैछ । मरेपछि ऊ ती देवकन्याको पति बन्नेछ । त्यहाँबाट पनि च्यूत भइसकेपछि ऊ नरकमा आउनेछ । उसैलाई पकाउन यो उम्लदो पितलको झोल तताइ-राखेको हुँ ।" यो सुनेर नन्द एकदम भयभीत भए । उनको मनमा संसार प्रति वैराग्य उत्पन्न भयो । त्यसपछि बुद्धका उपदेशलाई अनुशरण गरेर अर्हत्व प्राप्त गरे ।[१४]

१५. **अजातशत्रु** : नवौं परिच्छेदमा आश्रयबलको व्याख्या गर्दा गम्पोपाले अजातशत्रुको दृष्टान्त दिनुभएको थियो । त्यसमा थोड्दन नाम उल्लेख भएको थियो सुहृल्लेखका टीकाकार महामतिका अनुसार थोड्देन नै राजा अजातशत्रु थिए । अजातशत्रुले देवदत्तको लहलहैमा लागेर आफ्नै पिता धर्म-राज बिम्बिसारलाई वेणुवनको वन्दीगृहमा थुनेर मारेका थिए । त्यति मात्र होइन, उनले देवदत्तसंग मिलेर 'बुद्ध र उहाँका अनुयायीहरूलाई कसैले भिक्षा नदिनू" भन्ने आदेश जाहेर गरेका थिए । बुद्ध आफ्ना शिष्यहरूसंग नगरमा प्रवेश गरेका बेला अजातशत्रुले देवदत्तकै कुसल्लाह मानी धनपालक नामक बहुलाहा हात्ती छोडेका थिए । तर बुद्धले उसलाई वीनित गरिदिनुभयो । यस्ता धेरै पापहरू गरेपछि उनको मनमा बुद्धप्रति श्रद्धा उत्पन्न भयो । बुद्धको उपदेश अनुशरण गरी उनले आफ्नो पापको शोधन गरे ।[१५]







परिशिष्ट ३

# ग्रन्थमा उद्धरण गरिएका ग्रन्थहरूको सूची

१. अध्याशयसंचोदनसूत्र
२. अनन्तमुखसाधकनामधारणी
३. अनादिसंसारसूत्र
४. अनवतप्तनागराजपरिपृच्छासूत्र
५. अप्रतिष्ठिततन्त्र
६. अभिधर्मकोश
७. अभिधर्मकोशभाष्यटीका
८. अभिधर्मसमुच्चय
८. अभिसमयालङ्कार
९. अमृतगुह्यतन्त्रराज
१०. अवतंसकसूत्र
११. आर्यगण्डव्यूहसूत्र
१२. आर्यदशधर्मकसूत्र
१३. आर्यद्रुमसूत्र
१४. आर्यब्रह्मपरिपृच्छासूत्र
१५. आर्यभद्रचर्याप्रणिधानराज
१६. आर्यरत्नकूटसूत्र
१७. आर्यलङ्कावतारसूत्र
१८. आर्यललितविस्तरसूत्र
१९. आर्यवज्रध्वजसूत्र
२०. आर्यविमलकीर्तिनिर्देशसूत्र
२१. आर्याक्षयमतिपरिपृच्छासूत्र
२२. आर्याष्टसाहस्रिका प्रज्ञापारमिता

२३. आकाशगर्भसूत्र
२४. आकाशरत्नसूत्र
२५. उदानवर्ग
२६. उपासिकाचलाविमोक्ष
२७. करुणापुण्डरीकसूत्र
२८. कर्मशतकसूत्र
२९. कर्मावरणविशुद्धिसूत्र
३०. क्षितिगर्भसूत्र
३१. काश्यपपरिवर्तसूत्र
३२. गयाशीर्षसूत्र
३३. गर्भावक्रान्तिसूत्र
३४. गृहपति-उग्रपरिपृच्छासूत्र
३५. गृहपतिश्रीदत्तपरिपृच्छासूत्र
३६. चतुर्धर्मनिर्देशसूत्र
३७. जिनजननी
३८. ज्ञानालोकालङ्कारसूत्र
३९. तथागतकोष
४०. तथागतप्रतिमापरिच्छेद
४१. तथागताचिन्त्यगुह्यनिर्देश
४२. तत्त्वचर्या
४३. तत्त्वप्रकाशसूत्र
४४. त्रिसमयव्यूहराज
४५. दशचक्रक्षितिगर्भसूत्र
४६. दशभूमिकसूत्र
४७. दोहाकोश
४८. धर्मतास्वभावशून्यताचलप्रतिसर्वालोकसूत्र
४९. धर्मधातुप्रकृत्यसम्भेदनिर्देशनाममहायानसूत्र
५०. धर्मसंगीतिसूत्र

५१. नारायणपरिपृच्छासूत्र
५२. पितापुत्रसमागमसूत्र
५३. पुष्पकूटधारणी
५४. पूर्णपरिपृच्छासूत्र
५५. प्रकीर्णकसूत्र
५६. प्रज्ञापारमितासञ्चय गाथा वा रत्नगुणसञ्चय गाथा
५७. प्रतीत्यसमुत्पादहृदयकारिका
५८. प्रमाणवार्तिक
५९. बुद्धावतंसकसूत्र
६०. बोधिचर्यावतार
६१. बोधिपथप्रदीप
६२. बोधिसत्त्वपिटक
६३. बोधिसत्त्वभूमि
६४. ब्रह्मविशेषचिन्तिपरिपृच्छासूत्र
६५. भद्रकल्पिकसूत्र
६६. भावनार्थसिद्धि
६७. मञ्जुश्रीविक्रीडितसूत्र
६८. मध्यमकलघुसत्य
६९. मध्यमकावतार
७०. मध्यान्तविभाग
७१. महाचित्तोत्पादसूत्र
७२. महाधिगमपरिपुष्टिसूत्र
७३. महापरिनिर्वाणसूत्र
७४. महामोक्षसूत्र
७५. महायानसूत्रालंकार
७६. महासंवरोदयतन्त्रराज
७७. महासन्तिपातरत्नकेतुधारणी
७८. महासिंहनादसूत्र





७९. महोष्णीषसूत्र
८०. मूलमध्यमककारिका
८१. रत्नगोत्रविभागमहायानोत्तरतन्त्र (महायानोत्तरतन्त्र/उत्तरतन्त्र)
८२. रत्नचूडपरिपृच्छासूत्र
८३. रत्नावली
८४. रत्नोल्कानामधारणी
८५. राजाववादकसूत्र
८६. राहुलमात्रिकास्तूति
८७. लघुस्मृत्युपस्थान
८८. वज्रच्छेदिका प्रज्ञापारमिता सूत्र
८९. वज्रशेखरमहागुह्ययोगतन्त्र
९०. वज्रसमाधिसूत्र
९१. वर्मव्यूहनिर्देशसूत्र
९२. विनयागम
९३. विनिश्चयसंग्रह
९४. वीरदत्तपरिपृच्छासूत्र
९५. विंशतिकाप्रकरण
९६. शतसाहस्रिकाप्रज्ञापारमिता सूत्र
९७. शालिस्तम्बसूत्र
९८. शिक्षासमुच्चय
९९. शिष्यलेख
१००. शीलसंयुक्तसूत्र
१०१. श्रद्धाबलाधानावतारमुद्रासूत्र
१०२. श्रीदत्तपरिपृच्छासूत्र
१०३. श्रीसंभवविमोक्ष
१०४. समाधिराजसूत्र वा चन्द्रप्रदीपसूत्र
१०५. संभारपरिकथा
१०६. संवरविंशक





१०७. सद्धर्मपरिग्रहसूत्र
१०८. सन्धिनिर्मोचनसूत्र
१०९. सप्तशतिकाप्रज्ञापारमिता
११०. सम्यगाम
१११. सर्वबुद्धसमायोगडाकिनीजालसंवर
११२. सर्वधर्माप्रवृत्तिनिर्देशसूत्र
११३. सागमतिपरिपृच्छासूत्र
११४. सुबाहुपरिपृच्छासूत्र (तन्त्र)
११५. सुरतपरिपृच्छासूत्र
११६. सुवर्णप्रभासोत्तमसूत्र
११७. सुविक्रान्तविक्रामिपरिपृच्छासूत्र
११८. सुस्थितमतिदेवपुत्रपरिपृच्छापरिवर्त
११९. सुस्थितमतिदेवपुत्रपरिपृच्छासूत्र
१२०. सुहृल्लेख
१२१. दिव्यावदान - सूकरिकावदान
१२२. सूत्रालंकारटीका
१२३. स्मृत्युपस्थानसूत्र
१२४. हेवज्रतन्त्र



# सन्दर्भ, टिप्पणी र उद्धरणहरूको संस्कृत मूल

**वन्दना**

१. त्रिरत्नमा शरण लिएर बौद्ध ग्रन्थको सुरुवात गरिएको हुन्छ । त्रिरत्न भन्नाले बुद्ध, धर्म र संघ भन्ने बुझिन्छ । हिनयानमा बुद्ध एक मानव गुरु, धर्म शिक्षा र संघ भिक्षु तथा भिक्षुणीहरूका समुदायका रूपमा लिइएको हुन्छ । महायानानुयायी भएकाले गम्पोपाले यहाँ त्रिरत्नको अझ गहिरो अर्थ प्रस्तुत गर्नुभएको छ । जसअनुसार बुद्ध त्रिकायको अभेद्य युगनद्धता हो । त्रिकाय भन्नाले धर्मकाय, सम्भोगकाय र निर्माणकाय हुन् । धर्मकायले बुद्ध चित्तलाई जनाउँछ भने सम्भोगकाय र निर्माणकायले क्रमशः बुद्ध वाक् र बुद्ध काय (वा कर्म) लाई जनाँउदछन् । यी तीनैवटा कायको संमिश्रण वा युगनद्धतालाई स्वाभाविककाय भनिन्छ । त्यसैले स्वाभाविक काय अर्को छुट्टै काय होइन । संघलाई बोधिसत्त्वहरूले गरेका हुन्छन् । तैपनि आठ महाबोधिसत्त्व संघका रूपमा प्रख्यात छन् : १. मञ्जुश्री, २. वज्रपाणि, ३. अवलोकितेश्वर, ४. क्षितिगर्भ, ५. सर्वनीवरणविस्कम्भी, ६. गगनगञ्ज, ७. मैत्रेय, ८. समन्तभद्र । तर नेपाली बौद्ध धर्ममा संघ मण्डलका रूपमा रहेका आठजना बोधिसत्त्वहरू क्रमशः १. मञ्जुश्री, २. वज्रपाणि, ३. क्षितिगर्भ, ४. मैत्रेय, ५. गगनगञ्ज, ६. आकाशगर्भ, ७. समन्तभद्र र ८. सर्वनीवरणविस्कम्भी हुन् र अवलोकितेश्वर मण्डलका प्रमुख बोधिसत्त्व हुन् ।

२. लक्षणयुक्त योग्य (Perfect & Qualified) गुरुले शाक्यमुनि बुद्धको सद्धर्मलाई संरक्षित गरिराखेका हुँदा सम्पूर्ण बुद्ध, धर्म र संघको प्रतिनिधित्व गुरुले नै गरेको हुन्छ । किनभने गुरुले शिष्यलाई सद्धर्मको शिक्षा नदिए बुद्ध शासन दिगो रहने थिएन र संघको पनि निर्माण हुने थिएन । त्यसैले यो श्लोक यहाँ उद्धृत गर्नु सान्दर्भिक छ : *गुरुर्बुद्धो गुरुर्धमो गुरुः संघस्तथैव च । गुरुर्वज्रधरः श्रीमान् तस्मै श्रीगुरवे नमः* ॥ ७ ॥ (बौद्धस्तोत्रसंग्रहः पृ. ६६)











**विषय प्रवेश**

१. त्रिधातु : कामधातु, रूपधातु र अरूपधातु
२. षड्गति : नरक, तिर्यक, प्रेत, मनुष्य, देव र असुर गति
३. सपना देखिरहेको मान्छे भ्रमित हुन्छ र सपनालाई नै साँच्चिकै ठान्छ ; तर व्यूझिएपछि त्यो त खालि सपना मात्रै हो र भ्रम तुरुन्तै चाल पाइन्छ । त्यसरी नै तथतासम्बन्धी वा तत्त्वसम्बन्धी हाम्रो भ्रम पनि त्यो बेला राम्ररी देख्न सकिन्छ जब हामी अविद्या वा अज्ञानताबाट ब्यूझिन्छौं ।

**परिच्छेद १ : तथागत गर्भ**

१. सर्वेषामविशिष्टापि तथता शुद्धिमागता ।
तथागत्वं तस्माच्च तद्गर्भाः सर्वदेहिनः ॥
(महायान सूत्रालंकार : ९/३७)
२. संबुद्धकायस्फरणात् तथताऽव्यतिभेदतः ।
गोत्रतश्च सदा सर्वे बुद्धगर्भाः शरीरिणः ॥
(महायानोत्तरतन्त्र शास्त्र : १/२८)
३. ऐकान्तिको दुश्चरितोऽस्ति कश्चित् कश्चित् समुद्घातितशुक्लधर्मा ।
अमोक्षभागीयशुभोऽस्ति कश्चिन् निहीनशुक्लोऽस्त्यपि हेतुहीनः ॥
(महायान सूत्रालंकार : ३/११)
४. तथैव श्रावकाः सर्वे प्राप्तनिर्वाणसंज्ञिनः ।
जिनोऽथ देशयेत्तस्मै विश्रामोऽयं न निर्वृतिः ॥
(सद्धर्मपुण्डरीक सूत्र : ५/७४)
५. ततो वेदेमि अहमद्य भिक्षवो जनेथ वीर्य परमम् उदारम् ।
सर्वज्ञज्ञानेन कृतेन यूयं नैतावता निर्वृतिः काचि भोति ॥
सर्वज्ञज्ञानं तु यदा स्पृशिष्यथ ॥
(सद्धर्म पुण्डरीक सूत्र : ७/१०७-१०८)
६. ते श्रावकाः सर्वि न एन्ति निर्वृतिम् ।
चरन्ति एते वर बोधिचारिकां
बुद्धा भविष्यन्तिमि सर्वश्रावकाः ॥ (सद्धर्म पुण्डरीक सूत्र : ५/४४)











७. धूमेन ज्ञायते वह्निः सलिलं च बलाकया ।
निमित्तैर्ज्ञायते गोत्रं बोधिसत्त्वस्य धीमतः ॥ (दशधर्मक सूत्र)

८. कारुण्यमधिमुक्तिश्च क्षान्तिश्चादिप्रयोगतः ।
समाचारः शुभस्यापि गोत्रे लिङ्ग निरूप्यते ॥ (महायान सूत्रालंकार ३/५)

## परिच्छेद २ : दुर्लभ मनुष्य शरीर

१. नरकप्रेततिर्यञ्चो म्लेच्छा दीर्घायुषोऽमराः ।
मिथ्यादृग्बुद्धकान्तारौ मूकताष्टाविहाक्षणाः ॥

उपर्युक्त श्लोक प्रज्ञाकरमतिविरचित बोधिचर्यावतार पञ्जिकामा 'बोधिचित्तानुशंसा' नामक प्रथम परिच्छेदमा उद्धृत गरिएको हो । हेर्नुहोस् : पि. एल. वैद्य (सं), शान्तिदेवविरचितः बोधिचर्यावतारः, दरभंगा : मिथिला विद्यापीठ, १९६०, पृ. ५ ।

२. कुन्साङ्लामेश्यालुंमा बताइए अनुसार दीर्घायुष देवताहरूका विज्ञान रिक्त वा शून्य हुन्छ । मुक्ति त्यस्तो अवस्था हो जसमा कुशल अकुशल कुनैपनि कर्म हुँदैन भन्ने विश्वास लिएर सोही अनुसार साधना गरेको फलस्वरूप असंज्ञी देव भएर जन्म लिन्छन् । धेरै महाकल्पसम्म त्यसै अवस्थामा समाधिस्थ रहँदा रहँदै उनीहरूका कुशल कर्म पनि क्षीण हुँदै गइरहेको हुन्छ । सबै विपाक फल क्षीण भइसकेपछि आफ्ना मिथ्यादृष्टिका कारणले उनीहरू फेरि दुर्गति मै जन्म लिन पुग्छन् । त्यसैले उनीहरू पनि धर्म अभ्यास गर्ने अवसरबाट वञ्चित नै रहन्छन् ।
हेर्नुहोस् : The Padmakara Translation Group (tr.), The Words of My Perfect Teacher – kunzang lama'i shelung, New Delhi: HarperCollins Publishers India, 1994, p . 21

३. गुणोऽपरश्च दुःखस्य यत्संवेगान्मदच्युतिः ।
संसारिषु च कारुण्यं पापाद्भीतिर्जिने स्पृहा ॥ (बोधिचर्यावतार : ६/२१)

४. बोधिसत्त्वपिटकको संस्कृत मूल उपलब्ध गराउन सकेनौं । यसको टीकासहित अनुवाद उल्रीक पाजेलले सन् १९९५ मा गर्नुभएको थियो । उहाँले पनि यसको संस्कृत मूललाई प्राप्त गर्न सक्नुभएन । त्यसैले उहाँले सो ग्रन्थको तिव्वती वा चीनिया अनुवादबाट अंग्रेजीमा अनुवाद गर्नुभएको हुनसक्छ ।











गुणोऽपरश्च दुःखस्य यत्संवेगान्मदच्युतिः ।
संसारिषु च कारुण्यं पापाद्भीतिर्जिने स्पृहा ॥ (बोधिचर्यावतार : ६/२१)

५. दुर्लभा अष्टाक्षणविनिवृत्तिः । दुर्लभो मनुष्यप्रतिलाभः । दुर्लभा क्षणसंमद्धि-शुद्धिः । दुर्लभो बुद्धोत्पादः । दुर्लभा अविकलेन्द्रियता । दुर्लभो बुद्धधर्मश्रवः । दुर्लभं सत्पुरुषसमवधानम् । दुर्लभानि भूतकल्याणमित्राणि । दुर्लभो भूतनयानुशासनो पसंहारः । दुर्लभं सम्यगजीवितं मनुष्यलोके । दुर्लभा धर्मानुधर्मप्रतिपत्तिः ।
(गण्डव्यूह सूत्र : १२)

६. क्षणसंपदियं सुदुर्लभा । (बोधिचर्यावतार : १/४)

७. अत एवाह भगवान् - मानुष्यमतिदुर्लभम् ।
महार्णवयुगच्छिद्रकूर्मग्रीवार्पणोपमम् ॥ (बोधिचर्यावतार : ४/२०)

८. प्रतिलब्धा पुरुषार्थसाधनी । (बोधिचर्यावतार : १/४)

९. पुरुषास्त्रिविधा ज्ञेया उत्तमाधममध्यमाः । (बोधिपथप्रदीप : श्लोक सं. २)

१०. उपायेन तु केनापि केवलं संसृतेः सुखम् ।
स्वस्यैवार्थे यईहेत ज्ञेयः सो पुरुषोऽधम (बोधिपथप्रदीप : श्लोक सं. ३)

११. पापकर्मनिवृत्तात्मा भवसुखात् पराङ्मुखः ।
आत्मनिर्वाणमात्रार्थी यो नरो मध्यमस्तु सः ॥ (बोधिपथप्रदीप : श्लोक ४)

१२. स्वसन्तानगतैर्दुःखैर्दुःखस्यान्यस्य सर्वथा ।
सर्वस्य यः क्षयं काङ्क्षेदुत्तमः पुरुषस्तु सः ॥
(बोधिपथप्रदीप : श्लोक सं. ५)

१३. अद्यैव मरणं नैति न युक्ता में सुखासिका ।
अवश्यमेति सा वेला न भविष्यामहं यदा ॥ (बोधिचर्यावतार : ४/२०)

१४. मानुष्यं नावमासाद्य तर दुःखमहानदीम् ।
मूढ कालो न निद्राया इयं नौर्दुर्लभा पुनः ॥ (बोधिचर्यावतार : ७/१४)

१५. कर्मोकरणं त्वतन्मनुष्याणां शरीरकम् ॥ (बोधिचर्यावतार : ५/६६)

१६. अश्राद्धस्य मनुष्य शुक्लो धर्मो न रोहति ।
बीजानामग्निदग्धानामङ्कुरो हरितो यथा ॥

१७. अर्को शब्दमा भन्नुपर्दा चतुरार्य सत्यमध्ये तृष्णाले गर्दा नै हरेक किसिमको दुःखको उत्पत्ति हुन्छ भन्ने सत्यमाथिको अटल विश्वास नै संप्रत्यय श्रद्धा हो ।

१८. तत्र श्रद्धा चेतसः प्रसादः । सत्यरत्नकर्मफलाभिसम्प्रत्ययः ॥
(अभिधर्मकोष भाष्य : २/२५)











१९. छन्दाद् द्वेषाद्भयान्मोहाद्यो धर्मं नातिवर्तते ।
स श्राद्धक इति विज्ञेयः श्रेयसो भाजनं परम् ॥ (रत्नावली : १/६)

**परिच्छेद ३ : कल्याणमित्र संश्रय**

१. तेही सुशिष्यगुरुगौरवसंप्रयुक्तो कल्याणमित्र सद सेवयितव्य विज्ञैः । किं कारणं ततु तुणागमु पण्डितानाम् ॥ (रत्नगुणसञ्चय गाथा सूत्र : १५/१)
प्रज्ञापारमितासमुच्चयगाथा लाई रत्नगुणसञ्चय गाथा पनि भनिन्छ ।
हेर्नुहोस् : पि. एल. वैद्य (सं), महायान-सूत्र-संग्रह प्रथम भागः, दरभंगा : मिथिला विद्यापीठ, १९६१, पृ. ३७१
२. भन्नाको तात्पर्य सामान्यतया कल्याणमित्रको आवश्यकता किन पर्छ भन्ने कुरा त्रिकालका बुद्धहरूका दृष्टान्तले स्पष्ट हुन्छ । अर्कातिर कल्याणमित्रबिना किन बुद्धत्व प्राप्त गर्न सकिन्न भन्ने कुरा प्रत्येकबुद्धका दृष्टान्तले देखाउँदछ । प्रत्येकबुद्धका बारेमा परिच्छेद १ मा हेर्नुहोला ।
३. क्लेशतस्करसंघोऽयमवतारगवेषकः ।
प्राप्यावतारं मुष्णाति हन्ति सद्गतिजीवितम् ॥
(बोधिचर्यावतार : ५/२८)
४. कल्याणमित्ररक्षिताः सर्वबोधिसत्त्वपुण्योपचयाः ।
(गण्डव्यूह सूत्र : ५३ - श्रीसंभवः श्रीमतिश्च)
५. यथाभूतपरिज्ञान (Primordial Wisdom of actualizing reality as it is) र यथावत् व्यवस्थानपरिज्ञान (Primordial Wisdom of omniscience) । यिनको बारे परिच्छेद २० मा विस्तृतरूपमा व्याख्या गरिनेछ ।
६. बोधिसत्त्वभूमि पृ. १६३
७. यहाँ दुई तत्त्व भन्नाले अकशुल र कुशल तत्त्व अथवा क्लेश उत्पादक धर्म कुन कुन हुन् र त्यसलाई कसरी परिशुद्ध गर्ने भन्ने बुझिन्छ ।
८. विषदा संदेहजहा आदेया तत्त्वदर्शिका द्विविधा ।
संपन्नदेशनेयं विज्ञेया बोधिसत्त्वानाम् ॥ (महायान सूत्रालंकार : १२/५)
९. सदा कल्याणमित्रं च जीवितार्थेऽपि न त्यजेत् ।
बोधिसत्त्वव्रतधरं महायानार्थकोविदम् ॥ (बोधिचर्यावतार : ५/१०२)
१०. सुधनको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४३१ मा हेर्नुहोला ।











११. न परितृप्तिरुत्पादयितव्या कल्याणमित्रसंदर्शनेषु ।
(गण्डव्यूह सूत्र : ५३ - श्रीसंभवः श्रीमतिश्च)
१२. सदाप्ररुदितको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४३२ मा हेर्नुहोला ।
१३. नरोपाको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४३३ मा हेर्नुहोला ।
१४. राजा अनलको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४३७ मा हेर्नुहोला ।
१५. यथानुशिष्टप्रतिपत्तितश्च संराधयेञ्चितमतोऽस्य धीरः ॥
(महायान सूत्रालंकार : १७/१२)
१६. कल्याणमित्राराधनप्रतिलब्धा सर्वबुद्धबोधिः ॥
(गण्डव्यूह सूत्र : ५३ - श्रीसंभवः श्रीमतिश्च)
१७. अथ कुतो यावदेषां प्रयोगमौलपृष्ठानां व्यवस्थानम् ॥
(अभिधर्मकोशभाष्य : पृ. ६७७)
१८. कल्याणमित्रसंधारिताः कुलपुत्र बोधिसत्त्वा न पतन्ति दुर्गतिषु ।
कल्याणमित्रपरिगृहिता बोधिसत्त्वा न निवर्तन्ते महायानात् ।
कल्याणमित्रस्वारक्षिता बोधिसत्त्वा न गच्छन्ति पापमित्रवशम् ।
कल्याणमित्रसंगृहीता बोधिसत्त्वा अतिक्रामन्ति पृथग्जनभूमिम् ॥
(गण्डव्यूह सूत्र : ५३ - श्रीसंभवः श्रीमतिश्च)




**परिच्छेद ४: अनित्य भावना**

१. सब्बे संखारा अनिच्चाति - धम्मपद - मग्ग वग्गो/५
२. सर्वे क्षय अन्ता निचयाः
पतन अन्ताः समुच्छ्रयाः ।
संयोगा विप्रयोग अन्ता
मरण अन्तम् हि जीवितम् ॥ (उदानवर्ग : १/२२)

उदानवर्गका सम्पूर्ण मूल संस्कृत श्लोकहरू रोमन अक्षरमा रूपान्तरित गरेर वेबसाईटमा राखिएका छन् । यो श्लोक पनि वेबसाइटबाटै उद्धृत गरिएको हो । हेर्नुहोस् : http://www.sub.uni-goettingen.de/ebene_1/fiindolo/gretil/1_sanskr/4_rellit/buddh/udanav_u.htm

३. सप्ताग्निनादि्भरेकैवं गतेऽदि्भ सप्तके पुनः ।
तेजसा सप्तक पश्चाद् वायुसंवर्तनी ततः ॥ अभिधर्मकोष : ३/१०२)










४. न नित्यं सह सत्त्वेन तद्विमानोदयव्ययात् ।
तेजसा सप्तक पश्चाद् वायुसंवर्तनी ततः ॥ अभिधर्मकोष : ३/१०१)

५. सबै धर्महरू संस्कृत भएकाले अनित्य छन् र क्षण क्षणमा परिवर्तनशील छन् । यसरी सदा परिवर्तनको प्रवाहमा नपर्ने कुनै पनि वस्तु हुँदैन । आचार्य वसुबन्धुले क्षणभङ्गुरताको सिद्धान्त (The Doctrine of Momentariness) व्याख्या गर्दा क्षणको परिभाषा यसरी दिनुभएको छ : १२० तत्क्षण मिलेर एक क्षण बन्छ । एक तत्क्षण भन्नाले १/७५ औं सकेन्ड हो । तसर्थ यति सानो समयभित्र धेरै परिवर्तनहरू भइरहेका हुन्छन् । त्यसैले बसुवन्धुले अभिधर्मकोशभाष्यमा क्षणभंगुरलाई शीघ्र उत्पति र शीघ्र भङ्गको रूपमा व्याख्या गर्नुभएको छ । यहाँ स्थितिको कुरा आउँदैन । झरना वा नदीको प्रवाह जस्तै एउटा क्षण सकिनासाथ अर्को त्यस्तै प्रकारको क्षण द्रुत गतिले उत्पन्न हुन्छन् । एवं रीतले यो प्रकृया चलि नै रहन्छ । उदाहरणको रूपमा हामी नदी, चलचित्र इत्यादिलाई लिन सक्छौँ । पहिलो क्षणमा नदीमा जुन पानी थियो पछिल्लो क्षणमा त्यही पानी रहँदैन, तर हामी एउटै नदी देख्छौँ । हामीले सो नदीमा भइरहेको परिवर्तन देख्न सक्दैनौँ । त्यस्तै चलचित्र पनि धेरै फिल्महरू मिलेर मात्र गतिमान भइ-रहेको हुन्छ तर हामीलाई त्यो साँच्चिकै स्वतन्त्ररूपले चलिरहेको जस्तो लाग्छ । यी सब हामीले चाल पाउन सक्दैनौँ किनकि हामीमा अझै सबैथोक नित्य ठान्ने ग्राह भावना हटिसकेको छैन । बौद्धदर्शनका चार विकाशक्रम मध्ये सौ-तान्त्रिकका अनुसार यी परिवर्तन स्वतः भइराखेका हुन्छन् कुनै वाह्य कारक-तत्वले त्यसो गराउने होइन ।

६. अध्रुवं त्रिभवं शरदभ्रनिभं ।
(ललितविस्तर : संचोदनापरिवर्तस्त्रयोदशः/श्लोक सं. ७०)

७. रात्रिन्दिवमविश्राममायुषो वर्धते व्ययः ।
आयस्य चागमो नास्ति न मरिष्यामि किं न्वहम् ॥
(बोधिचर्यावतार : २/४०)

८. सर्वमुत्सृज्य गन्तव्यमिति न ज्ञातमीदृशम् ।
(बोधिचर्यावतार : २/३५)

९. पाँच अभिज्ञाहरू यस प्रकार हुन् : १. दिव्यचक्षु अभिज्ञा, २. दिव्यश्रोत अभिज्ञा, ३. परचित्त अभिज्ञा ४. ऋद्धि अभिज्ञा, ५. पूर्वानिवासानुस्मृति अभिज्ञा । ६. अर्को अभिज्ञा वा छैंटौ अभिज्ञा आश्रवक्षयज्ञान हो ।











१०. वेबसाईटको संस्करणमा यो अनित्य वर्गको श्लोक नं २५ छुटेको देखिन्छ । तर तिव्वतीभाषाबाट अंग्रेजीमा अनुवादित ग्रन्थमा हामीले यो श्लोक भेट्टाउन सक्छौँ ।

११. जुन हेतु प्रत्ययले बनेको हुन्छ, त्यसलाई संस्कृत धर्म भनिन्छ ।

१२. इहानियतमन्ते तु दशाब्दाः आदितोऽमितम् ॥ अभिधर्मकोश - ३/७८

१३. इमं चर्मपुटं तावत्स्वबुद्धचैव पृथक्कुरु ।
अस्थिपञ्जरतो मांसं प्रज्ञाशस्त्रेण मोचय ॥ बोधिचर्यावतार - ५/६३

१४. लब्ध्वापि च बहूंल्लाभान. चिरं भुक्त्वा सुखान्यपि ।
रिक्तहस्तश्च नग्नश्च यास्यामि मुषितो यथा ॥ बोधिचर्यावतार - ६/५९

**परिच्छेद ५: संसारको दुःख**

१. स्कन्ध पाँचवटा छन् जसलाई पञ्चस्कन्ध पनि भनिन्छ । ती हुन् : १. रूप, २. वेदना, ३. संज्ञा, ४. संस्कार र ५. विज्ञान । यी पाँचवटा स्कन्धबाहेक अर्कै भिन्नै आत्म छ भनी ग्राह गर्नु उपादान स्कन्ध हो । जुन बास्तवमा मिथ्यादृष्टि हो र त्यसैले गर्दा दुःखको सुरुवात हुन्छ ।

२. ऊर्णपक्ष्म यथैव हि करतलसंस्थं न वेद्यते पुम्भिः ।
अक्षिगतं तु तथैव हि जनयत्यरतिं च पीडां च ॥
करतलसदृशो बालो न वेत्ति संस्कारदुःखतापक्ष्म ।
अक्षिसदृशस्तु विद्वांस्तेनैवोद्वेज्यते गाढम् ॥ (अभिधर्मकोशटीका : ६/३)

३. अधः सहस्रैर्विंशत्या तन्मात्रोऽवीचिरस्य हि ।
तदूर्ध्वं सप्त नरकाः ॥ (अभिधर्मकोष : ३/५८)

४. शैलामभीषणविशङ्कटमेषयुग्म सङ्घट्टचूर्णितविशीर्णसमस्तगात्र । ४५

५. कामदेवायुषा तुल्या अहोरात्रा यथाक्रमम् ।
सञ्जीवादिषु षट्सु आयुस्तैस्तेषां कामदेववत् ॥ (अभिधर्मकोष : ३/५८)

६. अर्धं प्रतापनेऽवीचावन्तःकल्पम् । (अभिधर्मकोष : ३/५८)

७. सर्वेऽष्टौ षोडशोत्सदाः ॥
कुकूलं कुणपं चाथ क्षुरमार्गादिकं नदी ।
तेषां चतुर्दिशम् ॥ (अभिधर्मकोष : ३/५८ र ५९)

८. चारवटा बौद्धदर्शनका चरणहरू छन् जस्तैः वैभाषिक, सौतान्त्रिक,











योगाचार र माध्यमिक । वैभाषिक र सौतान्त्रिक हिनयान बौद्ध धर्म हुन् भने योगाचार र माध्यमिक महायान बौद्ध धर्म हुन् । वैभाषिक र सौतान्त्रिक मतावलम्वीहरूले शाक्यमुनि बुद्धले गर्नुभएको प्रथम धर्मचक्रप्रवर्त्तनलाई मात्र नीतार्थ मान्दछन् । र यिनीहरूलाई सर्वास्तिवाद पनि भनिन्छन् । योगाचार मतावलम्वीहरू वैशालीमा भएको तेश्रो धर्मचक्र प्रवर्तनलाई नीतार्थ मान्छन् र प्रथम र दोश्रो धर्मचक्रप्रवर्त्तनलाई नेयार्थ मान्दछन् । त्यस्तै माध्यमिकहरू दोश्रो धर्मचक्र प्रवर्तनलाई नीतार्थ मान्छन् तर प्रथम र तेश्रो धर्मचक्र प्रवर्तनलाई नेयार्थका रूपमा लिन्छन् । सम्पूर्ण बुद्ध वचनलाई दुई अर्थमा लिन सकिन्छ, नेयार्थ र नीतार्थ । नेयार्थ उपायस्वरूप विनेयजन सत्त्व (उद्धार गरिनुपर्ने सत्त्व) हरूलाई सद्धर्मको मार्गमा स्थापित गर्नका लागि प्रयोग गरिएको हुन्छ भने नीतार्थ प्रज्ञासंग सम्बन्धित भएकाले तत्त्व साक्षात्कार गर्ने अर्थमा लिइन्छ । यसरी शाक्यमुनि बुद्धका तीन धर्मचक्र प्रवर्तनलाई यी चार बौद्ध दर्शनका अनुयायीहरू नेयार्थ र नीतार्थका रूपमा लिन्छन् । यिनमा प्रथम, वैभाषिकहरू पदार्थ वा धर्मको त्रैकालिक (भूत, वर्तमान र भविष्य) अस्तित्वलाई मान्दछन् । र अनित्यलाई उत्पत्ति, स्थिति र भङ्गका रूपमा हेर्दछन् । वाह्य धर्मको अस्तित्व मान्ने भएकाले यिनीहरूलाई परमाणुवादी पनि भनिन्छ । त्यस्तै सौतान्त्रिकहरू धर्मको एक कालिक अस्तित्वलाई मात्र मान्छन् । उनीहरू अनित्यलाई उत्पत्ति र भङ्गका रूपमा हेर्दछन् । त्यसैले भूत र भविष्यमा वस्तुको अस्तित्वलाई यिनीहरू मान्दैनन् । योगाचारका कतिपय सिद्धान्तहरू सौतान्त्रिकसंग ठ्याक्कै मिल्छन् । दुवै स्वसंवेदनको सिद्धान्तलाई मान्छन् । तर योगाचार महायान दर्शन हो । यिनीहरू विज्ञानका लागि वाह्य धर्मको अस्तित्वको जरुरी छैन भनी मान्दछन् । योगाचारले मन नै परमार्थ सत्य हो वाह्य धर्म परिकल्पित मात्र हुन् भनी मान्छन् । यसरी वैभाषिकहरू र सौतान्त्रिकहरू वाह्यार्थवादी भएकाले नरक, नरक-पाल इत्यादिको पनि अस्तित्व मान्छन् भने योगाचारले पनि वाह्यसत्ता पटक्कै नमान्ने र खाली चित्तको मात्र परमार्थ सत्ता मान्ने भएकाले ती सबै चित्तका मात्र प्रक्षेपण हुन् भनी मान्छन् । यी सबै दर्शन मध्ये माध्यमिक सबै भन्दा श्रेष्ठ र अनुत्तर यस कारणले छ कि यसले यस्ता कुनैपनि विकल्पमय सिद्धान्त राख्दैन र कुनै अन्त (शाश्वत वा उच्छेद) मा टाँसेर बस्दैन । धर्म सबै प्रतीत्यसमुत्पन्न भएकाले निःश्वभाव छन्, शून्य छन्, तिनका आफ्नै स्वकीय सत्ता हुँदैन र तर आफ्नो सत्ताको लागि अरू नै कुनै प्रत्यय वा हेतुमाथि निर्भर











हुनुपर्ने हुनाले संवृति अर्थमा अस्तित्वमा रहेको जस्तो देखिन्छ, परमार्थरूपमा तिनीहरू शून्य छन् । माध्यमिक दर्शन त्यसैले भाव (छ) वा अभाव (छैन) विकल्प भन्दा माथि छ जुन बोधिका लागि नभइ नहुने पूर्वशर्त हो । नरक र नरकपालहरूलाई पनि माध्यमिक दर्शनले यसरी नै लिन्छ ।

९. शस्त्राणि केन नरके घटितानि प्रयत्नतः ।
   पापचित्तसमुद्भूतं तत्तत्सर्वं जगौ मुनिः ॥ (बोधिचर्यावतार : ५/८)

१०. शीता अन्येऽष्टावर्वुदादयः ॥ (अभिधर्मकोष : ३/५८ र ५९)

११. अन्न वा फल मापन गर्ने परिमाण शब्द ।
   १ खारी = १६ द्रोण
   १ द्रोण = १०.७ धार्नी
   १ खारी = १६ x १०.७ = १७१.२ धार्नी
   तसर्थ ८० खारी = ८० x १७१.२ = १३६९६ धार्नी

१२. सुत्तनिपात, पृ. १२६; संयुक्त निकाय, १, १५२; अंगुत्तर निकाय ५, १७३; अभिधर्मकोषभाष्य ३, ८४, पृ. १७६ ।

१३. वाहाद् वर्षशतेनैकतिलोद्धारक्षयायुषः ।
   अर्बुदाद् विंशतिगुणप्रतिवृद्धचायुषः परे ॥ (अभिधर्मकोष : ३/८४)

८ मौद्गल्यायनको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४३८ मा हेर्नुहोला ।

८८ संघरक्षितको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४४२ मा हेर्नुहोला ॥

१४. प्रेतानां मासाह्ना शतपञ्चकम् ॥ (अभिधर्मकोष : ३/८३)

१५. कल्पं तिरश्चाम् ॥ (अभिधर्मकोष : ३/८३)

१६. चार प्रकारका जन्महरू अन्दज, जरायुज, श्वेतज, औपपादुक हुन् । यिनका बारे अभिधर्मकोशमा विस्तृतरूपमा व्याख्या गरिएको पाइन्छ । हेर्नुहोस् : अभिधर्मकोश ३, ....

१७. चार धातुहरू पृथ्वी, आपु, तेज, वायु हुन् ।

१८. अत्युग्रगन्धमशुचिप्रकरोपरुद्धम् अत्यन्तसङ्कटमुपोढघनान्धकारम् ।
   आविश्य गर्भनिलयं निरयं यथैव दुःखं महत् स सहते परिपीडिताङ्गः ॥
   (शिष्यलेख : ३/८३)

१९. जर रूपसुरूपविरूपकरी, जर तेजहरी बलस्थामहरी
   सद (जर) सौख्यहरी परिभावकरी जर मृत्युकरी जर ओजहरी ॥
   (ललितविस्तर : १३/८५)











२०. वहुरोगशतै धनव्याधिदुःखैः उपसृष्ट जगज्ज्वलतेव मृगाः ।
(ललितविस्तर : १३/८६)
यस श्लोकको तिब्बती अनुवादमा अलिकति भिन्नता पाइन्छ ।

**परिच्छेद ६ : कर्म र त्यसको फल**

१. कर्मजं लोकवैचित्र्यम् । अभिधर्मकोश - ४/१
२. चेतना तत्कृतं च तत् । तत्रैव
३. चेतना चेतयित्वा च कर्मोक्तं परमर्षिणा । मध्यमकशास्त्र - १७/२
४. चेतना मानसं कर्म तज्जे वाक्कायकर्मणि । अभिधर्मकोश - ४/१
५. चारवटा पारजिकामध्ये एक । उदाहरणको लागि ऋद्धिसंपन्न नभएर पनि आफूसंग ऋद्धि सिद्धि छ भन्दै हिड्नु ।
६. लोभात् प्रेतगतिं याति क्षिप्यते नरके द्वेषात् ।
मोहात् तिर्यग्गतिं प्रायः ॥ रत्नावली - ३/३०
७. यहाँ विषय भन्दा बुद्ध आदि आश्रय भन्ने बुझिन्छ ।
८. लोभो द्वेषश्च मोहश्च तज्जं कर्मेति चाशुभम् । रत्नावली - १/२०
अशुभात्सर्वदुःखानि सर्वदुर्गतयस्तथा ॥ रत्नावली - १/२१
९. अलोभामोहाद्वेषाश्च तज्जं कर्मेतरच्छुभम् ॥ रत्नावली - १/२०
शुभात्सुगतयः सर्वाः सर्वजन्मसुखानि च ॥ रत्नावली - १/२१
१०. ध्यानाप्रमाणारूप्यैस्तु ब्रह्माद्यसुखमश्नुते । रत्नावली - १/२४
११. कथं पुनस्तेषां कर्म स्वकं भवति । स्वयंकृतकर्मविपाकप्रतिसंवेदनतामुपादाय, तद्धि नाम स्वकमित्युच्यते यत्परैरसाधारणम् । अभिधर्मकोष भाष्य - पृ. ७२
१२. कथं कर्मणा दायादत्वम् । तस्यां स्वयंकृतविपाकप्रतिसंवेदनायां कुशलाकुशलानां कमर्णमन्योन्यदायादतामुपादाय ।
अभिधर्मकोष भाष्य - पृ. ७२
१३. इति सत्त्रपतौ जिनस्य पुत्रे कलुषं स्वे हृदये करोति यश्च ।
कलुषोदयसंख्यया स कल्पान् नरकेष्वावसतीति नाथ आह ॥
बोधिचर्यावतार - १/३४
१४. पापकर्मनिवृत्तात्मा भवसुखात् पराङ्मुखः ।
आत्मनिर्वाणमात्रार्थी यो नरो मध्यमस्तु सः ॥ बोधिपथ प्रदीप - श्लो. ४











१५. राजा कृकिका सात पुत्रीको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४५१ मा हेर्नुहोला ।

**परिच्छेद ७ : मैत्री एवं करुणा**

१. तत्कस्य हेतोः ? एतया हि वयं जनिताः दुष्करकारिकैषा, अस्माकं जीवितस्य दात्री, लोकस्य च संदर्शयित्रि । अष्टसाहस्रिका प्रज्ञापारमिता सूत्र – पृ. १२५
२. यावत निष्ठ नभस्य भवेय्या सत्त्व अशेषत निष्ठ तथैव ।
भद्रचर्याप्रणिधान सूत्र - ४६
३. बोधिसत्त्वस्य सत्त्वेषु प्रेम मज्जगतं महत् ।
यथैकपुत्रके तस्मात्सदा हितकरं मतम् । महायान सूत्रालंकार - १३/२०
४. यावन्ति पूजा बहुविध अप्रमेया या क्षेत्रकोटीनयुतबिंबरेषु ।
तां पूज कृत्व पुरुषवरेषु नित्यं संख्याकलापी न भवति मैत्रचित्तः ॥
चन्द्रप्रदीप सूत्र - ३२/२७७
५. मैत्रीरक्षां विधास्यन्ति नराश्च देवता अपि ।
सौमनस्यं महासौख्यं विषशस्त्रैश्च नो क्षतिः ॥ रत्नावली - ३/८५
६. अर्थप्राप्तिरनायासं ब्रह्मलोके जनिर्भवेत् ।
अष्टमैत्रीगुणैर्धर्मैराप्तो नो यदि मुच्ये ॥ रत्नावली - ३/८६
७. मैत्रीबलको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४५४ मा हेर्नुहोला ।
८. बोधिसत्त्व वज्रपाणि ।
९. महादत्तको कथा परिशिष्ट २ अन्तर्गत पृष्ठ ४५१ मा हेर्नुहोला ।
१०. स्वसन्तानगतैर्दुःखस्यान्यस्य सर्वथा ।
सर्वस्य यः क्षयं काङ्क्षेदुत्तमः पुरुषस्तु सः ॥ बोधिपथप्रदीप - ५

**परिच्छेद ८: शरणगमन**

१. परिच्छेद १ मा हेर्नुहोस् ।
२. चार युग्म पुद्गल यस प्रकार छन् : - १. स्रोतआपन्नफलप्रतिपन्नक एवं स्रोतआपन्न, २. सकृदागामीफलप्रतिपन्नक एवं सकृदागामी, ३. अनागामीफलप्रतिपन्नक एवं अनागामी र ४. अर्हत्त्वफलप्रतिपन्नक एवं अर्हत् । आठ











एकल पुद्गल यस प्रकार छन् : - १. स्रोतआपन्नफलप्रतिपन्नक, २. स्रोतआपन्न, ३. सकृदागामीफलप्रतिपन्नक, ४. सकृदागामी, ५. अनागामीफलप्रतिपन्नक, ६. अनागामी, ७. अर्हत्त्वफलप्रतिपन्नक र ८. अर्हत् । श्रावकभूमि, पृ. १७२-१७३

३. जगच्छरणमेकत्र बुद्धत्वं पारमार्थिकम् ।

रत्नगोत्रविभागमहायानोत्तरतन्त्र - १/२१

४. मुनेर्धर्मशरीरत्वात् तन्निष्ठत्वाद् गणस्य च ॥

रत्नगोत्रविभागमहायानोत्तरतन्त्र - १/२१

५. धर्मो द्विधार्यसंघश्च नात्यन्तं शरणं परम् ।

रत्नगोत्रविभागमहायानोत्तरतन्त्र - १/२०

६. ज्यात्यत्वान् मोषधर्मत्वादभावात् सभयत्वतः ।
धर्मो द्विधार्यसंघश्च नात्यन्तं शरणं परम् ॥

रत्नगोत्रविभागमहायानोत्तरतन्त्र - १/२०

७. शास्तृशासनशिष्यार्थैरधिकृत्य त्रियानिकान् ।
कारत्रयाधिमुक्तांश्च प्रज्ञप्तं शरणत्रयम् ॥

रत्नगोत्रविभागमहायानोत्तरतन्त्र - १/१९

८. उपद्रवेभ्यः सर्वेभ्यो अपायादनुपायतः ।
सत्कायाद्धीनयानाच्च तस्माच्छरणमुत्तमम् ॥ महायान सूत्रालंकार - ९/८

९. सा-साना माटा (terrocotta) का स्तूपहरू जसलाई साँचोमा हालेर बनाइन्छन् ।

१०. यत्सप्तनेकायिकं प्रातिमोक्षसंवरसमादानं भिक्षुभिक्षुणीशिक्षमाणाश्रामणेर-श्रामणेर्युपासकोपासिकाशीलम् । तदेतद् गृहिप्रव्रजितपक्षे यथायोगं वेदितव्यम् ।

बोधिसत्त्वभूमि - पृ. ९६

११. प्रतिष्ठाशीलसंवृतिः । महायानसूत्रालंकार - ४/४

१२. सप्तधाप्रतिमोक्षैश्च सदाऽन्यसंवरान्वितः ।
भाग्यं बोधिसत्त्वानां संवरस्य न चान्यथा ॥ बोधिपथप्रदीप - श्लोक. २१

१३. किं प्रतिष्ठः ?....बोधिसत्त्वशीलसंवरप्रतिष्ठः ।

महायान सूत्रालंकार - पृ. १५-१६

**परिच्छेद ९: बोधिचित्त परिग्रह**

१. चित्तोत्पादः परार्थाय सम्यक्सम्बोधिकामता । *अभिसमयालंकार* - १/१९











२. भूहेमचन्द्रज्वलनैर्निधरत्नाकरार्णवैः ।
वज्राचलौषधीमित्रैश्चिन्तामण्यर्कगीतिभिः ॥ *अभिसमयालंकार* - १/२०
नृपगञ्जमहामार्गयानप्रस्रवणोदकैः ।
आनन्दोक्तिनदीमेघैर्द्वाविंशतिविधः स च ॥ *अभिसमयालंकार* - १/२१
३. चित्तोत्पादोऽधिमोक्षोऽसौ शुद्धाध्याशययिकोऽपरः ।
वैपाक्यो भूमिषु मतस्तथावरणवर्जितः ॥ महायान सूत्रालंकार - ४/२
४. स च पारमार्थिकचित्तोत्पादः प्रमुदितायां भूमौ ।
महायान सूत्रालंकार - ४/८
५. तद्बोधिचित्तं द्विविधं विज्ञातव्यं समासतः ।
बोधिप्रणिधिचित्तं च बोधिप्रस्थानमेव च ॥ बोधिचर्यावतार - १/१५
६. गन्तुकामस्य गन्तुश्च यथा भेदः प्रतीयते ।
तथा भेदोऽनयोर्ज्ञेयो यथासंख्येन पंडितैः ॥ बोधिचर्यावतार - १/१६
७. तस्मात्स चित्तोत्पादो बोध्यालम्बनः सत्त्वार्थालम्बनश्च ।
बोधिसत्त्व भूमि - पृ. ८
८. तज्ज्ञानपर्येष्टचाकारेण तज्ज्ञानालम्बनः । महायान सूत्रालंकार - पृ. १६
९. यावत निष्ठ नभस्य भवेय्या सत्त्व अशेषत निष्ठ तथैव ।
कर्मतु क्लेशतु यावत निष्ठा तावतनिष्ठ मम प्रणिधानम् ॥
आर्यभद्रचर्याप्रणिधानराज - श्लोक. ४६
१०. शिक्षासमुच्चयको पृ. ८ मा हेर्नुहोस् ।
११. मित्रबलाद् हेतुबलान्मूलाबलाच्छुतबलाच्छुभाभ्यासात् ।
अदृढदृढोदय उक्तश्चितोत्पादः पराख्यानात् ॥
महायान सूत्रालंकार - ४/७
१२. सूपासितसंबुद्धे सुसंभृतज्ञानपुण्यसंभारे ।
धर्मेषु निर्विकल्पज्ञानप्रसवात्परमतास्य । महायान सूत्रालंकार - ४/८
१३. संवरः सद्गुरोर्ग्राह्यः सम्यगलक्षणयुक्ततः ।
यः संवरविधौ दक्षः स्वयं च संवरे स्थितः ॥
कृपालुः संवरे शक्तः ज्ञातव्य सद्गुरुस्तु सः । बोधिपथप्रदीप - २३-२४
१४. सहधार्मिकस्य बोधिसत्त्वस्य कृतप्रणिधानस्य विज्ञस्य प्रतिबलस्य वाग्विज्ञप्त्यर्थग्रहणावबोधाय । बोधिसत्वभूमि - पृ. १०५
१५. संमुखं विमुखं पूजा बुद्धानां चीवरादिभिः ।











गाढप्रसन्नचित्तस्य संभारद्वयपूरये ॥ महायान सूत्रालंकार - १७/१

१६. मनः पूर्वंगमा धर्मा मनः श्रेष्ठा इति श्रुतेः । रत्नावली - ४/७३

१७. लोभो द्वेषश्च मोहश्च तज्जं कर्मेति चाशुभम् । रत्नावली - १/२०
अशुभात्सर्वदुःखानि सर्वदुर्गतयस्तथा । रत्नावली - १/२१

१८. इयमेव तु मे चिन्ता युक्ता रात्रिन्दिवं तदा ।
अशुभान्नियतं दुःखं निःसरेयं ततः कथम् ॥ बोधिचर्यावतार - २/६३

१९. चतुर्भि मैत्रेय ! धर्मैं समन्वागतो बोधिसत्त्वो महासत्त्वः कृतोपचित्तं पापमभिभवति ।

कतमैश्चतुर्भि? यदुत विदूषणसमुदाचारेण, प्रतिपक्षसमुदाचारेण, प्रत्यापत्तिबलेन, आश्रयबलेन ॥

आर्य चतुधर्मनिर्देश सूत्र, धीः (सारनाथः केन्द्रीय उच्च तिब्बती शिक्षा संस्था), पृ.४८

२०. प्रियाप्रियनिमित्तेन पापं कृतमनेकधा ।
सर्वमुत्सृज्य गन्तव्यमिति न ज्ञातमीदृशम् ॥ बोधिचर्यावतार - २/३५
अप्रिया न भविष्यन्ति प्रियो मे न भविष्यति ।
अहं च न भविष्यामि सर्वं च न भविष्यति ॥ बोधिचर्यावतार - २/३६

२१. इह शय्यागतेनापि बन्धुमध्येऽपि तिष्ठता ।
मयैवैकेन सोढव्या मर्मच्छेदादिवेदना ॥ बोधिचर्यावतार - २/४१

२२. यमदूतैर्गृहीतस्य कुतो बन्धुः कुतः सुहृत् ।
पुण्यमेकं तदा त्राणं मया तच्च न सेवितम् ॥ बोधिचर्यावतार - २/४२

२३. अङ्गच्छेदार्थमप्यद्य नीयमानो विशुष्यति ।
पिपासितो दीनदृष्टिरन्यदेवेक्षते जगत् ॥ बोधिचर्यावतार - २/४४
किं पुनर्भैरवाकारैर्यमदूतैरधिष्ठितः ।
महात्रासज्वरग्रस्तः पुरीषोत्सर्गवेष्टितः ॥ बोधिचर्यावतार - २/४५

२४. कथं च निःसराम्यस्मात् परित्रायत सत्त्वरम् ।
मा ममाक्षीणपापस्य मरणं शीघ्रमेष्यति ॥ बोधिचर्यावतार - २/३३

२५. कृताकृतपरीक्षोऽयं मृत्युर्विश्रम्भघातकः ।
स्वस्थास्वस्थैरविश्वास्य आकस्मिकमहाशनिः ॥ बोधिचर्यावतार - २/३४

२६. येन कल्पसहस्रेषु कृतं पापं सुदारुणम् ।
एकवेलां प्रकाशन्तु सर्वे व्रजन्तु संक्षयम् ॥ सुवर्णप्रभासोत्तमसूत्र - ४/३७







